# विषयसूची

ॐ

**भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।**

# वाजसनेयि माध्यन्दिन शुक्ल

# यजुर्वेद – संहिता

## ॥अथ प्रथमोऽध्यायः॥

॥पहिलो अध्याय॥

**ऋषि–** परमेष्ठी, प्रजापति, देवगण प्रजापति, अघशंस ।

**देवता–** शाखा, वायु, इन्द्र, उखा, पय, प्रश्न, गौ, अग्नि, प्रजापति, स्रुक्, शूर्प, राक्षस, ब्रह्म, राक्षसघाती, द्यू, अन्न, प्राणवायु, हवि, रक्ष, सविता, लिङ्गोक्त देवता, सूर्य, गृह, जल, पात्रसमूह, कृष्णाजिन, उलूखल, हवि, मुसल, वाक्, पत्नी, शूर्प, हवि, तण्डुल, उपवेष, कपाल, दृषत्, शम्या, उपल, आज्य, आज्य, पुरोडाश, त्रित, द्वित, एकत, स्फ्य, वेदिका, पुरीष, पूरक, असुर, वेदिका, विष्णु, चन्द्रमा, प्रैष, आभिचारिक, स्रुव ।

**छन्द–** स्वराट् बृहती, ब्राह्मी उष्णिक्, स्वराट् आर्षी त्रिष्टुप्, भुरिक् जगती, अनुष्टुप्, आर्ची त्रिष्टुप्, आर्ची पङ्क्ति, प्राजापत्या जगती, निचृत् अतिजगती, निचृत् त्रिष्टुप्, भुरिक् बृहती, स्वराट् जगती, भुरिक् अत्यष्टि, निचृत् उष्णिक्, भुरिक् आर्ची गायत्री, भुरिक् उष्णिक्, निचृत् जगती, याजुषी पङ्क्ति, स्वराट् ब्राह्मी त्रिष्टुप्, विराट् गायत्री, निचृत् ब्राह्मी पङ्क्ति, ब्राह्मी उष्णिक्, आर्ची त्रिष्टुप्, आर्ची पङ्क्ति, निचृत् ब्राह्मी त्रिष्टुप, विराट् ब्राह्मी त्रिष्टुप, गायत्री, निचृत् पङ्क्ति, भुरिक् त्रिष्टुप् गायत्री, बृहती, स्वराट् ब्राह्मी पङ्क्ति, स्वराट् ब्राह्मी पङ्क्ति, भुरिक् ब्राह्मी पङ्क्ति, ब्राह्मी त्रिष्टुप्, विराट् ब्राह्मी पङ्क्ति, त्रिष्टुप्, निचृत् जगती, जगती अनुष्टुप् ।

**॥ॐ॥ इषे त्वोर्जे त्वा वायव स्थ देवो वः सविता प्रार्पयतु श्रेष्ठतमाय कर्मणऽ आप्यायध्वमघ्न्याऽ इन्द्राय भागं प्रजावतीरनमीवाऽ अयक्ष्मा मा व स्तेनऽ ईशत माघशꣳसो ध्रुवाऽ अस्मिन् गोपतौ स्यात बह्वीर्यजमानस्य पशून्पाहि ॥१॥**

हे यज्ञका साधनहरू हो ! अन्न प्राप्तिका लागि सवितादेवताले तिमीहरूलाई अघि सारुन् । सृष्टिकर्ताले तिमीहरूलाई तेजस्वी बन्नका लागि प्रेरित गरुन् । तिमीहरू सबै प्राणस्वरूप हौ । सृष्टिकर्ताले श्रेष्ठ कर्मका लागि तिमीहरूलाई अघि सारुन् । तिमीहरूको शक्ति विनाशक नभई उन्नतिशील होस् । आफ्ना उत्पादनको एक भाग इन्द्रलाई प्रदान गर । सुसन्ततियुक्त र आरोग्यसम्पन्न भएर क्षय आदि रोगबाट मुक्त होओ । चोरीचकारी गर्नेहरूले तिमीहरूलाई चलाउन नसकून् । तिमीहरू दुष्टका संरक्षणमा नहोओ । मातृभूमिका रक्षाको छत्रछायामा रहेर सज्जनको सङ्ख्या वृद्धि गर र याजकका पशु आदि धनको रक्षा गर ।

**वसोः पवित्रमसि द्यौरसि पृथिव्यसि मातरिश्वनो घर्मोऽ सि विश्वधाऽ असि । परमेण धाम्ना दृᳬंहस्व मा ह्वार्मा ते यज्ञपतिर्ह्वार्षीत् ॥२॥**

हे यज्ञका साधनहरू हो ! तिमीहरू आफ्ना कर्मले सबै वस्तुलाई पवित्र गराउने द्युलोक र पृथ्वीका रूप हौ । तिमीहरू नै प्राणमा उष्णता धारण गर्दछौ । महान् शक्ति धारण गर र विघ्न नदिई प्रगतिमार्गलाई अघि बढाओ । तिमीहरूसँग सम्बन्धित यज्ञपति पनि कुटिल नहोऊन् ।

**वसोः पवित्रमसि शतधारं वसोः पवित्रमसि सहस्रधारम् । देवस्त्वा सविता पुनातु वसोः पवित्रेणा शतधारेण सुप्वा कामधुक्षः ॥३॥**

हे यज्ञका साधनहरू हो ! तिमीहरू सयौँ धारा भएका र पवित्र गराउने साधन हौ । सबैलाई पवित्रता प्रदान गर्ने सविताका सयौँ धाराले तिमीहरूलाई पवित्र बनाऊन् । हे मानिसहरू हो ! तिमीहरू अब कुन कामधेनु दुहेर कस्तो कामना पूरा गर्न चाहन्छौ ?

**सा विश्वायुः सा विश्वकर्मा सा विश्वधायाः । इन्द्रस्य त्वा भागᳬं सोमेनातनच्मि विष्णो हव्यᳬं रक्ष ॥४॥**

हे मानिसहरू हो ! पूर्ण आयु, कर्मशील शक्ति र धारक शक्ति नामका तीन कामधेनु तिमीहरूसँगै छन् । तिनबाट प्राप्त हुने पोषणक्षमतामध्ये इन्द्रको भागमा सोम मिसाएर तयार गरौँ । पोषणकर्ता विष्णुले हव्यपदार्थहरू सुरक्षित राखून् ।

**अग्ने व्रतपते व्रतं चरिष्यामि तच्छकेयं तन्मे राध्यताम् । इदमहमनृतात्सत्यमुपैमि ॥५॥**

हे व्रतका पालक तेजस्वी अग्निदेवता ! हामी व्रतशील बन्न सकौँ । असत्यको मार्ग त्यागेर सत्यको मार्गमा चल्ने हाम्रो व्रत पूरा होस् ।

**कस्त्वा युनक्ति स त्वा युनक्ति कस्मै त्वा युनक्ति तस्मै त्वा युनक्ति । कर्मणे वां वेषाय वाम् ॥६॥**

हे यज्ञका साधनहरू हो ! तिमीहरूलाई कसले नियुक्त गरेको हो ? कुन कामका लागि नियुक्त गरेको हो ? उसले तिमीहरूलाई कर्म गर्नका लागि नियुक्त गरेको हो र दिव्य स्थानमा व्याप्त रहनका लागि नियुक्त गरेको हो ।

**प्रत्युष्टᳬं रक्षः प्रत्युष्टाऽ अरातयो निष्टप्तᳬं रक्षो निष्टप्ताऽ अरातयः । उर्वन्तरिक्षमन्वेमि ॥७॥**

सम्बन्धित उपकरणहरूमा लुकिबसेका राक्षस र शत्रुहरू यज्ञरूपी ऊर्जाको प्रभावले डढिसके, दुःख दिनेहरू डढिसके । त्यसैले यस यज्ञका साधनहरू बाधाविघ्नरहित भएर अन्तरिक्षमा प्रवेश गर्दछन् ।

**धूरसि धूर्व धूर्वन्तं धूर्व तं योऽस्मान्धूर्वति तं धूर्व यं वयं धूर्वामः । देवानामसि वह्नितमᳬं सस्नितमं पप्रितमं जुष्टतमं देवहूतमम् ॥८॥**

तिमी आफ्ना विध्वंसकारी शक्तिले दुष्ट र हिंस्रकहरूको विनाश गर, अनेकौँलाई दुःख दिने हत्याराहरूलाई नाश गर, सबैले नष्ट गर्न चाहेका दुरात्मालाई नष्ट गराओ, दैवी शक्तिका वाहक, बलवर्द्धक, पूर्णता प्राप्त गराउने, सेवनयोग्य र देवताहरूलाई आमन्त्रित गर्ने होओ ।

**अहरुतमसि हविर्धानं दृथ्ंह हस्व मा ह्वार्मा ते यज्ञपतिर्ह्वार्षीत् । विष्णुस्त्वा क्रमतामुरु वातायापहतथ्ं रक्षो यच्छन्तां पञ्च ॥९॥**

तिमीहरू देवशक्ति धारण गर्नका लागि दृढ र सुयोग्य पात्र हौ । तिमीहरू र तिमीहरूका यज्ञ सञ्चालकले कुटिल हुनुहुँदैन । सबैका पोषक विष्णुदेव नै तिमीहरूमाथि आरूढ होऊन् । विशाल वायुमण्डलमा विचरण गर्दै वायु सेवन गरेर तिमीहरू प्राणसंवर्द्धन गर । राक्षसी वृत्तिहरू हटाइसकेपछि पाँचै औंलारूपी पाँचै किसिमका शक्तिहरूसँग ईश्वरीय प्रयोजनमा संलग्न होओ ।

**देवस्य त्वा सवितुः प्रसवेश्विनोर्बाहुभ्यां पूष्णो हस्ताभ्याम् । अग्नये जुष्टं गृह्णाम्यग्नीषोमाभ्यां जुष्टं गृह्णामि ॥१०॥**

हे यज्ञका सामग्रीहरू हो ! सृष्टिकर्ताले रचना गरेका यस सृष्टिमा अश्विनीकुमारहरूका बाहु र पूषादेवताका हातबाट तिमीहरूलाई हामी ग्रहण गर्दछौं । अग्निका लागि प्रिय लाग्ने हविष्यान्नका लागि तिमीहरूलाई हामी स्वीकार गर्दछौं र अग्नि तथा सोमका लागि प्रिय लागेको पदार्थ तिमीहरू ग्रहण गर्दछौ ।

**भूताय त्वा नारातये स्वरभिविख्येषं दृथ्ंह न्तां दुर्याः पृथिव्यामु-र्वन्तरिक्षमन्वेमि । पृथिव्यास्त्वा नाभौ सादयाम्यदित्याऽ उपस्थेग्ने हव्यथ्ं रक्ष ॥११॥**

तिमीहरूलाई अनुदारताका लागि नभएर उन्नतिका लागि निर्माण गरिएको हो । आत्मामा रहेको ज्योति हामीले देख्न पाऔं । धर्तीमा सज्जनताको वृद्धि होस् । समस्त भूमण्डलमा अवरोधविना हामी विचरण गर्न सकौं । हे अदितिपुत्र अग्निदेवता ! पृथ्वीको नाभीका रूपमा रहेको यस यज्ञस्थलमा स्थापना गरिएको हविष्यान्नको रक्षा गर ।

**पवित्रे स्थो वैष्णव्यौ सवितुर्वः प्रसव उत्पुनाम्यच्छिद्रेण पवित्रेण सूर्यस्य रश्मिभिः । देवीरापो अग्रेगुवो अग्रेपुवो ग्रऽ इममद्य यज्ञं नयताग्रे यज्ञपतिथ्ं सुधातुं यज्ञपतिं देवयुवम् ॥१२॥**

यज्ञका लागि प्रयोगमा आएका तिमीहरू दुई कुशका खण्डरूपी साधनहरूलाई पवित्रकर्ता वायु र सूर्यका रश्मिले दोषरहित र पवित्र गराउँछन् । हे दिव्य जलसमूह ! तिमी अग्रगामी र पवित्रता प्रदान गर्नेहरूमा श्रेष्ठ छौ । यज्ञकर्तालाई उन्नतिपथमा लैजाऊ र राम्रोसित यज्ञ सञ्चालन गर्ने याज्ञिकहरूलाई देवशक्तिले सम्पन्न गराऊ ।

**युष्मा इन्द्रोवृणीत वृत्रतूर्ये यूयमिन्द्रमवृणीध्वं वृत्रतूर्ये प्रोक्षिताः स्थ । अग्नये त्वा जुष्टं प्रोक्षाम्यग्नीषोमाभ्यां त्वा जुष्टं प्रोक्षामि । दैव्याय कर्मणे शुन्धध्वं देवयज्यायै यद्वोशुद्धाः पराजघ्नुरिदं वस्तच्छुन्धामि ॥१३॥**

हे रसतत्त्वका रूपमा रहेका जल ! इन्द्रदेवताले विकाररूपी वृत्रलाई नष्ट गर्दाखेरि तिम्रो सहायता लिएका थिए, तिमीले पनि उनलाई सहयोग दिएका थियौ । अग्नि र सोमका निम्ति तिमी प्रिय छौ र हामीले शुद्ध गराउँदा तिमी शुद्ध होऊ । हे यज्ञीय उपकरणहरू हो ! अशुद्ध रहेका कारण तिमीहरू ग्राह्य हुन सक्दैनौ, त्यसैले यज्ञीय कार्य र देवताको पूजाका लागि हामी तिमीहरूलाई पवित्र गराउँछौं ।

**शर्मास्यवधूतᳬरक्षोवधूता२ अरातयो दित्यास्त्वगसि प्रति त्वादितिर्वेत्तु ।**
**अद्रिरसि वानस्पत्यो ग्रावासि पृथुबुध्नः प्रति त्वादित्यास्त्वग्वेत्तु ॥१४॥**

यो सुखकारक मृगचर्मरूपी आसनबाट दुष्ट राक्षस र अनुदार वृत्ति हुनेहरूलाई हटाइसकिएको छ । यो पृथ्वीको आवरण हो । यसलाई पृथ्वीले स्वीकार गरेको छ । तिमीहरू वनस्पतिले निर्मित छौ र जगको ढुङ्गोजस्तै बलिया छौ । पृथ्वीको आवरण तिमीहरूलाई प्राप्त होस् ।

**अग्नेस्तनूरसि वाचो विसर्जनं देववीतये त्वा गृह्णामि बृहद्ग्रावासि वानस्पत्यः स२ इदं देवेभ्यो हविः शमीष्व सुशमि शमीष्व । हविष्कृदेहि हविष्कृदेहि ॥१५॥**

मन्त्ररूपी वाणीसँगै विसर्जित हुने तिम्रो हविष्यरूपी शरीर अग्निको बाहिरी आवरणरूप हो । मुसलका रूपमा ढुङ्गोजस्तो बलियो काठले बनाइएका तिमीलाई दैवी शक्तिको कीर्ति बढाउने उद्देश्यले हामी ग्रहण गर्दछौँ । त्यसैले देवताको प्रयोजनका लागि यो हविष्यान्न उत्तम रीतिले तयार गरेर हामीलाई प्रदान गर । हे हविष्यान्न तयार गर्ने मुसल ! तिमी यहाँ आऊ ।

**कुक्कुटोसि मधुजिह्व२ इषमूर्जमावद त्वया वयᳬसंघातᳬसंघातं जेष्म वर्षवृद्धमसि प्रति त्वा वर्षवृद्धं वेत्तु परापूतᳬरक्षः परापूता२ अरातयोपहतᳬरक्षो वायुर्वो विविनक्तु देवो वः सविता हिरण्यपाणिः प्रतिगृभ्णात्वच्छिद्रेण पाणिना ॥१६॥**

हे शमी ! तिमी कुखुरोझैँ खनेर असुरको संहार गर्ने र देवताहरूका लागि मिठो बोली बोल्ने मधुर जिब्रो भएका छौ, त्यसो हुनाले बलप्रदायक ध्वनि सुनाऊ । तिम्रा सहयोगले हामी सङ्घर्षमा पशुत्वमाथि विजय पाउन हुन सकौँ । हे सुपो र हविष्यान्न ! तिमीहरू वर्षाका पानीले बढ्दछौ । वर्षा बढाउने यज्ञले तिमीहरूलाई स्वीकार गरोस् । राक्षसी र अनुदार तत्त्व हटाइएको छ, अब तिनीहरू नाश भइसके । वायुले तिमीहरूलाई शुद्ध गराऊन् र सवितादेवताले सुनौला हातले तिमीहरूलाई धारण गरून् ।

**धृष्टिरस्यपाग्ने अग्निमामादं जहि निष्क्रव्यादᳬसेधा देवयजं वह । ध्रुवमसि पृथिवीं दृᳬह ब्रह्मवनि त्वा क्षत्रवनि सजातवन्युपदधामि भ्रातृव्यस्य वधाय ॥१७॥**

हे अग्नि धारण गर्ने काठले बनेका उपवेष नामका पात्र ! काँचो पदार्थ पकाउने लौकिक अग्नि र मांस जलाउने चिताग्निलाई निषेध गरेर देवपूजनका लागि योग्य गार्हपत्य अग्निको रूप धारण गर । हे यज्ञाग्नि ! तिमी पृथ्वीलाई बलियो बनाएर कपाल नामका पात्रमा स्थिर होऊ । ज्ञानी ब्राह्मण, शौर्यशाली क्षत्रिय र अन्य सजातीय तेजस्वी नागरिकहरूको हित गर्ने हुनाले तिमीलाई हामी शत्रुको विनाश गर्नका लागि धारण गर्दछौँ ।

**अग्ने ब्रह्म गृभ्णीष्व धरुणमस्यन्तरिक्षं दृᳬह ब्रह्मवनि त्वा क्षत्रवनि सजातवन्युपदधामि भ्रातृव्यस्य वधाय । धर्त्रमसि दिवं दृᳬ ह ब्रह्मवनि त्वा**

**क्षत्रवनि सजातवन्युपदधामि भ्रातृव्यस्य वधाय । विश्वाभ्यस्त्वाशाभ्यऽ उपद्धामि चितः स्थोर्ध्वचितो भृगूणामङ्गिरसां तपसा तप्यध्वम् ॥१८॥**

ज्ञानी ब्राह्मण, शूर क्षत्रिय र मानवजातिका उन्नतिमा सहयोगीहरूका हितमा लागेका हे अग्निदेवता ! तिमी ज्ञान धारण गर्ने धारक हौ, द्युलोक र अन्तरिक्षलाई बलशाली तुल्याऊ । तिमी ब्राह्मण, क्षत्रिय र अन्य सजातीयहरूलाई चेतना प्रदान गर्ने हौ, त्यसैले तिमीलाई आफ्ना नजिकै हामी स्थापित गर्दछौँ । भृगु र अङ्गिराका तपस्यारूपी अग्निले तेजस्वी बनेर हामीलाई उन्नति गर्ने ऊर्ध्वगामी चेतना प्रदान गर ।

**शर्मास्यवधूतꣳ रक्षोवधूता अरातयो दित्यास्त्वगसि प्रति त्वादितिर्वेत्तु । धिषणासि पर्वती प्रति त्वादित्यास्त्वग्वेत्तु दिवः स्कम्भनीरसि धिषणासि पार्वतेयी प्रति त्वा पर्वती वेत्तु ॥१९॥**

यो सुखकारक मृगचर्मरूपी आसनबाट दुष्ट राक्षस र अनुदार वृत्ति हुनेहरूलाई हटाइएको छ । यो पृथ्वीको आवरण हो । यसलाई पृथ्वीले स्वीकार गरेको छ । पृथ्वीको आवरण आफ्नै आधारसित परिचित रहोस् । अन्तरिक्षले द्युलोकलाई धारण गरेझैँ पर्वतहरूलाई धारण गर्न सक्नेलाई तिमी चिन । तिमी ती पर्वतका सन्तानलाई कर्मशक्ति प्रदान गर्दछौ ।

**धान्यमसि धिनुहि देवान् प्राणाय त्वोदानाय त्वा व्यानाय त्वा । दीर्घामनु प्रसितिमायुषे धां देवो वः सविता हिरण्यपाणिः प्रतिगृभ्णात्वच्छिद्रेण पाणिना चक्षुषे त्वा महीनां पयोसि ॥२०॥**

हे हविष्यान्नहरू हो ! तिमीहरू देवतालाई सन्तुष्ट गराओ । प्राण, उदान, व्यान आदि प्राणलाई संवर्द्धन गर्ने र उचित पात्रताका रूपमा रहेका हुनाले तिमीहरूलाई हामी ग्रहण गर्दछौँ । तिमीहरू पृथ्वीका लागि पयका रूपमा पानी, दुध, घिउ आदि पोषक तत्त्व हौ । तिमीहरूलाई सवितादेवताले आफ्ना छिद्ररहित हातमा धारण गरुन् ।

**देवस्य त्वा सवितुः प्रसवेश्विनोर्बाहुभ्यां पूष्णो हस्ताभ्याम् । सं वपामि समापऽ ओषधीभिः समोषधयो रसेन । सꣳरेवतीर्जगतीभिः पृच्यन्ताꣳसं मधुमतीर्मधुमतीभिः पृच्यन्ताम् ॥२१॥**

हे यज्ञका सामग्रीहरू हो ! सृष्टिकर्ताले रचना गरेका सृष्टिमा अश्विनीकुमारहरूका बाहु र पूषादेवताका हातबाट तिमीहरूलाई हामीले विस्तार गरेका छौँ । औषधिहरूलाई जल प्राप्त होस् र तिनीहरू रसले परिपुष्ट होऊन् । गुणसम्पन्न औषधिहरू प्रवाहमान जलमा मिसिऊन् । मधुरता युक्त तत्त्वहरू आपसमा मिसिऊन् ।

**जनयत्यै त्वा संयौमीदमग्नेरिदमग्नीषोमयोरिषे त्वा घर्मोसि विश्वायुरुरुप्रथाऽ उरु प्रथस्वोरु ते यज्ञपतिः प्रथतामग्निष्टे त्वचं मा हिꣳसीद्देवस्त्वा सविता श्रपयतु वर्षिष्ठेधि नाके ॥२२॥**

याजकहरूमा उत्पादक क्षमता र पूर्ण आयु वृद्धिका लागि जल र चामलको पिठो मिसाउँछौँ । यो काम अग्निका लागि, सोमका लागि र अग्निसोमका लागि गरिएको हो । हे पिठोले पकाइएका पुरोडाश नामका रोटी ! विस्तार क्षमताले युक्त हुनाले तिमी

विस्तृत होऊ र यसैबाट याजकको पनि यश विस्तृत होस् । अग्निदेवताले तिमीलाई क्षति नगरुन्, सवितादेवताले देवलोकका अग्निद्वारा तिमीलाई परिपक्व बनाऊन् ।

**मा भेर्मा संविक्था ऽ अतमेरुर्यज्ञोतमेरुर्यजमानस्य प्रजा भूयात् त्रिताय त्वा द्विताय त्वैकताय त्वा ॥२३॥**

नडराऔ, पछि नहटौँ । तीनका लागि, दुईका लागि वा एकको लागि गरिएको भए पनि यज्ञ कर्म क्लेशरहित हुन्छ । यज्ञकर्ताका प्रजाहरू दुःखबाट मुक्त रहन्छन् ।

**देवस्य त्वा सवितुः प्रसवेऽश्विनोर्बाहुभ्यां पूष्णो हस्ताभ्याम् । आददेध्वरकृतं देवेभ्यऽ इन्द्रस्य बाहुरसि दक्षिणः सहस्रभृष्टिः शततेजा वायुरसि तिग्मतेजा द्विषतोवधः ॥२४॥**

हे यज्ञका सामग्रीहरू हो ! सृष्टिकर्ताले रचना गरेका सृष्टिमा अश्विनीकुमारहरूका बाहु र पूषादेवताका हातबाट तिमीहरूलाई हामीले विस्तार गरेका छौं । तिमी इन्द्रका लागि दाहिने हातजस्तै छौ । हजारौँ किसिमका विकृतिहरू उडाउने, अत्यधिक प्रकाशमान, तीक्ष्ण तेजयुक्त अग्निलाई प्रदीप्त गर्ने वायुको जस्तै तिम्रो क्षमता छ । तिमी यज्ञमा बाधा पुऱ्याउनेहरूलाई नष्ट गर्नमा सक्षम छौ ।

**पृथिवि देवयजन्योषध्यास्ते मूलं मा हिंᳬसिषं व्रजं गच्छ गोष्ठानं वर्षतु ते द्यौर्बधान देव सवितः परमस्यां पृथिव्याᳬशतेन पाशैर्योस्मान्द्वेष्टि यं च वयं द्विष्मस्तमतो मा मौक् ॥२५॥**

हे पृथिवी ! देवताहरूका लागि तिमीमाथि नै हवन गरिँदै छ । तिमीमाथि उम्रने औषधिका जरामा हाम्रा कारणले क्षति नहोस् । हे खनेर निकालिएको माटो ! तिमी गाईको निवासस्थानमा जाऊ । द्युलोकमा तिमी मनग्गे वर्षा गर । हे सृष्टिकर्ता सवितादेवता ! हामी सबैलाई जसले दुःख दिन्छ त्यस दुष्टहरूलाई सबैले रिस गर्दछन् । त्यस्ता दुष्टलाई विशाल पृथ्वीमा आफ्ना सयौं बन्धनले बाँधिदेऊ र कहिल्यै मुक्त हुन नदेऊ ।

**अपाररुं पृथिव्यै देवयजनाद्वध्यासं व्रजं गच्छ गोष्ठानं वर्षतु ते द्यौर्बधान देव सवितः परमस्यां पृथिव्याᳬशतेन पाशैर्योस्मान्द्वेष्टि यं च वयं द्विष्मस्तमतो मा मौक् । अररो दिवं मा पप्तो द्रप्सस्ते द्यां मा स्कन् व्रजं गच्छ गोष्ठानं वर्षतु ते द्यौर्बधान देव सवितः परमस्यां पृथिव्याᳬशतेन पाशैर्योस्मान्द्वेष्टि यं च वयं द्विष्मस्तमतो मा मौक् ॥२६॥**

हामीले अररु नामका दुष्टलाई यहाँबाट निकालिसकेका छौं । हे खनिएको माटो ! तिमी गाईको निवासस्थानमा जाऊ । द्युलोकमा तिमी वर्षा गराऊ । हे सृष्टिकर्ता सवितादेवता ! हाम्रो रिस गर्नेहरूलाई तिमी कहिल्यै छुट्न नसक्ने गरी सयौं किसिमका बन्धनले बाँध ।

गायत्रेण त्वा छन्दसा परिगृह्णामि त्रैष्टुभेन त्वा छन्दसा परिगृह्णामि जागतेन त्वा छन्दसा परिगृह्णामि । सुक्ष्मा चासि शिवा चासि स्योना चासि सुषदा चास्यूर्जस्वती चासि पयस्वती च ॥२७॥

हे यज्ञवेदी ! हामी गायत्री, त्रिष्टुप् र जगती छन्दका मन्त्रले तिमीलाई प्राप्त गर्दछौं । तिमी कल्याणकारिणी, आनन्ददायिनी, पोषक खाद्य एवं पेयले युक्त, बस्नका लागि स्थान उपलब्ध गराउने र सुन्दर भूभागका रूपमा रहेकी छ्यौ ।

पुरा क्रूरस्य विसृपो विरप्शिन्नुदादाय पृथिवीं जीवदानुम् । यामैरयँश्चन्द्रमसि स्वधाभिस्तामु धीरासो अनुदिश्य यजन्ते । प्रोक्षणीरासादय द्विषतो वधोसि ॥२८॥

हे ज्ञानविज्ञानका अधिपति विष्णु ! वीर पुरुषले क्रूर युद्धमा आफ्नो सर्वस्व होम्दछन्, तर त्यसभन्दा पहिले नै विवेकवान्ले शक्ति र साधनलाई यज्ञका लागि प्रयोग गर्नुपर्दछ । उनीहरू आफूले धारण गरेको स्वधा शक्तिका माध्यमले भूमिलाई चन्द्रमातर्फ प्रेरित गर्दछन् । हे विज्ञानवेत्ता साधकहरू हो ! पवित्र गराउने जलपात्र नजिकै राख । तिमीहरू रिसडाहा गर्नेहरूका विनाशक हौ ।

प्रत्युष्टꣳ रक्षः प्रत्युष्टाऽ अरातयो निष्टप्तꣳ रक्षो निष्टप्ताऽ अरातयः । अनिशितोसि सपत्नक्षिद्वाजिनं त्वा वाजेध्यायै सम्मार्ज्मि । प्रत्युष्टꣳ रक्षः प्रत्युष्टाऽ अरातयो निष्टप्तरक्षो निष्टप्ताऽ अरातयः । अनिशितासि सपत्नक्षिद्वाजिनीं त्वा वाजेध्यायै सम्मार्ज्मि ॥२९॥

राक्षसी र अनुदार चरित्रकाहरू जति थिए ती सबै डढेर नाश भइसके । त्यसो हुँदा हामी याजकहरू व्यापक क्षेत्रमा यज्ञका लागि प्रवेश गर्दछौं । हे स्रुवा र स्रुची नामका यज्ञपात्र हो ! शत्रु नाश गर्नमा र अन्न दिनमा तिमीहरू समर्थ छौ । तिमीहरूलाई अन्न र बल प्राप्तिका लागि हामी पवित्र गराउँछौ ।

अदित्यै रास्नासि विष्णोर्वेष्पोस्यूर्जे त्वादब्धेन त्वा चक्षुषावपश्यामि । अग्नेर्जिह्वासि सुहूर्देवेभ्यो धाम्ने धाम्ने मे भव यजुषे यजुषे ॥३०॥

तिमी पृथ्वीको रसरूपी सारतत्त्व हौ । तिमी अग्निको जिब्रोरूपी लप्का हौ । हाम्रा प्रत्येक यज्ञमा र प्रत्येक घरमा देवतालाई आह्वान गरिदेऊ । तिमी सर्वव्यापी परमात्माको निवास-स्थलजस्तै छौ । हामी अन्न र बल प्राप्त गर्नका लागि तिमीलाई आँखा नझिम्क्याई हेरिरहन्छौं ।

सवितुस्त्वा प्रसवऽ उत्पुनाम्यच्छिद्रेण पवित्रेण सूर्यस्य रश्मिभिः । सवितुर्वः प्रसवऽ उत्पुनाम्यच्छिद्रेण पवित्रेण सूर्यस्य रश्मिभिः । तेजोसि शुक्रमस्यमृतमसि धाम नामासि प्रियं देवानामनाधृष्टं देवयजनमसि ॥३१॥

हामी याजकहरू सवितादेवताका प्रेरणाले, तेजस्वी सूर्यका रश्मिका माध्यमबाट तिमीहरूलाई शुद्ध गराउँछौं । तिमीहरू तेजरूप, प्रकाशरूप, अमृतरूप हौ र दिव्य आवास तथा कसैका दमनमा नपर्ने खालका छौ । त्यसैले देवताहरूका प्रिय यज्ञका साधनका रूपमा रहेका छौ ।

॥ इति प्रथमोऽध्यायः ॥

॥पहिलो अध्याय सकियो ॥

ॐ

भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।

# वाजसनेयि माध्यन्दिन शुक्ल

# यजुर्वेद – संहिता

## ॥अथ द्वितीयोऽध्यायः॥

॥दोस्रो अध्याय॥

**ऋषि–** परमेष्ठी प्रजापति, देवगण, विश्वावसु, बृहस्पति आङ्गिरस, कपि, देवल, सोमशुष्म, शूर्प, यवमान, कृषि, उद्दालवान्, धानान्तवान्, मनसस्पति, प्रजापति ।

**देवता–** इध्म, लिङ्गोक्त, आपः, जल, प्रस्तर, वेदिका, परिधि, मेखला, अग्नि, विधृती, प्रस्तर, जुहू, उपभृत, ध्रुवा, हवि, विष्णु, अग्नि, देवगण, पितर, स्रुचा, इन्द्र, आज्य, आशीर्वाद, पृथिवी, गौ, सविता, प्राशित्र, विश्वेदेवा, अग्निसोम, इन्द्राग्नी, यज्ञ, दक्षिणाग्नि, गार्हपत्य, वेद, वात, प्रजापति, राक्षस, त्वष्टा, विष्णु भाग, भूमि, देवगण, आहवनीय, सूर्य, असुर, कव्यवाहन अग्नि, पितर ।

**छन्द–** निचृत् पङ्क्ति, स्वराट् जगती, भुरिक् आर्ची शिष्टुप, भुरिक आर्ची पङ्क्ति, पङ्क्ति, निचृत गायत्री, निचृत ब्राह्मी बृहती, ब्राह्मी त्रिष्टुप, निचृत त्रिष्टुप, बृहती, बिराट् ब्राह्मी पङ्क्ति, जगती, भुरिक ब्राह्मी पङ्क्ति, ब्राह्मी बृहती, भुरिक् बृहती, बिराट् जगती, अनुष्टुप, भुरिक आर्ची गायत्री, ब्राह्मी बृहती, निचृत् अतिजगती, भुरिक् आर्ची पङ्क्ति, भुरिक त्रिष्टुप, निचृत जगती, स्वराट् त्रिष्टुप, भुरिक पङ्क्ति, भुरिक् ब्राह्मी त्रिष्टुप, भुरिक ब्राह्मी बृहती, बिराट् त्रिष्टुप, निचृत बृहती, निचृत आर्ची पङ्क्ति, आर्ची पङ्क्ति, भुरिक जगती, उष्णिक, निचृत पङ्क्ति, गायत्री, भुरिक उष्णिक, स्वराट् आर्षी अनुष्टुप, ब्राह्मी बृहती, स्वराट् बृहती ।

**कृष्णोस्याखरेष्ठोग्नये त्वा जुष्टं प्रोक्षामि वेदिरसि बर्हिषे त्वा जुष्टं प्रोक्षामि बर्हिरसि स्रुग्भ्यस्त्वा जुष्टं प्रोक्षामि ॥१॥**

यज्ञका निमित्त प्रयोग हुने गरेका हे समिधाहरू हो ! यज्ञका निम्ति हामीले तिमीहरूलाई पवित्र बनाएका छौं । हे यज्ञवेदी ! यज्ञकार्य सफल पार्नका लागि तिमीलाई पवित्र गराएका छौं । स्रुचाहरूको प्रयोग गर्ने प्रेरणा दिने आधाररूपी बर्हि नामका कुशहरू हो ! हामी तिमीहरूलाई पवित्र गराउँछौं ।

**अदित्यै व्युन्दनमसि विष्णोः स्तुपोस्यूर्णम्म्रदसं त्वा स्तृणामि स्वासस्थां देवेभ्यो भुवपतये स्वाहा भुवनपतये स्वाहा भूतानां पतये स्वाहा ॥२॥**

हे यज्ञको काम सकेर बचेका जल ! यज्ञ, पृथ्वी र विविध औषधिको गुणले युक्त पदार्थलाई तिमी सेचन गर्दछौं । हे स्तुपको आकारमा बाँधिएका कुशहरू हो ! देवताहरूका निम्ति ऊनजस्तो कोमल रूपमा आसन बनाएर तिमीहरूलाई हामी

फिंजाउँछौँ । हे याजकहरू हो ! तिमी पृथ्वीका र अन्य सबै लोकका प्राणीहरूका पालनकर्ताका निम्ति सर्वस्व समर्पण गर ।

**गन्धर्वस्त्वा विश्वावसुः परिदधातु विश्वस्यारिष्ट्यै यजमानस्य परिधिरस्यग्निरिडऽ ईडितः । इन्द्रस्य बाहुरसि दक्षिणो विश्वस्यारिष्ट्यै यजमानस्य परिधिरस्यग्निरिडऽ ईडितः । मित्रावरुणौ त्वोत्तरतः परिधत्तां ध्रुवेण धर्मणा विश्वस्यारिष्ट्यै यजमानस्य परिधिरस्यग्निरिडऽ ईडितः ॥३॥**

संसारको अनिष्ट निवारण गर्नका लागि हामी अग्निको स्तुति गर्दछौँ । हे अग्नि ! तिमी याजकको सुरक्षा गर्दछौ । विश्वावसु गन्धर्वले तिमीलाई चारै तिरबाट सम्हालून् । तिमी याजकहरूका रक्षक इन्द्रदेवताका दाहिने भुजाजस्तै छौ । हे यजमानका रक्षक ! मित्रावरुणले धर्मपूर्वक तिमीलाई धारण गरून् ।

**वीतिहोत्रं त्वा कवे द्युमन्तथं समिधीमहि । अग्ने बृहन्तमध्वरे ॥४॥**

हे भूत र भविष्यको ज्ञान भएका क्रान्तदर्शी अग्निदेवता ! ऐश्वर्य प्राप्तिका कामना गर्ने तेजस्वी महान् याजकले तिमीलाई यज्ञमा प्रज्वलित गर्दछन् ।

**समिदसि सूर्यस्त्वा पुरस्तात् पातु कस्याश्चिदभिशस्त्यै । सवितुर्बाहू स्थऽ ऊर्णम्रदसं त्वा स्तृणामि स्वासस्थं देवेभ्यऽ आत्वा वसवो रुद्राऽ आदित्याः सदन्तु ॥५॥**

हे समिधा ! तिमी अग्निलाई प्रदीप्त गराउँछौ । सवितादेवताले तिम्रो रक्षा गरून् । हे कुशका दुई टुक्राहरू हो ! तिमीहरू सवितादेवताका दुई भुजाजस्तै छौ । ऊनीले बनेको कोमल आसनका रूपमा देवताहरूलाई सुबिस्ताले बस्नका लागि तिमीहरूलाई फिंजाउँछौँ । वसुगण, मरुत्गण र रुद्रगण तिमीहरूमाथि स्थापित होऊन् ।

**घृताच्यसि जुहूर्नाम्ना सेदं प्रियेण धाम्ना प्रियथं सदऽ आसीद घृताच्यस्युपभृन्नाम्ना सेदं प्रियेण धाम्ना प्रियथं सदऽ आसीद घृताच्यसि ध्रुवा नाम्ना सेदं प्रियेण धाम्ना प्रियथं सदऽ आसीद प्रियेण धाम्ना प्रियथं सदऽ आसीद । ध्रुवा असदन्नृतस्य योनौ ता विष्णो पाहि पाहि यज्ञं पाहि यज्ञपतिं पाहि मां यज्ञन्यम् ॥६॥**

हे जुहू नामका पात्र ! तिमी आफ्ना लागि प्रिय घिउले भरिपूर्ण भएर घिउ प्रदान गर्नका लागि यस अग्निमा स्थापित भएका छौ । हे उपभृत् नामका पात्र ! तिमी आफ्ना घिउले युक्त भएर आफ्ना प्रिय यज्ञस्थलमा स्थापित छौ । हे ध्रुवा नामका पात्र ! तिमी आफ्नो प्रिय घिउले सिञ्चित भएर यज्ञस्थलमा स्थापित भएका छौ । हे यज्ञस्थलमा स्थापित विष्णुदेवता ! तिमी यज्ञस्थलमा स्थापित सबै खालका साधन, उपकरण, यज्ञकर्ताहरूको र हाम्रो रक्षा गर ।

**अग्ने वाजजिद्वाजं त्वा सरिष्यन्तं वाजजितथं सम्मार्ज्मि । नमो देवेभ्यः स्वधा पितृभ्यः सुयमे मे भूयास्तम् ॥७॥**

अन्न प्रदान गर्ने हे अग्निदेवता ! अन्न प्राप्तिको माध्यम र पुरुषार्थीले तिमीलाई शोधन गर्दछन् । देवता र पितृहरूलाई अन्न दिएर तिमीलाई नमस्कार गर्दछौँ । तिमी हाम्रा सहायक होऊ ।

**अस्कन्नमद्य देवेभ्यऽ आज्यथ्ं संभ्रियासमङ्घ्रिणा विष्णो मा त्वावक्रमिषं वसुमतीमग्ने ते च्छायामुपस्थेषं विष्णोः स्थानमसीतऽ इन्द्रो वीर्यमकृणोदूर्ध्वोध्वरऽ आस्थात् ॥८॥**

हे यज्ञका अग्नि ! यज्ञस्थललाई हामी आफ्ना गोडाले अपवित्र गराउँदैनौं । देवताहरूलाई समर्पित गर्नका लागि आज हामीले पवित्र घिउ ल्याएका छौं । हे अग्निदेवता ! इन्द्रदेवताले आफ्ना पराक्रमले यज्ञलाई उन्नति गराएका थिए । यज्ञस्थलमा रहेर अन्न प्रदान गर्ने हामी याजकहरू सधैं तिम्रा नजिकै रहन पाऔं ।

**अग्ने वेर्होत्रं वेर्दूत्यमवतां त्वां द्यावापृथिवी अव त्वं द्यावापृथिवी स्विष्टकृद्देवेभ्यऽ इन्द्रऽ आज्येन हविषा भूत्स्वाहा सं ज्योतिषा ज्योतिः ॥९॥**

हे अग्निदेवता ! हवनकार्यको विधिव्यवस्था तिमीले राम्ररी जानेका छौ । तिमीले नै देवताकहाँ हविको भाग पुऱ्याउने गरेका छौ । तिमी द्युलोक र भूलोकको नै रक्षा गर । हाम्रो घिउरूपी हविले देवताहरूसहित इन्द्र सन्तुष्ट होऊन् । ज्योतिबाट नै ज्योतिको एकीकरण होस् ।

**मयीदमिन्द्रऽ इन्द्रियं दधात्वस्मान् रायो मघवानः सचन्ताम् । अस्माकथ्ं सन्त्वाशिषः सत्या नः सन्त्वाशिषऽ उपहूता पृथिवी मातोपमां पृथिवी माता ह्वयतामग्निराग्नीध्रात्स्वाहा ॥१०॥**

हे इन्द्रदेवता ! हाम्रो मनोकामना पूरा होस् । हामी सबै किसिमका ऐश्वर्यले युक्त होऔं । हामी पराक्रमी हुन सकौं । हाम्रा इच्छाहरू सत्य फलयुक्त होऊन् । पृथ्वीलाई हामीले माताको जस्तै स्तुति गरेका छौं । यसले हामीलाई यज्ञाग्नि प्रदीप्त गराउन सक्ने तेजस्वी बनाएर लोकहितमा समर्पित हुने अनुमति देओस् ।

**उपहूतो द्यौष्पितोप मां द्यौष्पिता ह्वयतामग्निराग्नीध्रात्स्वाहा । देवस्य त्वा सवितुः प्रसवेश्विनोर्बाहुभ्यां पूष्णो हस्ताभ्याम् । प्रतिगृह्णाम्यग्नेष्ट्वास्येन प्राश्नामि ॥११॥**

द्युलोकलाई पालन गर्ने सवितादेवतालाई हामी अध्वर्युहरूले स्तुति गरेका छौं । त्यसैले द्युलोकका स्वामीले यज्ञको अवशेष ग्रहण गर्ने अनुमति दिऊन् । अग्निको अनुकूलताले हामी यज्ञको अवशेष ग्रहण गर्दछौं । यो यज्ञावशेष आहुतिका रूपमा रहेर उन्नति गराउने होस् । सवितादेवताका प्रेरणाले अश्विनीकुमारहरूका बाहु र पूषादेवताका हातका सहायताले हामी यज्ञको यो अवशेष ग्रहण गर्दछौं । अग्निका मुखबाट हामी भक्षण गर्दछौं ।

**एतन्ते देव सवितर्यज्ञं प्राहुर्बृहस्पतये ब्रह्मणे । तेन यज्ञमव तेन यज्ञपतिं तेन मामव ॥१२॥**

हे सृष्टिकर्ता सवितादेवता ! यजमानहरू तिम्रै निम्ति यज्ञको यो अनुष्ठान गरिरहेका छन् । त्यसैले तिमी यस यज्ञको, यजमानको र हामी यज्ञ सञ्चालकहरूको रक्षा गर ।

**मनो जूतिर्जुषतामाज्यस्य बृहस्पतिर्यज्ञमिमं तनोत्वरिष्टं यज्ञथ्ं समिमं दधातु । विश्वे देवासऽ इह मादयन्तामोऽम्प्रतिष्ठ ॥१३॥**

हे सवितादेवता ! तिम्रा वेगवान् मनले आज्यको सेवन गरोस् । बृहस्पतिदेवताले यस यज्ञलाई अनिष्टरहित बनाएर यसको विस्तार गरुन् र धारणपोषण गरुन् । सबै दैवी

शक्तिहरू प्रतिष्ठित भएर आनन्दित र सन्तुष्ट होऊन् । सवितादेवताको तथास्तु कथन प्रतिष्ठित होस् ।

**एषा ते अग्ने समित्तया वर्धस्व चा च प्यायस्व । वर्धिषीमहि च वयमा च प्यासिषीमहि । अग्ने वाजजिद्वाजं त्वा ससृवाᳬं सं वाजजितᳬं सम्मार्ज्मि ॥१४॥**

हे अग्निदेवता ! यो समिधा तिमीलाई प्रज्वलित गर्नका लागि तयार गरिएको छ । हामी याजकहरू तिमीलाई प्रदीप्त गराउँदै स्वयं पनि समृद्ध हुने कामना गर्दछौं । हे अन्नका उत्पादक अग्निदेवता ! तिमीलाई हामी जलसेचन गरेर परिष्कृत गर्दछौं ।

**अग्नीषोमयोरुज्जितिमनूज्जेषं वाजस्य मा प्रसवेन प्रोहामि । अग्नीषोमौ तमपनुदतां योस्मान्द्वेष्टि यं च वयं द्विष्मो वाजस्यैनं प्रसवेनापोहामि । इन्द्राग्न्योरुज्जितिमनूज्जेषं वाजस्य मा प्रसवेन प्रोहामि । इन्द्राग्नी तमपनुदतां योस्मान्द्वेष्टि यं च वयं द्विष्मो वाजस्यैनं प्रसवेनापोहामि ॥१५॥**

अन्नबाट प्रेरित भएपछि सोम र अग्निदेवताले प्राप्त गरेको जस्तै विजय प्राप्त गर्नका लागि हामी तयार भएका छौं । जसले हाम्रो रिस गर्दछन् र जोसित हामी रिस गर्दछौं तिनलाई अग्नि र सोमले पर भगाइदिऊन् । अन्नले प्रेरित भएका हामीहरू इन्द्र र अग्निदेवताले प्राप्त गरेको जस्तै विजय प्राप्त गर्नका लागि प्रेरित भएका छौं । जसले हामीसित रिस गर्दछन् र जोसित हामी रिस गर्दछौं उनलाई इन्द्र र अग्निदेवताले पर हटाइदिऊन् । हामी हविष्यान्नका प्रेरणाले शत्रुलाई पर भगाउँछौं ।

**वसुभ्यस्त्वा रुद्रेभ्यस्त्वादित्येभ्यस्त्वा संजानाथां द्यावापृथिवी मित्रावरुणौ त्वा वृष्ट्यावताम् । व्यन्तु वयोक्तं रिहाणा मरुतां पृषतीर्गच्छ वशा पृश्निर्भूत्वा दिवं गच्छ ततो नो वृष्टिमावह । चक्षुष्पाऽ अग्नेसि चक्षुर्मे पाहि ॥१६॥**

हामी वसुहरूलाई, रुद्रहरूलाई र आदित्यहरूलाई क्रमैसँग यी तीन परिधिहरू समर्पित गर्दछौं । यो कुरो द्युलोक र पृथ्वीलोकका शक्तिहरूले जानेका छन् । मित्रावरुणले वर्षाबाट तिनको रक्षा गरुन् । घिउले युक्त हव्यको स्वाद लिंदै पक्षीरूपी यज्ञीय ऊर्जाले मरुत्‌हरूको अनुगमन गर्दै स्वाधीन किरणमा परिवर्तित भएर द्युलोकमा पुगून् । त्यहाँबाट वर्षा लिएर आऊन् हे यज्ञाग्नि ! तिमी नेत्रका रक्षक हौ त्यसैले हाम्रा नेत्रको रक्षा गर ।

**यं परिधिं पर्यधत्थाऽ अग्ने देव पणिभिर्गुह्यमानः । तं तऽ एतमनु जोषं भराम्येष नेत्त्वदपचेतयाताऽ अग्नेः प्रियं पाथोपीतम् ॥१७॥**

हे अग्निदेवता ! तिमीले पणी नामका शत्रु व्यापारीबाट जोगाउनका लागि चारैतिर सीमा लगाएका थियौ । त्यस चारसीमाको घेरो तिमीबाट पर नहोस् भनेर हामी तिम्रै अनुकूल बनाउँछौं । यो प्रिय हविष्यान्न तिमीलाई प्राप्त होस् ।

**सᳬं स्रवभागा स्थेषा बृहन्तः प्रस्तरेष्ठाः परिधेयाश्च देवाः । इमां वाचमभि विश्वे गृणन्तऽ आसद्यास्मिन् बर्हिषि मादयध्वᳬं स्वाहा वाट् ॥१८॥**

हे विश्वेदेवता हो ! तिमीहरू आफ्नो परिधिका आश्रयमा बस । आफ्नै आसनमा बसेर मधुर रसले युक्त अन्नको भाग ग्रहण गरी पुष्ट हुँदै आनन्द मान । तिमीहरू यसै घोषणाअनुसारको कार्य गर ।

**घृताची स्थो धुर्यौ पातꣳ सुम्ने स्थः सुम्ने मा धत्तम् । यज्ञ नमश्च तऽ उप च यज्ञस्य शिवे संतिष्ठस्व स्विष्टे मे संतिष्ठस्व ॥१९॥**

हे जुहू र उपभृत् नामका घिउका पात्रहरू हो ! तिमीहरू घिउले परिपूर्ण होओ । हे गाडा तान्ने वाहनहरू हो ! तिमीहरू धुरामा बाँधिएका बेला सबैको रक्षा गर । हे यज्ञवेदी ! यो हविष्यान्न तिम्रा निकटमा ल्याइएको छ । तिमी सुखका रूप हौ । त्यसैले यज्ञ पुरा गराउनका लागि हाम्रो इष्ट बनेर हामीलाई सुख प्रदान गर्दै यहाँ स्थापित होऊ ।

**अग्नेदब्धायोशीतम पाहि मा दिद्योः पाहि प्रसित्यै पाहि दुरिष्ट्यै पाहि दुरद्मन्या अविषं नः पितुं कृणु । सुषदा योनौ स्वाहा वाडग्नये संवेशपतये स्वाहा सरस्वत्यै यशोभगिन्यै स्वाहा ॥२०॥**

हे तेजस्वी ! हे आयु प्रदान गर्ने ! हे सर्वव्यापक अग्निदेवता ! शत्रुको शस्त्र र तिनका जालबाट हामीलाई रक्षा गर, हामीलाई विनाशबाट जोगाऊ । हामीलाई विखालु भोजनबाट जोगाऊ । हाम्रो अन्न पवित्र गराऊ । आफ्ना निवासमा सुख र आनन्दले रहेर हाम्रो मार्ग विशाल गराऊ भन्ने हामी प्रार्थना गर्दछौं । हाम्रा निकटमा रहने गरेका तिमी अग्निका लागि हामी यो आहुति चढाउँछौं । यज्ञको बहिनीका रूपमा रहेकी वाणीरूपी सरस्वतीलाई यो आहुति हामीले प्रदान गरेका छौं ।

**वेदोसि येन त्वं देव वेद देवेभ्यो वेदोभवस्तेन मह्यं वेदो भूयाः । देवा गातुविदो गातुं वित्त्वा गातुमित । मनसस्पतऽ इमं देव यज्ञꣳ स्वाहा वाते धाः ॥२१॥**

हे वेद ! तिमी ज्ञानका स्वरूप हौ । देवताहरूलाई ज्ञानवान् बनाएझैं हामीलाई पनि ज्ञान प्रदान गर । हे मार्गदर्शक देवताहरू हो ! सन्मार्ग चिनेर सत्यका पथमा अगाडि बढौं । हे मनका परिपालक देवता ! यो यज्ञ तिमीलाई समर्पित गरेका छौं, वायुका माध्यमबाट यसलाई तिमी विस्तृत गराऊ ।

**संबर्हिरङ्क्ताꣳ हविषा घृतेन समादित्यैर्वसुभिः सम्मरुद्भिः । समिन्द्रो विश्वदेवेभिरङ्क्तां दिव्यं नभो गच्छतु यत् स्वाहा ॥२२॥**

हे इन्द्रदेवता ! कुशको यो मुठो यज्ञका लागि ल्याइएका घिउले भिजाएर समर्पित गर्दै छौं । यसलाई आदित्य, वसुहरू, मरुत् तथा सबै देवताहरूसँग दिव्य आकाशमा स्थापित गराऊ ।

**कस्त्वा विमुञ्चति स त्वा विमुञ्चति कस्मै त्वा विमुञ्चति तस्मै त्वा विमुञ्चति । पोषाय रक्षसां भागोसि ॥२३॥**

तिमीलाई कसले छोडेको हो ? तिमीलाई उनै सृष्टिकर्ताले छोडेका हुन । तिमीलाई किन छोडिएको हो ? तिमीलाई यज्ञ र याजकको हितका लागि छोडिएको हो । यज्ञमा छरिएको र पोखिएको अन्न राक्षसको भागका रूपमा त्यागिएको हो ।

**सं वर्चसा पयसा सं तनूभिरगन्महि मनसा सꣳ शिवेन । त्वष्टा सुदत्रो विदधातु रायोनुमार्ष्टु तन्वो यद्विलिष्टम् ॥२४॥**

हाम्रो शरीर तेजस्विता र पोषक तत्त्वले युक्त होस । हाम्रो मन कल्याणकारी भावनाले युक्त होस । शरीरमा रहेको कमी सबै पूरा होस । श्रेष्ठता प्रदान गर्ने त्वष्टाले हामीलाई अनेकौं किसिमका ऐश्वर्य प्रदान गरुन् ।

**दिवि विष्णुर्व्यक्रꣳस्त जागतेन छन्दसा ततो निर्भक्तो योस्मान्द्वेष्टि यं च वयं द्विष्मोन्तरिक्षे विष्णुर्व्यक्रꣳस्त त्रैष्टुभेन छन्दसा ततो निर्भक्तो योस्मान्द्वेष्टि यं च वयं द्विष्मः पृथिव्यां विष्णुर्व्यक्रꣳस्त गायत्रेण छन्दसा ततो निर्भक्तो योस्मान्द्वेष्टि यं च वयं द्विष्मोस्मादन्नादस्यै प्रतिष्ठायाऽ अगन्म स्वः सं ज्योतिषाभूम ॥२५॥**

पोषणका देवता विष्णुले जगती छन्दका मन्त्रले द्युलोकमा, त्रिष्टुप छन्दका मन्त्रले अन्तरिक्ष लोकमा र गायत्री छन्दका मन्त्रले पृथ्वीमा विचरण गरेका थिए । यसै कारण जसले हाम्रो रिस गर्दछ र जोसित हामी रिस गर्दछौं तिनीहरूलाई हामीले द्युलोक, अन्तरिक्ष वा पृथ्वीमा समाप्त गरेका छौं । हविष्यान्नका स्थानबाट र पूजाका स्थानबाट त्यस्ता शत्रुहरूलाई हटाइसकेका छौं । यसै किसिमले स्वर्गधाम प्राप्त गरेर हामी तेजस्वी बनौं ।

**स्वयंभूरसि श्रेष्ठो रश्मिर्वर्चोदाऽ असि वर्चो मे देहि । सूर्यस्यावृतमन्वावर्ते ॥२६॥**

हे सवितादेवता ! तिमी तेजस्वरूप हौ । तिमी स्वयं सिद्ध र समर्थ छौ । श्रेष्ठ तेजका रश्मिले युक्त छौ । त्यसैले हामीलाई पनि तेजस्वी बनाऊ । हामी सूर्यको आवर्तनअनुसार स्वयंको पनि आवर्तन गर्न सफल होऔं ।

**अग्ने गृहपते सुगृहपतिस्त्वयाग्नेहं गृहपतिना भूयासꣳ सुगृहपतिस्त्वं मयाग्ने गृहपतिना भूयाः अस्थूरि णौ गार्हपत्यानि सन्तु शतꣳ हिमाः सूर्यस्यावृतमन्वावर्ते ॥२७॥**

हे गृहपति अग्नि ! गृहपालकका रूपमा तिम्रो निकटता पाएर हामी श्रेष्ठ गृहस्वामी बनौं । गृहस्वामीका स्तुतिले तिमी उत्तम गृहपालक बन । हे अग्निदेवता ! हामी दाम्पत्य जीवन निर्वाह गर्दै सय वर्षसम्म यज्ञ गरौं । सूर्यले स्थापना गरेका सबै अनुशासन हामी पालन गरौं ।

**अग्ने व्रतपते व्रतमचारिषं तदशकं तन्मेराधी दमहं यऽ एवास्मि सोस्मि ॥२८॥**

हे व्रतको नियम पालन गर्ने अग्निदेवता ! हामीले पालन गरेका नियमले हामी सामर्थ्यवान बनेका छौं । हाम्रा यज्ञकर्महरू तिमीले सिद्ध गराएका हौ । यज्ञीय कर्म गर्न थाल्दा भएका हाम्रा भावनाहरू अहिले पनि उसै रूपमा छन् ।

**अग्नये कव्यवाहनाय स्वाहा सोमाय पितृमते स्वाहा । अपहताऽ असुरा रक्षाꣳसि वेदिषदः ॥२९॥**

पितृहरूलाई कव्य पुऱ्याउने अग्निदेवताका लागि यो आहुति समर्पित गरिएको छ । पितृहरूका सहचर सोमदेवताका लागि यो आहुति अर्पित गरिएको छ । यज्ञभूमिमा विद्यमान आसुरी शक्ति नाश भइसकेको छ ।

**ये रूपाणि प्रतिमुञ्चमानाऽ असुराः सन्तः स्वधया चरन्ति । परापुरो निपुरो ये भरन्त्यग्निष्टाँल्लोकात्प्रणुदात्यस्मात् ॥३०॥**

पितृहरूलाई समर्पित गरेको अन्न सेवन गर्नका लागि अनेकौं खालका रूप बदल्दै आएर हीन कर्म गर्ने गराउने गरेका सूक्ष्म वा स्थूल आसुरी शक्तिलाई यस पवित्र भूमिबाट टाढा पुऱ्याऔं ।

**अत्र पितरो मादयध्वं यथाभागमावृषायध्वम् । अमीमदन्त पितरो यथाभागमावृषायिषत ॥३१॥**

हे पितृहरू हो ! साँढेले आफ्नो रुचिअनुसारको अन्नभाग पाएर सन्तुष्ट र बलियो भएझैं तिमीहरू पनि आआफ्नो कव्यको भाग प्राप्त गरेर बलिष्ठ र हर्षित तथा आनन्दित होओ ।

**नमो वः पितरो रसाय नमो वः पितरः शोषाय नमो वः पितरो जीवाय नमो वः पितरः स्वधायै नमो वः पितरो घोराय नमो वः पितरो मन्यवे नमो वः पितरः पितरो नमो वो गृहान्नः पितरो दत्त सतो वः पितरो देष्मैतद्वः पितरो वासऽ आधत्त ॥३२॥**

हे पितृहरू हो ! तिमीहरूको रसरूपी वसन्त, शुष्कतारूपी ग्रीष्म, जीवनरूपी वर्षा, अन्नरूपी शरद, पोषणरूपी हेमन्त र उत्साहरूपी शिशिर ऋतुहरूलाई हाम्रो नमस्कार छ । हे पितृहरू हो ! हामीसँग भएका सबै खालका वस्त्र आदि वस्तुहरू तिमीलाई नै समर्पित गर्दछौं । हामीलाई पुत्रपौत्रादिले युक्त गृह प्रदान गर ।

**आधत्त पितरो गर्भं कुमारं पुष्करस्रजम् । यथेह पुरुषोसत् ॥३३॥**

हे पितृहरू हो ! यस पृथ्वीमा वीर पुरुष बन्न सकोस् भनेर तिमीहरू पौष्टिक पदार्थले शरीर बनेका यस सुन्दर बालकलाई पालनपोषण गर ।

**ऊर्जं वहन्तीरमृतं घृतं पयः कीलालं परिस्रुतम् । स्वधा स्थ तर्पयत मे पितॄन् ॥३४॥**

हे जलसमूह ! अन्न, घिउ, दुध र फलफूलमा तिमी रसका रूपमा विद्यमान छौ । त्यसैले अमृतजस्तै सेवनीय र धारकशक्ति बढाउने भएकाले हाम्रा पितृहरूलाई सन्तुष्ट गराओ ।

**॥ इति द्वितीयोऽध्यायः ॥**

॥दोस्रो अध्याय सकियो॥

ॐ

भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।

# वाजसनेयि माध्यन्दिन शुक्ल

# यजुर्वेद – संहिता

## ॥अथ तृतीयोऽध्यायः॥

॥तेस्रो अध्याय॥

ऋषि– विरूप आङ्गिरस, वसुश्रुत, भरद्वाज, सार्पराज्ञी, प्रजापति, तक्षा, जीवल चैलकी, प्रजापति, देवगण, गोतम राहूगण, विरूप, देवश्रवा देववात भारत, वामदेव, अवत्सार, ऋषिगण, मधुच्छन्दा वैशवामित्र, बन्धु, सुबन्धु, श्रुतबन्धु, विप्रबन्धु, बन्धु, ब्रह्मणस्पति, मेधातिथि, सत्यधृति वारुणि, आसुरी, आदित्य, शंयु बार्हस्पत्य, अगस्त्य, और्णवाभ, गोतम, बन्धु, वसिष्ठ, नारायण ।

देवता– अग्नि, वायु, सूर्य, यजमान आशीर्वाद, लिङ्गोक्त, इन्द्राग्नी, गौ, अग्नि, पय, रात्रि, गौ, ब्रह्मणस्पति, आदित्य, इन्द्र, सविता, अग्नि, गार्हपत्य, आहवनीय, दक्षिणाग्नि, आहवनीय, गार्हपत्य, अन्वाहार्यपचन, वास्तु, मरुद्गण, इन्द्र मरुद्गण, यज्ञ, मन, सोम, रुद्र, यजमान आशीर्वाद, क्षुर ।

छन्द– गायत्री, निचृत् गायत्री, दैवी बृहती, निचृत् बृहती, पङ्क्ति, याजुषी पङ्क्ति, गायत्री, भुरिक् गायत्री, विराट् त्रिष्टुप, निचृत् अनुष्टुप, भुरिक् त्रिष्टुप, त्रिष्टुप, निचृत ब्राह्मी पङ्क्ति, जगती, भुरिक् बृहती, उष्णिक, भुरिक् आसुरी गायत्री, गायत्री, विराट् गायत्री, स्वाराट् बृहती पथ्या बृहती, ब्राह्मी उष्णिक, अनुष्टुप, आर्षी पङ्क्ति, भुरिक् जगती, स्वाराट् अनुष्टुप, भुरिक् पङ्क्ति, विराट अनुष्टुप, ब्राह्मी अनुष्टुप, भुरिक् अनुष्टुप, विराट् पङ्क्ति, अतिपाद निचृत् गायत्री, स्वराट् गायत्री, विराट् ब्राह्मी त्रिष्टुप, पङ्क्ति ।

**समिधाग्निं दुवस्यत घृतैर्बोधयतातिथिम् । आस्मिन् हव्या जुहोतन ॥१॥**

हे ऋत्विक हो ! अतिथिजस्तै अग्निदेवतालाई समिधाले सेवा गर् । घिउका रूपमा श्रेष्ठ आहुति समर्पित गर ।

**सुसमिद्धाय शोचिषे घृतं तीव्रं जुहोतन । अग्नये जातवेदसे ॥२॥**

सबल, राम्ररी प्रज्वलित, जाज्वल्यमान, सर्वज्ञ, देदीप्यमान यज्ञाग्निमा हामी शुद्ध घिउ पगालेर आहुति प्रदान गरौं ।

**तं त्वा समिद्भिरङ्गिरो घृतेन वर्धयामसि । बृहच्छोचा यविष्ठ्य ॥३॥**

हे ज्वालाले प्रदीप्त अग्निदेवता ! तिम्रा लागि हामी घिउसहितका समिधा अर्पण गरेर प्रदीप्त गराउँछौं । हे नित्य तरुण अग्निदेवता ! त्यो भएपछि तिमी मास्तिर उरालिने ज्वालाद्वारा प्रकाशमान होऊ ।

**उप त्वाग्ने हविष्मतीर्घृताचीर्यन्तु हर्यत । जुषस्व समिधो मम ॥४॥**

हे अग्निदेवता ! हविद्रव्य र घिउले युक्त भएका समिधा तिमीलाई सधैं प्राप्त हुने गरून् । हे देदीप्यमान् अग्निदेवता ! हामीले प्रदान गरेका समिधा तिमी स्वीकार गर ।

**भूर्भुवः स्वर्द्यौरिव भूम्ना पृथिवीव वरिम्णा । तस्यास्ते पृथिवि देवयजनि पृष्ठेग्निमन्नदमन्नाद्यायादधे ॥५॥**

हे अग्निदेवता ! तिमी पृथ्वीलोकमा अग्निरूप, अन्तरिक्षलोकमा विद्युतरूप र द्युलोकमा सूर्यरूपमा रहेर सर्वत्र विद्यमान छौ । देवताहरूका लागि यज्ञ सम्पन्न गर्ने उपयुक्त स्थान प्रदान गर्ने हे पृथिवी देवी ! देवताहरूलाई हवि प्रदान गर्नका लागि तिमीमाथि बनाइएका यज्ञवेदीमा हामी अग्निदेवतालाई प्रतिष्ठित गर्दछौं । यस कर्मले हामी द्युलोकजस्तै सुविस्तृत र पृथ्वीजस्तै महिमाशाली बन्न सकौं ।

**आयं गौः पृश्निरक्रमीदसदन् मातरं पुरः । पितरं च प्रयन्त्स्वः ॥६॥**

अनेकौं किसिमका रङ्गीविरङ्गी प्रकाशले युक्त भएर तीनै लोकमा विचरण गर्ने अग्निको तेज धारण गरेका, विद्युतजस्तो आभायुक्त गतिमान सूर्यदेव प्रकट भए । सबैभन्दा पहिले उनी माता पृथ्वी, पिता स्वर्ग र अन्तरिक्षलोकमा पुगेर तिनीहरूलाई प्राप्त गर्दछन् ।

**अन्तश्चरति रोचनास्य प्राणादपानती । व्यख्यन्महिषो दिवम् ॥७॥**

यिनको प्रकाश आकाशमा सञ्चरित छ । रश्मिले प्राणबाट अपान प्रक्रिया सम्पन्न गराउँछ । यी महान सूर्यदेव द्युलोकलाई विशेष रूपले प्रकाशित गर्दछन् ।

**त्रिꣳशद्धाम वि राजति वाक्पतङ्गाय धीयते । प्रति वस्तोरह द्युभिः ॥८॥**

सबैका प्रेरक सूर्यदेव दिनका तीस घडीसम्म आफ्ना रश्मिले प्रकाशित हुन्छन् । यी प्रकाशित सूर्यदेवताको प्रार्थना गरिन्छ ।

**अग्निर्ज्योतिर्ज्योतिरग्निः स्वाहा सूर्यो ज्योतिर्ज्योतिः सूर्यः स्वाहा । अग्निर्वर्चो ज्योतिर्वर्चः स्वाहा सूर्यो वर्चो ज्योतिर्वर्चः स्वाहा । ज्योतिः सूर्यः सूर्यो ज्योतिः स्वाहा ॥९॥**

अग्नि तेज हुन् र तेज नै अग्नि हुन्, हामी तेजरूपी अग्निलाई हवि प्रदान गर्दछौं । सूर्य ज्योति हुन् र ज्योति नै सूर्य हुन् । हामी ज्योतिरूप अग्निलाई हवि प्रदान गर्दछौं । अग्नि वर्चस् हुन् र ज्योति पनि वर्चस् हुन् । हामी वर्चस्‌रूप अग्निलाई हवि प्रदान गर्दछौं । सूर्य ब्रह्मतेजका रूप हुन् र ब्रह्मवर्चस् सूर्यका रूप हुन् । हामी सूर्यरूपी ब्रह्मतेजलाई हवि प्रदान गर्दछौं । ज्योति नै सूर्य हुन् र सूर्य नै ज्योति हुन् । हामी उनै सूर्यलाई आहुति प्रदान गर्दछौं ।

**सजूर्देवेन सवित्रा सजू रात्र्येन्द्रवत्या । जुषाणो अग्निर्वेतु स्वाहा । सजूर्देवेन सविचा सजूरुषसेन्द्रवत्या । जुषाणः सूर्यो वेतु स्वाहा ॥१०॥**

सवितादेव र इन्द्रसँग रात्रिसित रहने गरेका अग्निदेवताले यो आहुति ग्रहण गरून् । सवितादेवसँगै इन्द्रसहित उषासँग सम्बद्ध सूर्यदेवतालाई यो आहुति चढाइएको छ ।

**उपप्रयन्तो अध्वरं मन्त्रं वोचेमाग्नये । आरे अस्मे च शृण्वते ॥११॥**

इन्द्रदेवताले हाम्रो भावना सुनिदिन्छन् । उनी यज्ञका नजिकै वा टाढा जहाँ उपस्थित भए पनि उनलाई हामी स्तुति र मन्त्र समर्पित गर्दछौं ।

**अग्निर्मूर्धा दिवः ककुत्पतिः पृथिव्या अयम् । अपाꣳरेताꣳसि जिन्वति ॥१२॥**

सर्वश्रेष्ठ देवता, आकाशका उच्चतम स्थानमा प्रतिष्ठित, पृथ्वीका स्वामी अग्निदेवमा ओज स्थापित गरिएको छ ।

**उभा वामिन्द्राग्नी आहुवध्या उभा राधस सह मादयध्यै । उभा दाताराविषाꣳ रयीणामुभा वाजस्य सातये हुवे वाम् ॥१३॥**

हे इन्द्र र अग्नि ! तिमीहरू दुवैलाई हामी आह्वान गर्दछौं । तिमीहरू हामीलाई धन प्रदान गरेर प्रसन्न गर्दछौ । अन्न र धन प्राप्तिका लागि तिमीहरूलाई यज्ञमा आह्वान गर्दछौं ।

**अयं ते योनिर्ऋत्वियो यतो जातो अरोचथाः । तं जानन्नग्नऽ आरोहाथा नो वर्धया रयिम् ॥१४॥**

हे अग्निदेवता ! प्रातः, मध्याह्न र सायंको समयानुसार उनै गार्हपत्य अग्निलाई आफ्नो उत्पादक मानेर फेरि पनि प्रदीप्त हुनका लागि, यज्ञकार्यको अन्त्य भएपछि तिमी पुनः उसै गार्हपत्य अग्निमा नै प्रविष्ट होऊ । त्यसपछि फेरि यज्ञ गर्नका लागि प्रदीप्त होऊ ।

**अयमिह प्रथमो धायि धातृभिर्होता यजिष्ठो अध्वरेष्वीड्यः । यमप्नवानो भृगवो विरुरुचुर्वनेषु चित्रं विभ्वं विशेविशे ॥१५॥**

देवता बोलाइदिने, यज्ञीय कर्म निर्वाह गर्ने अग्निदेवताले यज्ञमा ऋत्विकहरूको प्रशंसनीय स्तुति प्राप्त गर्दछन् । यज्ञको कार्य गर्न यस यज्ञवेदीमा उनलाई स्थापित गरेका छन् । यजमानको उन्नतिका लागि भृगुवंशी ऋषिले विलक्षण एवं विस्तृत कर्मका सम्पादक अग्निदेवतालाई वनमा प्रज्वलित गरेका थिए ।

**अस्य प्रत्नामनु द्युतꣳ शुक्रं दुदुह्रे अह्रयः । पयः सहस्रसामृषिम् ॥१६॥**

याजकहरू सनातन स्वरूप भएको शुद्ध सोम निकाल्दछन् । त्यस द्रष्टा सोमरसले हजारौं किसिमका धन प्रदान गर्छ ।

**तनूपाऽ अग्नेसि तन्वं मे पाह्यायुर्दाऽ अग्नेस्यायुर्मे देहि वर्चोदाऽ अग्नेसि वर्चो मे देहि । अग्ने यन्मे तन्वा ऊनं तन्मऽ आपृण ॥१७**

हे अग्निदेवता ! तिमी स्वभावैले आफ्ना होताहरूका शरीरको रक्षा गर्दछौ । त्यसैले हाम्रा शरीरको पनि रक्षा गर । हे आयुदाता अग्निदेवता ! हामीलाई आयु देऊ । हे अग्निदेवता ! तिमी वैदिक अनुष्ठानबाट तेज प्राप्त गरेर हामीलाई वर्चस् प्रदान गर्दछौ । हे इन्द्रदेवता ! हाम्रा अङ्गहरूको अपूर्णता हटाएर हाम्रो शरीर सर्वाङ्गसम्पन्न गराऊ ।

**इन्धानास्त्वा शतꣳ हिमा द्युमन्तꣳ समिधीमहि । वयस्वन्तो वयस्कृतꣳ सहस्वन्तः सहस्कृतम् । अग्ने सपत्नदम्भनमदब्धासो अदाभ्यम् । चित्रावसो स्वस्ति ते पारमशीय ॥१८॥**

हे अग्निदेवता ! तिमी दीप्तिमान, धनसम्पन्न, अहिंसक, कसैबाट पनि पराजित नहुने छौ । आयुष्मान्, शक्तिसम्पन्न, कसैसित पराजित नहुने गरी तिम्रो कृपा पाएपछि हामी याजकहरू सय वर्षसम्म तिमीलाई प्रज्वलित गरेर झलमल्ल गराउँछौँ । हे रात्रिदेवी ! कल्याण प्राप्तिका लागि हामी यजमानहरू तिम्रा निकट रहन पाऔँ ।

**सं त्वमग्ने सूर्यस्य वर्चसागथाः समृषिणाꣳ स्तुतेन । सं प्रियेण धाम्ना समहमायुषा सं वर्चसा सं प्रजया सꣳ रायस्पोषेण ग्मिषीय ॥१९॥**

हे अग्निदेवता ! तिमी सूर्यको तेज, ऋषिहरूका स्तोत्र र आहुतिले युक्त रहेका छौ । हामी पनि तिम्रो कृपा पाएर दीर्घायु, सुशिक्षा, ऐश्वर्ययुक्त तेज र पुत्रपौत्रादि सहित धनधान्य आदि पोषणले सम्पन्न हुन सकौँ ।

**अन्धस्थान्धो वो भक्षीय महस्थ महो वो भक्षीयोर्जस्थोर्जं वो भक्षीय रायस्पोषस्थ रायस्पोषं वो भक्षीय ॥२०॥**

हे गाईहरू हो ! तिमीहरू अन्नका स्रोत हौ । तिमीहरूका कृपाले हामी विभिन्न किसिमका अन्न आदि सेवन गरौँ । तिमीहरू पूज्य भएर हामीलाई पूज्यभावको प्रसिद्धि प्राप्त गराओ । तिमीहरू बलवान् छौ । तिमीहरूका कृपाले हामीलाई बल प्राप्त होस् । तिमीहरू धनका रूप हौ । तिमीहरूका कृपाले हामीलाई धनधान्य आदिको पोषण प्राप्त होस् ।

**रेवती रमध्वमस्मिन्योनावस्मिन् गोष्ठेस्मिँल्लोस्मिन् क्षये । इहैव स्त मापगात ॥२१॥**

हे धनसम्पन्न गाईहरू हो ! अग्निहोत्रका समयमा तिमीहरू आनन्दपूर्वक बस । दुध दुहुनुभन्दा पहिले नै तिमीहरू गोठमा पुग र यजमानका आँखाले देख्न पाउने ठाउँमै रहिराख । राति यजमानका घरमा सुखपूर्वक निवास गर र तिमीहरू यजमानको घर नछोड टाढा नजाओ त्यहीँ बस्ने गर ।

**सꣳहितासि विश्वरुप्यूर्जामाविश गौपत्येन । उप त्वाग्ने दिवेदिवे दोषावस्तर्द्धिया वयम् । नमो भरन्तऽ एमसि ॥२२॥**

हे गाईहरू हो ! काला, सेता अनेकौँ रूपरङ्गका तिमीहरू दुध आदि द्रव्य प्रदान गर्दै यज्ञकार्यसित संयुक्त रहेका छौ । दुध आदि बलवर्द्धक रस प्रदान गर्ने गाईका धनी यजमानलाई तिमीहरू आफ्ना स्वामीका रूपमा प्रतिष्ठित गराओ । रातदिन वास गरिरहेका हे गार्हस्पत्य अग्निदेवता ! हामी यजमानहरू सधैँ श्रद्धाभावले झुकेर तिम्रा नजिकै आउँछौँ ।

**राजन्तमध्वराणां गोपामृतस्य दीदिविम् । वर्धमानꣳ स्वे दमे ॥२३॥**

प्रकाशयुक्त, यज्ञका रक्षक, सत्य वचनरूपी व्रतमा प्रेरित गर्ने, यज्ञस्थलमा हुर्कने, यज्ञले खुसी हुने अग्निदेवतालाई स्तुति गर्दै हामी गृहस्थहरू उनैका नजिक आएका छौँ ।

**स नः पितेव सूनवेऽ ग्ने सूपायनो भव । सचस्वां नः स्वस्तये ॥२४॥**

हे गृहस्थका स्वामी अग्नि ! पुत्रले पितालाई सजिलै भेटेझैँ हामी यजमानका लागि बिनाबाधा तिमी प्राप्त होऊ । हाम्रो कल्याणका लागि तिमी हाम्रा नजिकै रहिदेऊ ।

**अग्ने त्वं नो अन्तमऽ उत त्राता शिवो भवा वरूथ्यः । वसुरग्निर्वसुश्रवाऽ अच्छा नक्षि द्युमत्तमथ्ँ रयिं दाः ॥२५॥**

हे अग्निदेवता ! तिमी हाम्रा अति नजिकै असल संरक्षक र मङ्गलकारी भएर रहन्छौ । सबैलाई आश्रय दिने, धनवान्हरूमा प्रथम हे अग्निदेवता ! तिमी हाम्रा नजिकै सहजै आऊ र तेजस्वितायुक्त भएर हामीलाई धन प्रदान गर ।

**तन्त्वा शोचिष्ठ दीदिवः सुम्नाय नूनमीमहे सखिभ्यः । स नो बोधि श्रुधी हवमुरुष्या णो अघायतः समस्मात् ॥२६॥**

हे तेजस्वी र प्रकाशवान् अग्निदेवता ! मित्र आदि स्नेही आफन्तका लागि सुखको कामना गर्दै निश्चित रूपमा हामी तिम्रो प्रार्थना गर्दछौँ । हे अग्निदेवता ! हामीहरूलाई तिमी चिन, हाम्रो आह्वान सुन र समस्त पापीबाट रक्षा गर ।

**इडऽएह्यदितऽएहि काम्याऽएत । मयि वः कामधरणं भूयात् ॥२७॥**

हे इडाका रूपमा रहेका गाईहरू हो ! इडा र मनुझैँ तिमीहरू हाम्रा यज्ञमा आओ । हे अदितिका रूपमा रहेका गाईहरू हो ! अदिति र आदित्यझैँ तिमीहरू पनि हाम्रा यज्ञस्थलमा आओ । हे अभीष्ट रूपी गाईहरू हो ! यहाँ आएर तिमीहरूले हाम्रा मनको रहर पूरा गराओ ।

**सोमानथ्ँ स्वरणं कृणुहि ब्रह्मणस्पते । कक्षीवन्तं यऽ औशिजः ॥२८॥**

हे सम्पूर्ण ज्ञानका अधिपति ब्रह्मणस्पतिदेवता ! सोमरस सेवन गराउने यजमानलाई तिमी उशिज्का पुत्र औशज अर्थात् कक्षीवान्लाई जस्तै उत्तम प्रकाशका शक्तिले सम्पन्न गराइदेऊ ।

**यो रेवान्योऽ अमीवहा वसुवित् पुष्टिवर्धनः । स नः सिषक्तु यस्तुरः ॥२९॥**

ब्रह्मणस्पतिदेव ऐश्वर्यशाली, रोगनाशक, धनदाता, पुष्टिवर्धक र शीघ्र फलदायक छन् । तिनले हामीमाथि कृपा राखून् ।

**मा नः शथ्ँसोऽ अररुषो धूर्तिः प्रणङ् मर्त्यस्य । रक्षा णो ब्रह्मणस्पते ॥३०॥**

हे ब्रह्मणस्पतिदेवता ! यज्ञ गर्नुको सट्टा अनिष्ट होस् भन्ने विचार भएका दुष्ट शत्रुहरू संहार गर । हामीमाथि दुष्टको प्रभाव नपरोस् । तिमी हाम्रो रक्षा गर ।

**महि त्रीणामवोस्तु द्युक्षं मित्रस्यार्यम्णः । दुराधर्षं वरुणस्य ॥३१॥**

मित्र, वरुण र अर्यमा तीन देवताको तेजस्वी, संयुक्त अवस्थाको संरक्षण हामीलाई प्राप्त होस् । त्यसबाट हामी अर्कालाई पराजित गर्न सक्षम होऔँ ।

**नहि तेषाममा चन नाध्वसु वारणेषु । ईशे रिपुरघशथ्ँसः ॥३२॥**

यी देवताका आश्रयमा रहनेलाई अनिष्टकारी आसुरी शक्तिले केही बिगार्न सक्दैन । देवताका कृपाले उनीहरूको आवास र यात्रा सुरक्षित हुन्छ ।

**ते हि पुत्रासो अदितेः प्र जीवसे मर्त्याय । ज्योतिर्यच्छन्त्यजस्रम् ॥३३॥**

मित्र, अर्यमा र वरुण यी अदितिपुत्रहरूले मानिसलाई दीर्घ जीवनको आधारका रूपमा रहेको अक्षय ज्योति निरन्तर प्रदान गर्दछन् ।

**कदा चन स्तरीरसि नेन्द्र सश्चसि दाशुषे । उपोपेन्नु मघवन् भूयऽ इन्नु ते दानं देवस्य पृच्यते ॥३४॥**

हे इन्द्रदेवता ! तिमी कहिल्यै सृष्टि विखण्डित गर्दैनौ । तिमी याजकका सहयोगी देवता हौ । तिम्रो दान बारम्बार आउँछ, त्यो आशाभन्दा बढी नै प्राप्त भएको हुन्छ ।

**तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि । धियो यो नः प्रचोदयात् ॥३५॥**

आफ्ना तेजले सबै सत्कर्म सम्पदान गराउनका लागि हाम्रा बुद्धिलाई सन्मार्गमा प्रेरित गर्ने सवितादेवताको वरण गर्न योग्य विकृतिनाशक, दिव्यता प्रदायक तेजको हामी ध्यान गर्दछौं ।

**परि ते दूडभो रथोऽस्माँ अश्नोतु विश्वतः । येन रक्षसि दाशुषः ॥३६॥**

कसैबाट पनि प्रभावित नहुने तिम्रो त्यो रथ, जसबाट तिमी दान दिनेहरूको रक्षा गर्दछौ, उसैबाट हामी सबैलाई चारै तिरबाट राम्ररी रक्षा गर ।

**भूर्भुवः स्वः सुप्रजाः प्रजाभिः स्याथं सुवीरो वीरैः सुपोषः पोषैः । नर्य प्रजां मे पाहि शथंस्य पशून्मे पाह्यथर्य पितुं मे पाहि ॥३७॥**

हे सत्य एवं स्थायी आनन्दका रूपमा स्थापित अग्निदेव असल प्रजा र सन्तानले, श्रेष्ठ वीरले र पौष्टिकता प्रदायक अन्नले तिमी सम्पन्न छौ । हे मानिसका हितैषि अग्निदेवता ! हाम्रा सन्तानको रक्षा गर । हे प्रशंसनीय अग्निदेवता ! हाम्रा सहयोगी पशुको रक्षा गर । हे गतिमान् अग्निदेवता ! हाम्रा पोषणकारी अन्नको रक्षा गर ।

**आ गन्म विश्ववेदसमस्मभ्यं वसुवित्तमम् । अग्ने सम्राडभि द्युम्नमभि सहऽ आ यच्छस्व ॥३८॥**

हे दीप्तिसम्पन्न, आह्वान गर्न योग्य अग्निदेवता ! तिमी सर्वज्ञ छौ र यजमानका लागि सर्वाधिक सम्पत्ति धारण गर्दछौ । हे अग्निदेवता ! हामी तिम्रा नजिक आउँदै छौं, हामीलाई बल र ऐश्वर्य प्रदान गर ।

**अयमग्निर्गृहपतिर्गार्हपत्यः प्रजाया वसुवित्तमः । अग्ने गृहपतेभि द्युम्नमभि सहऽ आ यच्छस्व ॥३९॥**

हाम्रा अगाडि रहेका यी अग्नि गृहपति हुन् । यिनले नै हामीलाई पुत्रपौत्रादि र धनधान्य प्रदान गर्दछन् । हे अग्निदेवता ! हामीलाई शक्ति र वैभव प्रदान गर ।

**अयमग्निः पुरीष्यो रयिमान् पुष्टिवर्धनः । अग्ने पुरीष्याभि द्युम्नमभि सहऽ आ यच्छस्व ॥४०॥**

यी दक्षिणाग्नि पशु आदिले युक्त छन् । यिनी ऐश्वर्य र समृद्धिवर्द्धक हुन् । हे पृथ्वीमा रहेका दक्षिणाग्नि ! हामीलाई तिमी शक्ति र ऐश्वर्य प्रदान गर ।

**गृहा मा बिभीत मा वेपध्वमूर्जं बिभ्रतऽ एमसि । ऊर्जं बिभ्रद्वः सुमनाः सुमेधा गृहानैमि मनसा मोदमानः ॥४१॥**

हे आवासगृह तिमी नडराऊ । हामी शक्तियुक्त भएर तिम्रा सामु आउँछौँ । हामी ओजसम्पन्न, श्रेष्ठ बुद्धियुक्त, दुःखरहित र हर्षित हुँदै तिमीकहाँ प्रवेश गर्दछौँ ।

**येषामध्येति प्रवसन्येषु सौमनसो बहुः । गृहानुपह्वयामहे ते नो जानन्तु जानतः ॥४२॥**

हे घर ! अन्यत्र देशमा जानुपर्दा तिम्रा विषयमा मनग्गे सोच्ने गर्दछौँ, हामीलाई तिमी ज्यादै प्रिय छौ । त्यसैले हामी उपस्थित रहेका अवस्थामा तिमीलाई सन्तुष्ट राख्छौँ । घरका अधिष्ठातादेव ज्ञानवान् छन्, उनले हाम्रो यो भावना ग्रहण गरुन् ।

**उपहूताऽइह गावऽउपहूताऽअजावयः । अथो अन्नस्य कीलालऽउपहूतो गृहेषु नः । क्षेमाय वः शान्त्यै प्रपद्ये शिवꣳ शग्मꣳ शंयोः शंयोः ॥४३॥**

हाम्रा घरमा गाईगोरु र भेडाबाख्रालाई सुखपूर्वक रहनका लागि सम्मानपूर्वक हामीले बोलाएका छौँ । घरको समृद्धिका लागि अन्नरसलाई आह्वान गरेका छौँ । कल्याणका लागि र सबै किसिमका अनिष्टबाट जोगिनका लागि हामीले घर प्राप्त गरेका छौँ । यस घरमा नै हामीलाई लौकिक र पारलौकिक सुख प्राप्त होस् ।

**प्रघासिनो हवामहे मरुतश्च रिशादसः । करम्भेण सजोषसः ॥४४॥**

हे शत्रुलाई विनाश गर्ने, प्रघास नामको विशेष किसिमको हवि ग्रहण गर्ने र दही मिश्रित जौको सत्तुलाई हविका रूपमा ग्रहण गर्ने मरुत्हरू हो ! हामी तिमीहरूलाई आह्वान गर्दछौँ ।

**यद्ग्रामे सदरण्ये यत्सभायां यदिन्द्रिये । यदेनश्चकृतमा वयमिदं तदवयजामहे स्वाहा ॥४५॥**

गाउँमा रहँदा, जङ्गलमा रहँदा, सामाजिक कार्य गर्दा अथवा जिब्रो आदि अङ्गले जेजस्तो पापकर्म उब्जाएका वा हामीले गरेका छौँ, त्यो सबै खालको पापलाई यसै आहुतिले विनाश गरिदेओस् ।

**मो षू णऽ इन्द्रात्र पृत्सु देवैरस्ति हि ष्मा ते शुष्मिन्नवयाः । महश्चिद्यस्य मीढुषो यव्या हविष्मतो मरुतो वन्दते गीः ॥४६॥**

हे इन्द्रदेवता ! युद्धमा तिमी हाम्रो पनि साथ नछोड । हे बलशाली इन्द्रदेवता ! तिम्रा लागि यज्ञको भाग प्रस्तुत छ । हामीलाई सुख दिने र प्रतिफल पाइने स्तुतिले अन्न र जल प्रदान गर्ने मरुत्हरूको पनि वन्दना गर्दछन् ।

**अक्रन् कर्म कर्मकृतः सह वाचा मयोभुवा । देवेभ्यः कर्म कृत्वास्तं प्रेत सचाभुवः ॥४७॥**

कर्म गर्ने ऋत्विक्हरूले सुख प्रदान गर्ने खालको वाणीले मन्त्रपाठ गरुन् । आपसमा समानताको भावना राखेर रहेका हे ऋत्विक्हरू हो ! देवताहरूका लागि अनुष्ठान पूरा गरिसकेपछि आआफ्ना घरतिर प्रस्थान गर ।

**अवभृथ निचुम्पुण निचेरुरसि निचुम्पुणः । अव देवैर्देवकृतमेनोयासिषमव मर्त्यैर्मर्त्यकृतं पुरुराव्णो देव रिषस्पाहि ॥४८॥**

अवभृथ यज्ञका रूपमा उँधोतिर प्रवाहित हुने हे जलप्रवाह हो ! तिमीहरू अत्यन्त वेगवान् भए पनि अत्यन्त मन्द गतिमा प्रवाहित भइदेओ । चैतन्य इन्द्रियले देवताप्रति गरेका पापकर्म यस जलमा पखाल्नका लागि आएका छौँ । हे अवभृथ नामका यज्ञदेवता ! दुःखदायी शत्रुबाट हामीलाई जोगाऊ ।

**पूर्णा दर्वि परापत सुपूर्णा पुनरापत । वस्नेव विक्रीणावहा इषमूर्जᳪं शतक्रतो ॥४९॥**

हे काठले बनेका दाबिलाहरू हो ! नजिकै रहेका अन्नले उत्कृष्ट रूपमा तिमीहरू पूरा भएर इन्द्रदेवतर्फ जाओ । कर्मफलले परिपूर्ण भएर फेरि पनि इन्द्रदेवतर्फ नै जाओ । अनेकौँ खालका असल कर्म सम्पन्न गर्ने हे इन्द्रदेवता ! हामीहरू दुवैले निश्चित गरेका मूल्यमा नै यो हविरूपी अन्नको रस परस्परमा क्रयविक्रय गरौँ ।

**देहि मे ददामि ते नि मे धेहि नि ते दधे । निहारं च हरासि मे निहारं निहराणि ते स्वाहा ॥५०॥**

हे यजमान ! तिमी सबैभन्दा पहिले मलाई हवि प्रदान गर । त्यसपछि म तिमीले खोजेको र रोजेको फल प्रदान गर्नेछु । तिमी निश्चित रूपमा हवि प्रदान गर, म निश्चित रूपले तिमीले रुचाएको फल प्रदान गर्नेछु । हे इन्द्रदेवता ! म तिम्रा लागि पक्कै हवि प्रदान गर्नेछु, तिमी त्यसको प्रतिफल अवश्य प्रदान गर ।

**अक्षन्नमीमदन्त ह्यव प्रियाऽ अधूषत । अस्तोषत स्वभानवो विप्रा नविष्ठया मती योजा न्विन्द्र ते हरी ॥५१॥**

हे इन्द्रदेवता ! तिम्रो अन्नले तृप्त भएका ब्राह्मणहरूले आफ्नो आनन्द व्यक्त गर्दै शिर हल्लाए । त्यसपछि उनीहरूले अरू नयाँ स्तोत्र पाठ गरे । अब तिमी यज्ञमा प्रस्थान गर्नका लागि रथमा अश्व नियोजित गर ।

**सुसंदृशं त्वा वयं मघवन्वन्दिषीमहि । प्र नूनं पूर्णवन्धुरः स्तुतो यासि वशाँ२ऽ अनु योजा न्विन्द्र ते हरी ॥५२॥**

हे ऐश्वर्यशाली इन्द्रदेवता ! सबै प्राणीहरूप्रति अनुग्रहको दृष्टि राख्ने भएकाले हामी तिम्रो अर्चना गर्दछौँ । स्तोतालाई दिन तयार गरेका धनले तिम्रो रथ परिपूर्ण छ । तिमी रुचाएका यजमानसमक्ष तुरुन्तै आउँछौ । हे स्तुत्य इन्द्रदेवता ! तिमी हरी नामको अश्व रथमा नियोजित गर ।

**मनो न्वा हवामहे नाराशᳪंसेन स्तोमेन । पितॄणां च मन्मभि ॥५३॥**

हामी श्रेष्ठ पुरुषमा प्रशंसित सोम र पितृ सन्तुष्ट गराउने स्तोत्रले देवता आह्वान गर्छौं ।

**आ नऽ एतु मनः पुन क्रत्वे दक्षाय जीवसे । ज्योक् च सूर्यं दृशे ॥५४॥**

सत्कर्म र कार्यदक्षताका लागि चिरकालसम्म सूर्यदेवताको दर्शन गर्ने मन श्रेष्ठ होस् ।

**पुनर्नः पितरो मनो ददातु दैव्यो जनः । जीवं व्रातथं सचेमहि ॥५५॥**

हाम्रा मनलाई श्रेष्ठताका लागि पितृहरूले पुनः प्रेरित गरून् अनि त्यसैबाट हामी आफ्नो जीवन र प्राण बलियो बनाउन सकौं ।

**वयथं सोम व्रते तव मनस्तनूषु बिभ्रतः । प्रजावन्तः सचेमहि ॥५६॥**

हे सोमदेवता ! हामी याजक तिम्रै अनुरूप कर्मका नियममा आबद्ध रहँदै शरीर र मन लगाउछौं । त्यसले गर्दा हामी सन्तानयुक्त भईकन पोषणमा सक्षम पनि होऔं ।

**एष ते रुद्र भागः सह स्वस्राम्बिकया तं जुषस्व स्वाहैष ते रुद्र भागऽआखुस्ते पशुः ॥५७॥**

हे रुद्रदेवता ! यो पुरोडाशको भाग मैले तिम्रा लागि अर्पित गरेको छु । तिमी आफ्नी बहिनी अम्बिकासँगै सेवन गर । यो तिम्रो घरपालुवा मुसाका लागि दिइएको भाग पनि तिम्रै हो ।

**अव रुद्रमदीमह्यव देवं त्र्यम्बकम् । यथा नो वस्यसस्करद्यथा नः श्रेयसस्करद्यथा नो व्यवसाययात् ॥५८॥**

हे तीन आँखाले तीनै कालका दुष्टको दमन गर्ने रुद्रदेवता ! तिमीलाई अर्पित गरिसकेपछि मात्रै हामी अन्न ग्रहण गर्दछौं । त्यसो गर्नाले हामीलाई असल आवास, व्यवसायमा सफलता र यशकीर्ति प्राप्त होस् ।

**भेषजमसि भेषजं गवेश्वाय पुरुषाय भेषजम् । सुखं मेषाय मेष्यै ॥५९॥**

हे रुद्रदेवता ! तिमी कष्ट निवारण गर्ने औषधिजस्तै सम्पूर्ण आपद्‌हरू निवारण गर्दछौ । त्यसो हुँदा हाम्रा अश्व र आफन्तका सबै किसिमका रोगव्याध निको पार्ने औषधि हामीलाई प्रदान गर । हाम्रा भेडा आदि पशुहरूलाई पनि सुखी वा निरोगी बनाऊ ।

**त्र्यम्बकं यजामहे सुगन्धिं पुष्टिवर्धनम् । ऊर्वारुकमिव बन्धनान्मृत्योर्मुक्षीय मामृतात् । त्र्यम्बकं यजामहे सुगन्धिं पतिवेदनम् । ऊर्वारुकमिव बन्धनादितो मुक्षीय मामुतः ॥६०॥**

सुगन्धित पुण्य, कीर्तिवान्, पुष्टिवर्द्धक र तीन किसिमले संरक्षण प्रदान गर्ने तीन किसिमको दृष्टि भएका भगवान्‌को हामी उपासना गर्दछौं । रुद्रदेवताले हामीलाई काँक्रोखरबुजो आदि उर्वारुक फलले भैं मृत्युको बन्धनबाट मुक्त गरून् र अमरताको सूत्रदेखि पर नपुऱ्याऊन् । पाकेको फल भेटनाबाट आफैं खुस्किएभैं सहजै हामी मृत्युका डरबाट मुक्त हुन सकौं, तर हामी अमरताबाट भने विमुख नहोऔं । हामी संसारका बन्धनहरूबाट मुक्त होऔं तर स्वर्गीय आनन्दबाट होइन ।

**एतत्ते रुद्रावसं तेन परो मूजवतोतीहि । अवततधन्वा पिनाकावसः कृत्तिवासाऽअहिथं सन्नः शिवोतीहि ॥६१॥**

हे रुद्रदेवता ! तिमी आफ्नो बाँकी रहेको हविको अंश लिएर धनुषको प्रत्यञ्चा खुकुल्याउँदै सबै प्राणीलाई भयमुक्त गराउन त्यस धनुषलाई कपडाले छोपेर मूजवान

पर्वतमा रहेका आफ्ना निवासतर्फ जाऊ । हे छालामा बेरिएका रुद्रदेवता ! तिमी कल्याणकारी हुँदै, कष्टबाट जोगाउँदै हाम्रो पूजाले सन्तुष्ट भएर पर्वतभन्दा पल्लोतिर जाऊ ।

**त्र्यायुषं जमदग्नेः कश्यपस्य त्र्यायुषं । यद्देवेषु त्र्यायुषं तन्नो अस्तु त्र्यायुषम् ॥६२॥**

बाल्य, यौवन र वृद्ध यी तीनै किसिमका आयु जमदग्नि, कश्यप र देवताहरूको जस्तै तेजस्वी रूपमा हामीलाई प्राप्त होस् ।

**शिवो नामासि स्वधितिस्ते पिता नमस्ते अस्तु मा माहिंᳮसीः । नि वर्त्तयाम्यायुषेन्नाद्याय प्रजननाय रायस्पोषाय सुप्रजास्त्वाय सुवीर्याय ॥६३॥**

हे रुद्रदेवता ! तिमी आफ्नो छुरा भन्ने नामकै कारण कल्याणकारी छौ । धारयुक्त शस्त्र तिम्रा पिता हुन् । तिमीलाई हामी नमस्कार गर्दछौं । हामीलाई दुःख नदेऊ । हामी आयु, पोषक अन्न, सुसन्तान, ऐश्वर्य वृद्धि, उत्तम प्रजा र श्रेष्ठ पराक्रम प्राप्त गर्नका लागि विशिष्ट सन्दर्भमा तिमीलाई चलाउने प्रयास गर्दछौं ।

## ॥इति तृतीयोऽध्यायः॥

॥तेस्रो अध्याय सकियो॥

ॐ

भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।

# वाजसनेयि माध्यन्दिन शुक्ल

# यजुर्वेद - संहिता

## ॥अथ चतुर्थोऽध्यायः॥

॥चौथो अध्याय॥

**ऋषि**— प्रजापति, स्वस्त्य आत्रेय, आङ्गिरस्, वत्स, अभितपन सूर्य, गोतम ।

**देवता**— देवयजन, कुशतरुण, क्षुर, आपः, जल, वास, नवनीत, अञ्जन, प्रजापति, सविता, आशीर्वाद, यज्ञ, अग्नि, लिङ्गोक्त, सविता, कृष्णाजिन, मेखला, नीवि, कृयाणविषाण, वास, दण्ड, यज्ञ, धी, वाक्, प्राण उदान, चक्षु, श्रोत्र, मित्रावरुण, आदित्य, विश्वेदेवा, लोष्ट, मूत्र, सोम, हिरण्य, आज्य, वाक्, गौ, पत्नी, सोम, अजा, धिष्ण्य नाम, पन्था, सोमवरुण, अनडुत्, सूर्य ।

**छन्द**—विराट् ब्राह्मी जगती, स्वराट् ब्राह्मी त्रिष्टुप्, स्वराट् अनुष्टुप्, निचृत् ब्राह्मी पङ्क्ति, निचृत् आर्षी अनुष्टुप्, पङ्क्ति, आर्षीबृहती, आर्षी अनुष्टुप्, आर्षी पङ्क्ति, निचृत् आर्षी जगती, साम्नी त्रिष्टुप्, स्वराट् ब्राह्मी अनुष्टुप्, आर्षी उष्णिक्, भुरिक् ब्राह्मी अनष्टुप्, भुरिक् आर्षी बृहती, स्वराट् आर्षी उष्णिक्, ब्राह्मी बृहती, भुरिक् आर्षी पङ्क्ति, आर्ची त्रिष्टुप्, स्वराट् आर्षी बृहती, साम्नी जगती, भुरिक आर्षी उष्णिक्, विराट् आर्षी बृहती, ब्राह्मी पङ्क्ति, आस्तार पङ्क्ति, ब्राह्मी जगती, याजुषी पङ्क्ति, भुरिक् शक्वरी, भुरिक् गायत्री, भुरिक् ब्राह्मी पङ्क्ति, साम्नी बृहती, साम्नी उष्णिक्, स्वराट् याजुषी त्रिष्टुप्, आर्षी त्रिष्टुप्, विराट् आर्षी त्रिष्टुप्, निवृत् आर्षी गायत्री, याजुषी जगती, भुरिक् आर्ची गायत्री, भुरिक आर्ची बृहती, विराट आर्ची अनुष्टुप्, निवृत् आर्षी जगती, विराट् ब्राह्मी बृहती, निवृत् आर्षी त्रिष्टुप् ।

**एदमगन्म देवयजनं पृथिव्या यत्र देवासो अजुषन्तविश्वे । ऋक्सामाभ्याꣳ सन्तरन्तो यजुर्भी रायस्पोषेण समिषा मदेम । इमाऽ आपः शमु मे सन्तु देवीरोषधे त्रायस्व स्वधिते मैनꣳ हिꣳसीः ॥१॥**

सबै देवताहरू आनन्दित हुने खालको यज्ञको उत्कृष्ट भूमिमा हामी यजमानहरू भेला भएका छौं । ऋक् र सामवेदका मन्त्रले यज्ञ पूर्ण गर्दै हामी धन र अन्नले सन्तुष्ट हुनेछौं । यो दिव्य जल हाम्रा लागि सुखदायक होस् । हे दिव्य गुणले सम्पन्न औषधि ! हाम्रो रक्षा गर । हे शस्त्र ! तिमी यस यजमान र औषधिलाई हिंसा नगर ।

**आपो अस्मान्मातरः शुन्धयन्तु घृतेन नो घृतप्वः पुनन्तु । विश्वꣳ हिरिप्रम्प्रवहन्ति देवीरुदिदाभ्यः शुचिरा पूत एमि । दीक्षातपसोस्तनूरसि तां त्वा शिवाꣳ शग्मां परिदधे भद्रं वर्णं पुष्यन् ॥२॥**

आमाजस्तै सहयार गर्ने जलले हामीलाई पवित्र बनाओस् । घिउका रूपमा रहेका जलले हाम्रो अशुद्धता निवारण गरोस् । तेजयुक्त यस जलको दिव्यताका दिव्य स्रोतले सबै पाप शोधन गरोस् । जलले शुद्ध र पवित्र बनेर हामी उँभो लाग्न सकौं ।

**महिनां पयोसि वर्चोदाऽ असि वर्चो मे देहि । वृत्रस्यासि कनीनकश्चक्षुर्दाऽ असि चक्षुर्मे देहि ॥३॥**

हे गाईका दुधले बनेका कान्तिप्रद नौनी ! हामीलाई कान्ति प्रदान गर । हे अञ्जन ! तिमी वृत्रका आँखाको पुतलीझैं छौ । हामीलाई हेर्न सक्ने हुनका लागि दृष्टिशक्ति प्रदान गर ।

**चित्पतिर्मा पुनातु वाक्पतिर्मा पुनातु देवो मा सविता पुनात्वच्छिद्रेण पवित्रेण सूर्यस्य रश्मिभिः । तस्य ते पवित्रपते पवित्रपूतस्य यत्कामः पुने तच्छकेयम् ॥४॥**

ज्ञानका अधिपति मनरूपी देवताले हामीलाई शुद्ध गराऊन् । वाणीका स्वामीले हाम्रो वाणी पवित्र गरुन् । दोषरूपी छिद्रविहीन सवितादेवताले हामीलाई शोधित गरुन् । हे पवित्रका अधिपति ! शोधन गरिएका पवित्री साधनले यजमानको अभीष्ट पूरा होस् । सोमयज्ञको अनुष्ठान गर्ने रहरले हामी पवित्र हुने विचार गर्दछौं, हामीलाई यज्ञ गर्ने सामर्थ्य प्राप्त होस् ।

**आ वो देवासऽ ईमहे वामं प्रयत्यध्वरे । आ वो देवासऽ आशिषो यज्ञियासो हवामहे ॥५॥**

हे देवताहरू हो ! यज्ञ प्रारम्भ भएपछि हामी यज्ञको फलका आशाले तिमीहरूलाई आह्वान गर्दछौं । हे देवताहरू हो ! हामी आशीर्वादरूपी यज्ञको फल प्राप्त गर्नका लागि तिमीहरूलाई बोलाउँछौं ।

**स्वाहा यज्ञं मनसः स्वाहोरोरन्तरिक्षात्स्वाहा द्यावापृथिवीभ्याꣳ स्वाहा वातादारभे स्वाहा ॥६॥**

हामी अन्तःकरणदेखि नै पूरा मन लगाएर यज्ञको अनुष्ठान गर्दछौं । विस्तृत अन्तरिक्षका लागि यज्ञ गर्दछौं । द्युलोक र पृथ्वीलोकका लागि हामी यज्ञका कार्यहरू गर्दछौं । सबै कर्मका प्रेरक वायुदेवताका कृपाले हामी यज्ञ प्रारम्भ गर्दछौं ।

**आकूत्यै प्रयुजेग्नये स्वाहा मेधायै मनसेग्नये स्वाहा दीक्षायै तपसेग्नये स्वाहा सरस्वत्यै पूष्णेग्नये स्वाहा । आपो देवीर्बृहतीर्विश्वशम्भुवोद्यावापृथिवीऽ उरोऽ अन्तरिक्ष । बृहस्पतये हविषा विधेम स्वाहा ॥७॥**

यज्ञ गर्ने मानसिक सङ्कल्पका प्रेरक अग्निदेवताका लागि हामी यो आहुति चढाउँछौं । मन्त्र धारण गर्ने मेधाशक्ति र मनलाई प्रेरित गर्ने अग्निदेवतालाई हामी आहुति अर्पण गर्दछौं । दीक्षा र तपको सिद्धिका लागि अग्निदेवतालाई हामी आहुति प्रदान गर्दछौं । मन्त्र उच्चारण गर्ने शक्तिले युक्त सरस्वती र वाणीका इन्द्रियलाई पोषण दिने पूषादेवतालाई प्रेरित गर्ने अग्निदेवतालाई यो आहुति प्रदान गरेका छौं । हे द्युलोक, विशाल पृथ्वीलोक र विस्तृत अन्तरिक्षलोक ! द्युतिमान् विशाल संसारका लागि सुखको कामना गर्ने हे जल ! हामी श्रेष्ठ ज्ञान प्राप्त गर्नका लागि हविष्यान्न अर्पित गर्दछौं । यो आहुति बृहस्पतिदेवताका लागि समर्पित गरिएको छ ।

**विश्वो देवस्य नेतुर्मर्तो वुरीत सख्यम् । विश्वो रायऽ इषुध्यति द्युम्नं वृणीत पुष्यसे स्वाहा ॥८॥**

सबै मानिसलाई कर्मफल प्रदान गर्ने प्रेरणादायी सवितादेवताको मित्रता स्वीकार गर्दै हामी उनीबाट प्रेरणा प्राप्त गर्दछौं । हामी आफ्ना प्रजाको पोषणका लागि दीप्तिमान् धनको कामना गर्दछौं । सबै मानिस उनीबाट धन प्राप्त गर्दछन् र ऐश्वर्यका अधिपति हुन्छन् । यसैका निम्ति यो आहुति समर्पित गर्दछौं ।

**ऋक्सामयोः शिल्पे स्थस्ते वामारभे ते मा पातमास्य यज्ञस्योदृचः । शर्मासि शर्म मे यच्छ नमस्ते अस्तु मा मा हिंᳪसीः ॥९॥**

हे शिल्प रूपात्मक ऋक् र सामवेदका अधिष्ठाता देवताहरू हो ! हामी तिमीलाई स्पर्श गर्दछौं । तिमी उत्तम ऋचा उच्चारण गर्ने बेलामा हाम्रो रक्षा गर । हे शिल्पका अधिपति ! तिमी शरणदाता भएर हामीलाई आश्रय देऊ । ऋक् र सामका रूपमा तिमीलाई नमस्कार छ । यजमानलाई तिमी हिंसा नगर ।

**ऊर्गस्याङ्गिरस्यूर्णम्रदा ऊर्जं मयि धेहि । सोमस्य नीविरसि विष्णोः शर्मासि शर्म यजमानस्येन्द्रस्य योनिरसि सुसस्याः कृषीस्कृधि । उच्छ्रयस्व वनस्पतऽ ऊर्ध्वो मा पाह्यᳪहसऽ आस्य यज्ञस्योदृचः ॥१०॥**

अङ्गमा शक्ति प्रदान गर्ने हे यज्ञका मेखला ! हामीलाई बल प्रदान गर । हे सोमप्रिय मेखला ! तिमी हाम्रा लागि दुवै पारीहरू जोडिन सक्ने होऊ । तिमी विष्णुका लागि सुखदायी माध्यम हुनाले यजमानका लागि सुखदायी होऊ । तिमी इन्द्रदेवताका लागि उत्पादनको स्रोत हुनाले खेतीबाली हरियो बनाऊ । हे वनस्पतिबाट उत्पन्न भएका दण्ड ! तिमी उन्नत भएर यज्ञको समाप्तिसम्म हामीलाई पापकर्मबाट जोगाऊ ।

**व्रतं कृणुताग्निर्ब्रह्माग्निर्यज्ञो वनस्पतिर्यज्ञियः । दैवीं धियं मनामहे सुमृडीकामभिष्टये वर्चोधां यज्ञवाहसᳪ सुतीर्था नोऽ असद्वशे । ये देवा मनोजाता मनोयुजो दक्षक्रतवस्ते नोवन्तु ते नः पान्तु तेभ्यः स्वाहा ॥११॥**

हे सेवासुसार गर्नेहरू हो ! आफ्ना नियमित कामहरू राम्ररी पूरा गर । श्रौत अग्नि वेदरूपी ब्रह्म हुन् । अग्नि नै यज्ञ हुन् । वनस्पतिहरू नै यज्ञका लागि योग्य छन् । यज्ञको सिद्धिका लागि देवताहरूलाई लक्ष्य प्रदान गर्ने, सुखका लागि तेज धारण गर्ने, यज्ञ सम्पन्न गराउने, यज्ञअनुष्ठानका विषयको बुद्धि हामीले प्राप्त गरौं । हाम्रा अधीनमा सुस्पष्ट बुद्धि होस् । देख्ने, सुन्नेजस्ता रूप र इच्छाबाट उत्पन्न भएर मनले संयुक्त, कुशल सङ्कल्प भएका देवताहरूले यज्ञमा विघ्न निवारण गरेर हामीलाई रक्षा गरुन् । प्राणरूप देवताहरूका निम्ति यो आहुति अर्पित गरिएको छ ।

**श्वात्राः पीता भवत यूयमापो अस्माकमन्तरुदरे सुशेवाः । ताऽ अस्मभ्यमयक्ष्माऽ अनमीवाऽ अनागसः स्वदन्तु देवीरमृताऽ ऋतावृधः ॥१२॥**

हे जल ! दुधका रूपमा हामीले सेवन गर्दा तिमी चाँडै पच्ने र पचाउने होऊ । हामीले पिइसकेपछि पेटमा पुगेर सुखकर होऊ । ठूला रोगविहीन, सामान्य बाधाहरू हटाउने, अपराध मेटाउने यज्ञमा सहायक, अमृतरूपी यो जल दिव्य गुणले युक्त र हाम्रा लागि स्वादिष्ट होस् ।

**इयं ते यज्ञिया तनूरपो मुञ्चामि न प्रजाम् । अथंऽहोमुचः स्वाहाकृताः पृथिवीमाविशत पृथिव्या सम्भव ॥१३॥**

हे यज्ञपुरुषरूपी पृथ्वी ! तिम्रो शरीर यज्ञका लागि योग्य छ । हामी यस ठाउँको विकारयुक्त जल परित्याग गर्दछौं, प्रजाका लागि उपयोगी रस त्याग्दैनौं । यो काम पापविनाशक होस् । स्वाहाका रूपमा स्वीकार गर योग्य जल विकारयुक्त भएपछि त्याग्नुपर्ने हुन्छ । त्यस्तो जल धर्तीका माटामुनि पसेर त्यसैमा मिसियोस् ।

**अग्ने त्वथं सु जागृहि वयथं सु मन्दिषीमहि । रक्षा णोऽ अप्रयुच्छन् प्रबुधे नः पुनस्कृधि ॥१४॥**

हे अग्निदेवता ! तिमी राम्रोसित बलिदेऊ । हामी यजमानहरू निद्राको आनन्द लिन्छौं । तिमी निरन्तर हाम्रो रक्षा गर । हे अग्निदेवता ! हामीलाई फेरि जगाएर तिमी क्रियाशील गराऊ ।

**पुनर्मनः पुनरायुर्मऽ आगन् पुनः प्राणः पुनरात्मा मऽ आगन् पुनश्चक्षुः पुनः श्रोत्रं मऽ आगन् । वैश्वानरो अदब्धस्तनूपाऽ अग्निर्नः पातु दुरितादवद्यात् ॥१५॥**

निदाएर अचेतन भएको यजमानको मन जागेपछि फेरि शरीरमा आइसकेको छ । सुतेर गुमिसकेको मेरो आयु जागेपछि फेरि प्राप्त भएको छ । यसै गरी प्राण, आत्मा, चक्षु, कान आदि इन्द्रियहरू मलाई फेरि प्राप्त भएका छन् । यसै गरी सबै इन्द्रियहरू क्रियाशील भएका, सम्पूर्ण विश्वका लागि हितकारी, दमन गर्न नसकिने, शरीरलाई सुरक्षित राख्ने हे अग्निदेवता ! घिन लाग्दा पापबाट हामीलाई जोगाऊ ।

**त्वमग्ने व्रतपाऽ असि देवऽ आ मर्त्येष्वा त्वं यज्ञेष्वीड्यः । रास्वेयत्सोमा भूयो भर देवो नः सविता वसोर्दाता वस्वदात् ॥१६॥**

दिव्य गुणले सम्पन्न हे अग्निदेवता ! तिमी मानिस र देवताबीचको श्रेष्ठ सङ्कल्पका संरक्षक हौ । त्यसैले समस्त यज्ञमा तिम्रो उपस्थितिका लागि प्रार्थना गरिन्छ ।

**एषा ते शुक्र तनूरेतद्वर्चस्तया सम्भव भ्राजं गच्छ । जूरसि धृता मनसा जुष्य विष्णवे ॥१७॥**

हे स्वच्छ वर्णका अग्निदेवता ! शरीरको रूपमा यो घिउ र तेजका रूपमा यो सुनौला आभा तिमीसँग छन् । तिम्रो स्वरूप र तेज एकाकार भएर आकाशमा व्याप्त रहून् । मनले ग्रहण गरेका मन्त्ररूपी वाणीहरू वेगवान् भएर विष्णुरूपी यज्ञलाई सन्तुष्ट गरून् ।

**तस्यास्ते सत्यसवसः प्रसवे तन्वो यन्त्रमशीय स्वाहा । शुक्रमसि चन्द्रमस्यमृतमसि वैश्वदेवमसि ॥१८॥**

तिमी सत्यका स्वरूप हौ र हामी तिम्रा कृपापात्रले तिम्रा शरीरबाट नियमित शक्ति प्राप्त गर्न सकौं । यो आहुति तिम्रै लागि हो । हे सुनौला देवता ! तिमी दीप्तिमान् र विनाशरहित छौ । तिमी सबै देवताको सङ्गठित शक्तिका रूपमा छौ ।

**चिदसि मनासि धीरसि दक्षिणासि क्षत्रियासि यज्ञियास्यदितिरस्युभयतः शीर्ष्णी । सा नः सुप्राची सुप्रतीच्येधि मित्रस्त्वा पदि बध्नीतां पूषाध्वनस्पात्विन्द्रायाध्यक्षाय ॥१९॥**

हे वाणी ! तिमी चित्त, मन र बुद्धिका रूप हौ । तिमी दक्षिणाका लागि दिइने द्रव्यको श्रेष्ठ रूप हौ । तिमी क्षत्रियको शक्तिका रूपमा रहेका छौ र यज्ञमा प्रयुक्त हुन योग्य

छौ । तिमी अखण्डित र देवमाताका रूप हौ । तिमी दुई शिरले युक्त छौ र अगाडि बढ्न तथा पछाडि हट्नका लागि सहयोग पु-याउँछौ । मित्रले तिम्रा दाहिने गोडामा बन्धन हालिदिऊन् । इन्द्रदेव अध्यक्षजस्ता होऊन् र पूषा देवताले मार्गको रक्षा गर्दै आनन्दित गराऊन् ।

**अनु त्वा माता मन्यतामनु पितानु भ्राता सगर्भ्योनु सखा सयुथ्यः । सा देवी देवमच्छेहीन्द्राय सोमं रुद्रस्त्वा वर्त्तयतु स्वस्ति सोमसखा पुनरेहि ॥२०॥**

यज्ञका लागि सोम जम्मा गर्न लाग्दा तिमीलाई तिम्री माता, तिम्रा पिता, सहोदर दाजुभाइ, सँगै रहने साथीभाइहरूले अनुमति दिऊन् । हे वाणीरूपी देवी ! इन्द्रदेवताका लागि सोम प्राप्त गर्नका लागि तिमी प्रस्थान गर । सोम ग्रहण गरिसकेपछि तिमीलाई रुद्रदेवताले हामीतिर ल्याऊन् । सोमसँगै हाम्रो कल्याण गर्न तिमी फेरि यहाँ आऊ ।

**वस्व्यस्यदितिरस्यादित्यासि रुद्रासि चन्द्रासि । बृहस्पतिष्ट्वा सुम्ने रम्णातु रुद्रो वसुभिरा चके ॥२१॥**

सोम प्राप्त गराउने गाईरूपी हे वाणी ! तिमी वसु, देवमाता अदिति, द्वादश आदित्य, एकादश रुद्र र चन्द्रका रूप हौ । बृहस्पतिले तिमीलाई अत्यन्त हर्ष प्रदान गरुन् । रुद्रले वसुगणसँगै तिम्रो रक्षा गरुन् ।

**अदित्यास्त्वा मूर्द्धन्नाजिघर्मि देवयजने पृथिव्याऽ इडायास्पदमसि घृतवत् स्वाहा । अस्मे रमस्वास्मे ते बन्धुस्त्वे रायो मे रायो मा वयᳬ रायस्पोषेण वियौष्म तोतो रायः ॥२२॥**

हे वाणीरूपी देवी ! समस्त पृथ्वीको सबैभन्दा उत्तम स्थानका रूपमा रहेको यज्ञस्थलमा हामी तिमीलाई घिउको आहुति प्रदान गर्दछौं । तिमी पृथ्वीकी अधिष्ठात्री देवी हौ । हाम्रो यस घिउको आहुतिले सन्तुष्ट होऊ । तिमी ऐश्वर्यशाली छौ । हामीलाई आफ्नै स्वजन ठानेर धनधान्यले समृद्ध गराऊ । हामीलाई त्यसबाट वञ्चित नगर ।

**समख्ये देव्या धिया सं दक्षिणयोरुचक्षसा । मा मऽ आयुः प्रमोषीर्मोऽ अहं तव वीरं विदेय तव देवी सन्दृशि ॥२३॥**

हे सोम एकत्र गर्ने दीप्तिमती, दक्षिणायोग्य, विस्तृत दर्शनयुक्त देवी ! हामीलाई तिमी विवेकपूर्वक हेर्दछ्यौ । पत्नीको र हाम्रो आयु क्षीण नगराऊ । हामीले तिम्रो आयु नष्ट नगरौं । तिम्रो कृपादृष्टिमा रहँदा हामीलाई पराक्रमी पुत्र प्राप्त होस् ।

**एष ते गायत्रो भागऽ इति मे सोमाय ब्रूतादेष ते त्रैष्टुभो भागऽ इति मे सोमाय ब्रूतादेष ते जागतो भागऽ इति मे सोमाय ब्रूताच्छन्दोनामानाᳬ साम्राज्यं गच्छेति मे सोमाय ब्रूतादास्माकोसि शुक्रस्ते ग्रह्यो विचितस्त्वा वि चिन्वन्तु ॥२४॥**

हे सोम ! अगाडि देखिँदै गरेको तिम्रो भाग गायत्री छन्दको हो । यो त्रिष्टुप् छन्दको भाग हो, यो तिम्रो जगती छन्दको भाग हो र यो उष्णिक् आदि छन्दको भाग हो । हामी यजमानहरू यो कुरो सोमलाई भन्दछौं । हे दिव्य सोम किनबेचका रूपमा आउने भए पनि तिमीसँग हाम्रो आफ्नोपना छ । शुक्र आदि सबै ग्रहहरू तिम्रै नियमका अधीनमा

रहेका छन् । विवेकपूर्वक तिमीलाई चयन गर्नेहरूले तत्त्व र अतत्त्व कुनकुन हुन् भनी ठम्याएर ग्रहण गरुन् ।

**अभि त्यं देवꣳ सवितारमोण्योः कविक्रतुमर्चामि सत्यसवꣳ रत्नधामभि प्रियं मतिं कविम् । उर्ध्वा यस्यामतिर्भाऽ अदिद्युतत्सवीमनि हिरण्यपाणिरमिमीत सुक्रतुः कृपा स्वः । प्रजाभ्यस्त्वा प्रजास्त्वानुप्राणन्तु प्रजास्त्वमनुप्राणिहि ॥२५॥**

द्युलोक र पृथ्वीलोकका मध्य भागमा विद्यमान, मेधावी, सत्यका प्रेरक, रत्नद्वारा पोषक, सबै प्राणीले रुचाउने, स्मरण गर्न योग्य, नवीन तत्त्वको साक्षात्कार गर्ने, ऊर्ध्व मुख भएर आकाशमा विद्यमान, सबैलाई प्रकाशित गराउने, आफ्नो दीप्तिले स्वयं पनि प्रकाशित भइरहने, सुनौला आभूषणले युक्त हात भएका, सत्यसङ्कल्पले स्वर्गको रचना गर्नमा समर्थ सवितादेवतालाई हामी अर्चना गर्दछौँ । हे सोम ! प्रजाको उपकारका लागि हामी तिमीलाई स्थिर गराउँछौँ । हे सोम ! सास फेर्ने बेलामा तिम्रो अनुसरण गर्दै प्रजाले जीवन धारण गरुन् । तिमी पनि प्रजाको अनुसरण गर्दै श्वास लिने गर ।

**शुक्रं त्वा शुक्रेण क्रीणामि चन्द्रं चन्द्रेणामृतममृतेन । सग्मे ते गौरस्मे ते चन्द्राणि तपसस्तनूरसि प्रजापतेर्वर्णः परमेण पशुना क्रीयसे सहस्रपोषं पुषेयम् ॥२६॥**

चन्द्रमाजस्तै आनन्ददायी र अमृतस्वरूपका हे सोम ! तिमी सुनझैं दीप्तिमान् भएर चम्कने हुनाले हामी सुनका सट्टामा किन्न चाहन्छौँ । हे सोम विक्रेता ! सोमको मूल्यका लागि तिरेका गाई फेरि यजमानकहाँ फिर्ता जाऊन् । तिमीलाई दिइएको देदीप्यमान स्वर्ण फेरि हामीकहाँ नै आओस् । हे अज ! तिमी तपस्वीको पवित्र शरीरझैँ छौ र सबै देवताका लागि प्रिय एवं प्रजापतिका शरीर हौ । हे सोम ! हामी श्रेष्ठ पशुधनले तिमीलाई किन्दछौँ । त्यसैले हजारौँ पुत्रपौत्रादिलाई पालनपोषण गर्न पुग्ने सम्पत्ति हामीकहाँ वृद्धि गराइदेऊ ।

**मित्रो नऽ एहि सुमित्रधऽ इन्दस्योरुमा विश दक्षिणमुशन्नुशन्तꣳ स्योनः स्योनम् । स्वान भ्राजाङ्घारे बम्भारे हस्त सुहस्त कृशानवेते वः सोमक्रयणास्तान्रक्षध्वं मा वो दभन् ॥२७॥**

हे प्रिय मित्र सोमदेवता ! मित्रको पोषण गर्ने हुनाले तिमी हामीतर्फ आऊ । तिमी सुखदायक हुँदै मङ्गलदायिनी जङ्घामा प्रवेश गर । ध्वनि गर्ने, सुशोभित रहने, पापका शत्रु, विश्वका पोषणकर्ता, सधैँ प्रसन्न रहने, श्रेष्ठ हात भएका, शक्तिहीन प्राणीका लागि जीवनदाता र सोमको रक्षा गर्ने हे सात विशिष्ट देवताहरू हो ! सोम किन्नका लागि तिमीहरूका सामु स्वर्ण राखिएको छ, त्यस बहुमूल्य पदार्थको रक्षा गर । तिमीहरूलाई कसैले दुःख नदेओस् ।

**परि माग्ने दुश्चरिताद्बाधस्वा मा सुचरिते भज । उदायुषा स्वायुषोदस्थाममृताँ२ऽ अनु ॥२८॥**

हे अग्निदेवता ! हामीलाई तिमी पूरै बचाऊ । सदाचाररूपी पुरुषलाई हामी यजमानहरूका बीचमा तिमी प्रतिष्ठित गराऊ । यज्ञ आदि उत्तम कर्म गर्दै, सोम आदि

देवताहरूको आयुको अनुसरण गर्दै सोम प्राप्ति रूपी अमरत्व प्राप्त गरेर हामी उत्कृष्ट हुन पाएका छौं ।

**प्रति पन्थामपद्महि स्वस्तिगामनेहसम् । येन विश्वाः परि द्विषो वृणक्ति विन्दते वसु ॥२९॥**

हामीलाई कल्याणको यात्रामा गमन गर्न योग्य, पाप या अपराधरूपी बाधाहरू नभएको मार्ग प्राप्त होस् । त्यस मार्गमा जाँदा यजमानलाई चोर आदि सबै शत्रु निवारण हुँदै जाऊन् र सम्पदाहरूको प्राप्ति होस् ।

**अदित्यास्त्वगस्यदित्यै सद आसीद । अस्तभ्नाद्द्यां वृषभो अन्तरिक्षममिमीत वरिमाणं पृथिव्याः । आसीदद्विश्वा भुवनानि सम्राड्विश्वेत्तानि वरुणस्य व्रतानि ॥३०॥**

हे कृष्णसार मृगका चर्म ! तिमी सम्पूर्ण पृथ्वीकै लागि चर्मजस्तै छौ । तिमी पृथ्वीको सानो भागका रूपमा रहेका यज्ञवेदीमा बस । शक्तिसम्पन्न वरुणदेवताले द्युलोक र अन्तरिक्षलाई स्थिर गराउँछन् । उनले पृथ्वीको परिमाण पनि मापन गर्दछन् । अत्यन्त सजिसजाउ सम्राट्झैं भएका वरुणदेवताले सम्पूर्ण भुवनलाई व्याप्त गरेर प्रतिष्ठित भएका छन् । यो उनको निश्चित कार्य हो ।

**वनेषु व्यन्तरिक्षं ततान वाजमर्वत्सु पय उस्रियासु । हृत्सु क्रतुं वरुणो विक्ष्वग्निं दिवि सूर्यमदधात्सोममद्रौ ॥३१॥**

वरुणदेवताले वनका वृक्षका टुप्पामा अन्तरिक्ष विस्तृत गराए । अश्व या मानिसमा वीर्य वृद्धि गरे, गाईमा दुध स्थापित गरे, हृदयमा सङ्कल्पशक्ति भएको मन बनाए, प्राणीमा पचाउने जठराग्नि स्थापित गरे । द्युलोकमा सूर्यदेव र पर्वतमा सोम उत्पन्न गरे ।

**सूर्यस्य चक्षुरारोहाग्नेरक्ष्णः कनीनकम् । यत्रैतशेभिरीयसे भ्राजमाने विपश्चिता ॥३२॥**

हे ज्ञानले सम्पन्न तेजस्वी किरण ! तिमी अश्वको जस्तै सञ्चरण गर्दछौ र अग्निको प्रकाशझैं दुनियाँका आँखाका पुतलीमा आरोहण गर्दछौ ।

**उस्रावेतं धूर्षाहौ युज्येथामनश्रू अवीरहणौ ब्रह्मचोदनौ । स्वस्ति यजमानस्य गृहान् गच्छतम् ॥३३॥**

हे बलिष्ठा गोरुका रूपमा रहेका सूर्य र अग्निदेवता ! यो ब्रह्माण्डरूपी गाडाको भार वहन गर्नमा तिमीहरू सक्षम छौ । तिमीहरू अत्यन्त जोसिला हुनाले आँसु झार्दैनौ । तिमीहरू अत्यन्त वीर हुनाले वीरलाई सताउँदैनौ । तिमीहरू नै ब्राह्मणलाई यज्ञको कार्यमा नियुक्त गर्दछौ । तिमीहरू आफूखुसी आएर रथमा जुट । अनि तिमीहरू दुवै हितकारी भएर यजमानका घरमा आओ ।

**भद्रो मेसि प्रच्यवस्व भुवस्पते विश्वान्यभि धामानि । मा त्वा परिपरिणो विदन् मा त्वा परिपन्थिनो विदन् मा त्वा वृका अघायवो विदन् । श्येनो भूत्वा परापत यजमानस्य गृहान् गच्छ तन्नौ सꣳस्कृतम् ॥३४॥**

हे प्राणीका पालक सोम ! तिमी यजमानहरूको पालन गर्दछौ । तिमी यजमानको परिवार, यज्ञशाला आदि सबैतिर लक्ष्य बनाएर तीव्र गतिमा गमन गर । सबैतिर घुम्ने

गरेका तस्करले तिम्रा विषयमा जानकारी नपाऊन् । यज्ञविरोधी शत्रुले तिमीलाई चिन्न नसकून् । पापी, ब्वाँसा र त्यस्तै दुर्जनहरूले तिमीलाई नजानून् । तिमी बाजपक्षीझैं तीव्रगामी बनेर परसम्म जाऊ । तिमी यजमानको घर फेला पार र त्यहाँका यज्ञीय उपकरणले युक्त, यज्ञीय स्थानमा पुग ।

**नमो मित्रस्य वरुणस्य चक्षसे महो देवाय तदृतꣳ सपर्यत । दूरदृशे देवजाताय केतवे दिवस्पुत्राय सूर्याय शꣳसत ॥३५॥**

हे ऋत्विक्हरू हो ! मित्र वरुणदेवतालाई देखेका महान् दिव्यतायुक्त, अति दूरबाट नै सबै वस्तु देख्ने, देवताका कुलमा उत्पन्न, संसार प्रकाशित गर्ने र द्युलोकका पुत्रजस्ता सूर्यदेवतालाई नमस्कार गर । उनका सत्यपथको अनुसरण गर्दै उनलाई पूजा गर ।

**वरुणस्योत्तम्भनमसि वरुणस्य स्कम्भसर्जनी स्थो वरुणस्यऋतसदन्यसि वरुणस्यऋतसदनमसि वरुणस्यऋतसदनमासीद ॥३६॥**

हे काठका उपकरणहरू हो ! तिमीहरू वरुणरूपी सोमको उन्नति गराओ । हे शमी ! तिमी वरुणदेवताको गति स्थिर गराऊ । हे डुम्रीका काठले बनेका आसन्दी ! तिमी यज्ञमा वरुणको आसनका रूपमा रहेको यस कालो मृगको चर्ममाथि सुखपूर्वक आसन ग्रहण गर ।

**या ते धामानि हविषा यजन्ति ता ते विश्वा परिभूरस्तु यज्ञम् । गयस्फानः प्रतरणः सुवीरोऽ वीरहा प्र चरा सोम दुर्यान् ॥३७॥**

हे सोमदेवता ! यज्ञ गर्नेहरू तिम्रा जुन तेजका लागि हवि प्रदान गर्दछन्, ती सबै तेज प्रखर यज्ञक्षेत्रका चारैतिर रहून् । घरको उन्नति गराउने, विपत्तिमा जोगाउने, पुत्रपौत्रादि श्रेष्ठ वीरहरूले युक्त गराउने, शत्रुका विनाशक सोमदेवता ! तिमी हामीतिर आऊ ।

**॥इति चतुर्थोऽध्याय॥**

॥चौथो अध्याय सकियो॥

ॐ

**भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।**

# वाजसनेयि माध्यन्दिन शुक्ल

# यजुर्वेद – संहिता

## ॥अथ पञ्चमोऽध्यायः॥

॥पाँचौँ अध्याय॥

**ऋषि–** गोतम, श्यावाश्व, मेधातिथि, वसिष्ठ, दीर्घतमा औतथ्य, मधुच्छन्दा, मधुच्छन्दा ऋतु भार्गव, अगस्त्य ।

**देवता–** विष्णु, शकल, दर्भतरुण, लिङ्गोक्त, अग्नि, वायु, सोम, पृथिवी, वेदिका, जल, वाक्, स्रुक्, परिधि, गुल्गुल, सविता, अक्षधुरी, हविर्धान, अभ्रि, राक्षसघाती, उपरव, यव, औदुम्बर, पितर, औदुम्बरी, द्यावापृथिवी, इन्द्र, विश्वेदेवा, धिष्ण्य, आहवनीय, बहिष्पवमान, देश, चात्वाल, शामित्र, ब्रह्मासन, शालाद्वार, प्राजहित, सद, द्वार, सूर्य, ऋत्विग्गण, धिष्णु, सोम, अप्तु, वनस्पति, कुशतरुण, परशु ।

**छन्द–** स्वराट् ब्राह्मी बृहती, आर्षी गायत्री, आर्ची त्रिष्टुप्, आर्षी पङ्क्ति, आर्षी त्रिष्टुप्, आर्षी उष्णिक्, भुरिक् आर्षी पङ्क्ति, विराट् ब्राह्मी पङ्क्ति, आर्षी बृहती, आर्षी जगती, बिराट् आर्षी बृहती, निचृत् आर्षी बृहती, भुरिक् आर्षी गायत्री, भुरिक् आर्षी, भुरिक आर्षी गायत्री, भुरिक् ब्राह्मी बृहती, निचृत्, ब्राह्मी जगती, याजुषी अनुष्टुपप्, ब्राह्मी उष्णिक्, निचृत् ब्राह्मी त्रिष्टुप्, भुरिक् ब्राह्मी पङ्क्ति, भुरिक् आर्षी अनुष्टुप्, स्वराट् आर्षी जगती, भुरिक् आर्षी गायत्री, स्वराट् आर्षी त्रिष्टुप्, स्वराट् ब्राह्मी त्रिष्टुप्, निचृत् आर्षी जगती, विराट् आर्ची त्रिष्टुप्, भुरिक् आर्ची पङ्क्ति, साम्नी पङ्क्ति, भुरिक् आर्षी बृहती, याजुषी बृहती, भुरिक् अष्टि, स्वराट् ब्राह्मी उष्णिक्, ब्राह्मी बृहती, आर्षी पङ्क्ति, निचृत् आर्षी पङ्क्ति, निचृत् आर्षी त्रिष्टुप्, ब्राह्मी जगती, आर्षी जगती, अनुष्टुप् । आर्ची उष्णिक्, विराट् आर्षी अनुष्टुप्, ब्राह्मी पङ्क्ति, अतिजगती, निचृत् आर्षी त्रिष्टुप्, भुरिक् आर्षी त्रिष्टुप्, साम्नी बृहती, निचृत् आर्षी पङ्क्ति, भुरिक् अत्यष्टि, ब्राह्मी त्रिष्टुप् ।

**अग्नेस्तनूरसि विष्णवे त्वा सोमस्य तनूरसि विष्णवे त्वातिथेरातिथ्यमसि विष्णवे त्वा श्येनाय त्वा सोमभृते विष्णवे त्वाग्नये त्वा रायस्पोषदे विष्णवे त्वा ॥१॥**

हे सोम ! तिमी अग्निको जस्तै उर्जा प्रदान गर्ने अग्नि नै हौ । तिमी दिव्य पोषक रसका रूपमा रहेका छौ । तिमी यज्ञमा आएका अतिथिहरूलाई यथोचित सत्कार गर्दछौ । तिमी सोम लिएर आउने श्येनजस्तै छौ । धनऐश्वर्य प्रदान गरेर सम्पूर्ण संसारका पोषक अग्नि एवं विष्णुदेवताको सन्तुष्टिका लागि हामी तिमीलाई ग्रहण गर्दछौँ ।

**अग्नेर्जनित्रमसि वृषणौ स्थऽउर्वश्यस्यायुरसि पुरूरवाऽअसि । गायत्रेण त्वा छन्दसा मन्थामि त्रैष्टुभेन त्वा छन्दसा मन्थामि जागतेन त्वा छन्दसा मन्थामि ॥२॥**

हे शकल ! तिमी अग्नि उत्पादनका आधार हौ । हे कुश ! तिमी अग्निको उत्पादक वीर्यरूप हौ । अग्नि उत्पन्न गर्नमा सहायक, तल रहेको शमीकाठ उर्वशीझैँ र माथिको काठ पुरुरवाजस्तै भएर सबैको ध्यान आकर्षित गर्दछौ । हे पात्रमा राखिएका घिउ ! तिमी अग्निलाई आयु प्रदान गरेर लामो समयसम्म प्रज्वलित गर्दछौ । हे अग्निदेवता ! तिमीलाई प्रकट गर्नका लागि गायत्री, त्रिष्टुप् र जगती छन्दले मन्थन गर्दछौँ ।

**भवतं नः समनसौ सचेतसावरेपसौ । मा यज्ञꣳ हिꣳसिष्टं मा यज्ञपतिं जातवेदसौ शिवौ भवतमद्य नः ॥३॥**

एकाग्र मन भएका, सद्भावयुक्त र नसुस्ताउने हे अग्निदेवता ! हाम्रा अपराधहरूमा नरिसाएर हाम्रो यज्ञ तिमी नष्ट हुन नदेऊ । यजमानको नाश हुन पनि नदेऊ, उनको रक्षा गर । आजको दिन हामी सबैका लागि कल्याणप्रद र शुभ होस् ।

**अग्नावग्निश्चरति प्रविष्टऽऋषीणां पुत्रो अभिशस्तिपावा । स नः स्योनः सुयजा यजेह देवेभ्यो हव्यꣳ सदमप्रयुच्छन्त्स्वाहा ॥४॥**

वेदको ज्ञान भएका ऋषिपुत्रहरूजस्ता हे ऋत्विक्हरू हो ! प्रमादवश यजमानलाई शाप दिएको भए आह्वनीय अग्निदेव रक्षक भएर त्यसबाट यी यजमानहरूको रक्षा गरुन्, यज्ञकुण्डमा प्रतिष्ठित भएर हवन सेवन गरुन् । हे अग्निदेवता ! तिमी यजमानहरूका लागि कल्याणकारी हुनाले यस श्रेष्ठ यज्ञमा हामीले प्रदान गरेको आहुति जोसजाँगरसाथ ग्रहण गर र इन्द्र आदि देवताहरूकहाँ पुऱ्याइदेऊ ।

**आपतये त्वा परिपतये गृह्णामि तनूनप्त्रे शाक्वराय शक्वनऽओजिष्ठाय । अनाधृष्टमस्यनाधृष्यं देवानामोजोनभिशस्त्यभिशस्तिपाऽ अनभिशस्तेन्यमञ्जसा सत्यमुपगेषꣳ स्विते मा धाः ॥५॥**

सर्वत्र गमन गर्ने, सर्वव्यापी, सबैका लागि नातिजत्तिकै प्रिय, सबै खालका काम सम्पन्न गराउन सक्षम, बलशाली हे आज्य ! तिमीलाई हामी यज्ञकार्यका लागि स्वीकार गर्दछौँ । तिमी कसैबाट तिरस्कृत नहुने खालका छौ, कसैलाई तिरस्कार गर्दैनौ । तिमी अग्नि आदि देवताका ओजस्वरूप, निन्दित कर्मबाट जोगाउने र प्रशंसाका योग्य छौ । त्यसैले हे शरीरको रक्षा गर्ने आज्य ! सरल र श्रेष्ठ मार्ग निर्देशन गर्ने भएर हामीलाई तिमी यज्ञका लागि स्थापित गर ।

**अग्ने व्रतपास्त्वे व्रतपा या तव तनूरियꣳ सा मयि यो मम तनूरेषा सा त्वयि । सह नौ व्रतपते व्रतान्यनु मे दीक्षां दीक्षापतिर्मन्यतामनु तपस्तपस्पतिः ॥६॥**

हे व्रतपालनमा सर्वश्रेष्ठ अग्निदेवता ! तिमी हाम्रा हालका नियमहरू पालन गर्दछौ । व्रतपालक भएर तिम्रो शरीर हामीसँग एकीकृत होस् । हे व्रतका अधिपति ! व्रतकार्यले अग्नि र यजमान समान रूपले सम्मानित होऊन् । दीक्षा पालन गर्ने सोमले हाम्रो दीक्षा पालन गरुन् र दीक्षा दिने तथा दीक्षा लिनेका बीचमा आपसी प्रेम बलियो होस् । तपस्याका अधिपति गुरु र तपको आचरण गर्ने शिष्यको भावना एक समान मिलेको होस् ।

**अꣳशुरꣳशुष्टे देव सोमाप्यायतामिन्द्रायैकधनविदे । आ तुभ्यमिन्द्रः प्यायतामा त्वमिन्द्राय प्यायस्व । आप्याययास्मान्त्सखीन्त्सन्या मेधया स्वस्ति ते देव सोम सुत्यामशीय । एष्टा रायः प्रेषे भगाय ऋतमृतवादिभ्यो नमो द्यावापृथिवीभ्याम् ॥७॥**

हे सोमदेवता ! सोमवल्लीका सबै अवयव धनवान् इन्द्रका लागि हितकारी होऊन् र त्यसका निम्ति वृद्धि होऊन् । तिमीलाई पान गरेर इन्द्रदेवताको उन्नति होस् । हे सोम ! तिमी पनि इन्द्रदेवताका निम्ति नै बढिराख । तिमी प्रिय ऋत्विक्हरूको धन प्रदान गर्ने शक्तिले वृद्धि होऊ । हे सोमदेवता ! तिम्रो कल्याण होस् । तिम्रा कृपाले हाम्रो सोम सवन गर्ने कार्य चाँडै सम्पन्न गर्न सकौँ । तिम्रो अनुकम्पाले हामी धन प्राप्त गरौँ । सत्यको पथ अनुसरण गर्ने अग्निदेवताका होताहरूलाई सत्यरूपी फल प्राप्त होस् । द्यावापृथिवीलाई हामी नमस्कार गर्दछौँ ।

**या ते अग्नेयः शया तनूर्वर्षिष्ठा गह्वरेष्ठा । उग्रं वचोऽ अपावधीत्त्वेषं वचोऽ अपावधीत्स्वाहा । या तेऽ अग्ने रजःशया तनूर्वर्षिष्ठा गह्वरेष्ठा । उग्रं वचोऽ अपावधीत्त्वेषं वचोऽ अपावधीत्स्वाहा । या ते अग्ने हरिशया तनूर्वर्षिष्ठा गह्वरेष्ठा । उग्रं वचोऽ अपावधीत्त्वेषं वचोऽ अपावधीत्स्वाहा ॥८॥**

हे अग्निदेवता ! तिमीसँग फलामे, चाँदीको र सुनको शरीर छ । त्यसले देवताहरूका मनको रहर पूरा गर्दछ । असुरहरूलाई टाढाका गुफामा पस्ने बनाउँछ । त्यसले राक्षसका कठोर शब्द नाश गर्दछ र देवताहरूका विषयमा आरोपप्रत्यारोप गर्दै बोलिएका कुराहरूलाई पूर्ण रूपले प्रभावहीन पारिदिन्छ । यस किसिमको महिमाले सम्पन्न शरीर भएका तिमी अग्निलाई हामी आहुति प्रदान गर्दछौँ ।

**तप्तायनी मेसि वित्तायनी मेस्यवतान्मा नाथितादवतान्मा व्यथितात् । विदेदग्निर्नभो नामाग्ने अङ्गिरऽआयुना नाम्नेहि योस्यां पृथिव्यामसि यत्तेनाधृष्टं नाम यज्ञिय तेन त्वा दधे विदेदग्निर्नभो नामाग्ने अङ्गिरऽआयुना नाम्नेहि यो द्वितीयस्यां पृथिव्यामसि यत्तेनाधृष्टं नाम यज्ञियं तेन त्वा दधे विदेदग्निर्नभो नामाग्नेऽ अङ्गिरऽआयुना नाम्नेहि यस्तृतीयस्यां पृथिव्यामसि यत्तेनाधृष्टं नाम यज्ञियं तेन त्वा दधे । अनु त्वा देववीतये ॥९॥**

हे पृथ्वीदेवी ! तिमी उर्जा प्रदान गर्ने हुनाले तप्यायनी र धन प्रदान गर्ने हुनाले वित्तायनी हौ, हामीलाई दुःखकष्टबाट जोगाऊ । हे खनजोत हुने धर्तीदेवी ! नभ नामका अन्तरिक्षका अग्निले तिमीलाई जानून् । हे अङ्गिरस्का नामले अङ्गमा रहेका अग्निदेवता ! तिमी आयुका रूपमा यस ठाउँमा रहिदेऊ । तिमी दृश्य रूपमा नै पृथ्वीमा निवास गर्दछौ । तिम्रो अति स्वच्छ, तिरस्काररहित, अनिन्द्य यज्ञीय रूपलाई हामी यहाँ स्थापित गर्दछौँ । हे नभ नामले परिरिचत अग्निदेवता ! तिमी जुन उद्देश्यले अर्को स्थानमा छौ, उसै उद्देश्यले धर्तीमा फेरि नाश नहुने खालको यज्ञीय रूपमा हामी स्थापित गर्दछौँ । हे माटो ! देवताका लागि उत्तर वेदिकाका रूपमा तिमीलाई स्थापित गर्दछौँ ।

**सिध्ठ॑ह्यसि सपत्नसाही देवेभ्यः कल्पस्व सिध्ठ॑ह्यसि सपत्नसाही देवेभ्यः शुन्धस्व सिध्ठ॑ह्यसि सपत्नसाही देवेभ्यः शुम्भस्व ॥१०॥**

सिंहिनीजस्तै भएर सबै शत्रु नाश गर्ने हे उत्तर वेदिका ! तिमी आफ्ना सामर्थ्यले देवताहरूको हित गर्नमा समर्थ छौ । शत्रुको नाश गर्ने सिंहिनीका रूपमा देवताको हित गर्नका लागि तिमीलाई पवित्रता प्राप्त होस् । तिमी शत्रु विनाश गर्ने सिंहिनी हौ । शुद्ध भएर देवताका पक्षमा काम गर र उनीहरूलाई प्रसन्न गराऊ ।

**इन्द्रघोषस्त्वा वसुभिः पुरस्तात्पातु प्रचेतास्त्वा रुद्रैः पश्चात्पातु मनोजवास्त्वा पितृभिर्दक्षिणतः पातु विश्वकर्मा त्वादित्यैरुत्तरतः पात्विदमहं तप्तं वार्बहिर्धा यज्ञान्निः सृजामि ॥११॥**

हे उत्तरवेदिका ! अष्टवसुहरूसँगै इन्द्रदेवताले पूर्व दिशामा तिम्रो रक्षा गरुन् । एकादश रुद्रहरूसँगै वरुणदेवताले पश्चिमतर्फ तिम्रो रक्षा गरुन् । पितृहरूसँगै यमदेवताले दक्षिण दिशामा तिम्रो रक्षा गरुन् । द्वादश आदित्यसँगै विश्वेदेवताले उत्तर दिशामा तिम्रो रक्षा गरुन् । तिम्रो रक्षाका लागि तयार गरिएको जललाई हामी वेदीका बाहिरतर्फ स्थापित गर्दछौँ ।

**सिध्ठ॑ह्यसि स्वाहा सिध्ठ॑ह्यस्यादित्यवनिः स्वाहा सिध्ठ॑ह्यसि ब्रह्मवनिः क्षत्रवनिः स्वाहा सिध्ठ॑ह्यसि सुप्रजावनिः रायस्पोषवनिः स्वाहा सिध्ठ॑ह्यस्या वह देवान् यजमानाय स्वाहा भूतेभ्यस्त्वा ॥१२॥**

हे उत्तरवेदिका ! तिमी सिंहिनीको रूप हौ । तिम्रो सिंहिनी रूपलाई यो आहुति प्रदान गरिएको छ । तिमी आदित्यलाई प्रसन्न गर्ने सिंहिनी रूप हौ । यो आहुति तिमीलाई दिइँदै छ । तिमी ब्राह्मण र क्षत्रियलाई हर्षित गराउने सिंहिनी रूप हौ । तिम्रा यसै रूपलाई आहुति प्रदान गरिँदै छ । तिमी पुत्रपौत्र, धनधान्य र स्वर्ण आदि प्रदान गर्ने हौ । तिम्रो सिंहिनी रूपलाई यो आहुति दिइँदै छ । यजमानको हित गर्नका लागि देवताहरूलाई आह्वान गर्ने हौ । सम्पूर्ण प्राणीको कल्याणका लागि यो आहुति तिमीलाई समर्पित गर्दछौँ ।

**ध्रुवोसि पृथिवीं दृध्ठ॑ह ध्रुवक्षिदस्यन्तरिक्षं दृध्ठ॑हाच्युतक्षिदसि दिवं दृध्ठ॑हाग्ने पुरीषमसि ॥१३॥**

हे स्थिर मध्यम परिधि ! पृथ्वीलाई तिमी स्थिर गराऊ । हे दक्षिण परिधि ! तिमी अन्तरिक्षमा स्थिर यज्ञमा निवास गर्दछौ । त्यसैले अन्तरिक्षलाई पुष्ट गराऊ । हे उत्तर परिधि ! तिमी द्युलोकको रूप हौ । त्यसैले द्युलोकलाई स्थिर गराऊ । हे सुगन्धित द्रव्यहरू हो ! अग्निलाई पूर्ण गराओ ।

**युञ्जते मनऽ उत युञ्जते धियो विप्रा विप्रस्य बृहतो विपश्चितः । वि होत्रा दधे वयुनाविदेकऽ इन्मही देवस्य सवितुः परिष्टुतिः स्वाहा ॥१४॥**

एक्लै यज्ञ धारण गर्ने, मार्गको ज्ञान भएका सवितादेव महान् स्तुतिका पात्र हुन् । अति बुद्धिमान् र ज्ञानी मानिस आफ्नो मन र बुद्धि उनै प्रेरक सवितादेवमा योजित गर्दछन् ।

**इदं विष्णुर्वि चक्रमे त्रेधा नि दधे पदम् । समूढमस्य पाध्ठ॑सुरे स्वाहा ॥१५॥**

यस्तो सबै विष्णुदेवताको पराक्रम हो, उनका तीन प्रकारका चरण छन् । यसको मर्म धुलो भरिएका ठाउँमा रहेको हुन्छ ।

**इरावती धेनुमती हि भूतꣳ सूयवसिनी मनवे दशस्या । व्यस्तभ्ना रोदसी विष्णवेते दाधर्त्थ पृथिवीमभितो मयूखैः स्वाहा ॥१६॥**

हे द्यावापृथिवी ! मानिसको कल्याणका आकाङ्क्षाले तिमीहरू दुवै गाई र अन्नले परिपूर्ण भएका छौ । हे विष्णुदेवता ! तिमीले द्युलोक र पृथ्वीलाई स्थिरता प्रदान गरेका छौ र पर्वतबाट पृथ्वीलाई अड्याएका छौ ।

**देवश्रुतौ देवेष्वा घोषतं प्राची प्रेतमध्वरं कल्पयन्ती ऊर्ध्वं यज्ञं नयतं मा जिह्वरतम् । स्वं गोष्ठमा वदतं देवा दुर्ये आयुर्मा निर्वादिष्टं प्रजां मा निर्वादिष्टमत्र रमेथां वर्ष्मन् पृथिव्याः ॥१७॥**

हे दिव्य विद्यामा निपुण देवश्रुतहरू हो ! देवताहरू यज्ञलाई पूर्व दिशामा अघि बढाऊन, यज्ञलाई उन्नति गराऊन्, तल खस्न नदिऊन् भनेर तिमीहरू दुवैले देवसभामा घोषण गरिदेओ । देवस्थानमा रहेका गौशालामा गएर तिमीहरू दुईले आयु छउन्जेल देवताहरूले यज्ञकर्ता र प्रजालाई निन्दित हुन नदिऊन् भन्ने कुरो गरिदेओ । पृथ्वीका यस रहन योग्य र सेवा गर्न योग्य स्थलमा आनन्दपूर्वक निवास गरौँ ।

**विष्णोर्नुकं वीर्याणि प्रवोचं यः पार्थिवानि विममे रजाꣳसि । यो अस्कभायदुत्तरꣳ सधस्थं विचक्रमाणस्त्रेधोरुगायो विष्णवे त्वा ॥१८॥**

पृथ्वी, अन्तरिक्ष र द्युलोकका निर्माता, देवताहरूको निवासस्थान द्युलोकलाई स्थिर गराउने, तीन खुट्टाले तीनै लोकमा विचरण गर्ने विष्णुदेवताका वीरतापूर्ण कार्यको वर्णन कति गरौँ ?

**दिवो वा विष्णऽउत वा पृथिव्या महो वा विष्णऽउरोरन्तरिक्षात् । उभा हि हस्ता वसुना पृणस्वा प्रयच्छ दक्षिणादोत सव्याद्विष्णवे त्वा ॥१९॥**

हे विष्णुदेवता ! द्युलोक वा पृथिवीलोक वा अत्यधिक विस्तृत अन्तरिक्षलोकबाट उपलब्ध गरेका धनले तिमी दुवै हात परिपूर्ण गराऊ । अनि दाहिने हातले र बायाँ हातले बहुमूल्य एवं प्रचुर ऐश्वर्य हामीलाई प्रदान गर । हे काष्ठ ! विष्णुदेवताको प्रसन्नताका लागि तिमीलाई हामी स्थापित गर्दछौँ ।

**प्र तद्विष्णुः स्तवते वीर्येण मृगो न भीमः कुचरो गिरिष्ठाः । यस्योरुषु त्रिषु विक्रमणेष्वधिक्षियन्ति भुवनानि विश्वा ॥२०॥**

विष्णुदेवताका तीन पाउमा ब्रह्माण्ड अडेको छ । भयङ्कर, हिंस्रक र पहाडका कन्दरामा बस्ने पराक्रमी पशु आदि सारा संसारले विष्णुदेवताका पराक्रमको प्रशंसा गर्दछ ।

**विष्णो रराटमसि विष्णोः श्नप्त्रे स्थो विष्णोः स्यूरसि विष्णोर्ध्रुवोसि । वैष्णवमसि विष्णवे त्वा ॥२१॥**

कुश अड्निका लागि आधार दिएको हे ठाउँ ! तिमी विष्णुको निधारजस्तै हौ । हे शिरका दुवै भागहरू हो ! तिमीहरू विष्णुरूपी मण्डपका काठका जोर्नी हौ । हे सूत्र ! तिमी विष्णुरूपी लोकलाई व्यापक बनाउँछौ । हे धागोमा बाँधिएका ग्रन्थि तिमी विष्णुको रूपमा लोकहरूलाई स्थिर गराउँछौ । हे हविर्धान नामका यज्ञमण्डप ! तिमी सर्वव्यापक विष्णुसित सम्बन्धित छौ । त्यसैले हामी विष्णुदेवताको प्रसन्नताका लागि तिमीलाई स्पर्श गर्दछौँ ।

**देवस्य त्वा सवितुः प्रसवेऽश्विनोर्बाहुभ्यां पूष्णो हस्ताभ्याम् । आ ददे नार्यसी दमहथ्ंᳫ रक्षसां ग्रीवाऽ अपिकृन्तामि । बृहन्नसि बृहद्रवा बृहतीमिन्द्राय वाचं वद ॥२२॥**

हे अभ्रि देवता ! सवितादेव छँदाछँदै पनि हाम्रा अश्विनीकुमारहरूका बाहु र पूषादेवताका हातबाट तिमीलाइं स्वीकार गर्दछौँ । तिमी हाम्रा सहायक हौ । मौलो गाड्नका लागि खाडल खन्दा यज्ञमा बाधा हाल्ने राक्षसको घाँटी छिनाउँछौँ । हे उपरव नामका खाडल ! तिमी महान् छौ, मनग्गे ध्वनि निकाल्छौ । त्यसैले इन्द्रलाई लक्ष्य गरेर उनैलाई सुहाउने स्तोत्रको पाठ गर ।

**रक्षोहणं वलगहनं वैष्णवीमिदमहं तं वलगमुत्किरामि यं मे निष्ट्यो यममात्यो निचखानेदमहं तं वलगमुत्किरामि यं मे समानो यमसमानो निचखानेदमहं तं वलगमुत्किरामि यं मे सबन्धुर्यमसबन्धुर्निचखानेदमहं तं वलगमुत्किरामि यं मे सजातो यमसजातो निचखानोत्कृत्यां किरामि ॥२३॥**

राक्षसको विनाश गर्ने, हिंसाका गोप्य प्रयोगहरू नष्ट गर्ने, पोषण दिन समर्थ बृहद् वैष्णवी वेदका वार्णीहरू बोलून् । हाम्रो अनिष्ट गर्न सक्ने गोप्य मन्त्रणाहरू र गोप्य रूपमा स्थापित घातक प्रयोगहरूलाई परामर्शदाताहरूले उखेलेर मिल्काइदिऊन् । हामीसरहका वा भिन्नै खालकाहरूले गोप्य रूपमा प्रयोग गरेका अनिष्टकारी प्रयोगहरू हामी निकालेर पर फ्याँकिदिन्छौँ । हाम्रो आफन्त वा बिरानाले छलपूर्वक स्थापित गरेका अनिष्टकारी प्रयोग झिकेर पर फ्याँकिदिऔँ । हाम्रा सजातीय वा विजातीयहरूले हाम्रो अनिष्ट गर्नका लागि स्थापित गरेका गुप्त प्रयोगहरू हामी उधिनेर पर मिल्काऔँ । यसरी हामीमाथि हुने गोप्य तथा घातक क्रियाकलापहरू हामी निर्मूल गर्न सकौँ ।

**स्वराडसि सपत्नहा सत्रराडस्यभिमातिहा जनराडसि रक्षोहा सर्वराडस्यमित्रहा ॥२४॥**

हे यज्ञका खाडल ! तिमी प्रकाशवान् भएर अन्धकाररूपी शत्रुलाई नष्ट गर्दछौ । तिमी यज्ञको पूरै अवधिभरि रहन्छौ र अभिमानीहरूको विनाश गर्दछौ । तिमी असल मानिसहरूमा सुप्रतिष्ठित भएका कारण राक्षसहरूलाई नष्ट गर्न सक्दछौ । तिमी सबैलाई प्रकाशित गराउँछौ र अमित्रहरूलाई विनाश गर्दछौ ।

**रक्षोहणो वो वलगहनः प्रोक्षामि वैष्णवान् रक्षोहणो वो वलगहनोवनयामि वैष्णवान् रक्षोहणो वो वलगहनोवस्तृणामि वैष्णवान् रक्षोहणौ वां वलगहनाऽउपदधामि वैष्णवी रक्षोहणौ वां वलगहनौ पर्यूहामि वैष्णवी वैष्णवमसि वैष्णवा स्थ ॥२५॥**

राक्षस र अभिचारी साधनहरूको विनाश गर्ने विष्णुदेवतासित सम्बन्धित यस यज्ञका खाडललाई हामी पखाल्छौँ । राक्षस र अभिचारी साधनको विनाश गर्ने विष्णुदेवताका रूपमा स्थापित यस यज्ञको खाडललाई पखालेर बचेको पानी छर्किएर हामी कुशका आसन बिछाउँछौँ । राक्षस र अभिचारसाधनका विनाशक विष्णुदेवताका रूपमा रहेका यज्ञका खाडलका वरिपरि हामी कुशका आसनले ढाक्छौँ । राक्षस र तिनको अभिचार

विनाश गर्ने विष्णुदेवतासित सम्बन्धित दुवै यज्ञका खाडलहरूमा एकएक फल्याक राख्दछौं । राक्षस र तिनको अभिचार मन्त्र विनाश गर्ने विष्णुदेवतासित सम्बन्धित यज्ञका खाडललाई चारै तिरबाट माटाले छोप्दछौं । हे पत्थरहरू हो ! तिमीहरू यज्ञका रक्षक विष्णुदेवसित एकीकृत होओ ।

**देवस्य त्वा सवितुः प्रसवेऽश्विनोर्बाहुभ्यां पूष्णो हस्ताभ्याम् । आददे नार्यसी दमहꣳ रक्षसां ग्रीवा अपिकृन्तामि । यवोसि यवयास्मद्द्वेषो यवयारातीर्दिवेत्वान्तरिक्षाय त्वा पृथिव्यै त्वा शुन्धन्तांल्लोकाः पितृषदनाः पितृषदनमसि ॥२६॥**

हे अभ्रि देवता ! सवितादेव छँदाछँदै पनि हामी अश्विनीकुमारहरूका बाहु र पूषादेवताका हातबाट तिमीलाई स्वीकार गर्दछौं । तिमी हाम्रा सहायक हौ । मौलो गाड्नका लागि खाडल खन्दा यज्ञमा बाधा हाल्ने राक्षसको घाँटी छिनाउँछौं । हे यव ! दुर्भाग्य र शत्रुका समूहका दुःखबाट हामीलाई तिमी जोगाऊ । हे डुम्रीका हाँगा ! द्युलोकलाई हर्षित गराउनका लागि, अन्तरिक्षलाई हर्षित गराउनका लागि र मूल भागको रूपमा रहेको पृथ्वीलाई प्रसन्न गर्नका लागि हामी तिमीलाई सफा गर्दछौं । हे यजुष् ! यस जलले पितृको निवासस्थान शुद्ध होस् । हे कुश ! तिमी पितृका आवासस्थान हौ ।

**उद्दिवꣳ स्तभानान्तरिक्षं पृण दृꣳहस्व पृथिव्यां द्युतानस्त्वा मारुतो मिनोतु मित्रावरुणौ ध्रुवेण धर्मणा । ब्रह्मवनि त्वा क्षत्रवनि रायस्पोषवनि पर्यूहामि ब्रह्म दृꣳह क्षत्रं दृꣳहायुर्दृꣳह प्रजां दृꣳ ह ॥२७॥**

हे डुम्रीका हाँगा ! तिमी द्युलोकलाई माथि उठाऊ, अन्तरिक्षलाई विशाल बनाऊ र पृथ्वीलाई स्थिर गराऊ । दीप्तिमान् मरुत्, वायु र मित्रावरुणले तिमीलाई स्थिर गराउनका लागि खाडलमा हाल्छन् । हे डुम्री ! ब्राह्मण, क्षत्रिय र वैश्यले स्तुति गरिने तिम्रा चारैतिर हामी माटो हाल्दछौं । हे डुम्रीका हाँगा तिमीलाई हामी स्थिर गर्दछौं । तिमी पनि ब्राह्मण, क्षत्रिय, धन र पुत्र आदिलाई सुस्थिर गराऊ ।

**ध्रुवासि ध्रुवोयं यजमानोस्मिन्नायतने प्रजया पशुभिर्भूयात् । घृतेन द्यावापृथिवी पूर्येथामिन्द्रस्य छदिरसि विश्वजनस्य छाया ॥२८॥**

हे डुम्रीका हाँगा ! तिमी स्थिर हौ । यजमान पनि आआफ्ना घरमा पुत्र र पशुले परिपूर्ण हुँदै स्थिर रहून् । यस घिउका आहुतिले तिमी द्युलोक र पृथ्वी व्याप्त गराऊ । हे झारपातले बनेका घरकटेराहरू हो तिमीहरू इन्द्रसँग सम्बन्धित छौ, त्यसैले तिमीहरू सबै मानिसका लागि छहारीका रूपमा रहेका छौ ।

**परि त्वा गिर्वणो गिरऽइमा भवन्तु विश्वतः । वृद्धायुमनु वृद्धयो जुष्य भवन्तु जुष्टयः ॥२९॥**

हे स्तुत्य इन्द्रदेवता ! श्रेष्ठ वृद्ध पुरुष, तीनै कालमा सवन गर्ने यजमान र स्तोत्ररूपी शास्त्रका वाणीहरू तिमीलाई सबै तिरबाट प्राप्त होऊन् । हाम्रो सेवाले तिमी प्रसन्न होऊ ।

**इन्द्रस्य स्यूरसीन्द्रस्य ध्रुवोसि । ऐन्द्रमसि वैश्वदेवमसि ॥३०॥**

हे डोरी ! तिमी इन्द्रदेवसँगको सम्बन्ध गाँस्ने गँसोटका रूप हौ । हे डोरीको गाँठाहरू हो ! तिमीहरू इन्द्रदेवसित संयुक्त भएर स्थिर होओ । हे सदो नामका यज्ञमण्डप !

इन्द्र तिम्रा अभिमानी देवता हुन् । हे आग्नीध्र नामका मण्डप ! तिमी इन्द्रदेवताका सम्बन्धित भएका छौ । अब सबै देवताहरूसँग सम्बन्धित होऊ ।

**विभूरसि प्रवाहणो वह्निरसि हव्यवाहनः । श्वात्रोसि प्रचेतास्तुथोसि विश्ववेदाः ॥३१॥**

हे आग्नीध्रीय धिष्ण्य नामका प्रमुख यज्ञवेदी ! तिमीभित्र प्रज्वलित भएको अग्नि अन्य वेदीहरूमा लगिन्छ । त्यसैले त्यस व्यापक अग्निलाई विभिन्न रूपमा चिन्ने गरिएको छ । हे होतृधिष्ण्य नामका यज्ञवेदी ! तिमीमा प्रकट भएका अग्निले यज्ञलाई वहन गर्दछन् र देवताहरूका लागि प्रदान गरिएको हवि धारण गर्ने हुनाले तिनी हव्यवाहन हुन पुगेका छन् । हे मित्रावरुणधिष्ण्य यज्ञवेदी ! तिमीमा प्रकट भएका अग्नि सबैका मित्र हुनाले श्वात्र नाम भएका हुन्छन् र सबै विकृतिहरू हटाउनाले वरुण नाम तिनको हुन्छ । हे ब्राह्मणच्छन्सिधिष्ण्य ! तिमी ब्रह्मस्वरूप हौ र सबैलाई चिनेजानेका छौ ।

**उशिगसि कविरङ्घारिरसि बम्भारिरवस्यूरसि दुवस्वाञ्छुन्ध्यूरसि मार्जालीयः सम्राडसि कृशानुः परिषद्योसि पवमानो नभोसि प्रतक्वा मृष्टोसि हव्यसूदनऽऋतधामसि स्वर्ज्योतिः ॥३२॥**

हे पोतृधिष्ण्य ! तिमी कामनायोग्य छौ र नूतन ऋचाहरूको दर्शन गर्न सक्छौ । हे नेष्ट्रधिष्ण्य ! तिमी पापनाशक र पोषणकर्ता हौ । हे अच्छावाकृधिष्ण्य ! तिमी अन्नको कामना गर्ने र हवियुक्त छौ । हे होत्रादिधिष्ण्य ! तिमी दक्षिण दिशामा रहेर शुद्ध र पवित्र गराउने गर्दछौ । हे उत्तर वेदीमा रहेका आहवनीय ! तिमी अनेक आहुति धारण गर्ने हुनाले सम्राट् हौ र व्रत लिएर खिइएका यजमानकहाँ जाने हुनाले कृशानु हौ । हे बहिष्पवमान देश ! तिमी ऋत्विक्हरूले चारै तिरबाट घेरिएका हुनाले पावन हौ । हे चात्वाल ! खन्ने काम गर्दा माथितिर उचालिने हुनाले तिमी आकाशरूप हौ र प्रदक्षिणाका निम्ति ऋत्विक्हरूले हिंडाउने हुनाले तिमी प्रतक्वा हौ । हे शामित्र ! तिमी शुद्ध छौ तथा हवि पकाउने हौ । हे डुम्रीका हाँगाहरू हो ! तिमीहरू सामगान हुने ठाउँमा र सुनमा प्रकाशित हुने सूर्यको ज्योतिरूप हौ ।

**समुद्रोसि विश्वव्यचाऽअजोस्येकपादहिरसि बुध्न्यो वागस्यैन्द्रमसि सदोस्यृतस्य द्वारौ मा मा सन्तापतमध्वनामध्वपते प्र मा तिर स्वस्ति मेस्मिन्पथि देवयाने भूयात् ॥३३॥**

हे ब्रह्मासन ! तिमी समुद्रजस्तै अनन्त ज्ञानवान् छौ र सदसत् कार्यका ज्ञाता हौ । हे पुराना यज्ञस्थलका ढोकाहरू हो ! तिमीहरू यज्ञस्थलमा जाने जुनसुकै प्राणीका गोडा अनुशासित गराउँछौ । हे प्राजहित ! तिमी नयाँ स्थानमा राखिँदा पनि नष्ट नहुने र सबैभन्दा पहिले राखिएका कारणले मूल अग्निका रूप हौ । हे सदो मण्डप ! तिमी वाणीका रूप हौ । इन्द्रदेवतासँग संयुक्त छौ र उनका गृहका रूप हौ । हे सदो मण्डपका द्वारमा रहेका तीन शाखाहरू हो ! तिमीहरू यज्ञका द्वारमा स्थापित छौ ।

बारम्बार आउनेजानेबाट दुःखी नहोओ । हे मार्गरक्षक सूर्य ! मार्गका मध्य भागमा विद्यमान भएर तिमीले मेरो उन्नति गराऊ । देवत्व प्राप्तिको मार्ग वा यज्ञमार्गमा लागेर हाम्रो कल्याण होस् ।

**मित्रस्य मा चक्षुषेक्षध्वमग्नयः सगराः सगरास्थ सगरेण नाम्ना रौद्रेणानीकेन पात माग्नयः पिपृत माग्नयो गोपायत मा नमो वोस्तु मा मा हिॐसिष्ट ॥३४॥**

हे ऋत्विक्हरू हो ! हामी याजकहरूमाथि तिमीहरूको मङ्गलमयी दृष्टि रहोस् । हे अग्नि हो ! तिमीहरू नामविना वा धिष्ण्य नामले गरिएका स्तुतिप्रति सम्मानको भावना राख । हे अग्निहरू हो ! भयङ्कर सेनाले तिमी हाम्रो रक्षा गर । हे अग्निहरू हो ! धनधान्यले परिपूर्ण गरेर हामीलाई रक्षा गर । तिमीहरूलाई हामी नमस्कार गर्दछौँ । हामीलाई हिंसित नगर र हाम्रो यज्ञ निर्बाध सम्पन्न गराओ ।

**ज्योतिरसि विश्वरूपं विश्वेषां देवानाॐ समित् । त्वॐ सोम तनूकृद्भ्यो द्वेषोभ्यान्यकृतेभ्यऽउरुयन्तासि वरूथॐ स्वाहा जुषाणो अप्तुराज्यस्य वेतु स्वाहा ॥३५॥**

हे आज्य ! तिमी अनेकौ आहुतिले युक्त भएका कारण विश्वरूप हौ । प्रकाशले युक्त र सबै देवताका लागि समिधाजस्तै छौ । तिमी प्रचरणी नामका जुहूमा राखिएको सोमले शुत्रको नाश गराउँछौ । हाम्रा विरोधीहरूले गरेका अरू सबै असत् कर्मका तिमी विनाशक हौ । तिमी शत्रुहरूबाट सुरक्षित स्थानमा हामीलाई लैजाने भएकाले हाम्रा बल हौ । सोम लिएर जानका लागि यो आहुति तिमीलाई प्रदान गरिएको छ । हे सोम ! प्रसन्न हुँदै तिमी आज्य सेवन गर, यो आहुति तिमीलाई समर्पित छ ।

**अग्ने नय सुपथा राये अस्मान्विश्वानि देव वयुनानि विद्वान् । युयोध्यस्मज्जुहुराणमेनो भूयिष्ठां ते नमउक्तिं विधेम ॥३६॥**

दिव्य गुणले युक्त हे अग्निदेवे ! सबै मार्ग जानेका हुनाले हामी याजकहरूलाई यज्ञको फल प्राप्त गराउनका लागि तिमी नै सन्मार्गतिर लैजाऊ । हामीलाई कुटिल आचरण भएका शत्रु र पापबाट मुक्त राख । तिम्रा लागि स्तोत्र र नमस्कारको व्यवस्था गर्दछौँ ।

**अयं नो अग्निर्वरिवस्कृणोत्वयं मृधः पुरऽ एतु प्रभिन्दन् । अयं वाजाञ्जयतु वाजसातावयॐ शत्रूञ्जयतु जर्हृषाणः स्वाहा ॥३७॥**

अग्निले हामीलाई श्रेष्ठ धन प्रदान गरुन् । शत्रुको विनाश गर्दै अग्नि हाम्रासामु आऊन् । यिनै अग्नि अन्नको कामना गर्ने यजमानहरूलाई, शत्रुबाट प्राप्त धन प्रदान गरेर विजयी गराऊन् । यिनै अग्नि शत्रुलाई प्रसन्नतापूर्वक जितून् र हामीले चढाएको आहुति ग्रहण गरुन् ।

**उरु विष्णो विक्रमस्वोरु क्षयाय नस्कृधि । घृतं घृतयोने पिब प्रप्र यज्ञपतिं तिर स्वाहा ॥३८॥**

हे सर्वव्यापी आह्वनीय अग्निदेवता ! तिमी आफ्ना पराक्रमले शत्रुलाई परास्त गर । हाम्रो निवासका लागि हामीलाई प्रचुर क्षमताले सम्पन्न गराऊ । हे घिउको आहुतिले प्रदीप्त अग्निदेवता ! यज्ञमा तिमी घिउको सेवन गर र यजमानको अत्यधिक उन्नति गराऊ ।

**देव सवितरेष ते सोमस्तꣳ रक्षस्व मा त्वा दभन् । एतत्त्वं देव सोम देवो देवाँ२ऽ उपागाऽइदमहं मनुष्यान्त्सह रायस्पोषेण स्वाहा निर्वरुणस्य पाशान्मुच्ये ॥३९॥**

हे सवितादेवता ! यो सोम तिमीलाई प्रदान गरिएको छ । तिमी यसको रक्षा गर । हे सोमको रक्षा गर्नेहरू हो ! तिमीहरूलाई राक्षसले दुःख नदिऊन् । हे सोमदेवता ! तिमी देवत्व प्राप्त गरेर देवताहरूमा अधिष्ठित भएका छौ । हामीलाई हामीसित सम्बन्धित सबै व्यक्ति, पशु आदि धन प्राप्त होऊन् । मण्डपबाट निस्केका यस सोमका आहुतिले हामी वरुणदेवताको पाशबाट मुक्त भएका छौं ।

**अग्ने व्रतपास्त्वे व्रतपा या तव तनूर्मय्यभूदेषा सा त्वयि यो मम तनूस्त्वय्यभूदियꣳ सा मयि । यथायथं नौ व्रतपते व्रतान्यनु मे दीक्षां दीक्षापतिरमꣳस्तानु तपस्तपस्पतिः ॥४०॥**

हे व्रतपालनमा सर्वश्रेष्ठ अग्निदेवता ! तिमी हाम्रा व्रत रक्षा गर । व्रतकालमा हाम्रो र तिम्रो शरीर एकीकृत होस् । हे व्रतका अधिपति अग्निदेव! श्रेष्ठ व्रतकार्यमा दीक्षा पालक अग्निले हाम्रो दीक्षा पालन गरेका छन् । तपका पालक अग्निले हाम्रो तपस्या स्वीकार गरुन् ।

**उरु विष्णो विक्रमस्वोरु क्षयाय नस्कृधि । घृतं घृतयोने पिब प्रप्र यज्ञपतिं तिर स्वाहा ॥४१॥**

हे सर्वव्यापी आह्वनीय अग्निदेवता ! तिमी आफ्ना पराक्रमले शत्रुलाई परास्त गर । हाम्रो निवासका लागि हामीलाई प्रचुर क्षमताले सम्पन्न गराऊ । हे घिउको आहुतिले प्रदीप्त अग्निदेवता ! यज्ञमा तिमी घिउको सेवन गर र यजमानको अत्यधिक उन्नति गराऊ ।

**अत्यन्याँ२ऽ अगां नान्याँ२ऽ उपागामर्वाक् त्वा परेभ्योविदं परोवरेभ्यः । तं त्वा जुषामहे देव वनस्पते देवयज्यायै देवास्त्वादेवयज्यायैजुषन्तां विष्णवे त्वा । ओषधे त्रायस्व स्वधिते मैनꣳ हिꣳसीः ॥४२॥**

हे यूपवृक्ष ! मौलो निर्माण गर्नमा उपयोगी यूपवृक्षहरू हामी प्राप्त गरौं । मौलो बनाउन काम नलाग्ने वृक्ष हामीलाई प्राप्त नहोऊन् । टाढा वा नजिकका वृक्षमध्ये हामीले तिमीलाई नै नजिकै पाएका छौ । हे वनका पालक ! देदीप्यमान वृक्ष ! देवताहरूका यज्ञकार्यका लागि हामी तिम्रो सेवा गर्दछौं । देवताकार्यका लागि देवताले

पनि तिम्रो सेवा गर्दछन् । हे मौलो तयार गर्ने वृक्ष ! हामी यज्ञका लागि घिउ छर्कन्छौं । हे औषधि ! बन्चरोबाट यसको रक्षा गर । हे फर्सा ! यस मौलोलाई तिमी नष्ट नगर ।

**द्यां मा लेखीरन्तरिक्षं मा हिंथ्ंसीः पृथिव्या सम्भव । अयथ्ं हि त्वा स्वधिस्तेतिजानः प्रणिनाय महते सौभगाय । अतस्त्वं देव वनस्पते शतवल्शो वि रोह सहस्रवल्शा वि वयं रुहेम ॥४३॥**

हे मौलोका लागि उपयोगी वृक्ष ! तिमी द्युलोकलाई नष्ट नगर, अन्तरिक्षलाई पनि हिंसित नगर बरु तिमी पृथ्वीसित मिलेर एकाकार होऊ । हे काटिएका रुख ! यो ज्यादै धारिलो बन्चरो तिम्रै सौभाग्यका लागि हो । तिमी यज्ञका लागि मौलोको रूप भइदेऊ । हामी यज्ञमा मौलोका रूपमा तिमीलाई प्रयोग गरौं । हे वनस्पतिरूपी देवता ! हालसम्म तिमी केवल काठ नै थियौ, अब तिमी यज्ञको मौलोका रूपमा प्रयुक्त हुनाले अनेकौं आँकुराहरूले युक्त हुँदै विशिष्ट जीवन प्राप्त गर्दछौ । हामी याजकहरू वृक्षका हाँगाबिंगाभैँ पुत्रपौत्रादिले युक्त भई वंश वृद्धि गर्न सकौं ।

**॥इति पञ्चम अध्याय ॥**

॥पाँचौं अध्याय सकियो॥

ॐ

भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।

# वाजसनेयि माध्यन्दिन शुक्ल

# यजुर्वेद – संहिता

## ॥अथ षष्ठोऽध्यायः ॥

॥छैटौं अध्याय॥

**ऋषि–** अगस्त्य, दीर्घतमा, मेधातिथि, मधुच्छन्दा, गोतम ।

**देवता–** सविता, शकल, यूप, चषाल, विष्णु, स्वरु, लिङ्गोक्त, पशु, अग्नि, सोम, अपः, शास, वाक्, तृण, देवगण, रज्जु, यज्ञ, आशीर्वाद, सुख, द्वेष, असि, राक्षस, द्यावा, पृथिवी, वायु, वपाश्रावण्य, पवमान, हृदय, वसा, विश्वेदेवा, दिशा, प्राण, त्वष्टा, समुद्र, शूल, वरुण, आज्य, ग्रावा, निग्राभ्या, इन्द्र ।

**छन्द–** निचृत् पङ्क्ति, आसुरी उष्णिक्, भुरिक् आर्षी उष्णिक्, निचृत् गायत्री, स्वराट् पङ्क्ति आर्ची उष्णिक्, साम्नी त्रिष्टुप्, स्वराट् प्राजापत्या जगती, निचृत् आर्षी गायत्री, आर्षी गायत्री, आर्षी उष्णिक् भरिक् साम्नी बृही, निचृत् आर्षी बृहती, प्राजापत्या अनुष्टुप्, भरिक् प्राजापत्या बृहती, प्राजापत्या बृहती, निचृत् अतिजगती, प्राजापत्या बृहती, भरिक् आर्षी गायत्री, स्वराट् प्राजापत्या बृहती, भरिक् आर्षी उष्णिक् निचृत गायत्री, भुरिक प्राजापत्या अनुष्टुप्, साम्नी उष्णिक्, निचृत् आर्षी अनुष्टुप्, भुरिक् आर्षी जगती, स्वराट् धृति, निचृत् आर्षी त्रिष्टुप्, ब्राह्मी उष्णिक्, निचृत् ब्राह्मी अनुष्टुप्, प्राजापत्या अनुष्टुप्, आर्ची पङ्क्ति, दैवी पङ्क्ति, ब्राह्मी अनुष्टुप्, ब्राह्मी त्रिष्टुप्, याजुषी उष्णिक्, स्वराट् उत्कृति, ब्राह्मी स्वराट् उष्णिक, निचृत् अनुष्टुप्, आर्षी त्रिष्टुप्, त्रिपाद् गायत्री, आर्षी विराट् अनुष्टुप्, भुरिक् गायत्री, आर्षी त्रिष्टुप्, भुरिक् आर्षी गायत्री, स्वराट् आर्षी पङ्क्ति, भुरिक् आर्ची पङ्क्ति, विराट् ब्राह्मी जगती, पचंपदा ज्योतिष्मती जगती, भुरिक् आर्षी बृहती, स्वराट् आर्षी पथ्याबृहती, भरिक आर्षी अनुष्टुप्, पुरोष्णिक् ।

**देवस्य त्वा सवितुः प्रसवेऽश्विनोर्बाहुभ्यां पूष्णो हस्ताभ्याम् । आ ददे नार्यसी दमहꣳ रक्षसां ग्रीवा अपिकृन्तामि । यवोसि यवयास्मद् द्वेषो यवयारातीर्दिवेत्वान्तरिक्षाय त्वा पृथिव्यै त्वा शुन्धन्ताँल्लोकाः पितृषदनाः पितृषदनमसि ॥१॥**

हे अभ्रि देवता ! सवितादेवसँगै रहेर हामी अश्विनीकुमारहरूका बाहु र पूषादेवताका हातबाट तिमीलाई स्वीकार गर्दछौं । तिमी हाम्रा सहायक हौ । मौलो गाड्नका लागि खाडल खन्दा यज्ञमा बाधा हाल्ने राक्षसको घाँटी छिनाउँछौं । हे यव ! दुर्भाग्य र शत्रुका समूहका दुःखबाट हामीलाई तिमी जोगाऊ । हे डुम्रीका हाँगा ! द्युलोकलाई हर्षित गराउनका लागि, अन्तरिक्षलाई हर्षित गराउनका लागि र मूल भागको रूपमा

रहेको पृथ्वीलाई प्रसन्न गर्नका लागि हामी तिमीलाई सफा गर्दछौं । हे यजुष् ! यस जलले पितृको निवासस्थान शुद्ध होस् । हे कुश ! तिमी पितृका आवासस्थान हौ ।

**अग्रेणीरसि स्वावेशऽउन्नेतॄणामेतस्य वित्तादधि त्वा स्थास्यति देवस्त्वा सविता मध्वानक्तु सुपिप्पलाभ्यस्त्वौषधीभ्यः । द्यामग्रेणास्पृक्षऽ आन्तरिक्षं मद्ध्येनाप्राः पृथिवीमुपरेणादृꣳहीः ॥२॥**

हे यज्ञका साधनहरू हो ! तिमीहरू पहिलो पटक प्रयोग गरिने हौ र आफ्नो महान् दायित्व बुझेर समाजको नेतृत्व गर्ने सबै मानिसलाई सन्मार्गमा प्रेरित गर । संसारका अधिष्ठाता सविता देवताले तिमीहरूलाई मधुर र श्रेष्ठ फलदायक औषधीय गुणले सम्पन्न गराऊन् । तिमीहरू आफ्ना सद्भावनाले द्युलोकको स्पर्श गर, सद्विचारले अन्तरिक्ष भर र सत्कर्मले पृथ्वीलाई सुदृढ बनाओ ।

**या ते धामान्युश्मसि गमद्ध्यै यत्र गावो भूरिशृङ्गाऽ अयासः । अत्राहतदुरुगायस्य विष्णोः परमं पदमव भारि भूरि । ब्रह्मवनि त्वा क्षत्रवनि रायस्पोषवनि पर्यूहामि । ब्रह्म दृꣳह क्षत्रं दृꣳहायुर्दृꣳह प्रजां दृꣳह ॥३॥**

हे यज्ञका सम्पूर्ण सामग्रीहरू हो ! सूर्यका रश्मिले प्रकाशित, सर्वव्यापक, सम्माननीय भगवान् विष्णुको परम धामजस्तै उत्तम धाममा पुग्ने रहर गर्दछौं । हे यज्ञसामग्रीहरू हो ! हामी तिमीहरूलाई ब्राह्मण, क्षत्रिय र वैश्य आदिका लागि बल र वैभव प्रदान गर्ने मान्दछौं । त्यसैले तिमीहरू ब्रह्मनिष्ठलाई सद्ज्ञानरूपी सम्पदा, क्षत्रियलाई पराक्रमरूपी सम्पदा र वैश्यलाई धनऐश्वर्य प्रदा गरेर सबैको आयु र सङ्ख्या वृद्धि गराओ ।

**विष्णोः कर्माणि पश्यत यतो व्रतानि पस्पशे । इन्द्रस्य युज्ज्यः सखा ॥४॥**

हे याजकहरू ! सर्वव्यापक भगवान् विष्णुका सृष्टि सञ्चालनमा सम्बन्धित कार्यहरू ध्यानपूर्वक हेर । यसमा अनेकौं किसिमका व्रत वा नियमहरूको दर्शन गर्न सकिन्छ । इन्द्रका योग्य मित्रहरूले त्यस्ता परम सत्ताको अनुकूल बनेर रहनुपर्दछ ।

**तद्विष्णोः परमं पदꣳ सदा पश्यन्ति सूरयः । दिवीव चक्षुराततम् ॥५॥**

जसरी सामान्य आँखाले आकाशमा रहेका सूर्यदेवतालाई सहजतापूर्वक देख्न सकिन्छ उसै गरी विद्वान्हरूले आफ्ना ज्ञानचक्षुले विष्णुदेवताका श्रेष्ठ स्थानलाई पनि देख्छन् ।

**परिवीरसि परि त्वा दैवीर्विशो व्ययन्तां परीमं यजमानꣳ रायो मनुष्याणाम् । दिवः सूनुरस्येष ते पृथिव्याँल्लोकऽआरण्यस्ते पशुः ॥६॥**

हे सर्वव्यापी यज्ञदेवता ! ज्ञानीजलका समूहले तिमीलाई सूर्यको दिव्य प्रकाशझैं कणकणमा निहित रहेको अनुभव गर्दछन् । समस्त पृथ्वी, वन र पशुप्राणीमा तिम्रो विस्तार छ । तिमी याजकहरूलाई सत्कर्मका मार्गबाट सबैतिरको वैभव परिपूर्ण रूपमा प्रदान गर ।

**उपावीरस्युप देवान्दैवीर्विशः प्रागुरुशिजो वह्नितमान् । देव त्वष्टर्वसु रम हव्या ते स्वदन्ताम् ॥७॥**

हे त्वष्टादेवता ! तिमी आफ्ना अगाडि आएकाहरूको रक्षा गर्दछौ । श्रेष्ठ गुणले युक्त प्रजा, दिव्य गुणसम्पन्न, तेजस्वी समर्थ विद्वान्लाई तिमी प्राप्त हुन्छौ । तिमी साधनको सदुपयोग गर्दछौ । यस हव्य पदार्थले तिमीलाई सन्तुष्ट गरोस् ।

**रेवती रमद्ध्वम्बृहस्पते धारया वसूनि । ऋतस्य त्वा देवहविः पाशेन प्रतिमुञ्चामि धर्षा मानुषः ॥८॥**

विद्वान् पुरुषहरूले श्रेष्ठ यज्ञमा श्रेष्ठ हवि प्रदान गर्नका लागि बाँधेका जेजति पशुहरू छन्, ती सबै दुधालु पशुहरू मुक्त होऊन् र दुध आदि ऐश्वर्य प्रदान गर्दै तिनीहरू आनन्दले रहून् तथा मानिसहरू पनि समर्थ होऊन् ।

**देवस्य त्वा सवितुः प्रसवेऽश्विनोर्बाहुभ्यां पूष्णो हस्ताभ्याम् । अग्नीसोमाभ्यां जुष्टं नियुनज्मि । अद्भ्यस्त्वौषधीभ्योनु त्वा माता मन्यतामनु पितानु भ्राता सगर्भ्योनु सखा सयूथ्यः । अग्नीषोमाभ्यां त्वा जुष्टं प्रोक्षामि ॥९॥**

हे यज्ञका साधनहरू हो ! सवितादेवताका प्रेरणाले अश्विनीकुमारहरूका हातबाट हामी तिमीहरूलाई ग्रहण गर्दछौँ । औषधि र जलका सहायताले शुद्ध गर्दछौँ र सोम र अग्निको सन्तुष्टिका लागि यज्ञजस्तो उत्तम कार्यमा नियोजित गर्दछौँ । यसका लागि तिम्रा मातापिता, भाइबन्धु र मित्रहरूले अनुमति प्रदान गरुन् ।

**अपां पेरुरस्यापो देवीः स्वदन्तु स्वात्तं चित्सद्देवहविः । सन्ते प्राणो वातेन गच्छताथ्ं समङ्गानि यजत्रैः सं यज्ञपतिराशिषा ॥१०॥**

हे यज्ञसँग सम्बन्धित पशु ! तिमी जलको रक्षा गर्दछौ । दिव्य गुण भएको जल र हविष्यान्नले सधैँ समृद्ध रहन्छौ । देवताका आशीर्वादले तिम्रो जीवन पूर्ण रूपमा यज्ञकार्यमा समर्पित रहोस् । तिम्रो प्राण शुद्ध वायुसँग सम्बद्ध होस् र तिमी यज्ञीय अनुशासनको पालनकर्ता होऊ ।

**घृतेनाक्तौ पशूँस्त्रायेथाथ्ं रेवति यजमाने प्रियं धाऽआविश । उरोरन्तरिक्षात्सजूर्देवेन वातेनास्य हविषस्त्मना यज समस्य तन्वा भव । वर्षो वर्षीयसि यज्ञे यज्ञपतिं धाः स्वाहा देवेभ्यो देवेभ्यः स्वाहा ॥११॥**

हे यज्ञको साधनका रूपमा रहेका स्तम्भ र हतियार ! तिमीहरू घिउ आदि पदार्थ प्रदान गर्ने पशुको रक्षा गर । अन्तरिक्षबाट सबैको रक्षा गर्ने दिव्य प्राणझैँ ऐश्वर्यशाली याजकका शरीरका लागि अनुकूल र प्रिय बनेर रहँदै उनलाई रक्षा गर । हे याजकहरू हो ! सबै किसिमका सुख प्रदान गर्ने यस महान् यज्ञमा श्रेष्ठ हविष्यान्नले आहुति प्रदान गर । त्यो आहुति देवताको सम्मानका लागि समर्पित गर्दै यज्ञीय अनुशासनको पालनकर्ता होओ ।

**माहिर्भूर्मा पृदाकुर्नमस्तऽ आतानानर्वा प्रेहि । घृतस्य कुल्याऽ उप ऋतस्य पथ्याऽअनु ॥१२॥**

सत्कर्मले सुख विस्तार गराउने हे यज्ञका साधनहरू हो ! सर्प आदि हिंस्रक प्राणीको जस्तो तिमीहरू क्रोधी र प्राणनाशक नहोओ । हे याजकहरू हो ! निर्बाध रूपले प्रवाहित जलधाराको जस्तो तिमीहरू शाश्वत सत्यका मार्गमा चल, हामी तिमीहरूको सम्मान गर्दछौँ ।

**देवीरापः शुद्धा वोड्ढ्वथं॑ सुपरिविष्य देवेषु सुपरिविष्य वयं परिवेष्टारो भूयास्म ॥१३॥**

जलको जस्तो सरस दिव्य गुणले सम्पन्न, स्वाभाविकतया शुद्ध हे देवीहरू हो ! तिमीहरू देवताहरूका सन्तुष्टिका लागि उत्तम पात्रमा रहेको हविष्यान्न ग्रहण गर । देवताहरूलाई आहुति दिँदै हामी पनि यस देवताकार्यमा संलग्न हुन्छौं ।

**वाचं ते शुन्धामि प्राणं ते शुन्धामि चक्षुस्ते शुन्धामि श्रोत्रं ते शुन्धामि नाभिं ते शुन्धामि मेढ्रं ते शुन्धामि पायुं ते शुन्धामि चरित्राँस्ते शुन्धामि ॥१४॥**

हे याजकहरू हो ! हामी तिम्रो प्राण, वाणी, दृष्टि, श्रोत्र, नाभी, जननेन्द्रिय, गुदा आदिको सफाइ गर्दछौं र यसै अनुकूल तिम्रो चरित्रलाई पनि शुद्ध गराएर यज्ञका लागि अनुकूल गराउँछौं ।

**मनस्तऽ आप्यायतां वाक्तऽ आप्यायतां प्राणस्तऽआप्यायतां चक्षुस्तऽआप्यायताथं॑ श्रोत्रं तऽआप्यायताम् । यत्ते क्रूरं यदास्थितं तत्तऽआप्यायतां निष्ट्यायतां तत्ते शुध्यतु शमहोभ्यः । ओषधे त्रायस्व स्वधिते मैनथं॑ हिथं॑सीः ॥१५॥**

हे याजकहरू हो ! तिम्रा मन, वाणी र प्राणले उत्कर्ष प्राप्त गरुन् । तिम्रा नेत्र र कान कल्याणकारी शक्तिले युक्त होऊन् । यज्ञीय पशुको क्रूरता शान्त होस् र स्वाभाविकता स्थिर रहोस् । उसको आचरण सधैं सुखदायी होस् । हे औषधि ! यिनको रक्षा गर र यिनलाई नष्ट हुनबाट जोगाऊ ।

**रक्षसां भागोसि निरस्तथं॑ रक्षऽइदमहथं॑ रक्षोभि तिष्ठामीदमहथं॑ रक्षोव बाध इदमहथं॑ रक्षोधमं तमो नयामि । घृतेन द्यावापृथिवी प्रोर्णुवाथां वायो वे स्तोकानामग्निराज्यस्य वेतु स्वाहा स्वाहाकृतेऽ ऊर्ध्वनभसं मारुतं गच्छतम् ॥१६॥**

हे काम नलाग्ने झारपातहरू हो ! तिमीहरू विनाकारी तत्त्व नै हौ । त्यसैले तिमीहरूलाई पर हटाउने गर्दछन् । तिमीहरू दुष्ट स्वभावका भएकाले उम्रन नदिएर उन्मूलन गर्नतिर सबै लाग्दछन् । व्यवहारका सानाठुला सबै कुरा बुझेका हे याजकहरू हो ! तिमीहरूले दिएका अर्घ्यका जलले पृथ्वी र द्युलोक भरिपूर्ण होस् । तिमीहरूले समर्पित गरेको घिउ आदिको हविष्यान्न अग्निले प्राप्त गरुन् र वायुका रूपमा आकाशमा भरिपूर्ण होस् ।

**इदमापः प्रवहतावद्यं च मलं च यत् । यच्चाभिदुद्रोहानृतं यच्च शेपे अभीरुणम् । आपो मा तस्मादेनसः पवमानश्च मुञ्चतु ॥१७॥**

हे जलदेवता ! तिमी शरीरमा भएको मल र विकार हटाएझैं याजकलाई रिसडाहा गर्ने, असत्य बोल्ने, ढाँटनेछल्ने, दोषारोपण गर्ने जस्ता निन्दनीय कर्म गर्ने र त्यस्ता कर्महरूलाई दोषका रूपमा हटाइदेऊ । जल वायुले आफ्नो पवित्र प्रवाहले हामीलाई यज्ञीय प्रयोजन पूरा गर्ने अनुरूप भइदिऊन् ।

**कार्षिरसि समुद्रस्य त्वा क्षित्याऽ उन्नयामि । समापो अद्‌भिरग्मत समोषधीभिरोषधीः ॥२८॥**

समुद्रसम्मको भूमि उर्वर होस् भनेर नै तिमीलाई माथि उठाइएको हो । प्राणरूपी पर्जन्यका रूपमा बर्सिएका पानीले औषधिहरू उत्पन्न हुन्छन् । लोकहितका लागि कृषिकार्यका रूपमा यस्तो यज्ञको प्रक्रिया निरन्तर चलिरहन्छ ।

**यमग्ने पृत्सु मर्त्यमवा वाजेषु यं जुनाः । स यन्ता शश्वतीरिषः स्वाहा ॥६.२९॥**

हे अग्निदेवता ! जीवन सङ्ग्राममा जुन पुरुषहरूलाई तिमी प्रेरित गर्दछौ, तिनीहरूको रक्षा पनि स्वयं नै गर्दछौ । त्यसका साथै उनीहरूलाई पोषक अन्न पनि आपूर्ति गर्दछौ ।

**देवस्य त्वा सवितुः प्रसवेऽश्विनोर्बाहुभ्यां पूष्णो हस्ताभ्याम् । आ ददे रावासि गभीरमिममध्वरङ्कृधीन्द्राय सुषूतमम् । उत्तमेन पविनोर्जस्वन्तं मधुमन्तं पयस्वन्तं निग्राभ्या स्थ देवश्रुतस्तर्पयत मा मनो मे ॥३०॥**

हे यज्ञका साधनहरू हो ! हामी याजकहरू तिमीलाई सूर्योदयका समयमा अश्विनीकुमारहरू र पूषादेवताका हातबाट ग्रहण गर्दछौँ । तिमीहरू इच्छा पूरा गराउने हौ । इन्द्रदेवताको सन्तुष्टिका लागि यस विशाल यज्ञलाई शक्तिसामर्थ्य, मधुर रस र पोषक पदार्थहरूले परिपूर्ण गराओ । तिमीहरू उचित किसिमले हव्य ग्रहण गरेर हामीलाई सन्तुष्ट गराओ ।

**मनोमे तर्पयत वाचम्मे तर्पयत प्राणम्मे तर्पयत चक्षुर्मे तर्पयतश्श्रोत्रम्मे तर्पयतात्मानम्मे तर्पयत प्रजाम्मे तर्पयत पशून्मे तर्पयत गणान्मे तर्पयत गणामे मा वितृषन् ॥३१॥**

हे यज्ञका लागि तयार गरिएका जलराशि ! तिमीले आफ्ना दिव्य गुणले हाम्रो मन, वाणी र प्राणलाई सन्तुष्ट गराऊ । तिमीले हाम्रा आँखा, कान र आत्मालाई सन्तुष्टि प्रदान गर । हाम्रा सन्तान, सेवक र घरपालुवा पशुधनलाई सन्तुष्ट गराऊ । हाम्रा सहयोगीहरू तिम्रा अभावका कारण कहिल्यै प्यासा रहनुनपरोस् ।

**इन्द्राय त्वा वसुमते रुद्रवतऽ इन्द्राय त्वादित्यवतऽ इन्द्राय त्वाभिमातिघ्ने । श्येनाय त्वा सोमभृतेऽग्नये त्वा रायस्पोषदे ॥३२॥**

हे सोम ! सूर्यजस्तै तेजस्वी भएर शत्रुलाई दुःख दिँदै तिनीहरूको विनाश गर्ने, सोमरस पान गर्नका लागि बाजपक्षीझैँ झम्टिने र ऐश्वर्यशालीहरूमा अग्रगण्य इन्द्रदेवताको सन्तुष्टिका लागि तिमीलाई हामी स्वीकार गर्दछौँ ।

**यत्ते सोम दिवि ज्योतिर्यत्पृथिव्यां यदुरावन्तरिक्षे । तेनास्मै यजमानायोरु राये कृद्ध्यधि दात्रे वोचः ॥३३॥**

पृथ्वी, अन्तरिक्ष र द्युलोकसम्म फैलिएका हे दिव्य सोम ! तिमी लोकहितका लागि सत्कर्ममा लागेका याजकहरूलाई सहायता गर ।

**श्वात्रा स्त्थ व्वृत्रतुरो राधोगूर्ताऽअमृतस्य पत्नीः । ता देवीर्देवत्रेमं यज्ञं नयतोपहूताः सोमस्य पिबत ॥३४॥**

हे सोमरूपी अमृतको रक्षा गर्ने देवशक्तिहरू हो ! तिमीहरू कल्याणकारी छौ । वृत्ररूपी विकृतिहरू मासेर सोमको पोषण गर्ने र धन प्रदायक होओ । तिमीहरू यस यज्ञको नेतृत्व गर्दै सोमरस पान गर ।

**मा भेर्म्मा सं विक्क्थाऽऊर्जं धत्स्व धिषणे वीड्वी सती वीडयेथामूर्जं दधाथाम् । पाप्मा हतो न सोमः ॥३५॥**

हे सोम ! रस निकाल्दाखेरि ढुङ्गाका प्रहार पर्दा तिमी त्यसबाट भयभीत र विचलित नहोऊ । चन्द्रमाको जस्तै आनन्द प्रदान गर्ने, आकाश र पृथ्वीजस्तै शक्तिसामर्थ्यले युक्त भएर तिमीले सबैका दोष दूर गराऊ ।

**प्रागपागुदगधराक्सर्वतस्त्वा दिशऽआ धावन्तु । अम्ब निष्पर समरीर्विदाम् ॥३६॥**

हे सोम ! तिमी पूर्व, पश्चिम, उत्तर, दक्षिण आदि सबै दिशाबाट आफ्नो अंश प्राप्त गरेर यज्ञशालामा आऊ । हे धर्तीमाता ! आफ्ना अंशले सोमलाई पूर्णता प्रदान गर । यस यज्ञलाई सबैले राम्ररी जान्न सकून् ।

**त्वमङ्ग प्र शꣳसिषो देवः शविष्ठ मर्त्यम् । न त्वदन्यो मघवन्नस्ति मर्डितेन्द्र ब्रवीमि ते वचः ॥६.३७॥**

हे प्रशंसनीय बलवान् इन्द्रदेवता ! तिमी आफ्ना तेजले तेजस्वी भएर साधकको प्रशंसा गर्दछौ । हे ऐश्वर्यवान् इन्द्रदेवता ! सुख प्रदान गर्ने तिमीबाहेक अन्य कोही पनि छैन भनेर तिम्रै वचनका आधारमा हामी भन्दछौं । त्यसैले हामी सबैले तिम्रै स्तवन गरिरहेका छौं ।

## ॥इति षष्ठोऽध्याय ॥

॥छैटौं अध्याय सकियो॥

ॐ

भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।

# वाजसनेयि माध्यन्दिन शुक्ल

# यजुर्वेद – संहिता

## ॥अथ सप्तमोऽध्यायः॥

॥सातौँ अध्याय॥

**ऋषि–** गोतम, वसिष्ठ, मधुच्छन्दा, गृत्समद, त्रसदस्यु, मेधातिथि, अवत्सार काश्यप, वेन, परुच्छेप, भरद्वाज, देवश्रवा, विश्वामित्र, त्रिशोक, वत्स, प्रस्कण्व, कुत्स आङ्गिरस, अगस्त्य ।

**देवता–** प्राण, लिङ्गोक्त, सोम, उपांशु, देवगण, सोमांशु, ग्रह, उपांशुसवन, इन्द्र, मघवा, देवगण, ग्रह, वायु, इन्द्रवायु, मित्रावरुण, अश्विनीकुमार, विश्वेदेवा, शुक्र, आभिचारिक, शकल, सोम, इन्द्र, वेन, शुक्र मन्थी, दक्षिणोत्तरवेदिका श्रोणीमन्थी, आग्रयण, ग्रह वैश्वानर, ध्रुव, चात्वाल, उपांशुसवन, प्रजापति, इन्द्रामरुत्, महेन्द्र, सूर्य, अग्नि, दक्षिणा ।

**छन्द–** निचृत् आर्षी अनुष्टुप्, निचृत् आर्षी पङ्क्ति विराट् ब्राह्मी जगती आर्षी उष्णिक्, आर्षी पङ्क्ति, भुरिक् त्रिष्टुप्, निचृत् जगती, आर्षी गायत्री, आर्षी स्वराट् गायत्री, आर्षी गायत्री, आसुरी गायत्री, ब्राह्मी बृहती, ब्राह्मी उष्णिक्, निचृत् आर्षी जगती, पङ्क्ति, निचृत् आर्षी त्रिष्टुप्, प्राजापत्या गायत्री, विराट् जगती, निचृत् ब्राह्मी अनुष्टुप्, निचृत् आर्षी त्रिष्टुप्, साम्नी गायत्री, स्वराट् ब्राह्मी त्रिष्टुप्, निचृत् त्रिष्टुप्, प्राजापत्या गायत्री, भुरिक् आर्षी पङ्क्ति, निचृत् आर्षी जगती, स्वराट् ब्राह्मी त्रिष्टुप्, याजुषी जगती, विराट् ब्राह्मी त्रिष्टुप्, अनुष्टुप्, प्राजापत्या अनुष्टुप्, स्वराट् साम्नी अनुष्टुप्, भुरिक् आर्ची गायत्री, भुरिक् साम्नी अनुष्टुप्, आर्षी त्रिष्टुप्, याजुषी अनुष्टुप्, विराट् आर्षी बृहती, स्वराट् ब्राह्मी बृहती, आसुरी अनुष्टुप्, आसुरी, उष्णिक, साम्नी गायत्री, आसुरी गायत्री, ब्राह्मी बृहती, आर्ची पङ्क्ति, भुरिक् साम्नी पङ्क्ति, साम्नी गायत्री, आसुरी अनुष्टुप्, याजुषी पङ्क्ति, आसुरी उष्णिक्, आर्षी गायत्री, आर्ची उष्णिक्, आर्षी गायत्री, निचृत् आर्षी उष्णिक्, आर्षी, त्रिष्टुप् विराट् आर्ची पङ्क्ति, विराट् आर्षी त्रिष्टुप्, विराट् आर्ची पङ्क्ति, साम्नी उष्णिक्, निचृत् आर्षी त्रिष्टुप्, विराट् आर्ची पङ्क्ति, भुरिक् पङ्क्ति, साम्नी त्रिष्टुप्, आर्षी गायत्री, विराट् आर्षी गायत्री, भुरिक् आर्षी गायत्री, भुरिक् आर्षी त्रिष्टुप्, विराट् जगती, भुरिक् प्राजापत्या जगती, स्वराट् प्राजापत्या जगती, निचृत् आर्ची जगती, आर्ची जगती ।

**वाचस्पतये पवस्व वृष्णोऽअꣳशुभ्यां गभस्तिपूतः । देवो देवेभ्यः पवस्व येषां भागोसि ॥१॥**

सबै किसिमका सुख प्रदान गर्ने, उत्तम गुणले सम्पन्न हे दिव्य सोम ! सूर्यका रश्मिका माध्यमबाट वाचस्पति आदि देवताहरूको सन्तुष्टिका लागि तिमी पवित्रता प्राप्त गर । तिमी जुनजुन देवताका अंश हौ, तिनीहरूलाई सन्तुष्ट गराऊ ।

**मधुमतीर्न ऽइषस्कृधि यत्ते सोमादाभ्यं नाम जागृवि तस्मै ते सोम सोमाय स्वाहा स्वाहोर्वन्तरिक्षमन्वेमि स्वाङ्कृतोसि ॥२॥**

कहिल्यै विनाश नहुने हे दिव्य सोम ! तिमी हाम्रो आहार मधुर रस आदि तत्त्वले परिपूर्ण गराऊ । तिम्रो जाग्रत स्वरूपका लागि हामी यो आहुति प्रदान गर्दछौँ । यो आहुति अनन्त अन्तरिक्षमा विस्तृत रूपमा फैलियोस् ।

**स्वाङ्कृतोसि विश्वेभ्यऽइन्द्रियेभ्यो दिव्येभ्यः पार्थिवेभ्यो मनस्त्वाष्टु स्वाहा त्वा सुभव सूर्याय देवेभ्यस्त्वा मरीचिपेभ्यो देवाꣳशो यस्मै त्वेडे तत्सत्यमुपरिप्लुता भङ्गेन हतोसौ फट् प्राणाय त्वा व्यानाय त्वा ॥३॥**

हे उत्तम जन्म पाएका सुभव ! पृथ्वी र द्युलोकमा रहने सबै प्राणी र इन्द्रियको कल्याणका लागि तिमी स्वयं प्रकाशित भएका छौ । हे पवित्र मन भएका उपांशु नामका पात्र ! तिमीलाई सूर्यदेवताको किरणजस्तै प्रकाशित छौ र देवता तथा मानिसको सन्तुष्टिका लागि नियुक्त गरिएको छ । हे तेजस्वी देवताहरू हो ! तिमीहरू मर्यादा उल्लङ्घन गर्ने दुराचारीको चाँडै नाश गराओ । तिमीहरू आफ्नै सत्य आचरणका कारण प्रशंसनीय छौ । प्राण र व्यान नामका वायुले शरीर सञ्चालन गरेझैँ यज्ञ सञ्चालनका लागि तिमीहरूलाई नियुक्त गरिएको छ ।

**उपयामगृहीतोस्यन्तर्यच्छमघवन् पाहि सोमम् । उरुष्य रायऽएषो यजस्व ॥४॥**

हे ऐश्वर्यशाली इन्द्रदेवता ! यज्ञका लागि नियमअनुसार ग्रहण गरिएका यस कलशमा रहेको सोमरस तिमी स्वीकार गर र उपयाम नामका पात्रमा स्थापित सोमको रक्षा गर । याजकहरूलाई शत्रुबाट रक्षा गर्दै अपार धनवैभव प्रदान गर ।

**अन्तस्ते द्यावापृथिवी दधाम्यन्तर्दधाम्युर्वन्तरिक्षम् । सजूर्देवेभिरवरैः परैश्चान्तर्यामे मघवन् मादयस्व ॥५॥**

हे इन्द्रदेवता ! पृथ्वी, द्युलोक र अनन्त अन्तरिक्षमा तिम्रो विस्तार रहेको छ । तिम्रा नजिकै स्वर्गमा रहेका देवता र पर रहेका याजकहरूलाई समान रूपले तिमी आनन्द प्रदान गर ।

**स्वाङ्कृतोसि विश्वेभ्यऽइन्द्रियेभ्यो दिव्येभ्यः पार्थिवेभ्यो मनस्त्वाष्टु स्वाहा त्वा सुभव सूर्याय देवेभ्यस्त्वा मरीचिपेभ्यऽउदानाय त्वा ॥६॥**

हे उत्तम जन्म पाएका सुभव ! पृथ्वी र द्युलोकमा रहने सबै प्राणी र इन्द्रियको कल्याणका लागि तिमी स्वयं प्रकाशित भएका छौ । हे पवित्र मन भएका उपांशु नामका पात्र ! तिमीलाई सूर्यदेवताको किरणजस्तै प्रकाशित छौ र देवता तथा मानिसको सन्तुष्टिका लागि नियुक्त गरिएको छ । उदान नामका वायुले शरीर सञ्चालन गरेझैँ यज्ञ सञ्चालनका लागि तिमीहरूलाई नियुक्त गरिएको छ ।

**आ वायो भूष शुचिपाऽ उप नः सहस्रं ते नियुतो विश्ववार । उपो ते अन्धो मद्यमयामि यस्य देव दधिषे पूर्वपेयम् वायवे त्वा ॥७॥**

हे पवित्रत विस्तार गर्ने वायुदेवता ! तिमी अनन्त गुणका आश्रय हौ । हाम्रा जीवनलाई सद्गुणले विभूषित गराऊ । तिम्रा लागि तृप्तिकारक श्रेष्ठ सोमरस नामको आहार हामी समर्पित गर्दछौँ । तिमीले यस्तो सोमरस पहिले पनि पान गरेका छौ । हे सोम ! वायुदेवताका लागि हामी तिमीलाई ग्रहण गर्दछौँ ।

**इन्द्रवायूऽ इमे सुताऽ उप प्रयोभिरागतम् । इन्दवो वामुशन्ति हि । उपयामगृहीतोसि वायवऽइन्द्रवायुभ्यां त्वैष ते योनिः सजोषोभ्यां त्वा ॥८॥**

हे इन्द्रदेवता ! हे वायुदेवता ! यो सोमरस तिमीहरूकै लागि पेलेर र निचोरेर तयार गरीकन राखिएको हो । तिमीहरू अन्न आदि पदार्थ आफूसित लिएर यहाँ आइदेओ, किनभने यस सोमरसले तिमीहरू दुवैलाई खोजिरहेको छ ।

**अयं वां मित्रावरुणा सुतः सोमऽ ऋतावृधा । ममेदिह श्रुतᳪ हवम् । उपयामगृहीतोसि मित्रावरुणाभ्यां त्वा ॥९॥**

सत्यलाई विस्तार गराउने हे मित्र र वरुणदेवताहरू हो ! तिमीहरूको तृप्तिका लागि सोमरस प्रस्तुत गरेका छौं । तिमीहरू यज्ञशालामा आओ, हामी तिमीहरूलाई आह्वान गर्दछौं । हे सोम देवता ! उपयाम नामका पात्रामा इन्द्र र वरुणदेवताका लागि तिमीलाई हामीले नियमपूर्वक तयार गरेका छौं । हामी उनीहरूकै लागि तिमीलाई समर्पित गर्दछौं ।

**राया वयᳪ ससवाᳪसो मदेम हव्येन देवा यवसेन गावः । तां धेनु मित्रावरुणा युवं नो विश्वाहा धत्तमनपस्फुरन्तीमेष ते योनिर्ऋतायुभ्यां त्वा ॥१०॥**

सत्यको विस्तार गर्ने हे मित्र र वरुणदेव हो ! पलायन नगर्ने किसिमका गाईहरू हामी यजमानलाई प्रदान गर । त्यस्ता किसिमका गाईहरू भएपछि हामी सम्पत्तिवान् हुन सक्नेछौं र घाँस पाएर गाई अथवा हवि पाएर देवता खुसी भएझैं हामी खुसी हुनेछौं । सत्य र यज्ञको विस्तारका लागि तिमीहरू यज्ञशालामा आएर सुनिश्चित आसनमा विराजमान होओ ।

**या वां कशा मधुमत्यश्विना सूनृतावती । तया यज्ञं मिमिक्षतम् । उपयामगृहीतोस्यश्विभ्यां त्वैष ते योनिर्माध्वीभ्यान्त्वा ॥११॥**

हे अश्विनीकुमारहरू ! तिमीहरूको वाणी मधुर र सत्यवचनयुक्त छ । त्यसबाट यज्ञको सेचन गर्ने कृपा गर । हे उपांशु नामका यज्ञपात्र ! मधुरताका लागि प्रसिद्ध हुनाले अश्विनीकुमारको खुसीका लागि हामी नियमअनुसार तिमीलाई ग्रहण गर्दछौं । तिमी यस यज्ञशालामा नियमअनुसार सुनिश्चित आसनमा विराजमान होऊ ।

**तं प्रत्नथा पूर्वथा विश्वथेमथा ज्येष्ठतातिं बर्हिषदᳪ स्वर्विदम् । प्रतीचीनं वृजनं दोहसे धुनिमाशुं जयन्तमनु यासु वर्धसे । उपयामगृहीतोसि शण्डाय त्वैष ते योनिर्वीरतां पाह्यपमृष्टः शण्डो देवास्त्वा शुक्रपाः प्रणयन्त्वनाधृष्यसि ॥१२॥**

पोषक तत्वले युक्त, तृप्तिदायक सोमरस बारम्बार पान गरेर, यज्ञशालाको सर्वोच्च स्थानमा विराजमान हुने हे इन्द्रदेवता ! तिमी शत्रुलाई भयभीत गराउने, प्राचीन ऋषिहरूलाई झैं याजकलाई वाञ्छित वैभवका रूपमा यज्ञको फल प्रदान गर्दछौ । हामी तिम्रो वन्दना गर्दछौं । हे उपांशु ग्रह ! तिमीलाई देवताहरूका लागि हामीले नियमअनुसार ग्रहण गरेका छौं । सोमरस पान गर्ने देवताहरूले तिमीलाई प्राप्त गरेर याजकहरूको शक्ति तथा सामर्थ्य वृद्धि गरुन् ।

**सुवीरो वीरान् प्रजनयन्परीह्यभि रायस्पोषेण यजमानम् । सञ्जग्मानो दिवा पृथिव्या शुक्रः शुक्रशोचिषा निरस्तः शण्डः शुक्रस्याधिष्ठानमसि ॥१३॥**

सूर्यको जस्तै तेजस्विताले पृथ्वी र द्युलोकलाई प्रकाशित गर्ने हे ग्रहहरू हो ! तिमीहरू याजकको पराक्रम वृद्धि गराउँदै उनीहरूलाई वैभव प्रदान गर । तिमीहरू दुष्टता हटाउने र कल्याणकारी पराक्रमलाई आश्रय दिएर बढाउने काम गर्दछौ ।

**अच्छिन्नस्य ते देव सोम सुवीर्यस्य रायस्पोषस्य ददितारः स्याम । सा प्रथमा संस्कृतिर्विश्ववारा स प्रथमो वरुणो मित्रो अग्निः ॥१४॥**

अनन्त शक्तिले सम्पन्न अक्षय ऐश्वर्यवान् हे सोमदेवता ! तिम्रा अनुग्रहले हामी याजकहरू सधैँ देवताका लागि हवि प्रदान गर्ने सत्कर्म गरौँ । यो विश्व मानवसमुहले स्वीकार गर्न योग्य सबैभन्दा पहिलो र सर्वोत्कृष्ट संस्कृति हो । संस्कारित सोमदेव नै वरुण, मित्र र अग्नि आदि देवताहरूमा अग्रणी हुन् ।

**स प्रथमो बृहस्पतिश्चिकित्वाँस्तस्माऽइन्द्राय सुतमा जुहोत स्वाहा । तृम्पन्तु होत्रा मद्ध्वोयाः स्विष्य याः सुप्रीताः सुहुता यत्स्वाहायाऽग्नीत् ॥१५॥**

सर्वश्रेष्ठ विद्वान्, मेधावी इन्द्रदेवताका लागि सोमरस अर्पित गरौँ । होताहरू उनलाई मधुर हविष्यान्न प्रदान गरेर सन्तुष्ट गराऊन् । सोमरस नामको वाञ्छित आहारले तृप्त हुन चाहने देवताहरू यज्ञाग्निका नजिकै पुगून् ।

**अयं वेनश्चोदयत्पृश्निगर्भा ज्योतिर्जरायू रजसो विमाने । इममपाॅं सङ्गमे सूर्यस्य शिशुं न विप्रा मतिभी रिहन्ति । उपयामगृहीतोसि मर्क्काय त्वा ॥१६॥**

परम तेजस्वी देवताले अन्तरिक्षबाट जल प्राप्त गरेर त्यही जल वर्षाका रूपमा उपलब्ध गराउँछन् । जलका रूपमा पाएको त्यस अनुदानलाई पुत्र जन्मेको जस्तै सुखद रूपमा पाएपछि विद्वान्हरूले विभिन्न किसिमका स्तोत्रले सूर्यदेवताको वन्दना गर्दछन् । हे सोमदेवता ! शुक्रको पुत्र मर्क नामका असुरको विनाश गर्नका लागि तिमीलाई नियमअनुसार ग्रहण गरिएको छ ।

**मनो न येषु हवनेषु तिग्मं विपः शच्या वनुथो द्रवन्ता । आ यः शर्याभिस्तुविनृम्णो अस्याश्रीणीतादिशं गभस्तावेष ते योनिः प्रजा पाह्यपमृष्टो मर्क्को देवास्त्वा मन्थिपाः प्रणयन्त्वनाधृष्यासि ॥१७॥**

सधैँभरि सत्कर्म गर्नमा लागेका ज्ञानीहरूले जुन सोमयागमा मन लगाएर सहभागी हुने गरेका छन्, ती यज्ञबाट प्राप्त हुने सोमरसलाई पौष्टिक आहारका रूपमा ग्रहण गर्दछन् । हे मन्थी नामका ग्रह ! शत्रुलाई विनाश गर्दै सन्तानहरूका साथै याजकहरूको सुरक्षा गर्ने कर्तव्य तिमी निर्वाह गर । तिमी निर्भय हुँदै देवताहरूलाई प्राप्त गर ।

**सुप्रजाः प्रजाः प्रजनयन् परीह्यभि रायस्पोषेण यजमानम् । सञ्जग्मानो दिवा पृथिव्या मन्थी मन्थीशोचिषा निरस्तो मर्क्को मन्थिनोधिष्ठानमसि ॥१८॥**

मन्थन कार्यमा लाग्ने हे मन्थी ! तिमी उत्तम सन्तति भएका यजमानलाई ऐश्वर्य प्रदान गर्दै सत्कर्ममा प्रेरित गर । सूर्य र पृथ्वीजस्तै विचारशील साधकका जीवनमा तिमी सद्गुणको विकास गराऊ । महान् दुःखदायी असुरहरू तिम्रा तेजका प्रभावले भागून् ।

**ये देवासो दिव्येकादश स्थ पृथिव्यामद्ध्येकादश स्थ । अप्सुक्षितो महिनैकादश स्थ ते देवासो यज्ञमिमं जुषध्वम् ॥१९॥**

हे देवताहरू हो ! तिमीहरू पृथ्वी, अन्तरिक्ष र देवलोक यी तीनै लोकमा एघारएघारको सङ्ख्यामा छौ । हे देवताहरू ! तिमीहरू सबै आहुतिहरू ग्रहण गर ।

**उपयामगृहीतोस्याग्रयणोसि स्वाग्रयणः । पाहियज्ञं पाहि यज्ञपतिं विष्णुस्त्वामिन्द्रियेण पातु विष्णुं त्वं पाह्यभि सवनानि पाहि ॥२०॥**

हे सर्वप्रथम ग्रहण गरिने आग्रयण ग्रह ! तिमीलाई यज्ञका निम्ति सर्वप्रथम बोलाइएको र स्थापित गरिएको छ । यस यज्ञ र यजमानको रक्षा गरेर उनलाई उन्नति गराऊ । यज्ञका अधिष्ठाता विष्णुदेवताले तिम्रो रक्षा गरुन् र तिमी उनको रक्षा गर । तिमी बिहान, दिउँसो र साँझ तीनै वटा यज्ञका सवनको रक्षा गर ।

**सोमः पवते सोमः पवतेस्मै ब्रह्मणेस्मै क्षत्रायस्मै सुन्वते यजमानाय पवतऽइषऽऊर्जे पवतेभ्यऽओषधीभ्यः पवतेद्द्यावापृथिवीभ्यां पवते सुभूताय पवते विश्वभ्यस्त्वा देवेभ्यऽएष ते योनिर्विश्वेभ्यस्त्वा देवेभ्यः ॥२१॥**

ब्राह्मण, क्षत्रिय आदि सबै यजमानको सन्तुष्टिका लागि यो सोमरस पवित्र गरेर तयार गरिएको छ । पृथ्वी, अन्तरिक्ष र द्युलोकमा धनधान्य, वनस्पति र जीवनशक्तिको विस्तार गर्नका लागि सोमरस पवित्र गरिन्छ । सबै देवताको सन्तुष्टिका लागि ग्रहण गरिएका हे सोम ! तिमी यज्ञशालामा सुनिश्चित पात्रको आफ्नो स्थानमा स्थिर होऊ ।

**उपयामगृहीतोसीन्द्राय त्वा बृहद्द्वते वयस्वतऽउक्क्थाव्यङ्गृह्णामि । यत्तऽइन्द्र ब्बृहद्द्वयस्तस्मै त्वा विष्णवे त्वैष ते योनिरुक्थेब्भ्यस्त्वा देवेभ्यस्त्वा देवाव्यं यज्ञस्यायुषे गृह्णामि मित्रावरुणाभ्यां त्वा ॥२२॥**

नियमअनुसार ग्रहण गरिएका हे सोम ! मित्र, वरुण, इन्द्र, विश्वव्यापक विष्णु आदि देवताहरूको सुन्तुष्टिका लागि हामी तिमीलाई स्थापित गर्दछौँ । आफ्नो प्रिय आहार सोमरस पान गर्नका लागि इन्द्रदेवतालाई हामी वन्दना गर्दछौँ । यज्ञको सफलता र याजकको दीर्घायुको कामना गर्दै तिमीलाई यज्ञशालाको सुनिश्चित श्रेष्ठ आसनमा स्थापित गर्दछौँ ।

**मित्रावरुणाभ्यां त्वा देवाव्यं यज्ञस्यायुषे गृह्णामीन्द्राय त्वा देवाव्यं यज्ञस्यायुषे गृह्णामीन्द्राग्निभ्यां त्वा देवाव्यं यज्ञस्यायुषे गृह्णामीन्द्रावरुणाभ्यां त्वा देवाव्यं यज्ञस्यायुषे गृह्णामीन्द्राबृहस्पतिभ्यां त्वा देवाव्यं यज्ञस्यायुषे गृह्णामीन्द्राविष्णुभ्यां त्वा देवाव्यं यज्ञस्यायुषे गृह्णामि ॥२३॥**

हे आनन्ददायक दिव्य सोम ! मित्र, वरुण, इन्द्र, अग्नि, बृहस्पति र विष्णु आदि देवताहरूलाई सन्तुष्ट गर्नका लागि तिमीलाई ग्रहण गर्दछौँ । यज्ञलाई निर्विघ्न रूपमा सफल गर्नका लागि र त्यसको विस्तार गर्नका लागि तिमीलाई हामी यज्ञशालामा स्थापित गर्दछौँ ।

**मूर्धानं दिवो अरतिं पृथिव्या वैश्वानरमृतऽ आ जातमग्निम् । कविं॑ सम्राजमतिथिञ्जनानामासन्नापात्रञ्जनयन्त देवाः ॥२४॥**

द्युलोकको सबैभन्दा माथि बस्ने, भूलोकका स्वामी, वैश्वानर अग्निदेव सबै प्राणीभित्र छन् । ज्ञानी अतिथिजस्ता र पूज्य देवताहरूका मुखरूपी अग्निदेवतालाई देवताहरूले नै प्रकट गरेका हुन् ।

**उपयामगृहीतोसि ध्रुवोसि ध्रुवक्षितिर्ध्रुवाणां ध्रुवतमोच्युतानामच्युतक्षित्तमऽएष ते योनिर्वैश्वानराय त्वा । ध्रुवं ध्रुवेण मनसा वाचा सोममवनयामि । अथा नऽ इन्द्र इद्विशोसपत्नाः समनसस्करत् ॥२५॥**

नियमपूर्वक ग्रहण गरिएका हे सोमदेवता ! आफ्ना स्थानबाट कहिल्यै विचलित नहुने, स्थिर रहनेहरूमा अग्रणी र स्थिर निवास भएकाले तिमी ध्रुव नामले परिचित छौ । हामी स्थिर चित्त भएका याजकहरू तिमी कल्याणकारी हुनाले देवताहरूको सन्तुष्टिका लागि यज्ञस्थलमा स्थापित गर्दछौँ । इन्द्रदेवताले शत्रुको विनाश गर्दै हाम्रा सन्तानहरूलाई सद्बुद्धि प्रदान गरुन् ।

**यस्तेद्द्रप्सः स्कन्दति यस्ते अꣳशुर्ग्रावच्युतो धिषणायोरुपस्थात् । अद्ध्वर्योर्वा परि वा यः पवित्रात्तं ते जुहोमि मनसा वषट्कृतꣳ स्वाहा देवानामुत्क्रमणमसि ॥२६॥**

देवताहरूलाई सर्वोच्च पद प्राप्त गराउने हे सोमदेवता ! ढुङ्गामा पेल्दा, निचोर्दा र छानेर पात्रमा खन्याउँदा तिम्रो जुन भाग माटोमा खस्दछ वा अध्वर्युका साथमा जुन भाग बँचेको हुन्छ, त्यो सबै नै सङ्कल्पशक्तिका प्रभावले जम्मा पारेर हामी अग्निलाई समर्पित गर्दछौँ । तिमी देवशक्तिलाई ऊर्ध्व गति प्रदान गर्नमा समर्थ छौ ।

**प्राणाय मे वर्चोदा वर्चसे पवस्व व्यानाय मे वर्चोदा वर्चसे पवस्वोदानाय मे वर्चोदा वर्चसे पवस्व वाचो मे वर्चोदा वर्चसे पवस्व क्रतूदक्षाभ्यां मे वर्चोदा वर्चसे पवस्वश्श्रोत्राय मे वर्चोदा वर्चसे पवस्व चक्षुर्भ्यां मे वर्चोदसौ वर्चसे पवेथामात्मनमे ॥२७॥**

हे यज्ञका पात्र ! तिमी दिव्य आकाशलाई धारण गर्ने वर्चस्वी हौ । हाम्रा प्राणवायु, उदानवायु र व्यानवायुलाई तेज प्रदान गर । हे देवता ! हाम्रा मन, वाणी र कर्ममा तेजस्विता स्थापना गर्ने उपाय गर । तेजस्विता प्रदान गर्नेहरूमा अग्रणी हे देवता ! हाम्रा आँखा र कानहरूलाई दिव्यशक्तिले सम्पन्न गराइदेऊ ।

**आत्मने मे वर्चोदा वर्चसे पवस्वौजसे मे वर्चोदा वर्चसे पवस्वायुषे मे वर्चोदा वर्चसे पवस्व विश्वाभ्यो मे प्रजाभ्यो वर्चोदसौ वर्चसे पवेथाम् ॥२८॥**

हे तेज प्रदान गर्ने देवता ! हाम्रा आत्मामा तेजस्विता जागृत गराऊ, हाम्रा ओजमा वर्चस् जागृत गराऊ, हाम्रा आयुमा वर्चस् जागृत गराऊ । हे तेजस्वी ग्रहरूपी उपकरणहरू हो ! पृथ्वीका सबै प्राणी र प्रजाहरूलाई तेज प्रदान गर्ने कृपा गर ।

**कोसि कतमोसि कस्यासि को नामासि । यस्य ते नामामन्महि यं त्वा सोमेनातीतृपाम । भूर्भुवः स्वः सुप्रजाः प्रजाभिः स्याꣳ सुवीरो वीरैः सुपोषः पोषैः ॥२९॥**

हे सोमपात्र ! तिमी को हौ ? कोसित सम्बन्धित छौ ? तिम्रो नाम कुन क्रममा छ ? तिम्रो नाम के हो, तिम्रो परिचय के हो ? हामी यी सबै कुराहरू जानेपछि तिमीलाई हामी सोमरसले परिपूर्ण गराउन सक्छौँ । पृथ्वी, अन्तरिक्ष र द्युलोकमा अग्नि, वायु र सूर्यका रूपमा व्याप्त रहेका हे देवता ! हामीलाई तिमी वीर, पराक्रमी र वैभवले सम्पन्न सन्तान प्रदान गर ।

**उपयामगृहीतोसि मधवे त्वोपयामगृहीतोसि माधवाय त्वोपयामगृहीतोसि शुक्राय त्वोपयामगृहीतोसि शुचये त्वोपयामगृहीतोसि नभसे त्वोपयामगृहीतोसि नभस्याय त्वोपयामगृहीतोसीषे त्वोपयामगृहीतोस्यूर्जे त्वोपयामगृहीतोसि सहसे त्वोपयामगृहीतोसि सहस्याय त्वोपयामगृहीतोसि तपसे त्वोपयामगृहीतोसि तपस्याय त्वोपयामगृहीतोस्यंहसस्पतये त्वा ॥३०॥**

हे ऋतुरूपी ग्रह ! तिमी नियमअनुसार ग्रहण गरिएका छौ । हामी तिमीलाई चैत्र, वैशाख, ज्येष्ठ, आषाढ, श्रावण, भाद्र, आश्विन, कार्तिक, मार्गशीर्ष, पौष, माघ, फाल्गुन र पुरुषोत्तम आदि तेह्र वटा महिनाको सन्तुष्टिका लागि नियमअनुसार नियुक्त गर्दछौं ।

**इन्द्राग्नी आ गतꣳ सुतङ्गीर्भिर्नभो वरेण्यम् । अस्य पातन्धियेषिता । उपयामगृहीतोसीन्द्राग्निभ्यां त्वैष ते योनिरिन्द्राग्निभ्यान्त्वा ॥३१॥**

हे पात्रमा ग्रहण गरिएका सोम ! इन्द्र र अग्निदेवतालाई तृप्त तथा प्रसन्न गराउनका लागि तिमी यस यज्ञशालामा आफ्नो निश्चित स्थानमा बस । हे इन्द्रदेवता ! हे अग्निदेवता ! याजकहरूका उत्तम वाणीले गरिएका स्तुतिले प्रसन्न भएर सोमपान गर्नका लागि यज्ञशालामा आओ र आआफ्नो भाग ग्रहण गर ।

**आ घा येऽ अग्निमिन्धते स्तृणन्ति बर्हिरानुषक् । येषामिन्द्रो युवा सखा । उपयामगृहीतोस्यग्नीन्द्राभ्यां त्वैष ते योनिरग्नीन्द्राभ्यान्त्वा ॥३२॥**

इन्द्र र अग्निदेवतालाई सन्तुष्ट गराउनका लागि विधिपूर्वक ग्रहण गरिएका हे सोमग्रह ! यज्ञशालामा तिम्रा लागि यो स्थान निश्चित गरिएको छ, आसन ग्रहण गर । तेजस्वी इन्द्रदेवता तिम्रा मित्र हुन् र समिधाहरूले अग्निलाई प्रदीप्त गराउँदै तिमी आहुति प्रदान गर्दछौ । हे कलशमा रहेका सोम ! यी याजकहरूका यज्ञलाई सफल बनाऊ ।

**ओमासश्चर्षणीधृतो विश्वे देवासऽ आगत । दाश्वाꣳसो दाशुषः सुतम् । उपयामगृहीतोसि विश्वेभ्यस्त्वा देवेभ्यऽएष ते योनिर्विश्वेभ्यस्त्वा देवेभ्यः ॥३३॥**

याजकहरूलाई पोषण र संरक्षण प्रदान गर्ने हे विश्वदेवहरू हो ! यजमानले सोमसहितको हवि दान गर्दै सम्पन्न गर्ने यस यज्ञहरूमा आइदेओ । तिमीहरूका लागि यो स्थान सुनिश्चित गरिएको छ र समस्त देवताहरूको सन्तुष्टिका लागि तिमीहरू यहाँ स्थिर होओ ।

**विश्वे देवासऽ आगत शृणुता म इमꣳ हवम् । एदं बर्हिर्नि षीदत । उपयामगृहीतोसि विश्वेभ्यस्त्वा देवेभ्यऽएष ते योनिर्विश्वेभ्यस्त्वा देवेभ्यः ॥३४॥**

हाम्रो स्तुतिबाट प्रसन्न हुने गरेका हे विश्वदेवताहरू हो ! हामीले आह्वान गर्दा तिमीहरू आओ र यज्ञशालाका यस पवित्र आसनमा विराजमान होओ । हे ग्रहण गर्ने ग्रह नामका पात्र ! सबै देवताहरूको सन्तुष्टिका लागि तिमीलाई ग्रहण गरिएको छ । यो स्थान तिम्रा लागि निश्चित गरिएको हो । देवताहरूको प्रसन्नताका लागि हामी तिमीलाई ग्रहण गर्दछौं ।

**इन्द्र मरुत्वऽ इह पाहि सोमं यथा शार्यातेऽ अपिबः सुतस्य । तव प्रणीती तव शूर शर्मन्ना विवासन्ति कवयः सुयज्ञाः । उपयामगृहीतोसीन्द्राय त्वा मरुत्वत ऽएष ते योनिरिन्द्राय त्वा मरुत्वते ॥३५॥**

मरुत्गणसँग निवास गर्ने गरेका हे इन्द्रदेवता ! नीतिवान्, दूरदर्शी, सत्कर्ममा लागेका, नैष्ठिक याजकहरूले तिमीलाई उपासना गर्दछन् । शर्यातका यज्ञमा सोमरस पान गरेझैं यस यज्ञमा आएर पनि सोमरस पान गरेर सन्तुष्ट होऊ । हे ग्रहरूपी पात्र ! मरुत्हरूका साथै इन्द्रदेवतालाई प्रसन्न गराउनका लागि तिमीलाई विधिपूर्वक तयार गरेर ग्रहण गरेका छौं । यो तिम्रा लागि निश्चित गरिएको स्थान हो, इन्द्रको सन्तुष्टिका लागि मरुत्हरू यस स्थानमा स्थिर होऊन् ।

**मरुत्वन्तं वृषभं वावृधानमकवारिं दिव्यꣳ शासमिन्द्रम् । विश्वासाहमवसे नूतनायोग्रꣳ सहोदामिह तꣳ हुवेम । उपयामगृहीतोसीन्द्रायत्वा मरुत्वत ऽएष ते योनिरिन्द्राय त्वा मरुत्वते । उपयामगृहीतोसि मरुतां त्वौजसे ॥३६॥**

साधकहरूको रक्षा गर्नका लागि मरुत्हरूको सहायताले अत्यन्त महत्त्वपूर्ण कार्य गर्ने, दिव्य गुणले सम्पन्न, असल शासक, वीर, पराक्रमी र शत्रु विनाश गर्ने इन्द्रदेवतालाई हामी आह्वान गर्दछौं । उनले हामीलाई सबै किसिमले संरक्षण प्रदान गरून् । हे ग्रहपात्र ! मरुत्हरूका साथै इन्द्रदेवतालाई सन्तुष्ट गराउनका लागि हामी तिमीलाई नियमअनुसार ग्रहण गर्दछौं । यो मूल स्थान तिम्रा लागि निश्चित गरिएको हो । मरुत्हरूलाई बल र प्रसन्नता प्रदान गर्नका लागि तिमीलाई यस स्थानमा स्थापित गराउँछौं ।

**सजोषा ऽ इन्द्र सगणो मरुद्भिः सोमं पिब वृत्रहा शूर विद्वान् । जहि शत्रूँरप मृधो नुदस्वाथाभयं कृणुहि विश्वतो नः । उपयामगृहीतोसीन्द्रायत्वा मरुत्वतऽएष ते योनिरिन्द्राय त्वा मरुत्वते ॥३७॥**

मरुत्हरूका सहयोगले वृत्र संहार गर्ने, देवताका मित्र, वीर, पराक्रमी हे इन्द्रदेवता ! याजकले चढाएको सोमरस पिएर तिमी सन्तुष्ट होऊ । हिंस्रक प्राणी र शत्रु विनाश गर्दै हाम्रो डर मेटाऊ । हे ग्रहपात्र ! मरुत्हरूका साथै इन्द्रदेवतालाई सन्तुष्ट गराउनका लागि हामी तिमीलाई नियमअनुसार ग्रहण गर्दछौं । यो मूल स्थान तिम्रा लागि निश्चित गरिएको हो । मरुत्हरूलाई बल र प्रसन्नता प्रदान गर्नका लागि तिमीलाई यस स्थानमा स्थापित गराउँछौं ।

**मरुत्वाँरऽ इन्द्र वृषभो रणाय पिबा सोममनुष्वधं मदाय । आसिञ्जस्व जठरे मद्ध्वऽ ऊर्मिं त्वꣳराजासि प्रतिपत्सुतानाम् । उपयामगृहीतोसीन्द्रायत्वा मरुत्वतऽएष ते योनिरिन्द्राय त्वा मरुत्वते ॥३८॥**

हे इन्द्रदेवता ! मरुत्हरूका सहयोगले तिमी वर्षा गर्दछौ । हव्य आदिले युक्त सोम पान गरेर खुसीले रमाउँदै तिमी युद्धका लागि तयार होऊ । द्युलोकमा रहेको दिव्य सोमका तिमी अधिपति हौ । हे ग्रहपात्र ! मरुत्हरूका साथै इन्द्रदेवतालाई सन्तुष्ट

गराउनका लागि हामी तिमीलाई नियमअनुसार ग्रहण गर्दछौं । यो मूल स्थान तिम्रा लागि निश्चित गरिएको हो । मरुत्‌हरूलाई बल र प्रसन्नता प्रदान गर्नका लागि तिमीलाई यस स्थानमा स्थापित गराउँछौं ।

**महाँ२ऽइन्द्रो नृवदा चर्षणिप्राऽउतद्द्विबर्हाऽअमिनः सहोभिः । अस्मद्र्यग्वावृधे वीर्यायोरुः पृथुः सुकृतः कर्तृभिर्भूत् । उपयामगृहीतोसि महेन्द्राय त्वैष ते योनिर्महेन्द्राय त्वा ॥३९॥**

स्तोता र प्रजाको पालन गर्ने हे महान् इन्द्रदेवता ! तिमी हामीकहाँ आऊ । अनेकौं शक्तिका कारण दुवै लोकमा अहिंसित, पराक्रमी, वीरताका कार्य गरेर मनग्गे सामर्थ्य भएका इन्द्रदेव हाम्रा अगाडि आऊन् । विशाल शरीर र उत्तम गुणसम्पन्न इन्द्रदेव आफ्ना कर्म र सामर्थ्यका कारण नै पूजनीय छन् । हे ग्रहपात्र ! मरुत्‌हरूका साथै इन्द्रदेवतालाई सन्तुष्ट गराउनका लागि हामी तिमीलाई नियमअनुसार ग्रहण गर्दछौं । यो मूल स्थान तिम्रा लागि निश्चित गरिएको हो । मरुत्‌हरूलाई बल र प्रसन्नता प्रदान गर्नका लागि तिमीलाई यस स्थानमा स्थापित गराउँछौं ।

**महाँ२ऽइन्द्रो यऽओजसा पर्जन्यो वृष्टिमाँ२ऽइव । स्तोमैर्वत्स्यस्य वावृधे । उपयामगृहीतोसि महेन्द्राय त्वैष ते योनिर्महेन्द्राय त्वा ॥४०॥**

जल वर्षा गराउने मेघजस्तै महान् र तेजस्वी इन्द्रदेव आफ्ना प्रियपात्रको स्तुतिले समृद्ध भएर व्यापक रूप ग्रहण गर्दछन् । हे ग्रहपात्र ! मरुत्‌हरूका साथै इन्द्रदेवतालाई सन्तुष्ट गराउनका लागि हामी तिमीलाई नियमअनुसार ग्रहण गर्दछौं । यो मूल स्थान तिम्रा लागि निश्चित गरिएको हो । मरुत्‌हरूलाई बल र प्रसन्नता प्रदान गर्नका लागि तिमीलाई हामी यस स्थानमा स्थापित गराउँछौं ।

**उदु त्यं जातवेदसं देवं वहन्ति केतवः । दृशे विश्वाय सूर्यᳬ स्वाहा ॥४१॥**

सम्पूर्ण प्राणीका ज्ञाता सूर्यदेवताले समस्त विश्वलाई दृष्टि प्रदान गर्नका लागि ज्योतिर्मयी रश्मिहरू विशेष रूपले प्रकाशित भएका छन् ।

**चित्रं देवानामुदगादनीकं चक्षुर्मित्रस्य वरुणस्याग्नेः । आप्रा द्यावापृथिवी अन्तरिक्षᳬ सूर्यऽ आत्मा जगतस्तस्थुषश्च स्वाहा ॥४२॥**

चराचर जगत्‌का आत्मारूपी सूर्यदेव दैवी शक्तिको अद्‌भुत तेजका रूपमा उदाए । मित्र, वरुण आदिका आँखाजस्ता सूर्यदेव उदाउनासाथ द्युलोक, पृथ्वीलोक र अन्तरिक्ष प्रकाशले झलमल्ल भए ।

**अग्ने नय सुपथा रायेऽ अस्मान्विश्वानि देव वयुनानि विद्वान् । युयोध्यस्मज्जुहुराणमेनो भूयिष्ठां ते नम उक्तिं विधेम स्वाहा ॥४३॥**

दिव्य गुणले युक्त हे अग्निदेव ! सबै मार्ग जानेका हुनाले हामी याजकहरूलाई यज्ञको फल प्राप्त गराउनका लागि तिमी नै सन्मार्गतिर लैजाऊ । हामीलाई कुटिल आचरण भएका शत्रु र पापबाट मुक्त राख । तिम्रा लागि स्तोत्र र नमस्कारको व्यवस्था गर्दछौं ।

**अयं नोऽ अग्निर्वरिवस्कृणोत्वयं मृधः पुरऽएतु प्रभिन्दन् । अयं वाजाञ्जयतु वाजसातावयथं᳕ शत्रूञ्जयतु जर्हृषाणः स्वाहा ॥४४॥**

अग्निले हामीलाई श्रेष्ठ धन प्रदान गरुन् । शत्रुको विनाश मर्दै अग्नि हाम्रासामु आऊन् । यिनै अग्नि अन्नको कामना गर्ने यजमानहरूलाई, शत्रुबाट प्राप्त धन प्रदान गरेर विजयी गराऊन् । यिनै अग्नि शत्रुलाई प्रसन्नतापूर्वक जितून् र हामीले चढाएको आहुति ग्रहण गरुन् ।

**रूपेण वो रूपमभ्यागां तुथो वो विश्ववेदा विभजतु । ऋतस्य पथा प्रेत चन्द्रदक्षिणा वि स्वः पश्य व्यन्तरिक्षं यतस्व सदस्यैः ॥४५॥**

हे दक्षिणा ! हामीले तिम्रो स्वरूप राम्रोसँग जानिसकेका छौँ । सर्वद्रष्टा प्रजापतिले तिमीलाई ऋत्विक्हरूका लागि विधिपूर्वक वितरित गरेका छन् । तिमीलाई प्राप्त गरेर हामी सत्य मार्गका अनुगामी बनौँ र सूर्यदेव जसरी अनन्त अन्तरिक्षको अवलोकन गर्नमा समर्थ छन्, उसै गरी हामी पनि दूरदृष्टिले युक्त हुन सकौँ ।

**ब्राह्मणमद्य विदेयं पितृमन्तं पैतृमत्यमृषिमार्षेयथं᳕ सुधातुदक्षिणम् । अस्मद्राता देवत्रा गच्छत प्रदातारमाविशत ॥४६॥**

मन्त्रद्रष्टा, ऐश्वर्यशाली, दिव्य गुणले सम्पन्न पिता र पितामह भएका दीर्घजीवी प्रसिद्ध ऋषि र ब्राह्मणहरूले हामी युक्त होऔँ । उनीहरूसँग सबै दक्षिणा एकत्र होस् । हे दक्षिणा ! तिमी ऋत्विक्हरूकहाँ पुगेर देवताहरूलाई सन्तुष्ट गर र दान दाता याजकहरूलाई अभीष्ट फल प्रदान गर ।

**अग्नये त्वा मह्यं वरुणो ददातु सोमृतत्त्वमशीयायुर्दात्रऽएधि मयो मह्यं प्रतिग्रहीत्रे रुद्राय त्वा मह्यं वरुणो ददातु सोमृतत्त्वमशीय प्राणो दात्रऽएधि वयो मह्यं प्रतिग्रहीत्रे बृहस्पतये त्वा मह्यं वरुणो ददातु सोमृतत्त्वमशीय त्वग्दात्रऽएधि मयो मह्यं प्रतिग्रहीत्रे यमाय त्वा मह्यं वरुणो ददातु सोमृतत्त्वमशीय हयो दात्रऽएधि वयो मह्यं प्रतिग्रहीत्रे ॥४७॥**

हे दक्षिणा ! अग्नि, रुद्र, बृहस्पति र यम आदि विभिन्न देवशक्तिहरूका कृपाका रूपमा तिमी वरुणदेवताद्वारा हामीलाई प्राप्त होऊ । तिमीलाई प्राप्त गरेर हामी स्वस्थ रहन सकौँ र हामी दीर्घायु होऔँ । तिमी दान दातालाई धनधान्यले परिपूर्ण सुख, ऐश्वर्य र दीर्घायु प्रदान गर ।

**कोदात्कस्माऽअदात्कामोदात्कामायादात् । कामो दाता कामः प्रतिग्रहीता कामैतत्ते ॥४८॥**

दक्षिणा कसले दिन्छ ? कसका लागि दिन्छ ? यस किसिमका कामनाहरूले नै दान दिनका लागि प्रेरित गर्दछन् । कामनाहरूलाई नै दान दिने गरिन्छ र कामनाले नै दान लिने गर्दछन् । त्यसैले यहाँ कामनाहरू नै सबैभन्दा ठूला कुरा हुन् ।

**॥इति सप्तमोऽध्याय ॥**

॥सातौँ अध्याय सकियो॥

ॐ

भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।

# वाजसनेयि माध्यन्दिन शुक्ल

# यजुर्वेद - संहिता

## ॥अथ अष्टमोऽध्यायः॥

॥आठौं अध्याय॥

**ऋषि**— कुत्स आङ्गिरस, भरद्वाज बार्हस्पत्य, मनसस्पति, अत्रि, मेधातिथि, शुनःशेप, अगस्त्य, गोतम, मेधातिथि, मधुच्छन्दा, विवस्वान्, वैखानस, कुरुस्तुति, प्रस्कण्व, देवगण, कुसुरुबिन्दु, शास भारद्वाज, परुच्छेप, वसिष्ठ, नैधुवि कश्यप ।

**देवता**— सोम, विष्णु, आदित्य, आशीर्वाद, सविता, विश्वेदेवा, रूप आत्मा, अग्नि, प्रजापति, ऋक्साम, धान, भक्षणीय द्रव्य, त्वष्टा, धात्र, देवगण, वात, यज्ञपति, रज्जु, वरुण, सोम, आपः, अग्नि, गर्भ, वशा, मरुद्गण, द्यावापृथिवी, इन्द्र, इन्द्रावरुण, षोडशी, सूर्य, गौ, विश्वकर्मा, अदाभ्य, पशु, यजमान आत्मस्तुति, इन्द्रापर्वत, प्रजापति, सिन्धु, विष्णु, लिङ्गोक्त, धर्म, यज्ञ ।

**छन्द**— आर्ची पङ्क्ति, भुरिक् पङ्क्ति, निचृत् आर्षी पङ्क्ति, निचृत् जगती, प्राजापत्या अनुष्टुप्, निचृत् आर्षी जगती, निचृत् आर्षी त्रिष्टुप्, विराट् ब्राह्मी अनुष्टुप्, प्राजापत्या गायत्री, निचृत् आर्षी बृहती, प्राजापत्या गायत्री, आर्षी उष्णिक्, स्वराट् आर्षी पङ्क्ति, विराट् ब्राह्मी बृहती, निचृत् आर्षी अनुष्टुप्, आर्षी पङ्क्ति, साम्नी उष्णिक्, निचृत् साम्नी उष्णिक्, निचृत् साम्नी अनुष्टुप्, भुरिक् प्राजापत्या गायत्री, निचृत् आर्षी उष्णिक्, विराट् आर्षी त्रिष्टुप्, भुरिक् आर्षी त्रिष्टुप्, स्वराट् आर्षी त्रिष्टुप्, आर्षी त्रिष्टुप्, स्वराट् आर्षी उष्णिक्, भुरिक साम्नी बृहती, विराट् आर्ची बृहती, याजुषी उष्णिक्, निचृत् आर्षी त्रिष्टुप्, आसुरी गायत्री, भुरिक् आर्षी पङ्क्ति, स्वराट् आर्षी बृहती, भुरिक् प्राजापत्या अनुष्टुप्, स्वराट् आर्षी बृहती, भुरिक् प्राजापत्या अनुष्टुप्, स्वराट् आर्षी बृहती, भुरिक् साम्नी उष्णिक्, प्राजापत्या अनुष्टुप्, भुरिक् आर्षी अनुष्टुप्, आर्षी जगती, आर्षी गायत्री, आर्षी अनुष्टुप्, आर्षी उष्णिक्, विराट् आर्षी अनुष्टुप्, आर्षी उष्णिक्, साम्नी त्रिष्टुप्, विराट् आर्ची त्रिष्टुप्, भुरिक् त्रिपाद गायत्री, स्वराट् आर्ची अनुष्टुप्, भुरिक् आर्ची अनुष्टुप्, आर्षी गायत्री, आर्ची उष्णिक्, आर्षी गायत्री, स्वराट् आर्षी गायत्री, निचृत् आर्षी गायत्री, स्वराट् आर्षी गायत्री, स्वराट् ब्राह्मी उष्णिक्, निचृत अनुष्टुप्, स्वराट् आर्षी गायत्री, भुरिक् आर्षी त्रिष्टुप्, विराट् आर्षी अनुष्टुप्, निचृत् आर्षी त्रिष्टुप्, विराट् अर्षी अनुष्टुप्, याजुषी पङ्क्ति, याजुषी जगती, साम्नी बृहती, विराट् प्राजापत्या जगती, निचृत् आर्षी उष्णिक्, भुरिक् आर्षी जगती, निचृत् आर्षी बृहती, आर्षी अनुष्टुप्, आसुरी उष्णिक्, प्राजापत्या बृहती, विराट प्राजापत्या पङ्क्ति, निचृत् ब्राह्मी

उष्णिक्, आर्षी बृहती, निचृत् ब्राह्मी बृहती, भुरिक आर्षी जगती, निचृत् जगती, विराट् आर्षी गायत्री, स्वराट् ब्राह्मी त्रिष्टुप्, ब्राह्मी उष्णिक्, स्वराट् आर्षी गायत्री ।

**उपयामगृहीतोस्यादित्येभ्यस्त्वा । विष्णऽउरुगायैष ते सोमस्तꣳ रक्षस्व मा त्वा दभन् ॥१॥**

हे सोम ! तिमी उपयाम पात्रमा ग्रहण गर्न योग्य छौ । आदित्यको जस्तै तेजस्विताका लागि तिमीलाई हामी ग्रहण गर्दछौं । महान् स्तोत्रले सुशोभित हे विष्णु ! यो सोमरस तिमीप्रति समर्पित छ । तिमी यस सोमरसको रक्षा गर । शत्रुले तिम्रो दमन गर्न कहिल्यै नसकून् ।

**कदा चन स्तरीरसि नेन्द्र सश्चसि दाशुषे । उपोपेन्नु मघवन् भूयऽइन्नु ते दानन्देवस्य पृच्यतऽआदित्येभ्यस्त्वा ॥२॥**

हे इन्द्रदेवता ! तिमी हिंस्रक प्रवृत्तिबाट सर्वथा मुक्त छौ । यजमानले प्रदान गरेको हविष्य अति नजिकैबाट ग्रहण गर्दछौ । हे श्रेष्ठ ऐश्वर्यले सम्पन्न इन्द्रदेवता ! याजकले दिएको हविको प्रतिदान स्वरूप तिमीले प्रदान गरेको दानले सम्पन्नता बढाउँछ । हे इन्द्रदेवता ! हामी आदित्यको स्नेहभाव प्राप्त गर्नका लागि तिमीलाई स्तुति गर्दछौं ।

**कदा चन प्र युच्छस्युभे नि पासि जन्मनी । तुरीयादित्य सवनं तऽइन्द्रियमातस्थावमृतन्दिव्यादित्येभ्यस्त्वा ॥३॥**

हे आदित्य ! तिमी आलस्य, प्रमाद आदिबाट सर्वथा रहित छौ । तिमी देवता र मानव दुवैलाई नै श्रेष्ठ रीतिले संरक्षित गर्दछौ । तिम्रो छलछामरहित, अविनाशी र दिव्य आनन्ददायक शक्तिसामर्थ्य सूर्यमण्डलमा स्थापित छ । हे आदित्य ग्रहका रूपमा स्थापित पात्र ! हामी आदित्यदेवताको प्रसन्नताका लागि तिमीलाई ग्रहण गर्दछौं ।

**यज्ञो देवानां प्रत्येति सुम्नमादित्यासो भवता मृडयन्तः । आ वोर्वाची सुमतिर्ववृत्यादꣳहोश्चिद्या वरिवोवित्तरासदादित्येभ्यस्त्वा ॥४॥**

देवताहरूका लागि यज्ञ सुखदायक हुन्छ । हे आदित्यगण ! हाम्रा लागि तिमीहरू कल्याणकारी छौ । तिमीहरूको श्रेष्ठ विवेकशील प्रेरणा हामीलाई प्राप्त होस् । पापीहरूको धन उपार्जनमा लागेको बुद्धि पनि हाम्रा लागि नै अनुकूल होस् । हे सोमदेवता ! आदित्यहरूको प्रसन्नताका लागि हामी तिमीलाई ग्रहण गर्दछौं ।

**विवस्वन्नादित्यैष ते सोमपीथस्तस्मिन् मत्स्व । श्रदस्मै नरो वचसे दधातन यदाशीर्दा दम्पती वाममश्नुतः । पुमान् पुत्रो जायते विन्दते वस्वधा विश्वाहारपऽएधते गृहे ॥५॥**

हे आदित्य ! तिमी अज्ञानरूपी अन्धकारलाई विनाश गर्ने साधन हौ । पात्रमा रहेको सोमरस तिम्रा निम्ति सेवनयोग्य छ । यसबाट तिमी सबै किसिमले प्रसन्नचित्त होऊ । हे पुरुषार्थी मानिसहरू हो ! तिमीहरू आफ्ना वाणीमा सुसंस्कार धारण गर । गृहस्थ आश्रममा दम्पतीले धर्माचरण निर्वाह गरेपछि सबै किसिमका संस्कारहरूले सम्पन्न भएर पुत्र उत्पन्न हुन्छ र नित्य नै समृद्धि प्राप्त गरेर उनीहरू दुष्कर्म र ऋण आदिबाट निवृत्त रहँदै श्रेष्ठ गृहमा निवास गर्छन् ।

**व्वाममद्य सवितर्वाममुश्वो दिवे दिवे वाममस्मभ्यथ्थ्ं सावीः । वामस्य हि क्षयस्य देव भूरेरया धिया वामभाजः स्याम ॥६॥**

हे सर्वउत्पादक सवितादेवता ! आज हाम्रा लागि श्रेष्ठ सुख प्रदान गर आउँदा दिनमा पनि सुखप्रदायक होऊ । यसै किसिमले प्रतिदिन हामीलाई उत्तम सुख प्रदान गर । तिमी विपुल धन र आश्रयका अधिपति हौ भन्ने भावनाअनुसार हामीले पनि श्रेष्ठ धन प्राप्त गरौँ ।

**उपयामगृहीतोसि सावित्रोसि चनोधाश्चनोधाऽ असि चनो मयि धेहि । जिन्व यज्ञं जिन्व यज्ञपतिं भगाय देवाय त्वा सवित्रे ॥७॥**

हे सोम ! तिमी उपयाम नामका पात्रमा सेवन गर्न योग्य छौ । तिमी सवितादेवसित सम्बन्धित अन्न वृद्धि गर्नमा समर्थ छौ, त्यसो हुनाले हामीलाई अन्न प्रदान गर । तिमी यज्ञ र यज्ञपतिलाई पूर्णता प्रदान गर । हामी सम्पूर्ण वैभव आदिले युक्त, सर्वप्रेरक सवितादेवताका लागि तिमीलाई ग्रहण गर्दछौँ ।

**उपयामगृहीतोसि सुशर्मासि सुप्रतिष्ठानो बृहदुक्षाय नमः । व्विश्वेभ्यस्त्वा देवेभ्यऽएष ते योनिर्विश्वेभ्यस्त्वा देवेभ्यः ॥८॥**

हे सोम ! तिमी श्रेष्ठ नियमअनुशासनले सम्बद्ध छौ, श्रेष्ठ तथा सुखदायक गृहले सम्पन्न छौ । तिमी अति महत्त्वपूर्ण कर्त्तव्य निर्वाह गर्नमा सक्षम छौ, त्यसैले तिमीलाई हाम्रो नमस्कार छ । जगत्‌को सिर्जना गर्ने र धेरै किसिमका सेचन गुणले सम्पन्न प्रजापतिका लागि यो अन्न अर्पित छ । हामी तिमीलाई विश्वेदेवाको प्रसन्नताका लागि स्थापित गर्दछौँ ।

**उपयामगृहीतोसि बृहस्पतिसुतस्य देव सोम तऽइन्द्रोरिन्द्रियावतः पत्नीवतो ग्रहाँ२ऽ ऋद्ध्यासम् । अहं परस्तादहमवस्ताद्यदन्तरिक्षं तदु मे पिताभूत् । अहथ्थ्ं सूर्यमुभयतो ददर्शाहं देवानां परमं गुहा यत् ॥९॥**

हे सोम ! दिव्य गुणले सम्पन्न छौ । तिमी उपयाम पात्रमा ग्रहण गर्नका लागि योग्य छौ । ब्रह्मनिष्ठ ऋत्विक्‌हरूका प्रेरणाले तिम्रा मधुरतासम्पन्न शक्तिलाई हामी आफ्ना धर्मपत्नीका साथमा ग्रहण गर्दछौँ । हामी आत्मरूप भएपछि उच्च स्थान र भूमिमा छँदा उन्नति गर्न सकौँ । अन्तरिक्ष पिताझैँ भएर हाम्रो पालन गर्दछन् । हामी दुवै तर्फबाट सूर्यको दर्शन गर्न पाऔँ । वेदज्ञका हृदयरूपी सर्वोत्कृष्ट तथा अति गोपनीय गुफामा रहेको परम तत्त्वज्ञानको हामी दर्शन गर्न सकौँ ।

**अग्नाइऽइ पत्नीवन्त्सजूर्देवेन त्वष्ट्रा सोमं पिब स्वाहा । प्रजापतिर्वृषासि रेतोधा रेतो मयि धेहि प्रजापतेस्ते वृष्णो रेतोधसो रेतोधामशीय ॥१०॥**

हे अग्नि ! त्वष्टादेवताले जस्तै तिमी पनि पत्नीसहित भएर सोमपान गर । यो आहुति तिम्रै लागि समर्पित छ । हे उद्‌गाता ! तिमीहरू तेजस्वी वीर्य धारण गर्नमा र सन्तानको पालन गर्नमा सक्षम छौ । त्यसैले हामीमा पराक्रमको स्थापना गर । तिमीहरू यस्ता गुणले सम्पन्न व्यक्तिको निकटता पाएर हामी शक्तिवान्, अति पराक्रमशाली र सुसन्ततिले युक्त हुन सकौँ ।

**उपयामगृहीतोसि हरिरसि हारियोजनो हरिभ्यां त्वा । हर्योर्द्धानास्थसहसोमा ऽइन्द्राय ॥११॥**

हे उपायाम नामका पात्रमा ग्रहण गर्न योग्य सोम ! तिमी हरियो वर्णका र रसको रूपमा रहेका छौ । तिमीलाई ऋग्वेद र सामवेदको स्तुति गर्नका लागि हामी धारण गर्दछौं । तिमीलाई इन्द्रका रथका दुवैतिरका अश्वका निम्ति नियोजित गर्दछौं । हे सोमले युक्त धान्य ! तिमी इन्द्रदेवताका दुवै हरि नामका अश्वका निम्ति ग्रहण गर्न योग्य छौ ।

**यस्ते अश्वसनिर्भक्षो यो गोसनिस्तस्य तऽइष्टयजुष स्तुतस्तोमस्य शस्तोक्थस्योपहूतस्योपहूतो भक्षयामि ॥१२॥**

हे सोमले सेचन गरिएका धान्य ! यजुर्वेदका मन्त्रले जसको कामना गरिएको छ, ऋक्त्वेदका मन्त्रले जसलाई स्तुति गरिएको छ सामवेदका स्तोत्रले जसलाई संवर्द्धित गरिएको छ, त्यस्ता तिम्रो सेवन गर्नाले अश्व र गाईलाई पनि प्रेरणा दिन हामी समर्थ भएका छौं । तिम्रा सेवनले प्राप्त हुने अभीष्ट फलको इच्छाले युक्त भएर हामी तिमीलाई सादर सेवा गर्दछौं ।

**देवकृतस्यैनसोवयजनमसि मनुष्यकृतस्यैनसोवजनमसि**
**पितृकृतस्यैनसोवयजनमस्यात्मकृतस्यैनसोवयजनमस्येनसऽ**
**एनसोवयजनमसि । यच्चाहमेनो विद्वाँश्चकार यच्चाविद्वाँस्तस्य**
**सर्वस्यैनसोवयजनमसि ॥१३॥**

हे यज्ञका साधनहरू हो ! तिमीहरू देवताका प्रति गरिएका यज्ञ आदि कर्मका बीचमा उपेक्षित भएका कर्मका पापहरू पर हटाइदिन्छौ । मानिसप्रति ईर्ष्या, द्वेष, निन्दा, स्वार्थपन आदि दोष गरिएका भए तिनका पाप हटाउँछौ । पितृहरूप्रति श्राद्धतर्पण आदि कर्महीन हुनाले उत्पन्न भएका पाप नाश गर्दछौ र आत्माप्रति भएका घात प्रतिघातजन्य पापबाट पनि हामीलाई मुक्त गराउन सक्षम छौ । तिमी पहिलो अपराध र अपराधबाट उत्पन्न पापलाई निवारण गर्दछौ । जानीजानीकन वा अनजानमा हामीबाट जेजस्ता अपराधकर्म हामीबाट भए हामी ती सबै पापको निवारण गर्नमा तिमी सक्षम छौ, त्यसैले हामीलाई सम्पूर्ण पापबाट विमुक्त गर ।

**सं वर्चसा पयसा सं तनुभिरगन्महि मनसा सथं शिवेन । त्वष्ट्या सुदत्रो विदधातु रायोनुमार्ष्टु तन्वो यद्विलिष्टम् ॥१४॥**

हामीहरू सबैले ब्रह्मतेजले सम्पन्न, दुध आदि रसले परिपूर्ण, श्रेष्ठ शरीर र लोककल्याणकारी मनले सधैं युक्त रहन सकौं । श्रेष्ठ दान दाता त्वष्ट्यादेवताले हमीलाई ऐश्वर्य प्रदान गरुन् र हाम्रा शरीरमा जुन कुराको कमी रहेको छ, त्यो पनि सबै पूरा गराइदिऊन् ।

**समिन्द्र णो मनसा नेषि गोभिः सथं सुरिभिर्मघवन्त्सथं स्वस्त्या । सं ब्रह्मणा देवकृतं यदस्ति सं देवानाथं सुमतौ यज्ञियानाथं स्वाहा ॥१५॥**

हे ऐश्वर्यवान् इन्द्रदेवता ! हामीलाई असल मन, गाई, अश्व, श्रेष्ठ ज्ञान र हितकारी भावना प्रदान गर । देवताहरूको हित गर्ने ज्ञान र यज्ञीय कर्मले दैवताको जस्तै

**उत्तिष्ठन्नोजसा सह पीत्वी शिप्रे अवेपयः । सोममिन्द्र चमू सुतम् । उपयामगृहीतोसीन्द्राय त्वौजसऽ एष ते योनिरिन्द्राय त्वौजसे । इन्द्रौजिष्ठौजिष्ठस्त्वं देवेष्वस्योजिष्ठोहं मनुष्येषु भूयासम् ।८.३९॥**

हे ऐश्वर्यशाली इन्द्रदेवता ! तिमी आफ्ना पराक्रमले प्रगति गर्दै पात्रमा राखिएको सोमरस पान गर र आफ्नो चिउँडो तथा नाकलाई कम्पायमान गराउँदै प्रसन्नता व्यक्त गर । हे सोम ! तिमी उपयाम पात्रमा राखिएका छौ । तिम्रो स्थान यही हो । तिम्रो सेवामा उपस्थित भएका हामी याजकहरू ओजस्वी पराक्रम प्राप्त गर्नका लागि तिमीलाई ग्रहण गर्दछौं । सबै देवताहरूका अगुवा तथा शक्तिशाली हे इन्द्रदेवता ! हामी पनि मानिसहरूमा तिमीजस्तै सर्वश्रेष्ठ पराक्रमी बन्न सकौं ।

**अदृश्रमस्य केतवो वि रश्मयो जनाँ२ऽ अनु । भ्राजन्तो अग्नयोयथा । उपयामगृहीतोसि सूर्याय त्वा भ्राजायैष ते योनिः सूर्याय त्वा भ्राजाय । सूर्य भ्राजिष्ठ भ्राजिष्ठस्त्वं देवेष्वसि भ्राजिष्ठोहं मनुष्येषु भूयासम् ॥४०॥**

सूर्यको किरणजस्तै सबै मानिसहरूमा विशेष रूपमा देखा पर्ने अग्नि सर्वत्र प्रकाशित भएका छन् । हे अतिग्राह्य नामका यज्ञीय पात्र ! तिमी नियमपूर्वक ग्रहण गरिएका छौ । हामी तेजस्वी सूर्यदेवताको प्रसन्नताका लागि तिमीलाई ग्रहण गर्दछौं । तिम्रो आश्रय स्थान यही हो । ज्योतिसम्पन्न, तेजस्वी सूर्यदेवतालाई प्रसन्न गराउनका लागि हामी तिमीलाई स्थापित गर्दछौं । हे सूर्यदेवता ! तिमी देवताहरूमा सर्वश्रेष्ठ ज्योतिसम्पन्न भएझैं हामी पनि मानिसहरूमा सर्वश्रेष्ठ देदीप्यमान हुन सकौं ।

**उदु त्यं जातवेदसं देवं वहन्ति केतवः । दृशे विश्वाय सूर्यम् । उपयामगृहीतोसि सूर्याय त्वा भ्राजायैष ते योनिः सूर्याय त्वा भ्राजाय ॥४१॥**

सम्पूर्ण प्राणीका ज्ञाता सूर्यदेवताले समस्त विश्वलाई दृष्टि प्रदान गर्नका लागि ज्योतिर्मयी रश्मिहरू विशेष रूपले प्रकाशित भएका छन् ।

**आजिघ्र कलशं मह्या त्वा विशन्त्विन्दवः । पुनरूर्जा निवर्त्तस्व सा नः सहस्रं धुक्ष्वोरुधारा पयस्वती पुनर्मा विशताद्रयिः ॥४२॥**

हे महिमाशाली गाईहरू हो ! तिमीहरू यस कलशलाई सुँघ, यसमा भएको सोम आदि पोषक तत्त्व तिमीहरूमा प्रवेश होस् । त्यस ऊर्जालाई पुनः हजारौं पोषक धाराहरूका माध्यमबाट हामीलाई प्रदान गर । हामीलाई दुध र ऐश्वर्य आदि बारम्बार प्राप्त होस् ।

**इडे रन्ते हव्ये काम्ये चन्द्रे ज्योतेऽदिते सरस्वति महि विश्रुति । एता ते अघ्न्ये नामानि देवेभ्यो मा सुकृतं ब्रूतात् ॥४३॥**

विभिन्न खालका दैवी गुणले सम्पन्न हे गाईहरू हो ! तिमीहरू सबैबाट प्रशंसनीय, रमणीय, यज्ञका लागि उपयोगी, दुधघिउ दिने, दैवी गुण बढाउने, दुधको खोलो बगाउने, महिमाशाली, सुप्रसिद्ध र वध नगर्न योग्य छौ । यसो हुनाले हामी तिमीहरूलाई आह्वान गर्दछौं । देवताहरूका लागि समर्पित यस श्रेष्ठ यज्ञमा देवताहरूसित हाम्रो निवेदन स्वीकार गर्नका लागि भनिदेओ ।

**वि नऽइन्द्र मृधो जहि नीचा यच्छ पृतन्यतः । यो अस्माँ२ऽ अभिदासत्यधरं गमया तमः । उपयामगृहीतोसीन्द्राय त्वा विमृधऽएष ते योनिरिन्द्राय त्वा विमृधे ॥४४॥**

हे इन्द्रदेवता ! हाम्रा शत्रुहरूलाई तिमी परास्त गरिदेऊ । रणक्षेत्रमा हाम्रा विरोधीहरूलाई पराजित गराइदेऊ । हामीलाई आफ्ना अधीनमा राख्न खोज्नेहरूको जीवन अन्धकारमय होस् । हे ग्रह ! तिमी उपयाम पात्रमा ग्रहण गरिएका छौ । तिमीलाई शत्रुसंहारक इन्द्रदेवताका लागि ग्रहण गरिएको छ । तिम्रो स्थान यही हो, तिमीलाई यहाँ विशिष्ट रणकौशल प्रदर्शन गर्ने इन्द्रदेवताको प्रसन्नताका लागि स्थापित गरेका छौं ।

**वाचस्पतिं विश्वकर्माणमूतये मनोजुवं वाजे अद्या हुवेम । स नो विश्वानि हवनानि जोषद्विश्वशम्भूरवसे साधुकर्मा । उपयामगृहीतोसीन्द्राय त्वा विश्वकर्मणऽ एष ते योनिरिन्द्राय त्वा विश्वकर्मणे ॥४५॥**

मनजस्तै गतिशील, महाव्रती वाचस्पति नै श्रेष्ठ कर्मका निर्माता हुन् । यस यज्ञका लागि उनै इन्द्रदेवतालाई हामी आह्वान गर्दछौं । उत्तम कर्म गर्ने, सबैका हितकारी हुनाले उनले हाम्रो हविष्यान्न स्वीकार गर्दछन् । हे ग्रह ! तिमी उपयाम पात्रमा ग्रहण गरिएका छौ र तिम्रो आश्रयस्थल यही हो । विश्वकर्मा इन्द्रदेवतालाई प्रसन्न गर्नका लागि हामी तिमीलाई ग्रहण गर्दछौं ।

**विश्वकर्मन् हविषा वर्धनेन त्रातारमिन्द्रमकृणोरवध्यम् । तस्मै विशः समनमन्त पूर्वीरयमुग्रो विहव्यो यथासत् । उपयामगृहीतोसीन्द्राय त्वा विश्वकर्मणऽएष ते योनिरिन्द्राय त्वा विश्वकर्मणे । ॥४६॥**

सबै किसिमका उत्तम कर्महरूलाई सम्पन्न गर्ने हे विश्वकर्मा देवता ! तिमी वृद्धि गराउने हविष्यान्नरूपी साधनले हामी यजमानहरूको रक्षा गर । ऋषिहरूका ज्ञानले प्रेरित साधकहरू तिमीलाई नमस्कार गर्दछन् । तिमी विशेष किसिमले आदरपूर्वक आह्वान गर्ने योग्य छौ । त्यसो हुनाले तिमीलाई सबैले प्रणाम गर्दछन् । हे सोम ! तिमी उपयाम नामका यज्ञीय पात्रमा ग्रहण गर्न योग्य छौ । तिमीलाई विश्वकर्मा इन्द्रदेवताको प्रसन्नताका लागि हामी ग्रहण गर्दछौं, तिम्रो स्थान यही हो । त्यसो हुँदा विश्वकर्मा इन्द्रदेवतालाई प्रसन्न गर्नका लागि हामी तिमीलाई प्रतिष्ठित गराउँछौं ।

**उपयामगृहीतोस्यग्नये त्वा गायत्रच्छन्दसं गृह्णामीन्द्राय त्वा त्रिष्टुप्छन्दसं गृह्णामि विश्वेभ्यस्त्वा देवेभ्यो जगच्छन्दसं गृह्णाम्यनुष्टुप्तेभिगरः ॥४७॥**

हे अदाभ्य पात्रमा ग्रहण गरिएका सोम ! तिमी उपयाम पात्रमा ग्रहण गर्न योग्य छौ । गायत्री छन्दले धारण गर्न योग्य हुनाले तिमीलाई हामी अग्निदेवताका निम्ति ग्रहण गर्दछौं । त्रिष्टुप् छन्दले वरण गर्न योग्य तिमीलाई इन्द्रदेवताको प्रसन्नताका लागि स्वीकार गर्दछौं र जगती छन्दले तिमीलाई सर्वदेव समूहका लागि धारण गर्दछौं । हामी अनुष्टुप् छन्दमा आबद्ध भएका वाणीले तिम्रो स्तुति गर्दछौं ।

**व्रेशीनां त्वा पत्मन्ना धूनोमि कुकूननानान्त्वा पत्मन्ना धूनोमि भन्दनानां त्वा पत्मन्ना धूनोमि मदिन्तमानां त्वा पत्मन्ना धूनोमि मधुन्तमानां त्वा पत्मन्ना धूनोमि शुक्रं त्वा शुक्रऽ आ धूनोम्यन्हो रूपे सूर्यस्य रश्मिषु ॥४८॥**

हे सोम ! मेघमा अडिएको पानी बर्साउनका लागि हामी तिमीलाई कम्पायमान गराउँछौं । संसारको हितका लागि ध्वनि गर्ने मेघाभित्र रहेको पानी बर्सनका लागि तिमीलाई कम्पित गराउँछौं । अत्यन्त आनन्ददायक बादलभित्र रहेको पानी बर्साउनका लागि तिमीलाई कम्पित गराउँछौं । अति सन्तुष्टिप्रद बादलभित्रको पानी बर्साउनका लागि तिमीलाई कँपाउँछौं । अमृतरूपी जलले परिपूर्ण मेघबाट वर्षा गराउनका लागि तिमीलाई हामी कम्पित गराउँछौं । शक्तिसम्पन्न, पवित्र जल प्राप्त गर्नका लागि तिमीलाई कम्पित गराउँछौं र तिमीलाई दिवसरूपी सूर्यदेवताका किरणका निम्ति कम्पित गराउँछौं ।

**ककुभꣳ रूपं वृषभस्य रोचते बृहच्छुक्रः शुक्रस्य पुरोगाः सोमः सोमस्य पुरोगाः । यत्ते सोमादाभ्यं नाम जागृवि तस्मै त्वा गृह्णामि तस्मै ते सोम सोमाय स्वाहा ॥४९॥**

हे सोम ! तिम्रो बलवान्, तेजस्वी स्वरूप सूर्यजस्तै प्रकाशित भएको छ । महान् आदित्य सोमका अघि लागेर हिँड्दछन् वा सोम नै सोमका अघि हिँड्दछन् । हे सोम ! तिमी हानी नहुने, जीवन्त र जाग्रत छौ । त्यसो भएकैले हामीले तिमीलाई ग्रहण गरेका छौं । श्रेष्ठ कर्ममा संलग्न रहँदा हामी तिमीलाई आहुति समर्पित गर्दछौं ।

**उशिक् त्वं देव सोमाग्नेः प्रियं पाथोपीहि वशी त्वं देव सोमेन्द्रस्य प्रियं पाथोपीह्यस्मत्सखा त्व देव सोम विश्वेषां देवानां प्रियं पाथोपीहि ॥५०॥**

हे दिव्य गुणले सम्पन्न सोम ! तिमी दीप्तिमान् अग्निका प्रिय आहारका रूपमा उनलाई प्राप्त होऊ । हे सोमदेवता ! तिमी जितेन्द्रिय इन्द्रका लागि प्रिय पेयका रूपमा उनलाई प्राप्त होऊ । हे सोमदेवता ! तिमी हाम्रो मित्र भएर सम्पूर्ण देवसमूहको प्रिय मार्ग अनुसरण गर र हामीलाई पोषण गरेर सन्तुष्ट गराऊ ।

**इह रतिरिह रमध्वमिह धृतिरिह स्वधृतिः स्वाहा । उपसृजन् धरुणं मात्रे धरुणो मातरं धयन् । रायस्पोषमस्मासु दीधरत् स्वाहा ॥५१॥**

हे गाईहरू हो ! याजकहरूप्रतिको तिमीहरूको प्रेम स्थायी होस् । यिनीहरूसित सन्तुष्ट रहेर आनन्दपूर्वक बस्ने गर । यो आहुति तिमीहरूका लागि समर्पित छ । संसारलाई धारण गर्ने दिव्य अग्निदेवताले धर्तीमा स्थूल अग्नि प्रकट गरुन् र वाष्पीकरणका माध्यमबाट धर्तीको जल सुकाएर प्राणपर्जन्यका रूपमा बर्साऊन् । हामीलाई पुत्रपौत्रादिसहित अपार वैभव प्रदान गरुन् । यो आहुति तिमीलाई समर्पित छ ।

**सत्रस्य ऋद्धिरस्यगन्म ज्योतिरमृताऽअभूम । दिवं पृथिव्याऽ अध्यारुहामाविदाम देवान्त्स्वर्ज्योतिः ॥५२॥**

हे सोम तिमी यज्ञको समृद्धि बढाउँछौ । हामी यजमानहरू तिम्रा सहयोगले सूर्यरूपी ज्योतिबाट ज्योतित भएर अमरत्व प्राप्त गरौं र भूलोकबाट दिव्यलोकमा आरोहण गर्न सफल होऔं । हामी देवताको ज्योतिर्मय स्वर्गलोक हेर्नमा सफल होऔं ।

**युवं तमिन्द्रापर्वता पुरोयुधा यो नः पृतन्यापद तं तमिद्धतं वज्रेण तं तमिद्धतम् । दूरे चत्ताय छन्त्सद्‌गहनं यदिनक्षत् । अस्माकꣳ शत्रून्परि शूर विश्वतो दर्मा दर्षीष्ट विश्वतः । भूर्भुवः स्वः सुप्रजाः प्रजाभिः स्याम सुवीरा वीरैः सुपोषाः पोषैः ॥५३॥**

युद्धक्षेत्रमा अघि सरेर पराक्रम प्रदर्शन गर्ने हे इन्द्र र पर्वतदेवताहरू हो ! तिमीहरू दुवै युद्ध गर्ने प्रत्येक शत्रुलाई आफ्ना धारिला वज्रका प्रहारले यमलोक पुऱ्याओ । हे वीर ! शत्रुले चारै तिरबाट घेरेका बेलामा हामीलाई शत्रुबाट मुक्त गराओ । पृथ्वी, अन्तरिक्ष र स्वर्ग यी तीनै लोकमा व्याप्त रहेका हे देवताहरू हो ! तिमीहरूका अनुग्रहले हामी सबै याजकहरू श्रेष्ठ, वीर, पराक्रमी सन्तानले युक्त हुँदै अपार धन तथा वैभवले लाभान्वित हुन सकौं ।

**परमेष्ठ्यभिधीतः प्रजापतिर्वाचि व्याहृतायामन्धो अच्छेतः । सविता सन्यां विश्वकर्मा दीक्षायां पूषा सोमक्रयण्यामिन्द्रश्च ॥५४॥**

हे यज्ञमा परमेष्ठी नाम प्राप्त गरेका सोम ! तिम्रो मन्त्र उच्चारण गर्दै यजमानले आहुति प्रदान गरुन् । स्तुति गर्दा प्रजापति नाम प्राप्त गर्ने हे सोम ! तिम्रो मन्त्र उच्चारण गरेर यजमानले तिमीलाई आहुति प्रदान गरुन् । सोमतर्फ यजमान फर्किएका अवस्थानमा अन्ध भन्ने नाम उच्चारण गर्दै उसैका मन्त्रले हे सोम ! तिमीलाई यजमानले आहुति प्रदान गरुन् । सबैका लागि पोषक र संरक्षक भएका अवस्थामा तिमीलाई सविता नामले मन्त्रसहित आहुति प्रदान गरुन् । दीक्षाका समयमा तिम्रो नाम विश्वकर्मा हुँदा उपयुक्त मन्त्रसहित तिमीलाई यजमानले आज्यको आहुति प्रदान गरुन् । आरोग्यवर्द्धक किरणहरू तिमीले लिएर आएका अवस्थामा पूषा भन्ने तिम्रो नाम हुँदा त्यही नामसुहाउँदो मन्त्रले तिमीलाई यजमानले आज्यको आहुति प्रदान गरुन् ।

**इन्द्रश्च मरुतश्च क्रयायोपोत्थितोसुरः पण्यमानो मित्रः क्रीतो विष्णुः शिपिविष्टऽऊरावासन्नो विष्णुर्नरन्धिषः ॥५५॥**

किन्नका लागि तयारी गरेका अवस्थामा तिम्रो नाम इन्द्र र मरुत् हुने हुँदा इन्द्राय मरुद्भ्यश्च भन्ने मन्त्र उच्चारण गरी यजमानले आहुति प्रदान गरुन् । किन्ने बेलामा असुर नाम हुने हुँदा तिमीलाई असुराय स्वाहा भन्ने मन्त्रले यजमानहरू आहुति प्रदान गरुन् । मूल्य तिरेर किनिएका सोम मित्र हुनाले त्यस अवस्थामा त्यस्तै सुहाउँदो मन्त्रले तिमीलाई आहुति प्रदान गरुन् । यजमानले आफ्ना अधीनमा सोमलाई लिइसकेपछि तिनको नाम विष्णु हुने हुँदा विष्णुकै नामका मन्त्रले तिमीलाई आज्यआहुति प्रदान गरुन् । गाडामा राखेर लगिँदै गरेका सोमको पनि विष्णु नै नाम हुनाले यजमानले त्यस अवस्थामा विष्णवे नरन्धिषाय स्वाहा भन्ने मन्त्रले तिमीलाई आज्य र आहुति प्रदान गरुन् ।

**प्रोह्यमाणः सोमऽ आगतो वरुणऽ आसन्द्यामासन्नो ग्निराग्नीध्रऽ इन्द्रो हविर्धाने थर्वोपावह्रियमाणो विश्वेदेवाः ॥५६॥**

वाहनमा आउने सोम सोमकै नामले परिचित छन् । उनलाई सोमाय स्वाहा भनेर आज्याहुति प्रदान गरिन्छ । चौकीमा सुरक्षित सोम वरुण नामले प्रसिद्ध हुन्छन् ।

त्यसैले तिनलाई वरुणकै मन्त्रले आज्य आहुति प्रदान गरिन्छ । आग्नीध्रका नजिक रहेका सोम अग्निका नामले परिचित हुनाले अग्नये स्वाहा मन्त्रले उनलाई आज्य आहुति प्रदान गर्दछन् । हविष्यान्नका रूपमा रहेका सोमलाई इन्द्र नामले चिन्ने गरिन्छ, त्यसो हुँदा उनलाई इन्द्राय स्वाहा भन्ने मन्त्रले आहुति प्रदान गर्दछन् । अभिषवका निम्ति तयार गरिएको सोमको नाम अथर्व हुनाले अथर्वाय स्वाहा भन्ने मन्त्रले उनलाई आज्य र आहुति प्रदान गरिन्छ ।

**विश्वे देवाऽअंशुषु न्युप्तो विष्णुराप्रीतपाऽ आप्याय्यमानो यमः सूयमानो विष्णुः सम्भ्रियमाणो वायुः पूयमानः शुक्रः पूतः शुक्रः क्षीरश्रीर्मन्थी सक्तुश्रीर्विश्वेदेवाः ॥५७॥**

विभिन्न भागमा विभाजन गरिसकेपछि हे सोम तिम्रो नाम विश्वेदेवा हुन्छ । त्यस बेला विश्वेभ्यो देवेभ्यः स्वाहा भन्दै आज्याहुति प्रदान गरिन्छ । उपासकको संरक्षकका रूपमा विष्णु नाम हुनाले सोमलाई विष्णवे आप्रीतपाय स्वाहा भनेर घिउको आहुति प्रदान गरौं । अभिषव गरिएको सोमको नाम यम हुन्छ त्यस बेलामा यमाय स्वाहा भनेर नै उनलाई आहुति प्रदान गर्नुपर्दछ । शुद्धीकरण क्रियामा सोमको नाम वायु हुने हुँदा त्यस बेला वायुकै नामको मन्त्र उच्चारण गर्दै सोमलाई घिउको आहुति दिने गर्दछन् । शोधित भइसकेपछि पवित्र सोम शुक्र नामले परिचित हुन्छन् अनि तिनलाई शुक्राय स्वाहा भन्ने मन्त्रले घिउको आहुति प्रदान गरिन्छ । सातुमा मिसिएका सोमलाई मन्थी भन्ने नाम दिइएको हुँदा त्यस अवस्थामा मन्थिने स्वाहा भन्ने मन्त्रले सोमलाई आहुति प्रदान गर्नुपर्दछ ।

**विश्वे देवाश्चमसेषून्नीतोसुर्होमायोद्यतो रुद्रो हूयमानो वातोभ्यावृतो नृचक्षाः प्रतिख्यातो भक्षो भक्ष्यमाणः पितरो नाराशंसाः ॥५८॥**

यज्ञका लागि चमस नामका पात्रमा राखिएका सोमलाई विश्वेदेवा भन्ने नाम दिइएको हुँदा विश्वेदेवताकै मन्त्रले उनलाई आहुति प्रदान गर्नुपर्दछ । ग्रहयज्ञका लागि प्रयुक्त सोमको नाम असु हुन्छ, त्यस बेलामा असवे स्वाहा भनेर उनलाई आहुति प्रदान गरिन्छ । हविका रूपमा प्रयुक्त सोमको नाम रुद्र हो । त्यस बेला रुद्राय स्वाहा भनेर आहुति दिनुपर्दछ । अवशेष हविका रूपमा भक्षण गर्न ल्याइएका अवस्थामा उनको नाम वात हुन्छ र त्यसै अनुसारका मन्त्रले उनलाई हवि प्रदान गर्नुपर्दछ । हे ब्रह्म ! यज्ञबाट बचेका सोमलाई नृचक्ष भन्ने नामले ग्रहण गर र नृचक्षसे स्वाहा भन्ने मन्त्रले हवि प्रदान गर । पान गरिँदै भएका अवस्थामा सोमलाई भक्षक नाम दिनुपर्दछ र उनका लागि भक्षाय स्वाहा भनेर आहुति प्रदान गर्नुपर्दछ । भक्षणपछि सोमलाई नराशंस र पितृ नाम दिइन्छ तिनलाई पितृभ्यो नराशंसेभ्यो स्वाहा भन्ने मन्त्रले घिउको आहुति प्रदान गरिन्छ ।

**सन्नः सिन्धुरवभृथायोद्यतः समुद्रोभ्यवह्रियमाणः सलिलः प्रप्लुतो ययोरोजसा स्कभिता रजांसि वीर्येभिर्वीरतमा शविष्ठा । या पत्येते अप्रतीता सहोभिर्विष्णू अगन्वरुणा पूर्वहूतौ ॥५९॥**

यज्ञ सकिएपछि अवभृथ स्नान गर्नका लागि प्रयुक्त सोमको नाम सिन्धु हो । त्यस बेला कुनै बाधाविघ्न आएमा सिन्धवे स्वाहा भन्ने मन्त्रले आज्यको आहुति दिनुपर्दछ ।

ऋजीष नामका कुम्भमा जलमाथि राखिएका सोमको नाम समुद्र हो । समुद्राय स्वाहा भनेर उनलाई घिउको आहुति दिनुपर्दछ । ऋजीष कुम्भका जलमा मिसिएका सोमको नाम सलिल हो । सलिलाय स्वाहा भनेर तिनलाई घिउको आहुति प्रदान गर्दछन् । जुन विष्णु र वरुणका पराक्रमले ब्रह्माण्डरूप घडा आआफ्ना स्थानमा विद्यमान छन्, जो आफ्नै पराक्रमले अत्यन्त बलशाली छन् र जो आफ्ना सामर्थ्यशक्तिले अद्वितीय छन्, तिनीहरूले नै शत्रुलाई परास्त गर्दछन् । उनीहरूका लागि यज्ञमा जुन प्रथम आहुति अर्पित गरिन्छ त्यही मङ्गलमय आहुति यहाँ उनीहरूका लागि समर्पित गरिएको छ ।

**देवान्दिवमगन्यज्ञस्ततो मा द्रविणमष्टु मनुष्यानन्तरिक्षमगन्यज्ञस्ततो मा द्रविणमष्टु पितॄन्पृथिवीमगन्यज्ञस्ततो मा द्रविणमष्टु यङ्कञ्च लोकमगन्यज्ञस्ततो मे भद्रमभूत् ॥६०॥**

जुन यज्ञ दिव्यलोकमा देवताहरूसमक्ष गयो, उसै दिव्य यज्ञको फल, दैवी कृपाका रूपमा विशिष्ट ऐश्वर्यका रूपमा हामीलाई प्राप्त होस् । जुन यज्ञ अन्तरिक्षलाई प्राप्त भएको छ, त्यसबाट हामीलाई श्रेष्ठ धन प्राप्त होस् । जुन यज्ञ पितृ र पृथ्वीलाई प्राप्त भएको छ, त्यसबाट हामीलाई वैभव प्राप्त होस् र यस यस्तो यज्ञ जुनसुकै लोकमा सम्पन्न भएको भए पनि हामीलाई त्यसबाट मङ्गल होस् ।

**चतुस्त्रिꣳशत्तन्तवो ये वितत्निरे यऽ इमं यज्ञꣳ स्वधया ददन्ते । तेषां छिन्नꣳ सम्वेतद्दधामि स्वाहा घर्मो अप्येतु देवान् ॥६१॥**

यज्ञ संवर्द्धित गर्ने प्रजापति आदि चौंतीस देवताले यस यज्ञलाई विस्तृत गराउँछन् र श्रेष्ठ पोषक पदार्थ याजकहरूलाई प्रदान गर्दछन् । यज्ञलाई विस्तार गर्ने देवताहरूबाट प्राप्त वैभव हामी यज्ञको कार्यमा नै खटाउँछौं । देवताहरूका लागि समर्पित यो आहुति उनीहरूको आनन्द बढाउने काम गर्दछ ।

**यज्ञस्य दोहो विततः पुरुत्रा सो अष्टधा दिवमन्वाततान । स यज्ञ धुक्ष्व महि मे प्रजायाꣳ रायस्पोषं विश्वमायुरशीय स्वाहा ॥६२॥**

यज्ञको फल विभिन्न किसिमले विस्तृत भएर अखिल ब्रह्माण्डका आठै दिशामा व्याप्त होस् । यो यज्ञ पृथ्वी, अन्तरिक्ष र स्वर्गमा विस्तृत भएर हामीलाई धन, सन्तान आदि अपार वैभव प्रदान गर्ने होस् । यसै रीतिले हामी सम्पूर्ण आयु भएको जीवन प्राप्त गरौं भनेर यो आहुति समर्पित गर्दै छौं ।

**आ पवस्व हिरण्यवदश्ववत्सोम वीरवत् । वाजं गोमन्तमा भर स्वाहा ॥६३॥**

हे सोमदेवता ! हामीलाई सुन आदि धन, अश्व र वीर सन्ततिले युक्त वैभव प्रदान गर । गाईका दुधले युक्त अन्नले हामीलाई सम्पन्न बनाइदेऊ भनेर हामीहरू यो आहुति समर्पण गर्दछौं ।

**॥इति अष्टमोऽध्याय ॥**

॥आठौं अध्याय सकियो॥

ॐ

**भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।**

# वाजसनेयि माध्यन्दिन शुक्ल

# यजुर्वेद – संहिता

## ॥अथ नवमोऽध्यायः॥

॥नवौं अध्याय॥

**ऋषि–** बृहस्पति, इन्द्र, दधिक्रावा वामदेव्य, वसिष्ठ, नाभानेदिष्ठ, तापस, वरुण, देवगण, देवश्रवा, देववात भारत ।

**देवता–** सविता, इन्द्र, रस, लिङ्गोक्त, रथ, पृथिवी, अश्व, अश्वस्तुति, प्रजापति, यजमान, दिशा, आसन्दी, सुन्वन्, विश्वेदेवा, अर्यमा, अग्नि, पूषा, मित्र, वसु, देवगण, राक्षसघाती ।

**छन्द–** स्वराट् आर्षी त्रिष्टुप्, आर्षी पङ्क्ति, विकृति, निचृत् अतिशक्वरी, भुरिक् कृति, भुरिक् अष्टि, भुरिक् जगती, उष्णिक्, त्रिष्टुप्, धृति, विराट् उत्कृति, जगती, स्वराट् अतिधृति, निचृत् अतिजगती, भुरिक् पङ्क्ति, निचृत् त्रिष्टुप्, निचृत् धृति, अत्यष्टि, निचृत् अत्यष्टि, स्वराट् त्रिष्टुप्, अनुष्टुप्, स्वराट् अनुष्टुप्, भुरिक् अनुष्टुप्, भुरिक् आर्षी गायत्री, स्वराट् अतिधृति, कृति, निचृत्, जगती, निचृत् धृति, विराट् उत्कृति, विकृति, निचृत् अनुष्टुप्, भुरिक् ब्राह्मी बृहती, अतिजगती, स्वराट् ब्राहेमी त्रिष्टुप् ।

**देव सवितः प्रसुव यज्ञं प्रसुव यज्ञपतिं भगाय । दिव्यो गन्धर्वः केतपूः केतं नः पुनातु वाचस्पतिर्वाजं नः स्वदतु स्वाहा ॥१॥**

हे तेजस्वी सवितादेवता ! यस यज्ञलाई उत्तम विधिले पूर्ण गर । यजमानलाई धनधान्य लाभका लागि प्रेरित गर । अन्नलाई पवित्र गराउने दिव्य किरणले हाम्रो अन्न पवित्र बनाऊ र वाचस्पतिदेवताले हाम्रो अन्नरूपी आहुति ग्रहण गर ।

**ध्रुवसदं त्वा नृषदं मनःसदमुपयामगृहीतोसीन्द्राय त्वा जुष्टं गृह्णाम्येष ते योनिरिन्द्राय त्वा जुष्टतमम् । अप्सुषदं त्वा घृतसदं व्योमसदमुपयामगृहीतोसीन्द्राय त्वा जुष्टं गृह्णाम्येष ते योनिरिन्द्राय त्वा जुष्टतमम् । पृथिविसदं त्वान्तरिक्षसदं दिविसदं देवसदं नाकसदमुपयामगृहीतोसीन्द्राय त्वा जुष्टं गृह्णाम्येष ते योनिरिन्द्राय त्वा जुष्टतमम् ॥२॥**

हे सोमदेवता ! तिमी सबैभन्दा अधिक योग्य, नेतृत्व गर्नेहरूका पालक, मानवसमुदायका मनमा रमाउने, स्थिर रूपले प्रतिष्ठित इन्द्रदेवताका आश्रयस्थल हौ । इन्द्रका लागि योग्य छौ भन्ने जानेर तिमीलाई ग्रहण गर्दछौँ । तिमी पहिले उपयाम पात्रमा स्थापित होऊ । यसै गरी प्रजाहरूमा, आकाशमा र घिउमा तेजस्वी रूपले विराजमान भएकाले इन्द्रदेवताका लागि योग्य भएको जानेर हामी तिमीलाई ग्रहण गर्दछौँ । तिमी दोस्रो उपयाम पात्रमा स्थापित होऊ । यसै गरी पृथ्वी, अन्तरिक्ष,

द्युलोक, ज्ञानीजनका र दुःखरहित रूपमा इन्द्रदेवताका लागि योग्य छौ भन्ने जानेर तिमीलाई ग्रहण गर्दछौँ । यो तिम्रो आश्रयस्थल हो । तिमी यहाँ तेस्रो उपयाम पात्रमा पनि स्थापित रहन्छौ ।

**अपाᳬं रसमुद्वयसᳬं सूर्ये सन्तᳬं समाहितम् । अपाᳬं रसस्य यो रसस्तं वो गृह्णाम्युत्तममुपयामगृहीतोसीन्द्राय त्वा जुष्टं गृह्णाम्येष ते योनिरिन्द्राय त्वा जुष्टतमम् ॥३॥**

हे सोम ! प्रकाशपुञ्जमा रहने गरेका, सबै किसिमले धारण गर्न योग्य, जलको सारका पनि सार, कल्याणकारी रूपमा रहेका तिमीलाई हामी इन्द्र र वायुदेवताका लागि चतुर्थ उपयाम पात्रमा स्थापित गर्दछौँ । यो तिम्रो स्थान हो । तिमी इन्द्रदेवताका लागि सबैभन्दा प्रिय हुनाले हामी उनैका लागि तिमीलाई ग्रहण गर्दछौँ ।

**ग्रहाऽ ऊर्जाहुतयो व्यन्तो विप्राय मतिम् । तेषां विशिप्रियाणां वोहमिषमूर्जᳬं समग्रभमुपयामगृहीतोसीन्द्राय त्वा जुष्टं गृह्णाम्येष ते योनिरिन्द्राय त्वा जुष्टतमम् । सम्पृचौ स्थः सं मा भद्रेण पृङ्क्तं विपृचौ स्थो वि मा पाप्मना पृङ्क्तम् ॥४॥**

हे सोमरस तथा आसवका ग्रह नामका पात्रहरू हो ! तिमीहरू मेधावीजनलाई विशिष्ट मति प्रदान गर्दछौ । हामी याजकहरूका लागि तिमीभित्र रहेको रस उचित किसिमले स्थापित गर । हे ग्रह नामका पाँचौँ पात्र ! तिमी नियमअनुसार स्थापित गरिएका छौ । इन्द्र आदि देवताहरूको प्रसन्नताका लागि हामी तिमीलाई ग्रहण गर्दछौँ । यो तिम्रै निवास हो । तिमीहरू दुवै सँगै रहेर हामीलाई कल्याण र सुख प्रदान गर र हामीभन्दा छुट्टै रहेर पापबाट हामीलाई जोगाऊ ।

**इन्द्रस्य वज्रोसि वाजसास्त्वयायं वाजᳬं सेत् । वाजस्य नु प्रसवे मातरं महीमदितिं नमा वचसा करामहे । यस्यामिदं विश्वं भुवनमाविवेश तस्यां नो देवः सविता धर्म साविषत् ॥५॥**

तिमी इन्द्रको वज्रजस्तै अचुक छौ । तिमी अन्नयुक्त छौ, त्यसैले तिमीबाट अन्न प्राप्त होस् । हामी आफ्नो वाणीरूपी मन्त्रले माता अदितिजस्तै धर्ती मातालाई अन्न प्राप्त गर्नका लागि निश्चित रूपले प्रेरित गर्दछौँ । यो सम्पूर्ण विश्वलाई नै आफ्नो प्रभाव क्षेत्र बनाएका सविता देवताले हामीलाई धर्मका निम्ति गतिशील बनाऊन् ।

**अप्स्वन्तरमृतमप्सु भेषजमपामुत प्रशस्तिष्वश्वा भवत वाजिनः । देवीरापो यो वऽऊर्मिः प्रतूर्तिः ककुन्मान् वाजसास्तेनायं वाजᳬं सेत् ॥६॥**

जलका अन्तःस्तलमा अमृत र पुष्टिदायक औषधिहरू छन् । अश्व, अमृत र औषधिरूपी जल पान गरेर हामी बलवान् होऔँ । हे जलसमूह ! तिम्रा उच्च र वेगवान् तरङ्गहरू हाम्रा लागि अन्नप्रदायक बनून् ।

**वातो वा मनो वा गन्धर्वाः सप्तविᳬंशतिः । ते अग्रेश्वमयुञ्जंस्ते अस्मिञ्जवमादधुः ॥७॥**

वायु, मन, गन्धर्व, पृथ्वीलाई धारण गर्ने सत्ताईस नक्षत्र आदि पहिलेदेखि नै अश्वसँग आबद्ध छन् । तिनले यस यज्ञलाई गतिशील बनाऊन् ।

**वातरथंऽहा भव वाजिन्युज्यमानऽइन्द्रस्येव दक्षिणः श्रियैधि । युञ्जन्तु त्वा मरुतो विश्वदेवसऽ आ ते त्वष्टा पत्सु जवं दधातु ॥८॥**

हे अग्निरूपी घोडा ! रथमा नारिएपछि तिमी वायुको जस्तै वेगले सम्पन्न हुन्छौ । दाहिनेतर्फ रहेर इन्द्रदेवताको शोभा बढाऊ । मेधावी मरुत्हरू तिमीलाई रथमा नियुक्त गरुन् र त्वष्टादेवताले तिम्रा खुट्टा वेगवान् बनाऊन् ।

**जवो यस्ते वाजिन्निहितो गुहा यः श्येने परीत्तो अचरच्च वाते । तेन नो वाजिन् बलवान् बलेन वाजजिच्च भव समने च पारयिष्णुः । वाजिनो वाजजितो वाजथं सरिष्यन्तो बृहस्पतेर्भागमवजिघ्रत ॥९॥**

हे बलशाली ! तिम्रो गति हृदयमा, श्येनपक्षीमा र वायुमा छ । त्यसै बलले बलशाली भएर हामीलाई युद्धमा विजयी बनाऊ । युद्धमा शत्रुलाई पराजित गरेर हाम्रो सङ्कट हटाइदेऊ । हे अन्न विजेता बलशाली अग्नि ! अन्न प्राप्तिका कामनाले बृहस्पतिका चरुको भाग सुँघेर त्यसको सूक्ष्म अंश ग्रहण गर ।

**देवस्याहथं सवितुः सवे सत्यसवसो बृहस्पतेरुत्तमं नाकथं रुहेयम् । देवस्याहथं सवितुः सवे सत्यसवसऽइन्द्रस्योत्तमं नाकथं रुहेयम् । देवस्याहथं सवितुः सवे सत्यप्रसवसो बृहस्पतेरुत्तमं नाकमरुहम् । देवस्याहथं सवितुः सवे सत्यप्रसवसऽइन्द्रस्योत्तमं नाकमरुहम् ॥१०॥**

सत्यको मार्गमा चल्ने प्रेरणा प्रदान गर्ने सवितादेवताका अनुशासनमा रहेर हामी याजकहरू बृहस्पतिदेवताको श्रेष्ठ तथा इन्द्रको उत्कृष्ट स्वर्गमा आरोहण गरौँ । सत्य र न्यायले युक्त सबै खालका सुख प्रदान गर्ने सवितादेवताका प्रेरणाले हामी याजकहरू बृहस्पतिदेव र इन्द्रदेवताका उत्कृष्ट स्वर्गमा आरुढ होऔँ ।

**बृहस्पते वाजं जय बृहस्पतये वाचं वदत बृहस्पतिं वाजं जापयत । इन्द्र वाजं जयेन्द्राय वाचं वदतेन्द्रं वाजं जापयत ॥११॥**

हे बृहस्पति ! तिमी विजय प्राप्त गर । हे याजकहरू हो ! बृहस्पतिदेवताका लागि स्तुति गाओ र विजयी बनाओ । हे इन्द्रदेवता ! तिमी विजय प्राप्त गर । हे याजकहरू हो ! इन्द्रदेवताका लागि स्तुति गाओ र विजयी बनाओ ।

**एषा वः सा सत्या संवागभूद्यया बृहस्पतिं वाजमजीजपताजीजपत बृहस्पतिं वाजं वनस्पतयो विमुच्यध्वम् । एषा वः सा सत्या संवागभूद्ययेन्द्रं वाजमजीजपताजीजपतेन्द्रं वाजं वनस्पतयो विमुच्यध्वम् ॥१२॥**

हे गाउनेबजाउनेहरू हो ! एकैसाथ स्वर मिलाएर बृहस्पतिदेवतालाई युद्धमा विजयी गराउन सक्ने खालको वाणी निकाल । हे वनसमूहका स्वामी ! इन्द्रदेवताले विजय प्राप्त गर्न सकून् भनेर आफ्ना सैनिक, घोडा र रथ छोडिदेओ । हे सेनाध्यक्ष हो ! त्यसरी विजयी भएपछि आफ्ना सैनिक, घोडा र रथलाई सुस्ताउनका लागि मुक्त गरिदेओ ।

**देवस्याहथं सवितुः सवे सत्यप्रसवसो बृहस्पतेर्वाजजितो वाजं जेषम् । वाजिनो वाजजितोध्वन स्कभ्नुवन्तो योजना मिमानाः काष्ठां गच्छत ॥१३॥**

सबैलाई प्रेरणा प्रदान गर्ने, सबैलाई प्रकाशित गराउने, सत्यका प्रेरक बृहस्पतिदेवताका अनुशासनमा रहेर युद्धमा विजयी होऔँ । हामीलाई युद्धमा विजयी गराउने हे अश्वहरू

हो ! शत्रुको मार्ग रोक्दै गतिका साथ कोसौँ परसम्म कुदेर हामीलाई सीमापारि पुर्‍याइदेओ ।

**एष स्य वाजी क्षिपणिं तुरण्यति ग्रीवायां बद्धो अपिकक्षऽ आसनि । क्रतुं दधिक्राऽअनु सꣳ सनिष्यदत्पथामङ्काꣳसि स्वन्वापनीफणत् स्वाहा ॥१४॥**

यी अश्व, ग्रीवा, वक्ष र मुखमा बाँधिएका, यज्ञको उद्देश्यले मार्गका सबै बाधाहरू हटाउँदै शब्दनाद गर्दै अगाडि बढिरहेका छन् । त्यसमाथि बसेका वीरहरू शीघ्रतापूर्वक शत्रुहरूलाई हतियारले प्रहार गर्दछन् भन्ने उद्देश्यले हामी आहुति समर्पित गर्दछौँ ।

**उत स्मास्य द्रवतस्तुरण्यतः पर्णं न वेरनुवाति प्रगर्धिनः । श्येनस्येव ध्रजतो अङ्कसं परि दधिक्राव्णः सहोर्जा तरित्रतः स्वाहा ॥१५॥**

पँखेटाले चराको अनुसरण गरेझैँ वेगपूर्वक कुद्ने र प्रतिस्पर्धा गर्ने दधिक्रादेवताको अनुसरण मानिसले गर्दछन् । बाज पक्षीको उडानजस्तो गरी हिँड्ने र सुरक्षा प्रदान गर्ने दधिक्रादेवताका शरीरलाई सबैले एकै ठाउँमा भेला भएर अन्न आदि प्राप्त गर्नका लागि चारै तिरबाट घेर्दछन् ।

**शं नो भवन्तु वाजिनो हवेषु देवताता मितद्रवः स्वर्काः । जम्भयन्तोहिं वृकꣳ रक्षाꣳसि सनेम्यस्मद्युयवन्नमीवाः ॥१६॥**

यज्ञ र युद्धमा वाजिन् नामका अग्नि र घोडा हाम्रा लागि कल्याणकारी होऊन् र दैवी कार्यमा यज्ञको आहुतिले अझै सुसज्जित होऊन् । तिनीहरूले चाँडै सर्पझैँ कुटिल, ब्वाँसाजस्तो पछाडिबाट आक्रमण गर्ने, विघ्नकारी दुष्ट पुरुषलाई हामीबाट उनैले धेरै पर पुर्‍याइदिऊन् ।

**ते नो अर्वन्तो हवनश्रुतो हवं विश्वे शृण्वन्तु वाजिनो मितद्रवः । सहस्रसा मेधसाता सनिष्यवो महो ये धनꣳ समिथेषु जभ्रिरे ॥१७॥**

प्रसिद्ध याज्ञिक, अश्वमा सवार गर्ने, बलवान्, असामान्य गतिमा गमन गर्ने, वीरले हाम्रो कुरो सुनून् । हजारौँलाई तृप्त गराउने, यज्ञका अधिष्ठाता, आवश्यकताहरूलाई पूरा गराउने, वीरहरू जीवन सङ्ग्राममा महान् ऐश्वर्यशाली बन्दछन् ।

**वाजे वाजेऽ वत वाजिनो नो धनेषु विप्रा अमृताऽ ऋतज्ञाः । अस्य मध्वः पिबत मादयध्वन्तृप्ता यात पथिभिर्देवयानैः ॥१८॥**

हे बलशाली वाजी देवताहरू हो ! तिमीहरू अमर, सत्ययज्ञका ज्ञाता र विद्वान् छौ । तिमीहरू धनका लागि हुने युद्धमा हाम्रो रक्षा गर । तिमीहरू यस यज्ञमा आएर सोमरस पान गरेर आनन्दित होओ र सन्तुष्ट भएपछि देवयानका मार्गबाट प्रस्थान गर ।

**आ मा वाजस्य प्रसवो जगम्यादेमे द्यावापृथिवी विश्वरूपे । आ मा गन्तां पितरा मातरा चा मा सोम अमृतत्त्वेन गम्यात् । वाजिनो वाजजितो वाजꣳ ससृवाꣳसो बृहस्पतेर्भागमवजिघ्रत निमृजानाः ॥१९॥**

मातापिताका रूपमा रहेका विश्वरूप द्यावापृथिवी आएर हाम्रो रक्षा गरून् । हामीलाई अन्न उत्पादनको ज्ञान प्राप्त होस् र अमृतभावले सोम प्राप्त होस् । हे बलशालीहरू हो ! बृहस्पतिदेवताका अन्नको भाग प्रसन्न चित्तले प्राप्त गर ।

**आपये स्वाहा स्वापये स्वाहापिजाय स्वाहा ऋतवे स्वाहा वसवे स्वाहाहर्पतये स्वाहाह्ने मुग्धाय स्वाहा मुग्धाय वैनꣳशिनाय स्वाहा विनꣳशिनऽआन्त्यायनाय स्वाहान्त्याय भौवनाय स्वाहा भुवनस्य पतये स्वाहाधिपतये स्वाहा ॥२०॥**

देवत्व प्राप्त गर्नका लागि, उत्तम सुखको प्राप्तिका लागि, बारम्बार जन्मने देवताहरूका लागि, यज्ञरूपी परम शक्तिका लागि, प्रजापतिका लागि, दिनका स्वामीका लागि, सुन्दर दिवसका लागि, अविनाशी सुन्दर समयका लागि, अन्त्यसम्म पुऱ्याउने अविनाशीका लागि, भुवनको सीमाका लागि, सम्पूर्ण भुवनका स्वामीका लागि, अधिपति आदि सबै देवताका लागि यो आहुति समर्पित गरिएको छ, सबै देवशक्तिले त्यसलाई ग्रहण गरुन् ।

**आयुर्यज्ञेन कल्पन्तां प्राणो यज्ञेन कल्पन्तां चक्षुर्यज्ञेन कल्पन्ताꣳ श्रोत्रं यज्ञेन कल्पन्तां पृष्ठं यज्ञेन कल्पन्तां यज्ञो यज्ञेन कल्पन्ताम् । प्रजापतेः प्रजाऽ अभूम स्वर्देवाऽअगन्मामृताऽअभूम ॥२१॥**

यस यज्ञका प्रभावले हाम्रो आयु बढोस्, हाम्रो प्राण बलियो होस्, आँखाको ज्योति तेजिलो होस्, सुन्ने शक्ति टडकारो होस्, हाम्रो ढाड बलियो होस्, हाम्रो यज्ञ विस्तृत होस् । हामी सबै ईश्वरका सन्तान बनेर रहौँ । हामी सबै मेधावी बनेर दिव्य सुख प्राप्त गरौँ र अमृतत्त्व प्राप्त गर्नमा समर्थ होऔँ ।

**अस्मे वोऽअस्त्विन्द्रियमस्मे नृम्णमुत क्रतुरस्मे वर्चाꣳसि सन्तु वः । नमो मात्रे पृथिव्यै नमो मात्रे पृथिव्याऽ इयं ते राड्यन्तासि यमनो ध्रुवोसि धरुणः । कृष्यै त्वा क्षेमाय त्वा रय्यै त्वा पोषाय त्वा ॥२२॥**

हे दिशाहरू हो ! तिमीहरूको सबै ऐश्वर्य, धन, कार्यशक्ति र तेज हामीलाई प्राप्त होस् । माता पृथ्वीका लागि आदरसहित हामी नमस्कार अर्पित गर्दछौँ । हे मातृभूमि ! तिमी सञ्चालनशक्ति भएकी शासनशक्तिले सम्पन्न छ्यौ । तिमी नै अनेकौँ किसिमका व्यवस्था बनाउने र सबैलाई आश्रय प्रदान गर्ने हौ । खेतीको कामका लागि, संसारको हितका लागि, देशमा ऐश्वर्य वृद्धि गर्नका लागि, प्रजाको पालनपोषण गर्नका लागि र आफ्नो कुशलतापूर्वक उन्नतिका लागि तिमीलाई हामी स्वीकार गर्दछौँ ।

**वाजस्येमं प्रसवः सुषुवेऽग्रे सोमꣳ राजानमोषधीष्वप्सु । ताऽ अस्मभ्यं मधुमतीर्भवन्तु वयꣳ राष्ट्रे जागृयाम पुरोहिताः स्वाहा ॥२३॥**

सोम नामका अत्यन्त दीप्तिमान् पदार्थलाई अन्नका उत्पादक प्रजापतिले सबैभन्दा पहिले जल र औषधिका बीचमा उत्पन्न गरे । हाम्रा लागि यो सोम मधुर रसले युक्त

होओस् । हामी पुरोहितहरू राष्ट्रमा जागरुक अवस्थामा रहन सकौँ भन्दै यो आहुति समर्पित गरिएको छ ।

**वाजेस्येमां प्रसवः शिश्रिये दिवमिमा च विश्वा भुवनानि सम्राट् । अदित्सन्तं दापयति प्रजानन्त्स नो रयिᳬ सर्ववीरं नियच्छतु स्वाहा ॥२४॥**

अन्नका उत्पादक प्रजापतिले सम्पूर्ण भुवनसहित द्युलोकलाई आश्रय दिएका छन् । उनै प्रजापतिले आहुति प्रदान गर्नका लागि हाम्रा बुद्धिलाई प्रेरित गरुन् र सुसन्ततिसहित ऐश्वर्य प्रदान गरुन् भनेर यो आहुति समर्पित गरिएको छ ।

**वाजस्य नु प्रसवऽआबभूवेमा च विश्वा भुवनानि सर्वतः । सनेमि राजा परियाति विद्वान् प्रजां पुष्टिं वर्ध्यमानो अस्मे स्वाहा ॥२५॥**

अन्नका उत्पादक प्रजापतिले सबै तिरबाट सम्पूर्ण भुवनहरूलाई उत्पन्न गरे । उनै सनातन, सर्वज्ञाता प्रजापति हाम्रा प्रजा, पशुधन र समस्त ऐश्वर्यको वृद्धि गर्दै सबैभन्दा माथिल्लो स्थानमा निवास गरेका छन् । यो आहुति उनै प्रजापतिका लागि समर्पित छ ।

**सोमᳬ राजानमवसेग्निमन्वारभामहे । आदित्यान्विष्णुᳬ सूर्यं ब्रह्माणं च बृहस्पतिᳬ स्वाहा ॥२६॥**

हाम्रो पालनपोषणका लागि जसले राजा, सोम, अग्नि, बाहृ आदित्य, विष्णु, सूर्य, ब्रह्मा र बृहस्पति उत्पन्न गरे, उनै प्रजापतिको हामी स्तुति गर्दछौँ । यो आहुति उनै प्रजापतिका लागि समर्पित छ ।

**अर्यमणं बृहस्पतिमिन्द्रं दानाय चोदय । वातं विष्णुᳬ सरस्वतीᳬ सवितारं च वाजिनᳬ स्वाहा ॥२७॥**

हे परमात्मा ! तिमी अर्यमा, बृहस्पति, इन्द्र, वाणीकी अधिष्ठात्री देवी सरस्वती, विष्णु, सवितादेवता र बलवान् देवगणलाई दान गर्नका लागि प्रेरित गर । हामी यो आहुति तिम्रा लागि समर्पित गर्दै छौं ।

**अग्ने अच्छा वदेह नः प्रति नः सुमना भव । प्र नो यच्छ सहस्रजित्त्वᳬ हि धनदा असि स्वाहा ॥२८॥**

हे अग्निदेवता ! हामीप्रति तिमी श्रेष्ठ मनोभाव राखेर यज्ञमा उपस्थित होऊ र हाम्रा लागि हितकारी उपदेश देऊ । हे एक्लै अनेकौँ शत्रु जितेर प्रजाको पालन गर्ने अग्निदेवता ! तिमी ऐश्वर्यप्रदाता हौ । त्यसैले हामीलाई पनि धनधान्यले परिपूर्ण गराऊ । हामी यो आहुति तिमीलाई समर्पित गर्दछौँ ।

**प्र नो यच्छत्वर्यमा प्र पूषा प्र बृहस्पतिः । प्र वाग्देवी ददातु नः स्वाहा ॥२९॥**

अर्यमा, भग र बृहस्पतिदेवताले हामीलाई ऐश्वर्यले परिपूर्ण गरुन् । समस्त देवता र वाणीकी अधिष्ठात्री, सत्यप्रिय देवी सरस्वतीले भरपूर धन आदि सम्पदा प्रदान गरुन् ।

**देवस्य त्वा सवितुः प्रसवेऽश्विनोर्बाहुभ्यां पूष्णो हस्ताभ्याम् । सरस्वत्यै वाचो यन्तुर्यन्त्रिये दधामि बृहस्पतेष्ट्वा साम्राज्येनाभिषिञ्चाम्यसौ ॥३०॥**

सबैलाई उत्पन्न गर्ने सविता देवताका सृष्टिमा सरस्वतीका वाणीका प्रेरणाले अश्विनीकुमारदेवताहरूका बाहु र पूषादेवताका हातले हामी तिमीहरूलाई धारण

गर्दछौं । त्यसपछि बृहस्पति देवताका श्रेष्ठ नियन्त्रणमा सुव्यवस्था बनाएर यस साम्राज्यलाई सञ्चालन गर्ने काममा तिमीलाई स्थापित गर्दछौं ।

**अग्निरेकाक्षरेण प्राणमुदजयत्तमुज्जेषमश्विनौ द्व्यक्षरेण द्विपदो मनुष्यानुदजयतां तानुज्जेषं विष्णुस्त्र्यक्षरेण त्रींल्लोकानुदजयत्तानुज्जेषꣳ सोमश्चतुरक्षरेण चतुष्पदः पशूनुदजयत्तानुज्जेषम्पूषापञ्चाक्षरेण॥३१॥**

अग्निदेवताले एकाक्षरका दैवी गायत्री छन्दका प्रभावले उत्कृष्ट प्राणमाथि विजय प्राप्त गरे । हामी पनि त्यसै एकाक्षरका प्रभावले प्राणमा विजय प्राप्त गरौँ । दुई अक्षरका उष्णिक् छन्दका प्रभावले अश्विनीकुमारहरूले दुई खुट्टे मानिसमाथि विजय प्राप्त गरे । हामी पनि त्यसका प्रभावले मानिसमाथि विजय प्राप्त गरौँ । तीन अक्षरको दैवी अनुष्टुप् छन्दका प्रभावले विष्णुले तीनै लोकलाई विजय गरेझैँ हामी पनि तीन लोक विजयी बनौँ । चार अक्षरको दैवी बृहती छन्दका मन्त्रको प्रभावद्वारा सोमले चार खुट्टे पशुहरूलाई जितेझैँ हामी पनि उसै मन्त्रका प्रभावले पशुमाथि विजय प्राप्त गरौँ ।

**पूषा पञ्चाक्षरेण पञ्च दिशऽ उदजयत्ताऽ उज्जेषꣳ सविता षडक्षरेण षड्तूनुदजयत्तानुज्जेषं मरुतः सप्ताक्षरेण सप्त ग्राम्यान् पशूनुदजयँस्तानुज्जेषं बृहस्पतिरष्टाक्षरेण गायत्रीमुदजयत्तामुज्जेषम्मित्रोनवाक्षरेण ॥३२॥**

पाँच अक्षरको दैवी पङ्क्ति छन्दका प्रभावले पूषा देवताले पाँचै दिशाहरूमाथि विजय प्राप्त गरेका छन् । हामी पनि उसै गरी उसै मन्त्रका प्रभावले ती दिशाहरूमा विजयी होऔँ । छ अक्षर भएका दैवी त्रिष्टुप् छन्दका प्रभावले सविता देवताले छ वटा ऋतुहरूमाथि विजय प्राप्त गरेझैँ हामी पनि त्यस छन्दका मन्त्रले छ ऋतुहरूमा विजय प्राप्त गरौँ । सात अक्षरको दैवी जगती छन्द हो, त्यसका प्रभावले मरुत् देवताहरूले सात किसिमका गाई आदि घरपालुवा दुधालु पशुमाथि विजय प्राप्त गरेका छन् । हामी त्यस छन्दयुक्त मन्त्रका प्रभावले ती पशुमाथि विजयी हुन सकौँ । दैवी जगती छन्द आठ अक्षरको हुन्छ । त्यस छन्दका प्रभावले बृहस्पतिदेवताले गायत्री सिद्ध गरे । हामी पनि उनकै जस्तो त्यसै छन्दका मन्त्रले गायत्री सिद्ध गर्न सकौँ ।

**मित्रो नवाक्षरेण त्रिवृतꣳ स्तोममुदजयत्तमुज्जेषं वरुणो दशाक्षरेण विराजमुदजयत्तामुज्जेषमिन्द्रऽ एकादशाक्षरेण त्रिष्टुभमुदजयत्तामुज्जेषं विश्वेदेवा द्वादशाक्षरेण जगतीमुदजयँस्तामुज्जेषं वसवस्त्रयोदशाक्षरेण ॥३३॥**

दैवी शक्वरी छन्द नौ अक्षरको छ, त्यस छन्दका मन्त्रका प्रभावले मित्र देवताले ज्ञान, कर्म र भक्ति यी तीन किसिमका वृत्तिहरूमाथि विजय प्राप्त गरेका छन् । हामी पनि उसै मन्त्रका प्रभावले उसै गरी तीन वृत्तिहरूमाथि विजय प्राप्त गर्न सकौँ । दस अक्षरको दैवी अतिशक्वरी छन्द हुन्छ । त्यस छन्दका मन्त्रका प्रभावले वरुण देवताले विराट्माथि विजय प्राप्त गरेका छन् । त्यस छन्दको साधनाले हामी पनि विराट्माथि विजयी हुन सकौँ । एघार अक्षरको दैवी अष्टि छन्द हो । त्यस छन्दका प्रभावले त्रिष्टुभ् नामको शक्तिमाथि विजय प्राप्त गरे । हामीले पनि त्यस छन्दका मन्त्रले विजय प्राप्त गर्न सकौँ । बाह्र अक्षरको दैवी अत्यष्टि नामको छन्द छ । त्यस छन्दका

मन्त्रले विश्वेदेवताले जगती नामको स्तोममाथि विजय प्राप्त गरे । हामी पनि त्यसका प्रभावले त्यही विजय प्राप्त गर्न सकौँ ।

**वसवस्त्रयोदशाक्षरेण त्रयोदशर्थं स्तोममुदजयँस्तमुज्जेषꣳ रुद्राश्चतुर्दशाक्षरेण चतुर्दशर्थं स्तोममुदजयँस्तमुज्जेषमादित्याः पञ्चदशाक्षरेण पञ्चदशर्थं स्तोममुदजयँस्तमुज्जेषमदितिः षोडशाक्षरेण षोडशर्थं स्तोममुदजयत्तमुज्जेषं प्रजापतिः सप्तदशाक्षरेण सप्ददशर्थं स्तोममुदजयत्तमुज्जेषम् ॥३४॥**

दैवी धृति छन्दमा तेह्र वटा अक्षर छन् । त्यस छन्दका मन्त्रको प्रभावले वसुहरूले नौद्वार र चार अन्तःकरण गरी तेह्र शक्ति जितेका छन् । हामी पनि उसरी नै त्यस छन्दले विजयी हुन सकौँ । चौध अक्षरको दैवी अतिधृति छन्दका प्रभावले रुद्रहरू चौध किसिमका रत्नहरू जित्न सफल भए । हामी त्यस मन्त्रका प्रभावले त्यो विजय प्राप्त गर्न सकौँ । पन्ध्र अक्षरको आसुरी गायत्री छन्द हुन्छ । त्यस छन्दका मन्त्रका बलले आदित्यहरूले चार वेद, चार उपवेद, छ वेदाङ्ग र कार्यकुशलता गरी पन्ध्र वटा शक्तिमा अधिकार जमाएका थिए । त्यस छन्दका मन्त्रका प्रभावमा हामी पनि त्यो विजय प्राप्त गर्न सकौँ । सोह्र अक्षरको प्राजापत्या अनुष्टुप् छन्द हुन्छ । त्यसका प्रभावले देवमाता अदितिले सोह्र वटा कलाको समूह जितेकी थिइन् । हामी पनि त्यसका प्रभावले त्यो विजय प्राप्त गर्न सकौँ । सत्र अक्षरको निचृत आर्ची गायत्री छन्द छ । त्यस छन्दका मन्त्रका प्रभावले प्रजापतिले चार वर्ण, चार आश्रम, चार कर्म, चार पुरुषार्थ र आफ्नो मति गरी जम्मा सत्र वटा शक्तिमाथि विजय प्राप्त गरेका थिए । हामी पनि त्यसका प्रभावले ती शक्तिहरूमाथि विजय प्राप्त गर्न सकौँ ।

**एष ते निर्ऋते भागस्तं जुषस्व स्वाहाग्निनेत्रेभ्यो देवेभ्यः पुरः सद्भ्यः स्वाहा यमनेत्रेभ्यो देवेभ्यो दक्षिणासद्भ्यः स्वाहा विश्वेदेवनेत्रेभ्यो देवेभ्यः पश्चात्सद्भ्यः स्वाहा मित्रावरुणनेत्रेभ्यो वा मरुन्नेत्रेभ्यो वा देवेभ्यऽ उत्तरासद्भ्यः स्वाहा सोमनेत्रेभ्यो देवेभ्यऽउपरिसद्भ्यो दुवस्वद्भ्यः स्वाहा ॥३५॥**

हे पृथ्वीदेवी ! यो तिम्रो भाग हो, ग्रहण गर । पूर्व दिशामा विराजमान अग्निदेवताका निम्ति, दक्षिण दिशामा रहेका यम देवताका निम्ति, पश्चिम दिशामा रहेका विश्वेदेवताका निम्ति, उत्तर दिशामा विराजमान मित्रावरुण वा मरुत् देवताका निम्ति र अन्तरिक्षमा तथा द्युलोकमा रहेका हवि ग्रहण गर्ने देवताहरूको प्रसन्नताका लागि यो आहुति समर्पित गरिएको छ । सबै देवशक्तिहरूले स्नेहपूर्वक यो आहुति ग्रहण गरुन् ।

**ये देवाऽअग्निनेत्राः पुरःसदस्तेभ्यः स्वाहा ये देवा यमनेत्रा दक्षिणासदस्तेभ्यः स्वाहा । ये देवा विश्वदेवनेत्राः पश्चात्सदस्तेभ्यः स्वाहा ये देवा मित्रावरुणनेत्रा वा मरुन्नेत्रा वोत्तरासदस्तेभ्यः स्वाहा ये देवाः सोमनेत्राऽउपरिसदो दुवस्वन्तस्तेभ्यः स्वाहा ॥३६॥**

पूर्वमा रहेका देवताको नेतृत्व अग्निदेवताले गर्दछन्, दक्षिण दिशामा रहेका देवताहरूको नेतृत्व यमले गर्दछन्, पश्चिम दिशामा भएका देवताहरूको नेतृत्व विश्वेदेवताले गरेका छन् र उत्तरमा हुने देवताहरूको नेतृत्व मित्रावरुण वा मरुतहरूले गर्दछन् । ती सबै

देवताका साथ द्युलोकमा हुने देवताको नेतृत्व हवि स्वीकार गर्ने सोमले गरेका हुन्छन् । ती सबै देवताहरूका लागि यो श्रेष्ठ आहुति प्रदान गरिएको छ ।

**अग्ने सहस्व पृतनाऽअभिमातीरपास्य । दुष्टरस्तरन्नरातीर्वर्चोधा यज्ञवाहसि ॥३७॥**

हे शत्रुले जित्न नसक्ने अग्निदेवता ! शत्रुको सेना पराजित गर । आपद् निम्त्याउनेलाई हटाऊ । तिमी आफ्ना शत्रुको सेना जितेर यज्ञ गर्ने यजमानलाई मनग्गे अन्न दिएर तेजस्वी बनाऊ ।

**देवस्य त्वा सवितुः प्रसवेश्विनोर्बाहुभ्यां पूष्णो हस्ताभ्याम् । उपाथ्ंशोर्वीर्येण जुहोमि हतꣳ रक्षः स्वाहा रक्षसां त्वा वधायावधिष्म रक्षोवधिष्मामुमसौ हतः ॥३८॥**

संसार उत्पन्न गर्ने सवितादेवताका सृष्टिमा प्राणवान् शक्तिको सामर्थ्य अश्विनीकुमारहरूका बाहुबाट र पूषादेवताका हातबाट हामीले तिम्रा लागि ग्रहण गरेर यो उत्तम आहुति समर्पित गरेका छौँ । तिमीले शत्रु नाश गरेझैँ हामी पनि दुष्टहरूलाई विनाश गर्न सकौँ । यो दुष्ट राक्षस नाश भएझैँ हामी पनि यी विकृतिरूपी दुष्टहरूलाई विनाश गरौँ ।

**सविता त्वा सवानाथ्ंसुवतामग्निर्गृहपतीनाथ्ंसोमो वनस्पतीनाम् । बृहस्पतिर्वाचऽइन्द्रो ज्यैष्ठ्याय रुद्रः पशुभ्यो मित्रः सत्यो वरुणो धर्मपतीनाम् ॥३९॥**

हे याजक ! सवितादेवताले यज्ञकार्यका लागि तिमीलाई प्रेरित गरुन् । अग्निदेव गृहपतिहरूलाई प्रेरित गरुन् । सोमदेवताले तिम्रा लागि वनस्पतिरूपी औषधि प्रदान गरुन् । मेधा प्राप्तिका लागि बृहस्पतिदेवताले, ठूलोठालु बन्नका लागि इन्द्रदेवताले, पशुधनका लागि रुद्रदेवताले, सत्य व्यवहारका लागि मित्रदेवताले धर्मको मार्गमा चल्नका लागि वरुणदेवताले प्रेरित गरुन् ।

**इमं देवाऽ असपत्नꣳ सुवध्वं महते क्षत्राय महते ज्यैष्ठ्याय महते जानराज्यायेन्द्रस्येन्द्रियाय । इमममुष्य पुत्रममुष्यै पुत्रमस्यै विशऽएष वोमी राजा सोमोस्माकं ब्राह्मणानाथ्ंराजा ॥४०॥**

हे देवताहरू हो ! महान् क्षत्रबल सम्पादन गर्नका लागि, महान् राज्यको प्राप्तिका लागि, श्रेष्ठ जनसमूहको नेतृत्वका लागि, इन्द्रको जस्तै अनेकौँ विभूतिले विभूषित हुनका लागि, शत्रुरहित बन्नका लागि, मनले चाहेका पिताको पुत्र वा मनले चाहेका माताको पुत्रलाई प्रजाको हितका लागि अभिषेक गराऔँ । हे अमुक प्रजाहरू हो ! तिमीहरू सबैका लागि र हामी विद्वान्हरूका लागि पनि त्यस्तो राजा चन्द्रजस्तै आनन्ददायी हुनेछ ।

**॥इति नवमोऽध्याय ॥**

॥नवौँ अध्याय सकियो॥

ॐ

**भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।**

# वाजसनेयि माध्यन्दिन शुक्ल

# यजुर्वेद – संहिता

## ॥अथ दशमोध्यायः ॥

॥दसौँ अध्याय॥

**ऋषि–** देवश्रवा देववात भारत, संवरण प्राजापत्य, वामदेव, शुनःशेप, अश्विनीकुमार, सुकीर्ति काक्षीवत ।

**देवता–** आपः लिङ्गोक्त, चर्म, अग्नि, वरुण, तार्प्य, पाण्डव, अधीवास, उष्णीष, धनु, बाहु, इषु, प्रजापति, अग्नि, मृत्युनाशन, यजमान, असुर, रुक्म, मित्रावरुण, सुन्वन्, रुद्र, रथ, इन्द्र, भूमि, सूर्य, शतमानद्वय, शाखा, बाहु, आसन्दी, अधीवास, सुन्वन्, अक्ष यजमान, ब्रह्मा, स्फय, अग्नि अक्ष, सविता, सुरा, सोम, अश्विनीकुमार, सरस्वती, इन्द्र ।

**छन्द–** निचृत् आर्षी त्रिष्टुप्, स्वराट् ब्राह्मी पङ्क्ति, अभिकृति, निचृत् जगती, जगती, स्वराट् पङ्क्ति, स्वराट् संकृति, भुरिक् आकृति, भुरिक् त्रिष्टुप्, स्वराट् धृति, स्वराट् ब्राह्मी बृहती, विराट् आर्षी त्रिष्टुप्, कृति, भुरिक् अष्टि, विराट् आर्षी पङ्क्ति, निचृत् आर्षी अनुष्टुप्, भुरिक् जगती, विराट् आर्ची पङ्क्ति, स्वराट् आर्षी जगती, आर्षी पङ्क्ति, स्वराट् ब्राह्मी त्रिष्टुप्, विराट् ब्राह्मी त्रिष्टुप्, भुरिक् अतिधृति, भुरिक् ब्राह्मी बृहती, जगती, भुरिक् आर्षी जगती, आर्षी जगती, भुरिक् अनुष्टुप्, पिपीलिकामध्या विराट् गायत्री, विराट् धृति, भुरिक् ब्राह्मी त्रिष्टुप्, आर्षी त्रिष्टुप्, निचृत् ब्राह्मी त्रिष्टुप्, निचृत अनुष्टुप्, भुरिक् पङ्क्ति ।

**अपो देवा मधुमतीरगृभ्णन्नूर्जस्वती राजस्वश्चितानाः ।**
**याभिर्मित्रावरुणावभ्यषिञ्चन्याभिरिन्द्रमनयन्नत्यरातीः ॥१॥**

मिठो स्वाद भएको, विशिष्ट अन्नरसले युक्त, राजाहरूले पनि सेवन गर्ने, विवेक प्रदान गर्ने जल देवताहरूले ग्रहण गरे । मित्रावरुणले देवताहरूको अभिषेक गरेको, देवताहरूले इन्द्रदेवताको राज्याभिषेक गरेको जललाई नै हामी ग्रहण गर्दछौँ ।

**वृष्णाऽऊर्मिरसि राष्ट्रदा राष्ट्रं मे देहि स्वाहा वृष्णऽऊर्मिरसि राष्ट्रदा राष्ट्रममुष्मै देही वृषसेनोसि राष्ट्रदा राष्ट्रं मे देहि स्वाहा वृषसेनोसि राष्ट्रदा राष्ट्रममुष्मै देह्यर्थेतस्त्थ ॥२॥**

हे पानीका धाराहरू हो ! तिमीहरू बलवान् पुरुषलाई उच्च पदमा पुऱ्याउन र राष्ट्र प्रदान गर्नमा समर्थ छौ । यसै कारणले यो आहुति समर्पित गर्दछौँ । तिमीहरू सुखवर्षक राष्ट्र प्रदान गर्दछौ, त्यसैले राज्य प्रदान गर्नमा समर्थ भएर नै राजाको पद

प्रदान गर । तिमीहरूका लागि आहुति समर्पित गरिएको छ । तिमीहरू राज्य दिनमा समर्थ छौ । त्यसैले बलवान् सेनाले युक्त राज्य प्रदान गर ।

**अर्थेत स्थ राष्ट्रदा राष्ट्रं मे दत्त स्वाहार्थेत स्थ राष्ट्रदा राष्ट्रममुष्मै दत्तौजस्वती स्थ राष्ट्रदा राष्ट्रं मे दत्त स्वाहौजस्वती स्थ राष्ट्रदा राष्ट्रममुष्मै दत्तापः परिवाहिणी स्थ राष्ट्रदा राष्ट्र मे दत्त स्वाहापः परिवाहिणी स्थ राष्ट्रदा राष्ट्रममुष्मै दत्तापां पतिरसि राष्ट्रदा राष्ट्रं मे देहि स्वाहापां पतिरसि राष्ट्रदा राष्ट्रममुष्मै देह्यपां गर्भोसि राष्ट्रदा राष्ट्रं मे देहि स्वाहापां गर्भोसि राष्ट्रदा राष्ट्रममुष्मै देहि सूर्यत्वचसस्थ ॥३॥**

हे जलधाराहरू हो ! तिमीहरू धन कमाउन समर्थ छौ । त्यसैले हामीलाई राष्ट्र प्रदान गर । त्यसैका निम्ति हामी आहुति समर्पित गर्दछौँ । तिमीहरू ऐश्वर्यका बलले सामर्थ्यवान् छौ, ओजस्वी छौ र पराक्रमी छौ । त्यसो भएकैले तिमीहरू राष्ट्र प्रदान गर्नमा समर्थ छौ र त्यसैका लागि यो आहुति समर्पित गरिएको छ । तिमीहरू बल र उत्तम सेनाले युक्त छौ, त्यसैले राष्ट्र प्रदान गर्नमा समर्थ छौ । त्यसो भएर नै तिमीहरूलाई यो आहुति प्रदान गरिएको छ । तिमीहरू अनेकौँ खालका सेनाले युक्त भएको राष्ट्र प्रदान गर्नमा समर्थ छौ । त्यसैले हामीलाई राष्ट्र देओ भनेर यो आहुति समर्पित गरेका छौँ । तिमीहरू सबै जलका संरक्षक, पालक र आफ्ना अधीनमा राख्न सक्षम छौ । त्यसैले योग्य पुरुषलाई राष्ट्र प्रदान गर भनेर नै यो आहुति प्रदान गरेका छौँ ।

**सूर्यत्वचसस्थ राष्ट्रदा राष्ट्रं मे दत्त स्वाहा सूर्यत्वचस स्थ राष्ट्रदा राष्ट्रममुष्मै दत्त सूर्यवर्चस स्थ राष्ट्रदा राष्ट्रं मे दत्त स्वाहा सूर्यवर्चस स्थ राष्ट्रदा राष्ट्रममुष्मै दत्त मान्दा स्थ राष्ट्रदा राष्ट्रं मे दत्त स्वाहा मान्दा स्थ राष्ट्रदा राष्ट्रममुष्मै दत्त व्रजक्षित स्थ राष्ट्रदा राष्ट्रं मे दत्त स्वाहा व्रजक्षित स्थ राष्ट्रदा राष्ट्रममुष्मै दत्त वाशा स्थ राष्ट्रदा राष्ट्रं मे दत्त स्वाहा वाशा स्थ राष्ट्रदा राष्ट्रममुष्मै दत्त शविष्ठा स्थ राष्ट्रदा राष्ट्रं मे दत्त स्वाहा शविष्ठा स्थ राष्ट्रदा राष्ट्रममुष्मै दत्त शक्वरी स्थ राष्ट्रदा राष्ट्रं मे दत्त स्वाहा शक्वरी स्थ राष्ट्रदा राष्ट्रममुष्मै दत्त जनभृत स्थ राष्ट्रदा राष्ट्रं मे दत्त स्वाहा जनभृत स्थ राष्ट्रदा राष्ट्रममुष्मै दत्त विश्वभृत स्थ राष्ट्रदा राष्ट्रं मे दत्त स्वाहा विश्वभृत स्थ राष्ट्रदा राष्ट्रममुष्मै दत्तापः स्वराज स्थ राष्ट्रदा राष्ट्रममुष्मै दत्त । मधुमतीर्मधुमतीभिः पृच्यन्तां महि क्षत्रं क्षत्रियाय वन्वानाऽअनाधृष्टाः सीदत सहौजसो महि क्षत्रं क्षत्रियाय दधतीः ॥४॥**

हे जलसमूह ! तिमी सूर्यका कान्तिले उत्पन्न भएका हौ र स्वयं नै प्रकाशमान हुँदै सबैलाई तेज प्रदान गर्दछौ । तिमी राष्ट्र प्रदान गर्नमा समर्थ हुनाले हामीलाई राष्ट्र प्रदान गर । तिमी सूर्यजस्तै तेजस्वी छौ, तिम्रो प्रभाव सूर्यको जस्तै छ र तिमी राष्ट्र प्रदान गर्नमा समर्थ हुनाले हामीलाई राष्ट्र प्रदान गर भनेर हामी यो आहुति चढाउँछौँ । तिमी मानिसलाई आनन्द प्रदान गर्ने हुनाले राष्ट्र प्रदान गर्नमा समर्थ छौ, त्यसैले सुखदाता व्यक्तिलाई राष्ट्र प्रदान गर भनेर यो आहुति समर्पित गरेका छौँ । तिमी गाई आदि पशुको रक्षा गर्नमा सक्षम छौ, त्यसैले रक्षक पुरुषलाई राष्ट्र प्रदान गर भन्दै हामी आहुति

प्रदान गर्दछौं । तिमी कामना पूर्ति गर्ने हुनाले राष्ट्र प्रदान गर्नमा समर्थ छौ, त्यसैले सामर्थ्यवान्लाई राष्ट्र प्रदान गर भनेर यो आहुति समर्पित गरिएको छ । तिमी अत्यन्त बलशाली र महान् पराक्रमी हुनाले राष्ट्र प्रदान गर्न सक्ने छौ । त्यसैले हामीलाई राष्ट्र प्रदान गर भनेर यो आहुति प्रदान गरिएको छ । तिमी श्रेष्ठ पुरुषहरूको पोषण र उनलाई धारण गर्ने हौ । त्यसैले हामीलाई श्रेष्ठ गुणले युक्त गराएर राष्ट्र प्रदान गर भनेर यो आहुति प्रदान गरिएको छ । तिमी समस्त विश्वकै पालनपोषणकर्ता र धारणकर्ता हौ । त्यसैले पोषण र धारण गर्ने पुरुषहरूलाई राष्ट्र प्रदान गर । तिमी सबै विद्या र धर्महरूका ज्ञाता तथा यी गुणले युक्त राष्ट्र प्रदान गर्नमा समर्थ छौ । त्यसैले त्यस्ता धर्मज्ञ विद्वान् पुरुषलाई राष्ट्र प्रदान गर भनेर यो आहुति समर्पित गरिएको छ । हे मधुर रसले सम्पन्न जलका कणहरू हो ! माधुर्यमय जलको समूहसहित महान् क्षात्रबल भएका पराक्रमी यजमानका लागि आफ्ना रसले अभिषेक गर्दै राष्ट्र प्रदान गर । हे जलका कण हो ! राक्षससित नहार्ने बल तिमीहरू यस क्षत्रियमा स्थापित गराओ र यसै स्थानमा प्रतिष्ठित होओ ।

**सोमस्य त्विषिरसि तवेव मे त्विषिर्भूयात् । अग्नये स्वाहा सोमाय स्वाहा सवित्रे स्वाहा सरस्वत्यै स्वाहा पूष्णे स्वाहा बृहस्पतये स्वाहेन्द्राय स्वाहा घोषाय स्वाहा श्लोकाय स्वाहाथ्ं्शाय स्वाहा भगाय स्वाहार्यम्णे स्वाहा ॥५॥**

अग्नि, सोम, सविता, सरस्वती, पूषा, बृहस्पति, इन्द्र, श्रेष्ठ उद्घोष, श्रेष्ठ काव्य, ऐश्वर्य, अर्यमादेव र पुण्यपापको विभाग गर्ने देवताहरूका निमित्त हामी यो आहुति दिँदै छौं । तिमी जस्ता किसिमका ऐश्वर्यका प्रकाशक हौ, हामी पनि उस्तै किसिमले तिमीजस्तै कान्तिमान् हुन सकौं ।

**पवित्रे स्थो वैष्णव्यौ सवितुर्वः प्रसवऽउत्पुनाम्यच्छिद्रेण पवित्रेण सूर्यस्य रश्मिभिः । अनिभृष्टमसि वाचो बन्धुस्तपोजाः सोमस्य दात्रमसि स्वाहा राजस्वः ॥६॥**

हे दुई वटा कुशहरू हो ! हामीले यस यज्ञमा तिमीहरूलाई पवित्रकर्ताका रूपमा निरन्तर उत्तम विधिले पवित्र गराएका छौं । तिमीहरू दुवै पवित्र होओ । सूर्यका रश्मिले जल पवित्र भएर माथि उडेझैं हामी पनि तिमीहरूलाई उन्नत गराउन सकौं । हे जलसमूह ! तिमीहरू भ्रष्टता र पापाचारबाट मुक्त छौ । श्रेष्ठ वाणीका साथ एकापसमा दाजुभाइझैं रहौं । तपस्याका शक्तिले राजाको पद प्रदान गर्नमा तिमीहरू नै सक्षम छौ, त्यसैले राज्यलाई ऐश्वर्य प्रदान गर । त्यसैका निम्ति हामीहरू यो आहुति प्रदान गर्दछौं ।

**सधमादो द्युम्निनीरापऽ एताऽअनाधृष्टाऽ अपस्यो वसानाः । पस्त्यासु चक्रे वरुणः सधस्थामपाथ्ं् शिशुर्मातृतमास्वन्तः ॥७॥**

अभिषेक गर्नका लागि भाँडामा तयार पारिएको यो जल आनन्ददायी, तेजस्वी, उत्तम काममा प्रेरित गर्ने र पराजित नहुने किसिमको छ । यो आवासजस्तै भएर निवास प्रदान गर्दछ, धर्तीझैं धारण गर्दछ, माताझैं पोषण प्रदान गर्दछ र शिशुरूपी यजमानहरू आदरसहित यस जललाई स्थापित गर्दछन् ।

**क्षत्रस्योल्बमसि क्षत्रस्य जराय्वसि क्षत्रस्य योनिरसि क्षत्रस्य नाभिरसीन्द्रस्य वार्त्रघ्नमसि मित्रस्यासि वरुणस्यासि त्वयायं वृत्रं वधेत् । दृवासि रुजासि क्षुमासि पातैनं प्राञ्चं पातैनं प्रत्यञ्चं पातैनं तिर्यञ्चं दिग्भ्यः पात ॥८॥**

तिमी क्षत्रियको बलका निम्ति उल्ब र जरायुले गर्भलाई पोषण र रक्षण गरेझैं पोषक र संरक्षक हौ । तिमी त्यस क्षात्रधर्मका उत्पादक र केन्द्रस्थल पनि हौ । इन्द्रको धनुषझैं भएर यजमानका शत्रुको विनाश गर्दछौ । मित्र र वरुणले धनुषका दुई कोटिझैं साथमा रहेर शत्रुको विनाश गरुन् । तिमी वाणझैं भएर शत्रुलाई भेदन गर्ने, उनलाई सताउने र थर्काउने गर्दछौ । तिमी नै वीरको वाणझैं भएर यजमानलाई पूर्व, पश्चिम, उत्तर आदि सबै दिशाबाट रक्षा गर्छौ ।

**आविर्मर्या आवित्तो अग्निर्गृहपतिरावित्तऽइन्द्रो वृद्धश्रवाऽ आवित्तौ मित्रावरुणौ धृतव्रतावावित्तः पूषा विश्वेदेवाऽ आवित्तो द्यावापृथिवी विश्वशम्भुवावावित्तादितिरुरुशर्मा ॥९॥**

समस्त मानवसमाजले यस सूक्ष्म वातावरणको रक्षा गरुन् । यसलाई गृहपालक अग्निदेव, यशस्वी इन्द्रदेव, व्रतधारी मित्र एवं वरुणदेव, सर्वज्ञाता पूषादेव, समस्त विश्वको कल्याण गर्ने पृथ्वीलोक, द्युलोक र सुखस्वरूप देवमाता अदितिदेवीले पनि चिनेर रक्षा गरुन् ।

**अवेष्टा दन्दशूकाः प्राचीमारोह गायत्री त्वावतु रथन्तरꣳ साम त्रिवृत्स्तोमो वसन्तऽऋतुर्ब्रह्मद्द्रविणन्दक्षिणामारोह ॥१०॥**

मानिसलाई टोकेर, टुँगेर दुःख दिने यज्ञविरोधी तत्त्वहरू सबै विनाश भए । तिमी पूर्व दिशातर्फ अगाडि जाऊ । गायत्री छन्द, रथन्तर साम, त्रिवृत् स्तोम, वसन्त ऋतु र ज्ञानरूप धनले तिम्रो रक्षा गरुन् ।

**दक्षिणामारोह त्रिष्टुप् त्वावतु बृहत्साम पञ्चदश स्तोमो ग्रीष्मऽ ऋतुः क्षत्रं द्रविणम्प्रतीचीमारोह ॥११॥**

तिमी दक्षिण दिशातर्फ लाग । त्रिष्टुप् छन्द, बृहत् साम, पञ्चदश स्तोम, ग्रीष्म ऋतु र पुरुषार्थरूपी धनले तिम्रो रक्षा गरुन् ।

**प्रतीचीमारोह जगती त्वावतु वैरूपꣳ साम सप्तदश स्तोमो वर्षा ऋतुर्विड् द्रविणमुदीचीमारोह ॥१२॥**

तिमी पश्चिम दिशातर्फ लाग । जगती छन्द, वैरूप साम, सप्तदश स्तोम, वर्षा ऋतु र पोषणकारी धनऐश्वर्यले तिम्रो रक्षा गरुन् ।

**उदीचीमारोहानुष्टुप् त्वावतु वैराजꣳ सामैकविꣳश स्तोमः शरदृतुः फलं द्रविणमूर्द्ध्वामारोह ॥१३॥**

तिमी उत्तर दिशातर्फ लाग । अनुष्टुप् छन्द, वैराज साम, एकविंश स्तोम, शरद् ऋतु र फलदायी ऐश्वर्यले तिम्रो रक्षा गरुन् ।

**ऊर्ध्वामारोह पङ्क्तिस्त्वावतु शाक्वररैवते सामनी त्रिणवत्रयस्त्रिᳫं शौ स्तोमौ हेमन्तशिशिरावृतू वर्चो द्रविणं प्रत्यस्तं नमुचेः शिरः ॥१४॥**

तिमी मास्तिर जाऊ । पङ्क्ति छन्द, शाक्वर र रैवत साम, त्रिणव र त्रयस्त्रिंश नामका दुवै स्तोम, हेमन्त र शिशिर दुवै ऋतु तथा तेजरूप धनले तिमीलाई रक्षा गरुन् । अनाचारमा संलग्न नमुचि नामको प्रवृत्ति वा त्यस्ता व्यक्तिहरूलाई नष्ट गराइदेऊ ।

**सोमस्य त्विषिरसि तवेव मे त्विषिर्भूयात् । मृत्योः पाह्योजोसि सहोस्यमृतमसि ॥१५॥**

तिमी ऐश्वर्यका प्रकाशक, पराक्रमी, बलशाली र जन्ममरणबाट मुक्त छौ । हामी पनि तिमीजस्तै प्रकाशवान्, बलशाली र पराक्रमी होऔँ । हामीलाई मृत्युबाट रक्षा गर ।

**हिरण्यरूपाऽउषसो विरोकऽउभाविन्द्राऽउदिथः सूर्यश्च । आरोहतं वरुण मित्र गर्तं ततश्चक्षाथामदितिं दितिं च मित्रोसि वरुणोसि ॥१६॥**

हे मित्र र वरुण ! तिमीहरू दुवै सुवर्णजस्तै तेजस्वी, राजाजस्तै ऐश्वर्ययुक्त र उषालाई प्रकाशित गराउँदै चन्द्रसूर्यझैँ उदित हुन्छौ । त्यसैले तिमीहरू दुवै आरूढ भएर अव्यवस्थितलाई व्यवस्थित गर्ने सुझाव प्रदान गर । हे मित्र ! तिमी सुखका स्वरूप हौ, हे वरुण ! तिमी बाधाहरू निवारण गर्दछौ ।

**सोमस्य त्वा द्युम्नेनाभिषिञ्चाम्यग्नेर्भ्राजसा सूर्यस्य वर्चसेन्द्रस्येन्द्रियेण । क्षत्राणां क्षत्रपतिरेध्यति दिद्यून् पाहि ॥१७॥**

हे यजमान ! तिमीलाई चन्द्रमाको कान्तिले, अग्निका तेजले र इन्द्रदेवताका बलले हामी अभिषेक गर्दै छौँ । तिमी शौर्यवान् क्षत्रियका अधिपति भएर हानी गर्ने शक्तिबाट प्रजालाई जोगाऊ ।

**इमं देवाऽअसपत्नᳫं सुवध्वं महते क्षत्राय महते ज्यैष्ठ्याय महते जानराज्यायेन्द्रस्येन्द्रियाय । इमममुष्य पुत्रममुष्यै पुत्रमस्यै विशऽ एष वोमी राजा सोमोस्माकं ब्राह्मणानाᳫं राजा ॥१८॥**

हे देवताहरू हो ! महान् क्षत्रिय बलको सम्पादनका लागि, विशाल राज्यको पदका लागि, इन्द्रदेवजस्तै ऐश्वर्यशाली बलका लागि, शत्रुविहीन भई योग्य पितामाताको योग्य पुत्रका रूपमा प्रजाको पालनपोषणका लागि यी राजालाई हामी अभिषेक गरौँ । हे प्रजाहरू हो ! तिमीहरूलाई आनन्दित गराउने यी राजा नै सोम हुन् र ब्राह्मणका राजा पनि यिनै हुन् ।

**प्र पर्वतस्य वृषभस्य पृष्ठान्नावश्चरन्ति स्वसिचऽ इयानाः । ताऽ आववृत्रन्नधरागुदक्ताऽ अहिं बुध्न्यमनु रीयमाणाः । विष्णोर्विक्रमणमसि विष्णोर्विक्रान्तमसि विष्णोः क्रान्तमसि ॥१९॥**

अभिषेक गर्दाका समयमा श्रेष्ठ राजालाई पिठ्युँतर्फ सेचन गर्ने जलका धाराहरू पर्वतका पृष्ठभागमा बगेझैँ बहन्छन् । पर्वतबाट ओरालोतर्फ बग्ने नदीका धाराले पर्वतलाई छेकारो हालेझैँ यी जलधाराले ऐश्वर्यवान् पुरुषलाई छेकारो हाल्दछन् । यी पराक्रमीले यो पृथ्वी विष्णुको पहिलो पाइलोद्वारा वामन अवतार वा यज्ञका कारणले

जितेभैँ, अन्तरिक्ष दोस्रो पाइलोले विष्णुले नै जितेभैँ र स्वर्लोक विष्णुका तेस्रो पाइलाले जितेभैँ जित्न सक्ने विजयी होऊन् ।

**प्रजापते न त्वदेतान्यन्यो विश्वा रूपाणि परि ता बभूव । यत्कामास्ते जुहुमस्तन्नो अस्त्वयममुष्य पितासावस्य पिता वयथं॑ स्याम पतयो रयीणाथं॑ स्वाहा । रुद्र यत्ते क्रिवि परं नाम तस्मिन्हुतमस्यमेष्टमसि स्वाहा ॥२०॥**

हे प्रजाको पालन गर्ने प्रजापति ! यस संसारमा तिम्रा अतिरिक्त अन्य कोही पनि स्वामी छैन । हामी जुन कामनाले तिम्रा लागि यज्ञ गर्दछौँ, त्यो पूर्ण होस् । यो फलानाको पिता हो र यसको पिता फलानो हो भन्नेजस्तो नभई तिमी सबैका पिता हौ । धर्मको आचरण र उत्तम व्यवस्थाले हामी ऐश्वर्यवान् बन्न सकौँ भनेर यो आहुति प्रदान गर्दै छौँ । हे सबैले घरघरमा पूज ागर्ने आदरणीय रुद्रदेवता ! तिम्रो प्रलयङ्कारी र कल्याणकारी रूपका लागि यो आहुति प्रदान गरिएको छ ।

**इन्द्रस्य वज्रोसि मित्रावरुणयोस्त्वा प्रशास्त्रोः प्रशिषा युनज्मि । अव्यथायै त्वा स्वधायै त्वारिष्टो अर्जुनो मरुतां प्रसवेन जयापाम मनसा समिन्द्रियेण ॥२१॥**

हे रथ ! तिमी वज्रकै रूप हौ । तिमीलाई मित्र र वरुणदेवताले यी दुवै उत्तम शासकको उत्तम शासनको अधिकारले युक्त गराएका छन् । तिमीलाई स्वयं धारण गर्ने स्वधा गर्नका लागि नियुक्त गरिएको हो । प्रहारबाट घाइते नहुने, समर्थ, परम तेजस्वी, शत्रुविध्वंसक वीरजस्ता भएकाले आफ्नै शक्तिले विजय प्राप्त गर, अधिकार प्राप्त गर । हामी मन र बलले तिम्रा सहयोगी हौ ।

**मा तऽइन्द्र ते वयं तुराषाडयुक्तासो अब्रह्मता विदसाम । तिष्ठा रथमधि यं वज्रहस्ता रश्मीन् देव यमसे स्वश्वान् ॥२२॥**

शत्रुलाई चाँडै नष्ट गर्नमा समर्थ, हातमा वज्र धारण गर्ने तिमी दिव्य गुणले सम्पन्न भएर जसरी रथमा आरुढ हुँदै सुशिक्षित घोडाको लगाम समाइन्छ । उसै गरी हामी तिम्रा स्वजन हौँ र हामीबाट छुट्टिएर हानी नपुऱ्याइदेऊ, हामी ज्ञानरहित नहोऔँ ।

**अग्नये गृहपतये स्वाहा सोमाय वनस्पतये स्वाहा मरुतामोजसे स्वाहेन्द्रस्येन्द्रियाय स्वाहा । पृथिवि मातर्मा मा हिꣳसीर्मो अहं त्वाम् ॥२३॥**

गृहपालक अग्नि, वनस्पतिरूपी सोम, मरुत्‌गणको ओज र इन्द्रदेवताको बलका निमित्त यो आहुति समर्पित गरिएको छ । हे मातृभूमि ! हामी तिमीलाई नष्ट गर्दैनौँ र तिमी पनि हामीलाई विनाश नगर ।

**हथं॑सः शुचिषद्वसुरन्तरिक्षसद्धोता वेदिषदतिथिर्दुरोणसत् ।
नृषद्वरसदृतसद्व्योमसदब्जा गोजाऽ ऋतजाऽ अद्रिजाऽ ऋतं बृहत् ॥२४॥**

तिमी पवित्र, शुद्ध आचरण भएका, प्रजालाई पालनपोषण गर्ने, अन्तरिक्षमा वायुको रूपमा रहेर देवताहरूलाई यज्ञको आहुति पुऱ्याउने, यज्ञस्थलमा प्रतिष्ठित र अतिथिजस्तै सर्वत्र पूजनीय छौ । तिमी आफैँ कष्ट सहन गर्दै घरहरूमा रहन्छौ र नेतृत्व प्रदान गर्नेहरूमा प्रतिष्ठित भएका छौ । तिमी सत्यमा आश्रित, श्रेष्ठ पदार्थमा निहित र आकाशमा विद्यमान छौ । तिमी नै जलका उत्पादक, विशेष सामर्थ्यले सम्पन्न,

ज्ञानवान् भएर विदीर्ण नहुने किसिमका बलले सम्पन्न, महान् र सत्यरूपी बलवीर्यलाई धारण गरेका छौ ।

**इयदस्यायुरस्यायुर्मयि धेहि युङ्ङसि वर्चोसि वर्चो मयि धेह्यूर्गस्यूर्जं मयि धेहि । इन्द्रस्य वां वीर्यकृतो बाहू अभ्युपावहरामि ॥२५॥**

तिमी कति महान् छौ । तिमी नै जीवनस्वरूप हौ, त्यसैले हामीलाई दीर्घायु प्रदान गर । शुभकर्मसँग सम्बन्धित गराउने तिमी नै तेजरूप हौ, त्यसैले हामीलाई तेजस्वी बनाऊ । तिमी बलरूप हौ, त्यसैले हामीलाई बलशाली बनाऊ । तिमी इन्द्रदेवताका सामर्थ्यशाली भुजाका रूपमा रहेका मित्र र वरुणजस्तै छौ । हव्य पदार्थलाई हामी यज्ञका निकट स्थापित गर्दछौँ ।

**स्योनासि सुषदासि क्षत्रस्य योनिरसि । स्योनामासीद सुषदामासीद क्षत्रस्य योनिमासीद ॥२६॥**

तिमी सुखकारी छौ, सुखरूप हौ र पुरुषार्थ धारण गर्ने हौ । हे याजक ! तिमी सुखकारी आसनमा विराजमान होऊ । सुखको रूप र क्षात्रबलको आश्रयरूपी यस आसनमा विराजमान होऊ ।

**नि षसाद धृतव्रतो वरुणः पस्त्यास्वा । साम्राज्याय सुक्रतुः ॥२७॥**

प्रकृतिको नियम विधिवत् पालन गर्ने र सधैँ श्रेष्ठ कर्महरूमा लागिरहने वरुणदेवताले प्रजाहरूमा साम्राज्य स्थापित गर्न लागेका छन् ।

**अभिभूरस्येतास्ते पञ्च दिशः कल्पन्तां ब्रह्मँस्त्वं ब्रह्मासि सवितासि सत्यप्रसवो वरुणोसि सत्यौजाऽइन्द्रोसि विशौजा रुद्रोसि सुशेवः । बहुकार श्रेयस्कर भूयस्करेन्द्रस्य वज्रोसि तेन मे रध्य ॥२८॥**

हे अक्षरूपी यजमान ! तिमी शत्रुलाई पराजित गराउने हौ । पाँचै दिशाहरू तिम्रा निम्ति कल्याणकारी होऊन् । हे महान् शक्तिमान् ! तिमी सर्वश्रेष्ठ ज्ञानी छौ । तिमी सत्यकर्मले ऐश्वर्य प्रदान गर्दछौ । तिमी सत्यका बलले सम्पन्न वरुणदेव हौ । तिमी प्रजाका सहयोगले पराक्रमी बनेका इन्द्रदेव हौ । तिमी सेवा गर्न योग्य रुद्रदेव हौ । तिमी धेरै किसिमका कर्म गर्नमा समर्थ छौ, कल्याणकारी छौ, ऐश्वर्यवान् छौ । तिमी इन्द्रदेवताको वज्र हौ, हाम्रा यजमानलाई ऐश्वर्य प्रदान गर ।

**अग्निः पृथुर्धर्मणस्पतिर्जुषाणो अग्निः पृथुर्धर्मणस्पतिराज्यस्य वेतु स्वाहा । स्वाहाकृताः सूर्यस्य रश्मिभिर्यतध्वꣳ सजातानां मध्यमेष्ठ्याय ॥२९॥**

महान् पुरुषार्थयुक्त, धर्मपालक, सबैका अग्रणी, तेजस्वी अग्निदेवताले हाम्रो आज्यको आहुति स्वीकार गरुन् । आहुति प्राप्त गरेर उनीहरू सूर्यरश्मिबाट बलशाली हुँदै सामर्थ्यवान् राजाहरूका माझमा हामीलाई सर्वश्रेष्ठ बनाउने प्रयास गरुन् ।

**सवित्रा प्रसवित्रा सरस्वत्या वाचा त्वष्ट्रा रूपैः पूष्णा पशुभिरिन्द्रेणास्मे बृहस्पतिना ब्रह्मणा वरुणेनौजसाग्निना तेजसा सोमेन राज्ञा विष्णुना दशम्या देवतया प्रसूतः प्र सर्पामि ॥३०॥**

शुभ कर्मका उत्पादक सवितादेवताका दिव्य गुणले, वाणीरूपी सरस्वतीले, प्रजापतिका रूपले, पशुधनले युक्त भएका पूषादेवताले, वेदको ज्ञानयुक्त

बृहस्पतिदेवताले, राजारूप इन्द्रदेवताले पराक्रमयुक्त वरुणदेवताले, तेजस्वी अग्निदेवताले, राजास्वरूप सोमदेवताले र पालनकर्ता विष्णुदेवताले प्रेरणा प्रदान गर्दा हामी देवत्वको मार्गमा अघि बढ्न सकौं ।

**अश्विभ्यां पच्यस्व सरस्वत्यै पच्यस्वेन्द्राय सुत्राम्णे पच्यस्व । वायुः पूतः पवित्रेण प्रत्यङ्क्सोमो अतिस्रुतः । इन्द्रस्य युज्यः सखा ॥३१॥**

तिमी अश्विनीकुमारहरूका निम्ति, देवी सरस्वतीका निम्ति र देवशक्तिलाई नियन्त्रित गर्ने इन्द्रका निम्ति परिपक्व होऊ । वायुले पवित्र गरिएका, इन्द्रदेवसित सम्बन्धित, ऐश्वर्यशाली सोमलाई उनका मित्रले अवतरण गराइरहेका छन् ।

**कुविदङ्ग यवमन्तो यवं चिद्यथा दान्त्यनुपूर्वं वियूय । इहेहैषां कृणुहि भोजनानि ये बर्हिषो नमऽउक्तिं यजन्ति । उपयामगृहीतोस्यश्विभ्यां त्वा सरस्वत्यै त्वेन्द्राय त्वा सुत्राम्णे ॥३२॥**

हे सोम ! प्रजाको रक्षा गर्ने कामनाले तिमीलाई ज्ञानवान, ऐश्वर्ययुक्त अश्विनीकुमारहरू, देवी सरस्वती र इन्द्रदेवताका लागि हामी उपयाम पात्र ग्रहण गर्दछौं । जौखेती गर्ने किसानले जतन गरेर जौ काटेझैं देवताहरूको प्रिय सोमले दुष्टको दमन गर्नका लागि उत्तम पुरुषको भनाइअनुसार श्रेष्ठजनलाई पोषण प्रदान गरेर उनीहरूको सुरक्षा गरोस् ।

**युवथं्ँ सुराममश्विना नमुचावासुरे सचा । विपिपाना शुभस्पती इन्द्रं कर्मस्वावतम् ॥३३॥**

हे अश्विनीकुमार हो ! नमुची नामका असुरका अधिकारमा रहेको श्रेष्ठ मधुर सोमरस प्राप्त गरेर पान गर्दै तिमीहरू दुवै शुभ कर्मका पालक इन्द्रदेवताको रक्षा गर ।

**पुत्रमिव पितरावश्विनोभेन्द्रावथुः काव्यैर्दथं्ँसनाभिः । यत्सुरामं व्यपिबः शचीभिः सरस्वती त्वा मघवन्नभिष्णक् ॥३४॥**

हे इन्द्रदेवता ! राक्षसको संसर्गले अशुद्ध भएको सोम पान गरेर सङ्कटग्रस्त हुँदा पनि पिताले पुत्रको रक्षा गरेझैं अश्विनीकुमारले तिम्रो रक्षा । तिमीले नमुची वध गरेर प्रसन्नता प्रदान गर्ने सोम पान गरेपछि देवी सरस्वती पनि तिम्रै अनुकूल भइन् ।

**॥इति दशमोऽध्याय ॥**

॥दसौं अध्याय सकियो॥

ॐ

भूर्भुवः स्वः तत्सवितुवरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।

# वाजसनेयि माध्यन्दिन शुक्ल

# यजुर्वेद – संहिता

## ॥अथ एकादशोऽध्यायः॥

॥एघारौं अध्याय॥

**ऋषि–** प्रजापति साध्या, सविता, नाभानेदिष्ठ, कुश्रि, शुनःशेप, पुरोधस, मयोभुव, गृत्समद, सोमक, पायु, भरद्वाज, देवश्रवा देववात, प्रस्कण्व, सिन्धुद्वीप, विश्वमना, त्रित, उत्कील कात्य, विश्वामित्र, स्वस्त्य आत्रेय, सोमाहुति, विरूप आङ्गिरस, आरुणि, जमदग्नि ।

**देवता–** सविता, अश्व, गर्दभ, अज, अग्नि, सविता, पुष्करपर्ण, कृष्णाजिन, आपः, पृथिवी, वायु, रासभ, लिङ्गोक्त, अग्नि, औषधि, मित्र, रुद्रगण, सिनीवाली, अदिति, मृत्पिण्ड, उखा, रास्ना, अदिति, अवट, उषा, मित्र ।

**छन्द–** विराट् आर्षी अनुष्टुप्, विराट् शङ्कुमती गायत्री, निचृत् अनुष्टुप्, जगती, निचृत ब्राह्मी उष्णिक्, निचृत् आर्षी जगती, आर्षी त्रिष्टुप्, भुरिक् शक्वरी, भुरिक् अतिशक्वरी, भुरिक् अनुष्टुप्, भुरिक् आर्षी पङ्क्ति, आस्तार पङ्क्ति, गायत्री, आर्षी जगती, विराट् त्रिष्टुप्, निचृत् आर्षी त्रिष्टुप्, निचृत् आर्षी बृहती, आर्षी पङ्क्ति, निचृत गायत्री, अनुष्टुप्, पङ्क्ति, प्रकृति, स्वराट् पङ्क्ति, त्रिष्टुप्, निचृत त्रिष्टुप्, न्यङ्कुसारिणी बृहती, विराट् त्रिष्टुप्, उपरिष्यत् बृहती, विराट् अनुष्टुप्, विराट् पथ्याबृहती, ब्राह्मी बृहती, विराट् ब्राह्मी त्रिष्टुप्, भुरिक् बृहती, विराट् अभिकृति, अभिकृति, स्वराट् संकृति, भुरिक् कृति, निचृत प्रकृति, भुरिक् धुति, विराट् गायत्री, भुरिक् उष्णिक्, स्वराट् आर्षी त्रिष्टुप्, निचृत् आर्षी पङ्क्ति ।

**युञ्जानः प्रथमं मनस्तत्त्वाय सविता धियः । अग्नेर्ज्योतिर्निचाय्य पृथिव्याऽअध्याभरत ॥१॥**

सर्वद्रष्टा सवितादेवताले आफ्ना सङ्कल्पशक्तिद्वारा सृष्टि रचना गर्दाका समयमा सबैभन्दा पहिले मनस्तत्त्व र बुद्धिरूपी धारणशक्ति विकास गरे र अग्निबाट ज्योति जाग्रत गराएर भूमण्डलमा व्याप्त गराए ।

**युक्तेन मनसा वयं देवस्य सवितुः सवे । स्वर्ग्याय शक्त्या ॥२॥**

उनै सर्वद्रष्टा सवितादेवताले बनाएका विश्वमा हामी आफ्नो मनस्तत्त्वलाई परमतत्त्वसित युक्त गराएर पारलौकिक आनन्द प्राप्त गर्नका लागि त्यसै ज्योतिलाई आफूभित्र समाहित गराउँछौं ।

**युक्त्वाय सविता देवान्त्स्वर्यतो धिया दिवम् । बृहज्ज्योतिः करिष्यतः सविता प्र सुवाति तान् ॥३॥**

सर्वप्रकाशक सवितादेवताले सुखस्वरूप र आलोक विस्तारक सूर्य आदि देवतालाई आफ्ना प्रेरक शक्तिले तेजद्वारा परिपूर्ण गराए । सर्वप्रेरकका रूपमा उनै सवितादेव

व्यापक प्रकाशलाई समस्त विश्वमा फैलाउनका लागि सूर्य आदि देवतालाई प्रशस्त सामर्थ्यले सम्पन्न गराउँछन् ।

**युञ्जते मनऽ उत युञ्जते धियो विप्रा विप्रस्य बृहतो विपश्चितः । वि होत्रा दधे वयुनाविदेकऽइन्मही देवस्य सवितुः परिष्टुतिः ॥४॥**

एक्लै यज्ञ धारण गर्ने, मार्गको ज्ञान भएका सवितादेव महान् स्तुतिका पात्र हुन् । अति बुद्धिमान् र ज्ञानी मानिस आफ्नो मन र बुद्धि उनै प्रेरक सवितादेवमा योजित गर्दछन् ।

**युजे वां ब्रह्म पूर्व्यं नमोभिर्वि श्लोकऽएतु पथ्येव सूरेः । शृण्वन्तु विश्वे अमृतस्य पुत्राऽ आ ये धामानि दिव्यानि तस्थुः ॥५॥**

हे शकट हो ! तिमीहरू दुवैलाई हामी सोम आदि हविष्यान्नले अभिपूरित गरेर पत्नीशालाबाट हविर्धानतर्फ ल्याउँछौँ र त्यसपछि यज्ञ सम्पन्न गर्दछौँ । आहुतिझैँ स्तोत्ररूपी वचन पनि देवतासमक्ष पुगून् । दिव्यलोकका उच्च स्थानमा प्रतिष्ठित अमरता प्राप्त देवताले हाम्रो स्तोत्र सुनून् ।

**यस्य प्रयाणमन्वन्यऽइद्ययुर्देव देवस्य महिमानमोजसा । यः पार्थिवानि विममे सऽएतशो रजाᳬसि देवः सविता महित्वना ॥६॥**

उनै सवितादेवताको कर्म, महिमा र सामर्थ्य शक्तिलाई अन्य सबै देवताहरूले अनुगमन गर्दछन् । उनी आफ्नै उत्पादक क्षमताले सम्पूर्ण लोकका रचयिता हुन् । उनै स्रष्टा सवितादेवताको सिर्जनशीलता यस विश्वब्रह्माण्डमा सर्वत्र व्याप्त भएर रहेको छ ।

**देव सवितः प्र सुव यज्ञं प्र सुव यज्ञपतिं भगाय । दिव्यो गन्धर्वः केतपूः केतं नः पुनातु वाचस्पतिर्वाचं नः स्वदतु ॥७॥**

हे सवितादेवता ! तिमी सबैलाई यज्ञीय कर्मको प्रेरणा प्रदान गर । यज्ञकर्म सम्पन्न गर्नेहरूलाई ऐश्वर्यसम्पदाले युक्त गराएर सत्कर्मतर्फ प्रेरित गर । हे सवितादेवता ! दिव्यज्ञानको संरक्षक र वाणीको अधिपति हुनाले तिमी हाम्रो ज्ञान पवित्रतायुक्त गराऊ र वाणीमा मधुरता भरिदेऊ ।

**इमं नो देव सवितर्यज्ञं प्रणय देवाव्यᳬ सखिविदᳬ सत्राजितं धनजितᳬ स्वर्जितम् । ऋचा स्तोमᳬ समर्धय गायत्रेण रथन्तरं बृहद्गायत्रवर्त्तनि स्वाहा ॥८॥**

हे दिव्य गुणले युक्त सवितादेवता ! तिमी देवताहरूका पोषक, मैत्रीभावका विस्तारक, यज्ञीय ऊर्जाका सुनियोजक र सुख एवं समृद्धि प्रदान गर्ने हुनाले हाम्रा यस यज्ञलाई सफल बनाऊ । यस यज्ञलाई ऋक् आदि वेदका ऋचाहरूले परिपुष्ट गराऊ । गायत्र सामले रथन्तर साम र बृहत् सामलाई सुमृद्ध गराऊ । हामीले उत्तम भावनाले प्रदान गरेको यो आहुति स्वीकार गर ।

**देवस्य त्वा सवितुः प्रसवेऽश्विनोर्बाहुभ्यां पूष्णो हस्ताभ्याम् । आददे गायत्रेण छन्दसाङ्गिरस्वत्पृथिव्याः सधस्थादग्निं पुरीष्यमङ्गिरस्वदाभर त्रैष्टुभेन छन्दसाङ्गिरस्वत् ॥९॥**

सबैका सृष्टिकर्ताले रचना गरेका सृष्टिमा हामी गायत्री छन्दका प्रभावले दुवै अश्विनीकुमारका बाहु र पूषादेवताका हातबाट तिमीहरूलाई अङ्गिराले झैँ ग्रहण गरेका

छौं । तिमीहरू अङ्गिराले झैं त्रिष्टुप् छन्दका प्रेरणाले पृथ्वीलाई पोषणयुक्त उर्जाले परिपूर्ण गराओ ।

**अभ्रिरसि नार्यसि त्वया वयमग्निथं्ठ शकेम खनितुथं्ठ सधस्थऽ आ । जागतेन छन्दसाङ्गिरस्वत् ॥१०॥**

हे माटो खन्ने काममा आउने अभ्रि ! तिमी शत्रुरहित नारीजस्तो र खन्ने कामले नभुत्तिने स्वभावका छौ । हामी तिमीद्वारा जगती छन्दका प्रभावले पृथ्वीको यज्ञवेदीमा रहेका अग्निरूपी ऊर्जालाई विशिष्ट ज्ञानका सहायताले खनेर निकाल्न अङ्गिराझैं सफल होऔं ।

**हस्तऽआधाय सविता बिभ्रदभ्रिथं्ठ हिरण्ययीम् । अग्नेर्ज्योतिर्निचाय्य पृथिव्याऽअध्याभरदानुष्टुभेन छन्दसाङ्गिरस्वत् ॥११॥**

सबैको सृष्टि गर्ने सवितादेवताले हातमा सुवर्ण निर्मित अभ्रि लिएर अङ्गिराले झैं अग्निलाई यज्ञका लागि तयार भूमिमा स्थापित गरुन् र यजमानहरू अनुष्टुप् छन्दको राम्रो प्रकारले प्रयोग गर्दै ती अग्निलाई हुर्काऊन् ।

**प्रतूर्त्तं वाजिन्ना द्रव वरिष्ठामनु संवतम् । दिवि ते जन्म परममन्तरिक्षे तव नाभिः पृथिव्यामधि योनिरित् ॥१२॥**

अत्यन्त तीव्र गतिमा गमन गर्ने हे अग्निको ऊर्जाका रूपमा रहेका अश्व ! द्युलोकमा तिम्रो उत्पत्ति भएको हो, अन्तरिक्षमा तिम्रो केन्द्रस्थल छ र पृथ्वी तिम्रो फैलने आश्रयस्थल हो । त्यसैले चाँडै नै पृथ्वीका उपयुक्त स्थानमा स्थापित होऊ ।

**युञ्जाथाथं्ठ रासभं युवमस्मिन् यामे वृषण्वसू । अग्निं भरन्तमस्मयुम् ॥१३॥**

हे याजक र अध्वर्युरूपी यजमानका दम्पती ! धन आर्जन गर्नका लागि तिमीहरू दुवै हाम्रा अत्यन्त लाभदायी अग्निलाई प्रदीप्त गर्नमा समर्थ छौ । तिमीहरू यी बल, शब्द र दीप्तिले सम्पन्न रासभरूपी अग्निलाई यज्ञकर्ममा नियुक्त गर ।

**योगे योगे तवस्तरं वाजेवाजे हवामहे । सखायऽ इन्द्रमूतये ॥१४॥**

अरूका तुलनामा अत्यन्त सामर्थ्यले सम्पन्न इन्द्रदेवतालाई हामी सबैले पारस्परिक मित्रता बढाउने किसिमका प्रत्येक कार्यमा आफ्नो सुरक्षाका निम्ति र प्रत्येक सङ्घर्षमा विजय प्राप्त गर्न सहयोगका निम्ति आह्वान गर्दछौं ।

**प्रतूर्वन्नेह्यवक्रामन्नशस्ती रुद्रस्य गाणपत्यं मयोभूरेहि । उर्वन्तरिक्षं वीहि स्वस्तिगव्यूतिरभयानि कृण्वन् पूष्णा सयुजा सह ॥१५॥**

हे तीव्र गतिशील अग्निरूपी शक्ति ! अन्धकार र विकृतिरूपी दुष्टहरूको विनाश गर्दै हामीलाई सुखमय प्रकाश प्रदान गर्नका लागि तिमी आऊ । यसो गर्दा तिमीलाई दुष्टलाई रुवाउने रुद्रका समूहको नेतृत्व प्राप्त हुन्छ । हे तीव्र गति भएका ! तिमी ऋत्विक् यजमानहरूलाई निर्भय प्रदान गर्दै पृथ्वीका साथै विशाल अन्तरिक्षसम्म अन्नजलले सम्पन्न भएर मार्गमा व्याप्त हुन पुग ।

**पृथिव्याः सधस्थादग्निं पुरीष्यमङ्गिरस्वदाभराग्निं पुरीष्यमङ्गिरस्वदच्छेमोग्निं पुरीष्यमङ्गिरस्वद्भरिष्यामः ॥१६॥**

हे अभ्रि आदि यज्ञका उपकरणहरू हो ! तिमीहरू धर्तीमा सबैलाई पालनपोषण गर्नमा समर्थ, तेजस्वी, अग्रगति हुनेहरूका अगुवा, सबैका पोषक अग्निदेवतालाई यहाँ लिएर

आओ । ती अग्निदेव पोषणका सामर्थ्यले युक्त छन्, शत्रुविनाशक र कुशल नेतृत्वप्रदायक हुन् । हामी विशिष्ट पोषणक्षमताले सम्पन्न भएर अङ्गिराले झैँ उनै तेजस्वी अग्निलाई आफ्ना यज्ञस्थलमा प्रतिष्ठित गर्दछौँ ।

**अन्वग्निरुषसामग्रमख्यदन्वहानि प्रथमो जातवेदाः । अनु सूर्यस्य पुरुत्रा च रश्मीननु द्यावापृथिवी आततन्थ ॥१७॥**

पहिलेदेखि नै विद्यमान अग्निदेवताले उषाकालभन्दा पहिले नै दिनलाई प्रकट गराउँछन् । उनैले सूर्यका सम्पूर्ण किरणहरूलाई प्रकट गर्दछन् । हामी ती लोकसर्जक अग्निदेवतालाई द्युलोक र पृथ्वीलोकमा क्रमबद्ध रूपले सञ्चार गरिरहेको अनुभव गर्दछौँ ।

**आगत्य वाज्यध्वानथं̐ सर्वा मृधो विधूनुते । अग्निथं̐ सधस्थे महति चक्षुषा नि चिकीषते ॥१८॥**

उनै चेतनायुक्त ऊर्जाले सम्पन्न अग्नि बलवान् तथा तीव्रगामी अश्वले युद्धभूमि कँपाएझैँ सर्वत्र विचरण गर्दछन् । उनैले स्थिर दृष्टिले यज्ञाग्निलाई पनि निरीक्षण गर्दछन् ।

**आक्रम्य वाजिन् पृथिवीमग्निमिच्छ रुचा त्वम् । भूम्या वृत्वाय नो ब्रूहि यतः खनेम तं वयम् ॥१९॥**

हे वाज वा अश्वको रूपमा रहेका गतिशील वाजी ! तिमी पृथ्वीमा तीव्र गतिले सञ्चरित भएर अग्निको खोजी गर । भूमण्डलको खोजी गरेर हामीलाई अग्निरूपी ऊर्जा फेला पारेर ल्याऊ ।

**द्यौस्ते पृष्ठं पृथिवी सधस्थमात्मान्तरिक्षथं̐ समुद्रो योनिः । विख्याय चक्षुषा त्वमभि तिष्ठ पृतन्यतः ॥२०॥**

हे वाजी ! तिम्रो पृष्ठभाग द्युलोकमा छ, पृथ्वीमा तिम्रा गोडा छन् र अन्तरिक्षमा तिम्रो जीवात्मा छ । तिम्रा लागि उत्पत्तिस्थल योनिका रूपमा जलको बडवाग्नि विद्यमान छ । तिमी आफ्ना विवेकले सृष्टिचक्रका बाधक विकृतिरूपी राक्षसहरूलाई आक्रमण गरेर नष्ट गराऊ ।

**उत्क्राम महते सौभगायास्मादास्थानाद् द्रविणोदा वाजिन् । वयथं̐ स्याम सुमतौ पृथिव्याऽअग्निं खनन्तऽ उपस्थे अस्याः ॥२१॥**

हे अग्निका रूपमा रहेका वाजी ! धन र सौभाग्य प्रदान गर्नका लागि तिमी यस यज्ञस्थलबाट माथि उठेर आऊ । पृथ्वीका माथिल्ला भागमा अग्निमाथि आधारित यज्ञ आदि शोधनकार्य गरेर हामी सद्बुद्धिले सम्पन्न भई रहन सकौँ ।

**उदक्रमीद् द्रविणोदा वाज्यर्वाकः सुलोकथं̐ सुकृतं पृथिव्याम् । ततः खनेम सुप्रतीकमग्निथं̐ स्वो रुहाणा अधि नाकमुत्तमम् ॥२२॥**

अर्वा नामको चञ्चल र समृद्धि प्रदायक अश्वरूपी अग्नि धर्तीलाई पार गर्दै आएको छ । यसले श्रेष्ठ लोकलाई पुण्यवान् बनाएको छ । त्यसै कारणले संसारमा आरोहण गर्ने कामना भएका र देवताको जस्तै सुन्दर मुख भएका अग्निदेवतालाई खनेर निकाल्ने काममा सर्वोत्तम सुख प्राप्तिका लागि हामी याजकहरू खटिन्छौँ ।

**आ त्वा जिघर्मि मनसा घृतेन प्रतिक्षियन्तं भुवनानि विश्वा । पृथुं तिरश्चा वयसा बृहन्तं व्यचिष्ठमन्नै रभसं दृशानम् ॥२३॥**

दिव्य प्रकाशका रूपमा सारा ब्रह्माण्डमा व्याप्त रहेका, तेर्छो ज्योति फिँजाउने, लामो समयसम्म व्यापक रूपमा आफूलाई विस्तार गर्ने हे अग्निदेवता ! अन्न आदिको आहुतिले शक्तिशाली र प्रत्यक्षतः देखिने गरेका तिमीलाई योगमग्न मनले घिउ हालेर तिमीलाई यज्ञका लागि हामी प्रज्वलित गर्दछौँ ।

**आ विश्वतः प्रत्यञ्चं जिघर्म्यरक्षसा मनसा तज्जुषेत । मर्यश्रीः स्पृहयद्वर्णो अग्निर्नाभिमृशे तन्वा जर्भुराणः ॥२४॥**

सर्वत्र व्याप्त अग्निदेवतालाई हामी घिउले सेचन गरेर प्रदीप्त गराउँछौँ । हे अग्निदेवता ! अर्पण गरिएका घिउको आहुति शान्तिपूर्वक ग्रहण गर । मानिसबाट पूज्य, कान्तिवान् अग्निदेव तेजस्वी रूपमा प्रदीप्त हुँदा कसैले स्पर्श गर्न सक्दैनन् ।

**परि वाजपतिः कविरग्निर्हव्यान्यक्रमीत् । दधद्रत्नानि दाशुषे ॥२५॥**

सर्वज्ञ, अन्नका स्वामी अग्निदेव याजकले दिएको हवनीय पदार्थ स्वीकार गर्दछन् र परमार्थको हित गर्न चाहनेलाई धनधान्यले परिपूर्ण बनाउँछन् ।

**परि त्वाग्ने पुरं वयं विप्रꣳ सहस्य धीमहि । धृषद्वर्णं दिवेदिवे हन्तारं भङ्गुरावताम् ॥२६॥**

हे शक्तिशाली अग्निदेवता ! तिमी पूर्णता प्रदान गर्न जान्ने, सङ्घर्षशील असुरलाई सधैँ संहार गर्न सक्दछौ । हामी तिम्रै गुण पाउनका लागि ध्यान गर्दछौँ ।

**त्वमग्ने द्युभिस्त्वमाशुशुक्षणिस्त्वमद्भ्यस्त्वमश्मनस्परि । त्वं वनेभ्यस्त्वमोषधीभ्यस्त्वं नृणां नृपते जायसे शुचिः ॥२७॥**

हे मनुष्यका स्वामी अग्निदेवता ! तिमी द्युलोकबाट प्रकट भएपछि तुरुन्तै प्रकाशित भएकाले पवित्र छौ । तिमी जल, ढुङ्गा, वन र औषधिबाट उत्पन्न हुन्छौ ।

**देवस्य त्वा सवितुः प्रसवेऽश्विनोर्बाहुभ्यां पूष्णो हस्ताभ्याम् । पृथिव्याः सधस्था दग्निं पुरीष्यमङ्गिरस्वत्खनामि । ज्योतिष्मन्तं त्वाग्ने सुप्रतीकमजस्रेण भानुना दीद्यतम् । शिवं प्रजाभ्योऽहिꣳसन्तं पृथिव्याः सधस्थादग्निं पुरीष्यमङ्गिरस्वत्खनामः ॥२८॥**

हे यज्ञका सामग्रीहरू हो ! सृष्टिकर्ताले रचना गरेका सृष्टिमा अश्विनीकुमारहरूका बाहु र पूषादेवताका हातबाट तिमी सर्वत्र विचरण गर्ने अग्निदेवतालाई भूमिका माथिल्लो भागमा अङ्गिराले झैँ हामी ग्रहण गर्दछौँ । हे अग्निदेवता ! तिमी ज्योतिस्वरूप, श्रेष्ठ शोभायुक्त, निरन्तरका उज्ज्वल, देदीप्यमान, प्रजाको कल्याणका लागि शान्त रूप लिएका, अनिष्ट निवारक, ऐश्वर्य प्रदायक छौ ।

**अपां पृष्ठमसि योनिरग्नेः समुद्रमभितः पिन्वमानम् । वर्धमानो महाँ२ऽ आ च पुष्करे दिवो मात्रया वरिम्णा प्रथस्व ॥२९॥**

तिमी जलका आधार हौ, अग्निका उत्पादक हौ । तिमी समुद्र बढाउँछौ, स्वयं सबैतर्फ विस्तार हुँदै जलमा व्याप्त रहेका छौ । द्युलोकको तेजस्विता र पृथ्वीको विशालताअनुरूप तिमी विस्तृत होऊ ।

**शर्म च स्थो वर्म च स्थोच्छिद्रे बहुले उभे । व्यचस्वती सं वसाथां भृतमग्निं पुरीष्यम् ॥३०॥**

तिमीहरू दुवै क्षतिरहित, अति व्यापक र साधकका हितैषि तथा सुखदायक हौ । तिमीहरू दुवै सुरक्षा कवचजस्तै भएर रक्षा गर्दछौ, त्यसैले पोषक अग्निदेवतालाई संवर्द्धन गराओ ।

**सं वसाथाᳬ स्वर्विदा समीचीऽ उरसा त्मना । अग्निमन्तर्भरिष्यन्ती ज्योतिष्मन्तमजस्रमित् ॥३१॥**

तिमीहरू दुवै आफैं समान निरन्तर तेजयुक्त अग्निदेवतालाई आफ्ना पेटमा प्रज्वलित गराइराख । दिव्यलोकका आधारका रूपमा रहेका अग्निदेवतालाई आफ्ना हृदयमा सधैं धारण गरिराख ।

**पुरीष्योसि विश्वभराऽअथर्वा त्वा प्रथमो निरमन्थदग्ने । त्वामग्ने पुष्करादध्यथर्वा निरमन्थत । मूर्ध्नो विश्वस्य वाघतः ॥३२॥**

सम्पूर्ण विश्वलाई नै भरणपोषण र कल्याण गर्ने हे अग्निदेवता ! तिमीलाई सबैभन्दा पहिले अथर्वा ऋषिले गजबसँग मन्थन गरेर निकाले । हे अग्निदेवता ! अथर्वा ऋषिले विशाल आकाशमा मन्थन गरेर तिमीलाई प्रकट गरेर सम्मानपूर्वक उच्च स्थानमा विराजमान गराएका हुन् ।

**तमु त्वा दध्यङ्ङृषिः पुत्रऽ ईधे अथर्वणः । वृत्रहणं पुरन्दरम् ॥३३॥**

हे अग्निदेवता ! अथर्वाका पुत्र दध्यङ् ऋषिले तिमीलाई पहिलो पटक प्रदीप्त गराए । तिमी शत्रुसंहारक हौ, त्यसैले शत्रुको सहर नष्ट गर्न सक्दछौ ।

**तमु त्वा पाथ्यो वृषा समीधे दस्युहन्तमम् । धनञ्जयᳬ रणेरणे ॥३४॥**

हे सन्मार्गगामी र शक्तिमान् अग्निदेवता ! पाथ्यवृषाले तिमीलाई प्रदीप्त गरे । तिमी असुर संहारक तथा युद्धका विजेता हौ ।

**सीद होतः स्वऽ उ लोके चिकित्वान्त्सादया यज्ञᳬ सुकृतस्य योनौ । देवावीर्देवान्हविषा यजास्यग्ने बृहद्यजमाने वयो धाः ॥३५॥**

हे होतारूपी अग्निदेवता ! सबै कर्मका ज्ञाता तिमी आफ्ना प्रतिष्ठित स्थानलाई सुशोभित गराऊ र असल कर्मरूपी यज्ञ सम्पन्न गराऊ । देवतालाई सन्तुष्ट गराउने हे अग्निदेवता ! तिमी याजकहरूले दिएको आहुतिले देवताहरूलाई खुसी पार्दै याजकहरूलाई धनधान्य एवं दीर्घायु प्रदान गर ।

**नि होता होतृषदने विदानस्त्वेषो दीदिवाँ२ऽ असदत्सुदक्षः । अदब्धव्रतप्रमतिर्वसिष्ठः सहस्रम्भरः शुचिजिह्वो अग्निः ॥३६॥**

अग्निदेव होता, मेधावी, प्रदीप्त, पोषक, बलशाली, तेजस्वी, नियमपालक, आश्रयदाता र सत्यवक्ता हुन् । त्यसैले उनी हजारौँका लागि पालनपोषण गर्न समर्थ छन् । त्यस्ता अग्निदेव होताका घरमा प्रतिष्ठित होऊन् ।

**सᳬ सीदस्व महाँ२ऽ असि शोचस्व देववीतमः । वि धूममग्ने अरुषं मियध्य सृज प्रशस्त दर्शतम् ॥३७॥**

यज्ञका गुणहरूले गर्दा अत्यन्त प्रशंसनीय बनेका हे अग्निदेवता ! तिमी देवताका स्नेहपात्र र महान् गुणका प्रेरक हौ । यस उपयुक्त स्थानमा उपस्थित भएर प्रज्वलित

होऊ र घिउको आहुतिले दर्शन योग्य तथा तेजस्वी हुँदै धुवाँको ठूलो मुस्लो माथि उठाऊ ।

**अपो देवीरुपसृज मधुमतीरयक्ष्माय प्रजाभ्यः । तासामास्थानादुज्जिहतामोषधयः सुपिप्पलाः ॥३८॥**

हे यज्ञका अग्निदेवता ! मधुर, स्निग्ध, धर्तीको सेचन गर्नका लागि रसको रूपमा रहेको जल उत्पन्न गर । त्यसो भएपछि औषधिका बोटबिरुवाहरू फलफूलले भरिएर याजकको हानीनोकसानी र रोगव्याध निवारण गर्न सक्षम होऊन् ।

**सन्ते वायुर्मातरिश्वा दधातूत्तानाया हृदयं यद्विकस्तम् । यो देवानां चरसि प्राणथेन कस्मै देव वषडस्तु तुभ्यम् ॥३९॥**

माथितिर मुख फर्किएको यज्ञकुण्ड धारण गर्ने हे पृथ्वी ! तिमी माताजस्तै विशाल हृदयकी बनेर प्राणशक्तिका सञ्चारक वायु, जल र वनस्पतिहरूलाई भरिपूर्ण गराऊ । हे वायुदेवता ! तिमी दिव्य प्राणरूपी ऊर्जासँगै सञ्चरित हुन्छौ । त्यसो हुनाले वषट् उच्चारण गरिने यो पृथ्वी तिम्रा निम्ति कल्याणप्रद होस् ।

**सुजातो ज्योतिषा सह शर्म वरूथमासदत्स्वः । वासो अग्ने विश्वरूपꣳ सं व्ययस्व विभावसो ॥४०॥**

हे अग्निदेवता ! तिमी तेजयुक्त ज्वालाले नियमित रूपमा प्रज्वलित भएर श्रेष्ठ सुखदायक यज्ञवेदीलाई सुशोभित गराऊ । हे कान्तिमान् अग्निदेवता ! तिमी विशिष्ट आभाले वस्त्रझैँ संसारलाई उचित रूपमा धारण गर, तिमी पृथ्वीको आवरण बनेर उसको सुरक्षा गर ।

**उदु तिष्ठ स्वध्वरावा नो देव्या धिया । दृशे च भासा बृहता शुशुक्वनिराग्ने याहि सुशस्तिभिः ॥४१॥**

हे अग्निदेवता ! तिम्रा तेजयुक्त ज्वालाले विधिवत् प्रज्वलित भएर श्रेष्ठ सुखप्रद यज्ञ वेदीहरू सुशोभित होऊन् । हे कान्तिमान् अग्निदेवता ! तिम्रो आफ्नै विशिष्ट आभा वस्त्रझैँ भएर संसारलाई राम्ररी ढाकोस् र पृथ्वीको आवरणझैँ बनेर सुरक्षा गरोस् ।

**ऊर्ध्वऽ ऊ षु णऽ ऊतये तिष्ठा देवो न सविता । ऊर्ध्वो वाजस्य सनिता यदञ्जिभिर्वाघद्भिर्विह्वयामहे ॥४२॥**

हे काठमा रहने अग्निदेवता ! सर्वोत्पादक सवितादेवताले अन्तरिक्षबाट हामी सबैको रक्षा गर्दछन् । त्यसै गरी तिमी पनि आफ्नो ज्वाला माथितिर फिँजाउँदै अन्न आदि पोषक पदार्थ दिएर हाम्रो जीवनलाई रक्षा गर । मन्त्रोच्चारणपूर्वक हवि प्रदान गर्ने याजकहरूले तिम्रा उत्कृष्ट स्वरूपको आह्वान गरेका छन् ।

**स जातो गर्भो असि रोदस्योरग्ने चारुर्विभृतऽ ओषधीषु । चित्रः शिशुः परि तमाꣳसि स्यक्तून्प्र मातृभ्यो अधि कनिक्रदद्गाः ॥४३॥**

अग्निदेव द्यावापृथिवीका गर्भमा रहन्छन् । औषधिबाट जन्म लिएर सुन्दर स्थानमा प्रतिष्ठित हुन्छन् । अन्धकार परास्त गर्दछन् र शिशुझैँ शब्द गर्दै मातानजिक जान्छन् ।

**स्थिरो भव वीड्वङ्ग आशुर्भव वाज्यर्वन् । पृथुर्भव सुषदस्त्वमग्नेः पुरीषवाहणः ॥४४॥**

पदार्थहरूप्रति गमनशील रहने हे अर्वन् घोडाजस्तै चञ्चल यज्ञाग्नि ! तिमी सुस्थिर, सुदृढ र वेगयुक्त भएर शक्तिशाली होऊ । तिमी सबैलाई वहन गर र सर्वज्ञ व्यापक रूपमा पुगेका अग्निलाई सुख प्रदान गर्ने होऊ ।

**शिवो भव प्रजाभ्यो मानुषीभ्यस्त्वमङ्गिरः । मा द्यावापृथिवी अभि शोचीर्मान्तरिक्षं मा वनस्पतीन् ॥४५॥**

हे सबै अङ्गमा व्याप्त हुनाले अङ्गिरस् नाम पाएका अग्नि ! तिमी मानिस र सबै प्राणीका लागि कल्याणकारी छौ । तिमी स्वर्ग, पृथ्वी, अन्तरिक्ष र वनस्पति आदिमा कसैलाई पनि नसताऊ ।

**प्रैतु वाजी कनिक्रदन्नानदद्रासभः पत्वा । भरन्नग्निं पुरीष्यं मा पाद्यायुषः पुरा । वृषाग्निं वृषणं भरन्नपां गर्भथं समुद्रियम् । अग्नऽ आ याहि वीतये ॥४६॥**

यी गतिशीले यज्ञीय ऊर्जारूपी वाजी मन्त्ररूपी ध्वनि गर्दै अगाडितर्फ प्रस्थान गरुन् । रासभका रूपमा रहेको यो तेजस्वी अघि बढोस् । यसले प्राणरूपी अग्नि धारण गरेपछि लक्ष्यमा नपुगी नरोकियोस् । अत्यन्त शक्तिले सम्पन्न र सामर्थ्यले युक्त भएर जलका बीचमा यसले विद्युत् धारण गरेर प्रस्थान गरोस् । हे अग्निदेवता ! तिमी हवि ग्रहण गर्नका लागि आऊ ।

**ऋतथं सत्यमृतथं सत्यमग्निं पुरीष्यमङ्गिरस्वद्भरामः । ओषधयः प्रति मोदध्वमग्निमेतथं शिवमायन्तमभ्यत्र युष्माः । व्यस्यन् विश्वाऽअनिराऽअमीवा निषीदन्नो अप दुर्मतिं जहि ॥४७॥**

शाश्वत सत्यका स्वरूप, अविनाशी अग्निदेवतालाई अङ्गिराले भैँ हामी पनि परिपुष्ट गराउँछौँ । हे समस्त औषधि रूपी हविहरू हो ! तिमीहरू मङ्गलमय यज्ञकुण्डमा स्थित अग्निदेवतालाई समर्पित भएर आनन्द प्रदान गर । हे अग्निदेवता ! तिमी यहाँ उपस्थित रहेर हामीलाई सबै किसिमका शारीरिक कष्ट र मानसिक सन्तापबाट आरोग्य लाभ प्रदान गर र हाम्रो दुर्मतिजन्य कुविचार समाप्त गरिदेऊ ।

**ओषधयः प्रति गृभ्णीत पुष्पवतीः सुपिप्पलाः । अयं वो गर्भऽऋत्वियः प्रत्नथं सधस्थमासदत् ॥४८॥**

हे औषधिहरू हो ! तिमीहरू गतिला फूल र फलले लादिएर यज्ञीय अग्निरूपी ऊर्जा ग्रहण गर । यो अग्निरूपी गर्भ ऋतुअनुसार नै उत्पन्न हुने गर्दछ । यो यहाँ उहिलेदेखि नै छ ।

**वि पाजसा पृथुना शोशुचानो बाधस्व द्विषो रक्षसो अमीवाः । सुशर्मणो बृहतः शर्मणि स्यामग्नेरहथं सुहवस्य प्रणीतौ ॥४९॥**

हे अग्निदेवता ! तिमी आफ्नो बढ्दो तेजले डाह गर्ने शत्रुको बेहोरा भएका र राक्षसी वृत्ति भएकाहरूलाई बाधा हालिदेऊ । हे असल, सुखदायी, महान, सुविख्यात अग्निदेवता ! हामीलाई तिम्रै आश्रयमा रहन मन लाग्छ ।

**आपो हि ष्ठा मयोभुवस्ता नऽ ऊर्जे दधातन । महे रणाय चक्षसे ॥५०॥**

हे जलदेवता ! तिमी सुखका मूल स्रोत हौ । हामीलाई पराक्रमले युक्त उत्तम कर्म गर्नका लागि पोषक रस प्रदान गर ।

**यो वः शिवतमो रसस्तस्य भाजयतेह नः । उशतीरिव मातरः ॥५१॥**

हे जलधाराका समूह ! तिम्रो सबैभन्दा कल्याणकारी रस यहाँ विद्यमान छ, तिमी वात्सल्यमयी आमाले बालकलाई आफ्नो कल्याणकारी दुध चुसाएर परिपुष्ट गराएझैँ त्यो रस पान गर्नका लागि हामीलाई सम्मिलित गराऊ ।

**तस्माऽ अरं गमाम वो यस्य क्षयाय जिन्वथ । आपो जनयथा च नः ॥५२॥**

हे जलसमूह ! तिम्रो त्यही कल्याणकारी रस हामीलाई मनग्गे रूपमा उपलब्ध होस् । तिमीले विश्वलाई सन्तुष्ट गराउने, तिमीलाई हाम्रो उत्पत्तिको कारण सिद्ध गराउने र जीवनका लागि उपयोगी त्यस रसका गुणले हामीलाई परिपूर्ण गराऊ ।

**मित्रः सꣳसृज्य पृथिवीं भूमिं च ज्योतिषा सह । सुजातं जातवेदसमयक्ष्माय त्वा सꣳसृजामि प्रजाभ्यः ॥५३॥**

परम ओजस्वी सूर्यदेवताले अन्तरिक्ष र पृथ्वीलाई प्रकाशित गरेझैँ श्रेष्ठ गुणले युक्त सर्वज्ञानले सम्पन्न अग्निलाई हामी र हाम्रा प्रजारूपी सन्तानले आरोग्य लाभ गर्न सकौँ भनी हामी प्रज्वलित गर्दछौँ ।

**रुद्राः सꣳसृज्य पृथिवीं बृहज्ज्योतिः समीधिरे । तेषां भानुरजस्रऽ इच्छुक्रो देवेषु रोचते ॥५४॥**

रुद्रदेवताले भूलोकको सृष्टि गरे र त्यसलाई महान् तेजस्वितायुक्त सूर्यदेवताले प्रकाशित गरे । उनै रुद्रको पवित्र तथा प्रचण्ड ज्योति नै अन्य देवशक्तिहरूका अस्तित्वको परिचायक बनेको छ ।

**सꣳसृष्टां वसुभी रुद्रैर्धीरैः कर्मण्यां मृदम् । हस्ताभ्यां मृद्वीं कृत्वा सिनीवाली कृणोतु ताम् ॥५५॥**

औँसीकी अधिष्ठात्री देवी सिनिवालीले धैर्यवान् वसु र रुद्रगणद्वारा तयार गरिएको माटो आफ्नै हातले सुकोमल बनाएर त्यसबाट उपयोगी पात्रहरू निर्माण गरुन् ।

**सिनीवाली सुकपर्दा सुकुरीरा स्वौपशा । सा तुभ्यमदिते मह्योखां दधातु हस्तयोः ॥५६॥**

हे पूजनीय देवमाता अदिति ! सुन्दर केश, उत्तम आभूषणले सजिएकी र चन्द्रमाजस्ता सुन्दर अङ्गहरूले शरीर सजिएकी सिनिवाली देवीले तिम्रा लागि दुवै हातमा पुरोडाश पकाउने उखा नामको पात्र लिऊन् ।

**उखाँ कृणोतु शक्त्या बाहुभ्यामदितिर्धिया । माता पुत्रं यथोपस्थे साग्निं बिभर्तु गर्भऽआ । मखस्य शिरोऽसि ॥५७॥**

अदितिदेवीले आफ्ना शक्ति र सामर्थ्यले उत्तम बुद्धिपूर्वक दुवै हातमा पकाउने भाँडो लिऊन् र यस उखा नामका पकाउने भाँडाले पनि आमाले आफ्ना सन्तान काखमा लिएझैँ उचित तरिकाले आफूमा अग्निलाई धारण गरोस् । हे पकाउने भाँडा ! तिमी यज्ञका प्रमुख पात्र हौ ।

**वसवस्त्वा कृण्वन्तु गायत्रेण छन्दसाङ्गिरस्वद्ध्रुवासि पृथिव्यसि धारया मयि प्रजाथं॰ रायस्पोषं गौपत्यथं॰ सुवीर्यथं॰ सजातान्यजमानाय रुद्रास्त्वा कृण्वन्तु त्रैष्टुभेन छन्दसाङ्गिरस्वद्ध्रुवास्यन्तरिक्षमसि धारया मयि प्रजाथं॰रायस्पोषं गौपत्यथं॰ सुवीर्यथं॰ सजातान्यजमानायादित्यास्त्वा कृण्वन्तु जागतेन छन्दसाङ्गिरस्वद्ध्रुवासि द्यौरसि धारया मयि प्रजाथं॰रायस्पोषं गौपत्यथं॰ सुवीर्यथं॰ सजातान्यजमानाय विश्वे त्वा देवा वैश्वानराः कृण्वन्त्वानुष्टुभेन छन्दसाङ्गिरस्वद्ध्रुवासि दिशोसि धारया मयि प्रजाथं॰ रायस्पोषं गौपत्यथं॰ सुवीर्यथं॰ सजातान्यजमानाय ॥५८॥**

यज्ञको कार्य सम्पन्न गराउनाले उखा नामका हे पात्र ! वसुहरूले गायत्री छन्दका साामर्थ्यले अङ्गिराले झैँ तिमीलाई निर्माण गरुन् । तिमी पृथ्वीजस्तै बलियो छौ । हामी याजकहरूलाई सन्तान, धन, बल, गाईको स्वामित्व, श्रेष्ठ पराक्रम, सजातीय बान्धवहरूको उचित स्नेह प्रदान गर । हे उखा ! रुद्रगणले त्रिष्टुप् छन्दका प्रभावले अङ्गिराले झैँ तिमीलाई धारण गरुन् । तिमी अन्तरिक्षजस्तै बलियो होऊ । हामी याजकहरूलाई सन्तान, धन, बल, गाईको स्वामित्व, श्रेष्ठ पराक्रम, सजातीय बान्धवहरूको उचित स्नेह प्रदान गर । हे उखा ! आदित्यगणले जगती छन्दका प्रभावले अङ्गिराले झैँ तिमीलाई निमाण गरुन् । तिमी सुदृढ भएको द्युलोकजस्तै होऊ । हामी याजकहरूलाई सन्तान, धन, बल, गाईको स्वामित्व, श्रेष्ठ पराक्रम, सजातीय बान्धवहरूको उचित स्नेह प्रदान गर । हे उखा ! विश्वेदेवताले तिमीलाई अनुष्टुप् छन्दका प्रभावले अङ्गिराले झैँ बलियो पारेर निर्माण गरुन् । तिमी दिशाहरूको जस्तै बलियो बन । हामी याजकहरूलाई सन्तान, धन, बल, गाईको स्वामित्व, श्रेष्ठ पराक्रम, सजातीय बान्धवहरूको उचित स्नेह प्रदान गर ।

**अदित्यै रास्नास्यदितिष्टे बिलं गृभ्णातु । कृत्वाय सा महीमुखां मृण्मयीं योनिमग्नये । पुत्रेभ्यः प्रायच्छददितिः श्रपयानिति ॥५९॥**

हे उखा नामका पात्रमा तानिएका रेखाहरू हो ! तिमीहरू देवमाताका अदितिका प्रभावले यस उखा पात्रको बर्कीजस्तो भएका छौ । हे उखा ! देवताहरूकी माताले तिम्रो मध्य भाग धारण गरुन् । अदितिदेवी यस पृथ्वीरूपी माटाले अग्निलाई आधार दिन सक्ने गरी उखा बनाऊन् र आफ्ना पुत्र देवताहरूलाई पकाउने काममा लागि त्यो भाँडो प्रदान गरुन् ।

**वसवस्त्वा धूपयन्तु गायत्रेण छन्दसाङ्गिरस्वद्रुद्रास्त्वा धूपयन्तु त्रैष्टुभेन छन्दसाङ्गिरस्वदादित्यास्त्वा धूपयन्तु जागतेन छन्दसाङ्गिरस्वद्विश्वे त्वा देवा वैश्वानरा धूपयन्त्वानुष्टुभेन छन्दसाङ्गिरस्वदिन्द्रस्त्वा धूपयतु वरुणस्त्वा धूपयतु विष्णुस्त्वा धूपयतु ॥६०॥**

हे उखा ! गायत्री छन्दका प्रभावले वसुहरू अङ्गिराको जस्तै गरी तिमीलाई सूर्यको ताप प्रदान गरुन् । रुद्रगणले त्रिष्टुप् छन्दका प्रभावले अङ्गिराले झैँ तिमीलाई सूर्यका तापबाट जोगाऊन् । आदित्यगणले जगती छन्दका स्तोत्रले अङ्गिराले झैँ तिमीलाई घाममा सफा गरुन् र सबैका कल्याणकारी विश्वेदेवताहरूले अनुष्टुप् छन्दका प्रभावले अङ्गिराले झैँ घाममा सुकाऊन् । यसै गरी इन्द्र, वरुण र विष्णुदेव आदि सबै देवताहरूले तिमीलाई तातोमा राखेर सुकाएर तयार गरुन् ।

**अदितिष्ट्वा देवी विश्वदेव्यावती पृथिव्याः सधस्थे अङ्गिरस्वत् खनत्ववट देवानां त्वा पत्नीर्देवीर्विश्वदेव्यावतीः पृथिव्याः सधस्थे अङ्गिरस्वद्दधतूखे धिषणास्त्वा देवीर्विश्वदेव्यावतीः पृथिव्याः सधस्थे अङ्गिरस्वदभीन्धतामुखे वरूत्रीष्ट्वा देवीर्विश्वदेव्यावतीः पृथिव्याः सधस्थे अङ्गिरस्वच्छ्रपयन्तूखे ग्नास्त्वा देवीर्विश्वदेव्यावतीः पृथिव्याः सधस्थे अङ्गिरस्वत्पचन्तूखे जनयस्त्वाच्छिन्नपत्रा देवीर्विश्वदेव्यावतीः पृथिव्याः सधस्थे अङ्गिरस्वत्पचन्तूखे ॥६१॥**

यज्ञको कार्य सम्पन्न गराउनाले अवट नाम पाएका हे खाडल ! सम्पूर्ण दैवी गुणकी अधिष्ठात्री, देववृत्तिकी पोषक देवमाता भूमिका उच्च भागमा अङ्गिराले झैँ तिमीलाई खनेका छौँ । हे उखा ! देवताहरूको शक्तिलाई समस्त दैवी गुणसहित दीप्तिमान् पृथ्वीका माथिल्ला भागमा तिमीलाई अङ्गिराले झैँ स्थापित गर्दछौँ । हे उखा ! सम्पूर्ण देवताकी अधिष्ठात्री, स्तुत्य, सुमतिले सम्पन्न, दैवी गुणले युक्त पृथ्वीका माथिल्ला भागमा तिमीलाई अङ्गिराले झैँ प्रज्वलित गर्दछौँ । हे उखा ! समस्त देवगुणले युक्त, दिन र रातकी निर्मात्री भूमिमाथि अङ्गिराले झैँ तिमीलाई पकाऔँ । हे उखा ! समस्त शक्तिकी पोषक देवी पृथ्वीका माथिल्ला भागमा तिमीलाई अङ्गिराले झैँ पकाऔँ । हे उखा ! निरन्तर गतिशील देवशक्तिको सम्पूर्ण दैवी गुणले सम्पन्न पृथ्वीका माथिल्ला भागमा अङ्गिराले झैँ तिमीलाई परिपक्व गराऔँ ।

**मित्रस्य चर्षणीधृतोऽवो देवस्य सानसि । द्युम्नं चित्रश्रवस्तमम् ॥६२॥**

मानिसलाई पोषण प्रदान गर्ने शक्तिले प्रकाशवान्, मित्रदेवताका शाश्वत, आश्चर्यजक पदार्थले युक्त ऐश्वर्यलाई हामी धारण गरौँ ।

**देवस्त्वा सवितोद्वपतु सुपाणिः स्वङ्गुरिः सुबाहुरुत शक्त्या । अव्यथमाना पृथिव्यामाशा दिशऽ आपृण ॥६३॥**

हे उखा ! संसारका सृष्टिकर्ता सवितादेवताले आफ्ना उत्तम भुजा र औँलारूपी दिव्य किरणले, उनका निजी सामर्थ्यले र बुद्धिको कुशलताले बलियो हुँदै तिमीलाई प्रकाशित गराऊन् । तिमी दुःखरहित भएर भूलोकमा आफ्ना शुभ आकाङ्क्षाहरू र उच्च आदर्शहरूको प्राप्ति गर ।

**उत्थाय बृहती भवोदु तिष्ठ ध्रुवा त्वम् । मित्रैतां तऽउखां परिददाम्यभित्याऽ एषा मा भेदि ॥६४॥**

हे उखा ! तिमी खाडलबाट निस्केर विशालता प्राप्त गर र स्थायित्व प्राप्त गरेर आफ्ना कार्यहरू सम्पन्न गर । हे मित्रदेवता ! यो पकाउने भाँडालाई क्षति होला कि भनेर हामी तिम्रो जिम्मा लगाउँछौँ । यो नभत्कियोस् र राम्ररी यसले काम पूरा गरोस् ।

**वसवस्त्वाच्छृन्दन्तु गायत्रेण छन्दसाङ्गिरस्वद्रुद्रास्त्वाच्छृन्दतु त्रैष्टुभेन छन्दसाङ्गिरस्वदादित्यास्त्वाच्छृन्दन्तु जागतेन छन्दसाङ्गिरस्वद्विश्वे त्वा देवा वैश्वानराऽआच्छृन्दन्त्वानुष्टुभेन छन्दसाङ्गिरस्वत् ॥६५॥**

गायत्री छन्दका स्तोत्रले वसुगण, त्रिष्टुप् छन्दका मन्त्रले रुद्रगण, जगती छन्दका मन्त्रले आदित्यगण र अनुष्टुप् छन्दका मन्त्रशक्तिले विश्वदेवताका रूपमा तिमी रहेका छौ । सामूहिक कल्याणकारी देवशक्तिका रूपमा रहेका हे उखा ! तिमीलाई हामी तिनै देवताका रूपमा उनै छन्दका मन्त्रले अभिषिक्त गर्दछौँ ।

**आकूतिमग्निं प्रयुजꣳस्वाहा मनो मेधामग्निं प्रयुजꣳ स्वाहा चित्तं विज्ञातमग्निं प्रयुजꣳस्वाहा वाचो विधृतिमग्निं प्रयुजꣳ स्वाहा प्रजापतये मनवे स्वाहाग्नये वैश्वानराय स्वाहा ॥६६॥**

यज्ञरूपी सत्कर्मका प्रेरक अग्निदेवताका निम्ति यो आहुति समर्पित गर्दछौँ । मन र सद्‌बुद्धिलाई प्रेरणा प्रदान गर्ने अग्निदेवतालाई यो आहुति प्रदान गर्दछौँ । चित्त र विशिष्ट ज्ञानलाई प्रेरित गर्ने अग्निदेवतालाई यो आहुति प्रदान गर्दछौँ । वाणी र विशिष्ट विद्याका प्रेरक अग्निदेवतालाई यो आहुति प्रदान गर्दछौँ । मन्वन्तरका प्रवर्तक, प्रजाका पालक मनुरूपी अग्निदेवतालाई यो आहुति प्रदान गर्दछौँ । संसारका कल्याणकारी अग्निदेवताका निम्ति यो आहुति प्रदान गर्दछौँ ।

**विश्वो देवस्य नेतुर्मर्तो वुरीत सख्यम् । विश्वो रायऽ इषुध्यति द्युम्नं वृणीत पुष्यसे स्वाहा ॥६७॥**

सबै मानिसले प्रेरणादायी सवितादेवताको मित्रता स्वीकार गर्दछन् । मानिसहरू आफ्नो पोषणका लागि दीप्तिमान् धन प्राप्त गर्दछन् र ऐश्वर्यका अधिपति हुन्छन् ।

**मा सु भित्था मा सु रिषोऽम्ब धृष्णु वीरयस्व सु । अग्निश्चेदं करिष्यथः ॥६८॥**

हे उखा ! तिमी कहिल्यै क्षतिग्रस्त नहोऊ, कहिल्यै नष्ट नहोऊ, दृढतापूर्वक श्रेष्ठ पराक्रमी शूरवीरझैँ कर्तव्य पूरा गरिराख । अग्निदेवता र तिमी दुवैले यस यज्ञको कार्य सम्पादन गर ।

**दृꣳहस्व देवि पृथिवि स्वस्तयऽआसुरी माया स्वधया कृतासि । जुष्टं देवेभ्यऽइदमस्तु हव्यमरिष्य त्वमुदिहि यज्ञे अस्मिन् ॥६९॥**

हे पृथ्वी देवी ! आसुरी मायाजस्तो रूप बदल्न सक्ने तिमीले कल्याणको भावनाले युक्त भएर उखाको रूप धारण गरेकी छ्यौ । तिमी श्रेष्ठ र सुदृढ होऊ । हे उखा ! यो हविष्यान्न देवशक्तिका लागि आनन्ददायक होस् । तिमी यज्ञको समाप्तिसम्म यस यज्ञशालामा उपस्थित भइराख ।

**द्रवन्नः सर्पिरासुतिः प्रत्नो होता वरेण्यः । सहसस्पुत्रो अद्‌भुतः ॥७०॥**

वृक्षका समिधाहरूलाई प्रमुख रूपमा आहार गर्ने, घिउलाई प्रमुख रूपमा पिउने, प्राचीन देवशक्तिलाई आमन्त्रण गर्ने र बलपूर्वक अरणीमन्थनबाट प्रकट हुने अग्निदेवताले यस यज्ञलाई सफल गराऊन् ।

**परस्याऽ अधि संवतोऽ वराँ२ऽ अभ्यातर । यत्राहमस्मि ताँ२ऽ अव ॥७१॥**

हे अग्निदेवता ! तिमी शत्रुसेनाको सट्टा हाम्रो सेना विजयी बनाऊ । हामी जुन सेनासित हुन्छौं, त्यसलाई संरक्षण प्रदान गर ।

**परमस्याः परावतो रोहिदश्वऽइहा गहि । पुरीष्यः पुरुप्रियोग्ने त्वं तरा मृधः ॥७२॥**

उदाउँदा सूर्यको कान्तिरूपी रोहित नामका अश्वले सम्पन्न भएका हे अग्निदेवता ! वैभवशाली र अत्यन्त लोकप्रिय बनेका तिमी टाढाका स्थानबाट पनि यहाँ आऊ र लडाईंका मैदानमा शत्रुको संहार गरिसकेर त्यहाँबाट आएर पनि हाम्रो यज्ञ सफल बनाऊ ।

**यदग्ने कानि कानि चिदा ते दारूणि दध्मसि । सर्वं तदस्तु ते घृतं तज्जुषस्व यविष्ठ्य ॥७३॥**

हे सामर्थ्यवान् अग्निदेवता ! तिमीलाई समर्पित गरेका जुनसुकै दाउरा घिउको आहुतिझैं परम प्रिय होऊन् । ती सबैलाई तिमी अति प्रेमका साथ प्रसन्नतापूर्वक ग्रहण गर ।

**यदत्त्युपजिह्विका यद्वम्रो अतिसर्पति । सर्वं तदस्तु ते घृतम् तज्जुषस्व यविष्ठ्य ॥७४॥**

हे तरुण अग्निदेवता ! धमिराले सिध्याउने, धुल्याहाले खाने काठका समिधा पनि घिउझैं प्रिय होऊन् र तिनलाई पनि तिमी प्रेमपूर्वक सेवन गर ।

**अहरहरप्रयावं भरन्तोश्वायेव तिष्ठते घासमस्मै । रायस्पोषेण समिषा मदन्तोग्ने मा ते प्रतिवेशा रिषाम ॥७५॥**

हे अग्निदेवता ! तबेलामा रहेका घोडाहरूलाई नित्य नियमित रूपमा घाँस हालिएझैं तिम्रा आश्रयमा रहेका हामी याजकहरू यज्ञको आहारका लागि जम्मा गरेका समिधाहरूसँगै नित्य हविष्यान्न प्रदान गर्दछौं । हामी धनवैभव प्राप्त गरेर सुखी हुन सकौं, दुःखी हुनु नपरोस् ।

**नाभा पृथिव्याः समिधाने अग्नौ रायस्पोषाय बृहते हवामहे । इरम्मदं बृहदुक्थं यजत्रं जेतारमग्निं पृतनासु सासहिम् ॥७६॥**

पृथ्वीको नाभीकेन्द्रजस्तो यज्ञकुण्डमा प्रदीप्त हुने अवस्थामा, हविष्यान्नले सन्तुष्टि प्राप्त गर्ने, अत्यन्त प्रशंसनीय यज्ञाग्निलाई हामी आह्वान गर्दछौं । शत्रुलाई ह्वाकुलाले मिच्दै युद्धमा विजय प्राप्त गर्ने अग्निदेवबाट हामी महान् धनऐश्वर्य प्राप्त होस् भन्ने कामना गर्दछौं ।

**याः सेनाऽ अभीत्वरीराव्याधिनीरुगणाऽ उत । ये स्तेना ये च तस्करास्ताँस्ते अग्नेपि दधाम्यास्ये ॥७७॥**

हे अग्निदेवता ! आक्रमण गर्नका लागि तयार भएका शत्रुलाई, सजधजसहितका विरोधी सेनालाई र चोरडाकालाई हामी तिम्रा प्रज्वलित मुखमा हालिदिन्छौँ, त्यसो भएपछि तिम्रो प्रचण्ड तेजले विरोधी तत्त्वलाई विनाश गर्दछन् ।

**दंष्ट्राभ्यां मलिम्लूञ्जम्भ्यैस्तस्कराँ२ऽ उत । हनुभ्यांथ्ं स्तेनान् भगवस्ताँस्त्वां खाद सुखादितान् ॥७८॥**

हे ऐश्वर्यशाली अग्निदेवता ! दुष्कर्ममा लागेका दुष्टहरूलाई तिमी आफ्ना दाह्राले, दस्युलाई दाँतले र चोरलाई चिउँडाले थर्कमान गराऊ । दुःख दिने र सताउनेहरूलाई निर्मूल हुने गरी नष्ट गर र हामीलाई दुष्कर्मीहरूबाट मुक्ति देऊ । त्यसो भएपछि हामी निर्भयपूर्वक सत्कर्म गर्न सकौँ ।

**ये जनेषु मलिम्लवः स्तेनासस्तस्करा वने । ये कक्षेष्वघायवस्ताँस्ते दधामि जम्भयोः ॥७९॥**

हे अग्निदेवता ! हीन आचरण भएका, चोर, एकान्त वनमा घुम्ने गरेका तस्कर र बाक्लो मानिसको बस्तीमा रहने गरेका जनघाती हत्याराहरू सबैलाई तिम्रा दाह्रारूपी प्रचण्ड ज्वालामा हामी हाल्न सकौँ ।

**यो अस्मभ्यमरातीयाद्यश्च नो द्वेषते जनः । निन्दाद्यो अस्मान्धिप्साच्च सर्वं तं मस्मसा कुरु ॥८०॥**

हे अग्निदेवता ! हामीसित शत्रुको व्यवहार गर्ने मानिसहरू, हाम्रो रिसडाह गर्ने मानिसहरू, हाम्रो निन्दा गर्ने मानिसहरू र हाम्रो निर्भयतामा बाधा हाल्ने मानिसहरू वा तिनका दुर्गुणहरू सबैलाई निर्मूल हुने गरी नष्ट गराइदेऊ ।

**सथ्ंशितं मे ब्रह्म सथ्ंशितं वीर्यं बलम् । सथ्ंशितं क्षत्रं जिष्णु यस्याहमस्मि पुरोहितः ॥८१॥**

हे अग्निदेवता ! हामी पुरोहित र हाम्रा यजमानको ब्रह्मज्ञान, तेज र विजयशीलता तिम्रा प्रभावले क्षात्रबलले युक्त होस् ।

**उदेषां बाहू अतिरमुद्वर्चो अथो बलम् । क्षिणोमि ब्रह्मणाऽमित्रानुन्नयामि स्वाँ२ऽ अहम् ॥८२॥**

हे अग्निदेवता ! दुष्कर्मीहरूको बाहुबलका तुलनामा हाम्रो पराक्रम बढी होस्, उनका तेजको अपेक्षा हाम्रो ब्रह्मतेज अधिक होस् । ज्ञानको तेजले विरोधीहरूलाई समाप्त गर्न सकौँ, हामी आफन्तहरूको उन्नति गराउन सकौँ ।

**अन्नपतेन्नस्य नो देह्यनमीवस्य शुष्मिणः । प्रप्र दातारं तारिषऽऊर्जं नो धेहि द्विपदे चतुष्पदे ॥८३॥**

हे अन्नका स्वामी अग्निदेवता ! हामीलाई आरोग्यप्रद र पोषणयुक्त अन्न प्रदान गर । दानशील मानिसलाई उचित किसिमले पालनपोषण गर । हाम्रा पुत्रपौत्रादि र पशुका लागि पनि शक्तिवर्द्धक अन्न प्रदान गर ।

**॥ इति एकादशोऽध्यायः ॥**

॥एघारौँ अध्याय सकियो ॥

ॐ

भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।

# वाजसनेयि माध्यन्दिन शुक्ल

# यजुर्वेद – संहिता

## ॥अथ द्वादशोऽध्यायः॥

॥बाह्रौं अध्याय॥

**ऋषि–** वत्सप्री, कुत्स, श्यावाश्व, ध्रुव, शुनःशेप, त्रित, वामदेव, भालन्दन, विरूपाक्ष आङ्गिरस, तापस, वसिष्ठ, विरूप, दीर्घतमा, सोमाहुति, विश्वामित्र, देवश्रवा देववात भारत, प्रियमेध ऐन्द्र, जेता मधुच्छन्दा, गोतम, विश्वावसु, देवगन्धर्व, बुध, सौम्य, कुमारहारित, आथर्वण, भिषक्, बन्धु, हिरण्यगर्भ, पावकाग्नि, अवत्सार ।

**देवता–** रुक्म, अग्नि, सविता, गरुत्मान्, उखा, लिङ्गोक्त, वरुण, सूर्य, आपः, अग्नि, विश्वकर्मा, बहुदेवता, ऊष, सिकता, परिश्रित, इष्टका, लोकम्पृणा, इन्द्र, उखा, निर्ऋति, यजमान, भूति, सीर, सीता, अनडुत्, अप्, औषधि, कुः, आशीर्वाद, सोम ।

**छन्द–** भुरिक् पङ्क्ति, आर्षी त्रिष्टुप्, विराट् जगती, भुरिक् धृति, भुरिक् उत्कृति, निचृत् आर्षी त्रिष्टुप्, भुरिक् आर्षी अनुष्टुप्, आर्षी त्रिष्टुप्, निचृत् आर्षी गायत्री, निचृत् गायत्री, आर्षी अनुष्टुप्, विराट् आर्षी त्रिष्टुप्, भुरिक् आर्षी पङ्क्ति, भुरिक् जगती, विराट् त्रिष्टुप्, विराट् अनुष्टुप्, गायत्री, भुरिक् आर्षी उष्णिक्, निचृत् आर्षी अनुष्टुप्, निचृत् अनुष्टुप्, आर्ची पङ्क्ति, स्वराट् आर्षी त्रिष्टुप्, भुरिक् आर्षी त्रिष्टुप्, स्वराट् अनुष्टुप्, भुरिक् उष्णिक्, भुरिक् उपरिष्टात् बृहती, आर्षी पङ्क्ति, आर्षी जगती, त्रिष्टुप्, विराट् पङ्क्ति, भुरिक् आर्षी गायत्री, अनुष्टुप्, स्वराट् उष्णिक्, विराट् आर्षी अनुष्टुप्, विराट् बृहती, निचृत् उष्णिक्, भुरिक् गायत्री, निचृत् पङ्क्ति, निचृत् आर्षी पङ्क्ति, स्वराट् आर्षी पङ्क्ति उष्णिक् ।

**दृशानो रुक्मऽ उर्व्या व्यद्यौद्दुर्मर्षमायुः श्रिये रुचानः । अग्निरमृतो अभवद्वयोभिर्यदेनं द्यौरजनयत्सुरेताः ॥१॥**

समस्त पदार्थ प्रकाशित गर्ने तेजस्वी सूर्यदेव यस लोकमा सहज दर्शनीय भएर्छौं र विभिन्न प्रकारले धनऐश्वर्य बढाउँदै शोभायमान भएर्छौं अग्निदेव श्रेष्ठ, शक्तिसम्पन्न, अमृतस्वरूप, दुःखनाशक र आयुसंवर्द्धक हुन् । देवताले यिनलाई प्रकट गरेका हुन् ।

**नक्तोषासा समनसा विरूपे धापयेते शिशुमेकथं समीची । द्यावाक्षामा रुक्मो अन्तर्विभाति देवाऽ अग्निं धारयन्द्रविणोदाः ॥२॥**

बाबु र आमा एकै चित्त भएर जसरी आफ्ना सन्तानको पालनपोषण गर्दछन्, उसै गरी रात्रि र दिवस मानौं दुवैले एक चित्त भएर नै अग्निरूपी शिशुलाई बिहानबेलुकै हविले

पोषण गर्दछन् । त्यसो भएर नै उनी दिव्यलोक र भूलोकका भित्री भागमा सूर्यदेवजस्तै सुशोभित हुन्छन् । तिनै अग्निदेवतालाई ऐश्वर्यप्रदायक शक्तिहरूले धारण गरेका छन् ।

**विश्वा रूपाणि प्रति मुञ्चते कविः प्रासावीद्भद्रं द्विपदे चतुष्पदे । वि नाकमख्यत्सविता वरेण्योनु प्रयाणमुषसो वि राजति ॥३॥**

अत्यन्त मेधावी सवितादेव आफ्ना सबै रूप प्रकट गर्दछन् । उनी मानिस र पशुका कल्याणकारी हुन् । सबैले रुचाएका सवितादेव द्युलोकमा प्रकाश छर्दछन् । उषादेवी गएपछि यिनी प्रकट हुन्छन् ।

**सुपर्णोसि गरुत्माँस्त्रिवृत्ते शिरो गायत्रं चक्षुर्बृहद्रथन्तरे पक्षौ । स्तोमऽ आत्मा छन्दाᳬसि स्यङ्गानि यजूᳬषि नाम । साम ते तनूर्वामदेव्यं यज्ञायज्ञियं पुच्छं धिष्ण्याः शफाः । सुपर्णोसि गरुत्मान्दिवं गच्छ स्वः पत ॥४॥**

उकालोतर्फ लाग्ने हे महान् अग्निदेवता ! तिमी राम्रा पँखेटा हुने गरुड पक्षीजस्तै गतिशील छौ । त्रिवृत् नामको स्तोमशक्ति तिम्रो शिर र गायत्री छन्द तिम्रो नेत्र हो । दुई पँखेटाका रूपमा बृहत् र रथन्तर नामका सामहरू छन् भने यज्ञ तिम्रो अन्तरात्मा हो र सबै छन्दहरू तिम्रा शरीरका अङ्गहरू हुन्, त्यसो भएर नै तिम्रो नाम यजुष् भएको हो । वामदेव नामको साम तिम्रो देह, यज्ञायज्ञिय नामको साम तिम्रो पुच्छर र प्रज्ञामा रहने अग्नि तिम्रा नङ वा खुरका रूपमा छन् । हे अग्निदेवता ! तिमी गरुडभैँ दिव्यलोकतर्फ प्रस्थान गर र स्वर्गलोकमा पुग ।

**विष्णोः क्रमोसि सपत्नहा गायत्रं छन्दऽ आरोह पृथिवीमनु विक्रमस्व विष्णोः क्रमोस्यभिमातिहा त्रैष्टुभं छन्दऽ आरोहान्तरिक्षमनु विक्रमस्य विष्णोः क्रमोस्यरातीयतो हन्ता जागतं छन्दऽ आरोह दिवमनु विक्रमस्व विष्णोः क्रमोसि शत्रूयतो हन्तानुष्टभं छन्दऽ आरोह दिशोनु विक्रमस्व ॥५॥**

हे अग्निदेवता ! तिमी सर्वव्यापक विष्णुदेवताका शत्रुसंहारक पराक्रममा गायत्री छन्दका प्रभावले भूलोकभरि, त्रिष्टुप् छन्दमा आरोहण गरेर अन्तरिक्षमा, जगती छन्दमा आरोहित भएर स्वर्गलोकमा र अनुष्टुप् छन्दका प्रभावले सबै दिशामा विशेष पराक्रम देखाऊ । त्यसपछि सबै लोकका दुष्ट प्रवृत्तिहरूलाई समाप्त गर ।

**अक्रन्ददग्निः स्तनयन्निव द्यौः क्षामा रेरिहद्वीरुधः समञ्जन् । सद्यो जज्ञानो वि हीमिद्धो अख्यदा रोदसी भानुना भात्यन्तः ॥६॥**

हे अग्निदेवता ! तिमी आकाशमा मेघका बीचमा विद्युत् रूपमा चम्कन्छौ र गर्जना गर्दै पृथ्वी गुञ्जायमान गराउँछौ । प्राणरूपी पर्जन्यका रूपमा बोटबिरुवा अङ्कुरित गर्दछौ । तिमी चाँडै उत्पन्न र प्रज्वलित भएर सबैलाई प्रकाशित गर्दछौ । पृथ्वी र द्युलोकका माझमा विद्युत्का रूपमा सुशोभित हुने तिमी सबैका लागि स्तुत्य छौ ।

**अग्नेभ्यावर्त्तिन्नभि मा निवर्त्तस्वायुषा वर्चसा प्रजया धनेन । सन्या मेधया रय्या पोषेण ॥७॥**

सम्मुखमा प्रकाशित हुने हे अग्निदेवता ! तिमी दीर्घायु, तेज, सम्मान, श्रेष्ठ बुद्धि, स्वर्ण आदि आभूषण र शारीरिक पोषण आदिका रूपमा अभीष्ट लाभ प्रदान गर्दै हाम्रो अनुकूल होऊ ।

**अग्ने अङ्गिरः शतं ते सन्त्वावृतः सहस्रं तऽ उपावृतः । अधा पोषस्य पोषेण पुनर्नो नष्टमाकृधि पुनर्नो रयिमाकृधि ॥८॥**

हे अङ्गिराजस्तै दीप्तिमान् अग्नि ! तिमी सयौँ पटक हामीले आह्वान गर्दा आऊ । तिम्रो त्रिदावारी पनि यहाँबाट हजारौँ पटक हुन पाओस् । तिमी पोषण प्रदान गर्ने धन बढाउँदै, हाम्रो हराएको धन पुनः उपलब्ध गराउँदै हामीलाई फेरि पनि वैभवशाली बनाऊ ।

**पुनरूर्जा निवर्त्तस्व पुनरग्नऽ इषायुषा पुनर्नः पाह्यꣳ हसः ॥९॥**

हे अग्निदेवता ! तिमी आफ्ना प्रखर ऊर्जासँगै यहाँ उपस्थित होऊ । अन्न र आयु संवर्द्धन गराउनका लागि पुनः आऊ र पापबाट हामीलाई मुक्ति प्रदान गर ।

**सह रय्या निवर्त्तस्वाग्ने पिन्वस्व धारया । विश्वप्स्न्या विश्वतस्परि ॥१०॥**

हे अग्निदेवता ! तिमी धनसँगै आऊ र संसारको उपयोगका लागि श्रेष्ठ तथा पवित्र जलधाराले औषधि, वनस्पति आदिलाई अभिषिक्त गराऊ ।

**आ त्वाहार्षमन्तरभूर्ध्रुवस्तिष्ठाविचाचलिः । विशस्त्वा सर्वा वाञ्छन्तु मा त्वद्राष्ट्रमधिभ्रशत् ॥११॥**

हे अग्निदेवता ! सम्मानपूर्वक तिमीलाई ल्याएका छौँ । तिमी उखाका मध्य भागमा अविचलित भएर स्थिरतापूर्वक उपस्थित होऊ । सबै प्रजाहरूले तिम्रै कामना गरुन्, हाम्रो राष्ट्र तिम्रा तेजस्वितायुक्त गुणले कहिल्यै खाली हुन नपाओस् ।

**उदुत्तमं वरुण पाशमस्मदवाधमं वि मध्यमꣳ श्रथाय । अथा वयमादित्य व्रते तवानागसो अदितये स्याम ॥१२॥**

हे वरुणदेवता ! हामीलाई तीनै किसिमका तापरूपी बन्धनहरूबाट मुक्त गर । यी आधिदैविक, आधिभौतिक र आध्यात्मिक नामका तीन किसिमका पाशहरू हामीदेखि टाढा होऊन् । हाम्रा मध्य एवं अधोभागका बन्धनहरूबाट छुटाइदेऊ । हे सूर्यपुत्र ! पापबाट मुक्त भएर हामी तिम्रै कर्मफलका सिद्धान्तमा अनुशासित होऔँ । हाम्रो स्थिति दयनीय नहोस् ।

**अग्रे बृहन्नुषसामूर्ध्वो अस्थान्निर्जगन्वान् तमसो ज्योतिषागात् । अग्निर्भानुना रुशता स्वङ्गऽ आ जातो विश्वा सद्मान्यप्राः ॥१३॥**

बिहान सबैभन्दा पहिले अग्निदेव माथितिर मुख पारेझैँ प्रज्वलित र स्थित हुन्छन्, अन्धकार हटाएर तेजमय रूपमा अघि आउँछन् र उत्तम तेजले सबैतिर प्रकाश छर्दछन् ।

**हꣳसः शुचिषद्वसुरन्तरिक्षसद्धोता वेदिषदतिथिर्दुरोणसत् ।**
**नृषद्वरसदृतसद्व्योमसदब्जा गोजाऽ ऋतजाऽ अद्रिजाऽ ऋतम् बृहत् ॥१४॥**

चैतन्य रूपमा पवित्रतापूर्वक सर्वत्र विद्यमान, अन्तरिक्षमा वायुका रूपमा रहेका, सबैका लागि आश्रय बनेका, यज्ञवेदीमा देवताहरूलाई आह्वान गर्ने, यज्ञशालामा निवास गर्ने, सबैका लागि पूज्य, अतिथिका रूप, प्राणाग्निका रूपमा सबै मानिसमा रहेका, आकाशमा विद्युत्‌का रूपमा रहेका, जलमा बाडवाग्निका रूपमा रहेका, भूमिमा ज्वालामुखीका रूपमा समयसमयमा विस्फोट हुने गरेका, सत्य ज्ञानले सम्पन्न, ढुङ्गाबाट

झिल्कोका रूपमा निस्कने गरेका उनै अग्निदेवता नै हुन् । उनको यस्तो सर्वत्र व्यापक महिमा अत्यन्त प्रशंसनीय रहेको छ ।

**सीद त्वं मातुरस्याऽ उपस्थे विश्वान्यग्ने वयुनानि विद्वान् । मैनां तपसा मार्चिषाभि शोचीरन्तरस्याथं्, शुक्रज्योतिर्विभाहि ॥१५॥**

हे अग्निदेवता ! सम्पूर्ण कर्मका ज्ञानले युक्त भएर तिमी उखारूपी माताका काखमा स्थित होऊ । यसलाई आफ्ना तापरूपी ऊर्जाले सन्तप्त हुन नदेऊ र ज्वालाले नड़ढाऊ । यसका बीचमा अडिएर तिमी आफ्ना शीतल ज्योतिले प्रकाशित होऊ ।

**अन्तरग्ने रुचा त्वमुखायाः सदने स्वे । तस्यास्त्वथं् हरसा तपञ्जातवेदः शिवो भव ॥१६॥**

हे अग्निदेवता ! तिमी आफ्नै प्रकाशमान ज्योतिले यस उखाका मध्य भागमा आफ्नो आवास बनाएर प्रज्वलित होऊ । हे सम्पूर्ण ज्ञानले सम्पन्न अग्निदेवता ! तिमी आफ्ना ज्वालाले तेजस्वी हुँदै यस उखाको सबै किसिमले हित गर ।

**शिवो भूत्वा मह्यमग्ने अथो सीद शिवस्त्वम् । शिवाः कृत्वा दिशः सर्वाः स्वं योनिमिहासदः ॥१७॥**

हे अग्निदेवता ! तिमी हाम्रा लागि हितकारी भएर शान्तिपूर्वक यहाँ विराजमान होऊ । सम्पूर्ण दिशाहरूलाई कल्याण भावले युक्त गराऊ र उखाका काखमा उचित किसिमले विराजमान होऊ ।

**दिवस्परिं प्रथमं जज्ञे अग्निरस्मद् द्वितीयं परि जातवेदाः । तृतीयमप्सु नृमणाऽअजस्रमिन्धानऽ एनं जरत्ते स्वाधीः ॥१८॥**

सबैभन्दा पहिले अग्निदेव आकाशमण्डलमा विद्युतका रूपमा उत्पन्न भए, उनको दोस्रो जन्म जातवेदाका नामले हाम्रा बीच पार्थिव रूपले प्रकट भयो र तेस्रो बडवानलका रूपमा समुद्री जलमा उत्पन्न भए । मानिसका लागि कल्याणकारी अग्निदेव निरन्तर प्रदीप्त रहन्छन् । ध्यान गर्नमा कुशलहरूले उनै अग्निदेवताको प्रार्थना गर्दछन् ।

**विद्मा ते अग्ने त्रेधा त्रयाणि विद्मा ते धाम विभृता पुरुत्रा । विद्मा ते नाम परमं गुहा यद्विद्मा तमुत्सं यतऽ आजगन्थ ॥१९॥**

हे अग्निदेवता ! हामी तिम्रा तीनै किसिमका स्वरूप जान्दछौँ । अनेकौँ स्थानमा तिम्रो जुन स्थिति छ, हामी त्यससित पनि परिचित छौँ । तिम्रो जुन अति गोप्य र परम श्रेष्ठ नाम छ, हामी त्यससित पनि परिचित छौँ । तिम्रो उत्पन्न हुने स्थल जुन हो, त्यस कारणभूत स्थानसित पनि हामी परिचित छौँ ।

**समुद्रे त्वा नृमणाऽ अप्स्वन्तर्नृचक्षाऽ ईधे दिवो अग्नऽ ऊधन् । तृतीये त्वा रजसि तस्थिवाथं् समपामुपस्थे महिषा अवर्धन् ॥२०॥**

हे अग्निदेवता ! मनुष्यका कल्याणकारी वरुणदेवताले तिमीलाई समुद्री जलभित्र प्रज्वलित गरेका छन् । मानिसका निरीक्षक सूर्यदेव तिमीलाई दिव्य स्थानमा प्रज्वलित गर्छन् । तिमी आफ्नो तेस्रो स्थान मेघमण्डलमा वर्षा उत्पादन गर्ने विद्युत्का रूपमा छौ । मुख्य देवताका समूहले स्तुति गर्दै तिम्रो तेज बढाउँछन् ।

**अक्रन्ददग्निः स्तनयन्निव द्यौः क्षामा रेरिहद्वीरुधः समञ्जन् । सद्यो जज्ञानो वि हीमिद्धो अख्यदा रोदसी भानुना भात्यन्तः ॥२१॥**

द्युलोकमा मेघको जस्तै गर्जन गर्ने अग्निदेवताले पृथ्वीलाई आलोकित गर्दछन् । बोटबिरुवालाई अङ्कुरित गराउँदै सबैतिर व्याप्त हुन्छन् । चाँडै नै प्रकट भएर आफ्ना तेजस्विताले द्युलोक र भूलोकका मध्य भागमा प्रकाशमान हुन्छन् ।

**श्रीणामुदारो धरुणो रयीणां मनीषाणां प्रार्पणः सोमगोपाः । वसुः सूनुः सहसो अप्सु राजा वि भात्यग्रऽ उषसामिधानः ॥२२॥**

उदार सम्पत्तिशाली, ऐश्वर्य धारण गर्ने, मनीषीहरूका प्रेरक, सोमका संरक्षक, धन प्रदायक, बलका पुत्र, जलका स्वामी अग्निदेव उषाभन्दा अगाडि प्रज्वलित भएर शोभायमान हुन्छन् ।

**विश्वस्य केतुर्भुवनस्य गर्भऽ आ रोदसी अपृणाज्जायमानः । वीडुं चिदद्रिमभिनत्परायञ्जना यदग्निमयजन्त पञ्च ॥२३॥**

सम्पूर्ण विश्वका प्रकाशक, पानीबाट उत्पन्न अग्निदेव प्रकट हुँदाखेरि नै द्युलोक र भूलोक व्याप्त गर्दछन् । पाँचै वर्णका मानिसले अग्निदेवताको अर्चना गर्दा उनी राम्ररी बलियो पर्वतजस्तै बादल भेदन गरेर जलको वर्षा गराउँछन् ।

**उशिक्पावको अरतिः सुमेधा मर्तेष्वग्निरमृतो नि धायि । इयर्ति धूममरुषं भरिभ्रदुच्छुक्रेण शोचिषा द्यामिनक्षन् ॥२४॥**

ज्योतिष्मान् देखिएका अग्निदेवताको दीप्ति महान् छ । उनी अदम्य प्राणयुक्त प्रकाशले शोभायमान हुन्छन् । उनी अन्न र वनस्पति पाएर अमर हुन्छन् । अग्निको जन्मदाता र द्युलोकको उत्पादक शक्ति विचित्र रमाइलो छ ।

**दृशानो रुक्मऽ उर्व्या व्यद्यौद्दुर्मर्षमायुः श्रिये रुचानः । अग्निरमृतो अभवद्वयोभिर्यदेनं द्यौर्जनयत्सुरेताः ॥२५॥**

समस्त पदार्थ प्रकाशित गर्ने तेजस्वी सूर्यदेव यस लोकमा सहज दर्शनीय भएझैं र विभिन्न प्रकारले धनऐश्वर्य बढाउँदै शोभायमान भएझैं अग्निदेव श्रेष्ठ, शक्तिसम्पन्न, अमृतस्वरूप, दुःखनाशक र आयुसंवर्द्धक हुन् । देवताले यिनलाई प्रकट गरेका हुन् ।

**यस्ते अद्य कृणवद्भद्रशोचेऽपूपं देव घृतवन्तमग्ने । प्र तं नय प्रतरं वस्यो अच्छाभि सुम्नं देवभक्तं यविष्ठ ॥२६॥**

हे मङ्गलमय ज्योतिस्वरूप अग्निदेवता ! तिमीलाई घिउयुक्त पुरोडाश समर्पित गर्ने श्रेष्ठ याज्ञिकलाई तिमी श्रेष्ठ ऐश्वर्य प्रदान गर । देवताका उपासक र हविष्य समर्पित गर्ने साधकलाई सबै किसिमका सुखसौभाग्यतर्फ लैजाऊ ।

**आ तं भज सौश्रवसेष्वग्नऽ उक्थऽ उक्थऽ आ भज शस्यमाने । प्रियः सूर्ये प्रियो अग्ना भवात्युज्जातेन भिनदद्दुज्जनित्वैः ॥२७॥**

हे अग्निदेवता ! श्रेष्ठ अन्नले शास्त्रोक्त क्रियाकलाप सम्पादित गर्ने यजमानलाई श्रेष्ठ अभीष्ट फल प्रदान गर्दछौ । स्तुतियोग्य तिमी प्रत्येक स्तोत्रमा उनीहरूलाई अभीष्ट

फल प्रदान गर । स्तुतिकर्ता यजमान सूर्य र अग्निदेवताका प्रियपात्र होऊन् । पुत्रपौत्रादि सन्तानका साथै उनीहरूका शत्रु संहार गरिदेऊ ।

**त्वामग्ने यजमानाऽ अनु द्यून् विश्वा वसु दधिरे वार्याणि । त्वया सह द्रविणमिच्छमाना व्रजं गोमन्तमुशिजो विवव्रुः ॥२८॥**

हे अग्निदेवता ! तिम्रा साधक नित्य सबै किसिमका श्रेष्ठतम पूजन सामग्री तिम्रा निमित्त समर्पित गर्छन् । तिमीसित गाईरूपी धनको आकाङ्क्षाले प्रेरित देवताजस्ता ज्ञानीले गाईले परिपूर्ण गोठको ढोका तिम्रा लागि खोलिदिएका छन् ।

**अस्ताव्यग्निर्नराथं॑ सुशेवो वैश्वानरऽ ऋषिभिः सोमगोपाः । अद्वेषे द्यावापृथिवी हुवेम देवा धत्त रयिमस्मे सुवीरम् ॥२९॥**

मानिसहरूमा अग्निदेवताको सुन्दर आभा स्थित छ र सोम संरक्षक पनि उनै हुन् । उनै अग्निदेवताको स्तुति ऋषिहरूले गर्छन् । विद्वेषको भावनारहित द्यावापृथिवीलाई हामी आह्वान गर्दछौं । हे देवता हो ! हामीलाई श्रेष्ठ वीर सन्तानयुक्त ऐश्वर्य प्रदान गर ।

**समिधाग्निं दुवस्यत घृतैर्बोधयतातिथिम् । आस्मिन् हव्या जुहोतन ॥३०॥**

हे ऋत्विक् हो ! अतिथिजस्तै अग्निदेवतालाई समिधाले सेवा गर । घिउका रूपमा श्रेष्ठ आहुति समर्पित गर ।

**उदु त्वा विश्वे देवाऽ अग्ने भरन्तु चित्तिभिः । स नो भव शिवस्त्वथं॑ सुप्रतिको विभावसुः ॥३१॥**

हे अग्निदेवता ! तिमीलाई सबै देवत्व संवर्द्धक शक्तिहरूले श्रेष्ठ वृत्तिद्वारा परिपोषित गरुन् । तिमी श्रेष्ठ ज्वालाले सुशोभित र प्रचुर वैभवले युक्त भएर हाम्रा लागि सबै किसिमले कल्याणकारी होऊ ।

**प्रेदग्ने ज्योतिष्मान् याहिं शिवेभिरर्चिभिष्ट्वम् । बृहद्भिर्भानुभिर्भासन्मा हिथं॑ सीस्तन्वा प्रजाः ॥३२॥**

हे अग्निदेवता ! तिमी कल्याणकारी तेजस्वी ज्वालाले युक्त भएर यहाँ आऊ र व्यापक रश्मिहरूले प्रकाशित भएर हाम्रा सन्तान र प्रजाहरूलाई प्रत्येक आपद्‌बाट जोगाऊ ।

**अक्रन्ददग्निः स्तनयन्निव द्यौः क्षामा रेरिहद्वीरुधः समञ्जन् । सद्यो जज्ञानो वि हीमिद्धो अख्यदा रोदसी भानुना भात्यन्तः ॥३३॥**

द्युलोकमा मेघको जस्तै गर्जन गर्ने अग्निदेवताले पृथ्वीलाई आलोकित गर्दछन् । बोटबिरुवालाई अङ्कुरित गराउँदै सबैतिर व्याप्त हुन्छन् । चाँडै नै प्रकट भएर आफ्ना तेजस्विताले द्युलोक र भूलोकका मध्य भागमा प्रकाशमान हुन्छन् ।

**प्र प्रायमग्निर्भरतस्य शृण्वे वि यत्सूर्यो न रोचते बृहद्भाः । अभि यः पूरुं पृतनासु तस्थौ दिदाय दैव्यो अतिथिः शिवो नः ॥३४॥**

हविष्यान्न प्रदान गर्ने याजकको निमन्त्रणा स्वीकार गर्ने देवताहरूका अतिथि अग्निदेव अति तेजस्वी भएर सूर्यदेवजत्तिकै प्रकाश फैलाउँछन् । त्यस्ता अग्निदेवता युद्धमा दुष्प्रवृत्तिरूपी राक्षस शत्रुका सामु उपस्थित हुन्छन् र हाम्रा लागि कल्याणकारी भावनाले युक्त भएर प्रज्वलित भइदिन्छन् ।

**आपो देवीः प्रतिगृभ्णीत भस्मैतत्स्योने कृणुध्वथ्ंऽ सुरभाऽ उ लोके । तस्मै नमन्तां जनयः सुपत्नीर्मातेव पुत्रं बिभृताप्स्वेनत् ॥३५॥**

हे दिव्यताले परिपूर्ण जलधाराहरू हो ! तिमीहरू भस्म ग्रहण गरेर उपयुक्त, श्रेष्ठ, सुगन्धित स्थानमा राखिदेओ । श्रेष्ठ गुणले सम्पन्न स्त्री पतिसामु विनम्रतापूर्वक झुकेझैँ अग्निदेवताका सामु तिमी झुकिदेऊ । आमाले आफ्ना छोराछोरीलाई अँगालोमा लिएझैँ तिमीहरू यो भस्म धारण गर ।

**अप्स्वग्ने सधिष्टव सौषधीरनु रुध्यसे । गर्भे सञ्जायसे पुनः ॥३६॥**

हे अग्निदेवता ! तिमी जलमा प्रवेश गर्दै र औषधिलाई स्थिरता प्रदान गर्दै उनैका बीचबाट उत्पन्न हुन्छौ ।

**गर्भो अस्योषधीनां गर्भो वनस्पतीनाम् । गर्भो विश्वस्य भूतस्याग्ने गर्भो अपामसि ॥३७॥**

हे अग्निदेवता !तिमी औषधि, वनस्पति, सम्पूर्ण प्राणी र जललाई गर्भमा अड्याएका छौ र ती सबैको उत्पत्तिका माध्यम तिमी नै हौ ।

**प्रसद्य भस्मना योनिमपश्च पृथिवीमग्ने । सथ्ंऽ सृज्य मातृभिष्ट्वं ज्योतिष्मान् पुनरा सदः ॥३८॥**

हे अग्निदेवता ! तिमी भस्मका रूपमा जल र पृथ्वीमा अडिएका छौ । माताका रूपमा रहेका जलले अभिषिक्त भएर तेजस्विताले परिपूर्ण हुँदै यज्ञमा फेरि पनि उपस्थित हुन्छौ ।

**पुनरासद्य सदनमपश्च पृथिवीमग्ने । शेषे मातुर्यथोपस्थेन्तरस्याथ्ंऽ शिवतमः ॥३९॥**

हे अग्निदेवता ! तिमी अत्यन्त मङ्गलमय भएकाले जल र भूमिका स्थानहरूलाई प्राप्त गर्दछौ । त्यसपछि माताका काखमा सुतेको बालकझैँ भएर उखाका गर्भस्थलरूपी मध्य भागमा विश्राम गर्दछौ ।

**पुनरूर्जा निवर्त्तस्व पुनरग्नऽ इषायुषा । पुनर्नः पाह्यथ्ंऽ हसः ॥४०॥**

हे अग्निदेवता ! तिमी आफ्ना प्रखर ऊर्जासँगै यहाँ उपस्थित होऊ । अन्न र आयु संवर्द्धन गराउनका लागि पुनः आऊ र पापबाट हामीलाई मुक्ति प्रदान गर ।

**सह रय्या निवर्त्तस्वाग्ने पिन्वस्व धारया । विश्वप्स्न्या विश्वतस्परि ॥४१॥**

हे अग्निदेवता ! तिमी धनसँगै आऊ र संसारको उपयोगका लागि श्रेष्ठ तथा पवित्र जलधाराले औषधि, वनस्पति आदिलाई अभिषिक्त गराऊ ।

**बोधा मे अस्य वचसो यविष्ठ मथ्ंऽहिष्ठस्य प्रभृतस्य स्वधावः । पीयति त्वो अनु त्वो गृणाति वन्दारुस्टे तन्वं वन्दे अग्ने ॥४२॥**

सुहाउँदो तरुण रूप भएका, वैभवशाली हे अग्निदेवता ! हामीले बारम्बार गरेको महिमायुक्त निवेदन तिमी स्वीकार गर । तिम्रा कोही निन्दक छन् भने कोही प्रशंसक छन् । हामी स्तोताहरू स्वाभाविक रूपमा तिम्रा प्रज्वलित ज्योतिलाई वन्दना गर्दछौँ ।

**स बोधि सूरिर्मघवा वसुपते वसुदावन् । युयोध्यस्मद् द्वेषाꣳसि विश्वकर्मणे स्वाहा ॥४३॥**

हे ऐश्वर्यप्रदाता धनाधिपति अग्निदेवता ! तिमी ऐश्वर्यवान् तथा ज्ञानवान् हुनाले हाम्रो कामना बुझेर हामीमाथि डाह गर्ने हाम्रा शत्रु पर धपाऊ । तिमी विश्वका सम्पूर्ण क्रियाकलाप उत्तम किसिमले सम्पादन गर्दछौ, हाम्रो यो आहुति तिमीलाई नै समर्पित छ ।

**पुनस्त्वादित्या रुद्रा वसवः समिन्धतां पुनर्ब्रह्माणो वसुनीथ यज्ञैः । घृतेन त्वं तन्वं वर्धयस्व सत्याः सन्तु यजमानस्य कामाः ॥४४॥**

हे अग्निदेवता ! ऐश्वर्यका निम्ति आदित्यगण, रुद्रगण र वसुगणले तिमीलाई फेरि पनि प्रज्वलित गरुन् । याजकहरू यज्ञकर्म गर्दै फेरि पनि तिमीलाई प्रदीप्त गरुन् र तिमी आज्यको आहुतिले आफ्नो ज्योतिरूपी शरीरलाई संवर्द्धित गराऊ । तिम्रा संवर्द्धनले नै याजकको अभीष्ट लाभ हुन सकोस् ।

**अपेत वीत वि च सर्पतातो येत्र स्थ पुराणा ये च नूतनाः । अदाद्यमोवसानं पृथिव्याऽ अक्रन्निमं पितरो लोकमस्मै ॥४५॥**

हे यमदूतहरू हो ! तिमीहरू नयाँ वा पुराना जेजस्ता स्थितिमा भए पनि यस यज्ञस्थलभन्दा धेरै टाढा जाओ । यो स्थान र यहाँका वस्तु यजमानका लागि भनेर यमदेवताले निर्धारित गरिदिएका हुन् । त्यसैले तिमीहरू यो ठाउँ छोडेर अन्यत्र अगाडि जाओ ।

**संज्ञानमसि कामधरणं मयि ते कामधरणं भूयात् । अग्नेर्भस्मास्यग्नेः पुरीषमसि चित स्थ परिचितऽ ऊर्ध्वचितः श्रयध्वम् ॥४६॥**

हे उखा ! यज्ञका कर्मद्वारा तिमी उत्तम ज्ञान प्राप्त गर्दछौ । त्यसैले तिम्रो ज्ञान आर्जनको शक्ति र सामर्थ्य हामीलाई पनि उपलब्ध होस् । तिमी अग्निदेवताका प्रकाशक वा भासक रूप हुनाले भस्म रूप पनि हौ । तिमी पृथ्वीमा फैलेकाले सबैतिर व्याप्त हुन पुगेका छौ । त्यसैले यस गार्हस्पत्य अग्निको स्थान पनि तिमी ग्रहण गर ।

**अयꣳसो अग्निर्यस्मिन्त्सोममिन्द्रः सुतं दधे जठरे वावशानः । सहस्रियं वाजमत्यं न सप्तिꣳ ससवान्त्सन्त्स्तूयसे जातवेदः ॥४७॥**

इन्द्रदेव इच्छायुक्त भएर हजारौँका उपयोगमा आउन योग्य, आनन्ददायक र सन्तुष्टिप्रद सोमरस पान गरेर पेटमा पुऱ्याउने माध्यम भनेका यिनै अग्निदेवता हुन् । हे सर्वज्ञानले सम्पन्न अग्निदेवता ! यस किसिमको सोमयुक्त आहुति ग्रहण गर्दै तिमी ऋत्विक्हरूले गरेको स्तुति प्राप्त गर्दछौ ।

**अग्ने यत्ते दिवि वर्चः पृथिव्यां यदोषधीष्वप्स्वा यजत्र । येनान्तरिक्षमुर्वाततन्थ त्वेषः स भानुरर्णवो नृचक्षाः ॥४८॥**

हे यज्ञरूपी अग्निदेवता ! तिम्रा तेजले स्वर्गलोक ढाकेको छ । पृथ्वीमा त्यो तेज औषधिमा छ र विद्युत्का रूपले जलमा व्याप्त भएर अन्तरिक्षलोक ढाकेको छ । हे सर्वत्र गतिमान्, संसारलाई उज्यालो दिने अग्निदेवता ! तिम्रा उसै दिव्य तेजका कारण मानिसले सबै राम्रा र नराम्रा काम देख्छन् ।

**अग्ने दिवो अर्णमच्छा जिगास्यच्छा देवाँ२ऽ ऊचिषे धिष्ण्या ये । या रोचने परस्तात् सूर्यस्य याश्चावस्तादुपतिष्ठन्तऽ आपः ॥४९॥**

हे अग्निदेवता ! दिव्यलोकको अमृतरूपी जल तिमी विशेष ढङ्गले धारण गर्दछौ । बुद्धि प्रेरित गर्ने प्राणरूपी देवताका अगाडि तिमी गतिशील छौ । प्रकाशमान सूर्यमण्डलमा स्थित सूर्यका अगाडिको जल यसका तल छ । सबै जल तिमीमा विराजमान होस् ।

**पुरीष्यासो अग्नयः प्रावणेभिः सजोषसः । जुषन्तां यज्ञमद्रुहोनमीवाऽ इषो महीः ॥५०॥**

प्रजाको पालन गर्ने, समान विचार भएकाहरूमा स्नेहयुक्त रहने, द्रोहको भावनारहित अग्निले यज्ञमा आरोग्यप्रद वनौषधिले युक्त हविष्य पर्याप्त मात्रामा ग्रहण गरून् ।

**इडामग्ने पुरुदर्ठ॑सर्ठ॑ सनिं गोः शश्वत्तमर्ठ॑ हवमानाय साध । स्यान्नः सूनुस्तनयो विजावाग्ने सा ते सुमतिर्भूत्वस्मे ॥५१॥**

हे अग्निदेवता ! यज्ञ आदि कार्यका लागि, अनेकौं सत्कर्मका लागि र गाईको स्याहारका लागि उचित भूमि हामीलाई प्रदान गर । हाम्रा पुत्रले सन्तान बढाऊन् । तिम्रो सद्बुद्धि हामीलाई पनि प्राप्त होस् ।

**अयं ते योनिर्ऋत्वियो यतो जातो अरोचथाः । तं जानन्नग्नेऽ आ रोहाथा नो वर्धया रयिम् ॥५२॥**

हे अग्निदेवता ! तिमी यिनै अरणीका कारण सुन्दर रूपमा उत्पन्न भयौ । आफ्नो त्यो रहस्य जानेर तिमी त्यसै मूलमा प्रतिष्ठित होऊ र हाम्रो स्तुति बढाइदेऊ । मिलाउनुपन

**चिदसि तया देवतयाङ्गिरस्वद् ध्रुवा सीद । परिचिदसि तया देवतयाङ्गिरस्वद् ध्रुवा सीद ॥५३॥**

हे इष्टकाहरू हो ! तिमीहरू सुखका साधन जुटाइदिने हौ । वाणीका देवताले प्राणलाई सञ्चार गराएझैं तिमीहरू निर्धारित स्थानमा विराजमान होओ । तिमीहरू सबैतिरबाट आआफ्ना स्थानमा रहिदेओ । सबै तिरबाट साधनहरूलाई एकत्र गर्ने भएर वाणीका देवताले अङ्गमा प्राणलाई सञ्चार गराएझैं तिमीहरू आआफ्ना उपयुक्त स्थानमा विराजमान भइराख ।

**लोकं पृण छिद्रं पृणाथो सीद ध्रुवा त्वम् । इन्द्राग्नी त्वा बृहस्पतिरस्मिन् योनावसीषदन् ॥५४॥**

हे इष्टकाहरू हो ! तिमीहरू गार्हपत्यको चयन हुने स्थानमा रिक्त स्थानलाई पूरा गराओ, छिँडहरू टाल र यहाँ बलियो रूपमा नै स्थापित होओ । इन्द्रदेव, अग्निदेव र बृहस्पतिदेवताले यो स्थान तिमीहरूकै लागि रोजिदिएका हुन् ।

**ताऽ अस्य सूददोहसः सोमर्ठ॑ श्रीणन्ति पृश्नयः । जन्मन्देवानां विशस्त्रिष्वा रोचने दिवः ॥५५॥**

देवलोकमा रहेका विभिन्न किसिमका अन्नलाई प्राणपर्जन्यले युक्त गराएर सूर्योदयका समयमा जलप्रवाहले स्वर्ग, अन्तरिक्ष र पृथ्वी यी तीनै लोकका सबै ठाउँमा यज्ञको श्रेष्ठ विधानअनुसार परिपूर्ण हुने गरी पुऱ्याउँछन् ।

**इन्द्रं विश्वाऽ अवीवृधन्त्समुद्रव्यचसं गिरः । रथीतमꣳ रथीनां वाजानाꣳ सत्पतिं पतिम् ॥५६॥**

समुद्रजस्तै व्यापक, रथीहरूमा महानतम, अन्नका स्वामी र सत्प्रवृत्ति भएका इन्द्रलाई सबै स्तुतिले उन्नतिशील गराउँछन् ।

**समितꣳ सङ्कल्पेथाꣳ संप्रियौ रोचिष्णू सुमनस्यमानौ । इषमूर्जमभि संवसानौ ॥५७॥**

हे अग्निदेवता ! तिमी आपसी प्रेम भावनाका प्रेरक, सुनौलो कान्तिले युक्त र पारस्परिक सामूहिक विचारधाराका प्रेरक हौ । अन्न, घिउ आदिले युक्त यो हविष्यान्न ग्रहण गर र हामीलाई उपयुक्त हुने यज्ञरूपी श्रेष्ठ कार्यलाई सफल बनाइदेऊ ।

**सं वां मनाꣳसि सं व्रता समु चित्तान्याकरम् । अग्ने पुरीष्याधिपा भव त्वं नऽइषमूर्जं यजमानाय धेहि ॥५८॥**

हे अग्निदेवता ! हामी तिम्रो कार्य, विचार र भावनालाई संयुक्त गर्दछौं । हे अग्निदेवता ! तिमी नै हाम्रा अधीश्वर हौ, अतः पोषणशक्तिले युक्त अन्न यजमानको कल्याणका लागि प्रदान गर ।

**अग्ने त्वं पुरीष्यो रयिमान् पुष्टिमाँ२ऽ असि । शिवाः कृत्वा दिशः सर्वाः स्वं योनिमिहासदः ॥५९॥**

सबैको भलो गर्ने हे वैभवशाली अग्निदेवता ! तिमी सबै प्राणीलाई पोषण गर्दछौ । हाम्रा लागि सबै दिशाहरू नै मङ्गलमय गराउँदै यहाँ आऊ र आफ्ना स्थानमा बस ।

**भवतन्नः समनसौ सचेतसावरेपसौ । मा यज्ञꣳ हिꣳसिष्ट मा यज्ञपतिं जातवेदसौ शिवौ भवतमद्य नः ॥६०॥**

एकाग्र मन भएका, सद्भावयुक्त र नसुस्ताउने हे अग्निदेवता ! हाम्रा अपराधहरूमा नरिसाएर हाम्रो यज्ञ तिमी नष्ट हुन नदेऊ । यजमानको नाश हुन पनि नदेऊ, उनको रक्षा गर । आजको दिन हामी सबैका लागि कल्याणप्रद र शुभ होस् ।

**मातेव पुत्रं पृथिवी पुरीष्यमग्निꣳ स्वे योनावभारुखा । तां विश्वैर्देवैर्ऋतुभिः संविदानः प्रजापतिर्विश्वकर्मा वि मुञ्चतु ॥६१॥**

पृथ्वीबाट माटो झिकेर बनाइएको उखा प्राणीहरूको कल्याण गर्ने अग्निलाई आफूभित्र आमाले बच्चालाई बोकेझैं बोकिरहेको छ । सबै देवता र ऋतुहरूको एकताको भावले प्रेरित भएको उखालाई सृष्टिका स्रष्टा प्रजापति विश्वकर्माले पाशबाट मुक्त गराऊन् ।

**असुन्वन्तमयजमानमिच्छ स्तेनस्येत्यामन्विहि तस्करस्य । अन्यमस्मदिच्छ सा तऽइत्या नमो देवि निर्ऋते तुभ्यमस्तु ॥६२॥**

हे दुष्ट नाश गर्नमा समर्थ निर्ऋति शक्ति ! तिमी यज्ञकर्मबिनाका र धर्मकार्य नभएका पुरुषका निकटमा जाऊ र तिनलाई नियन्त्रण गर । तिमीप्रति हाम्रो इच्छा यस्तै छ । हे देवी ! तिमीलाई हाम्रो नमस्कार छ ।

**नमः सु ते निर्ऋते तिग्मतेजोऽयस्मयं विचृता बन्धमेतम् । यमेन त्वं यम्या संविदानोत्तमे नाके अधि रोहयैनम् ॥६३॥**

हे निर्ऋति ! तीक्ष्ण तेजस्वितायुक्त तिम्रा शक्तिलाई हाम्रो नमस्कार छ । तिमी फलामझैं बलिष्ठ भएर हामीलाई जन्ममरणरूपी फन्दाबाट जोगाऊ । त्यसपछि अग्नि र भूमिसँग एकमतो हुन सक्ने यी यजमानलाई श्रेष्ठ स्वर्गलोकमा विराजमान गराऊ ।

**यस्यास्ते घोरऽआसञ्जुहोम्योषां बन्धानामवसर्जनाय । यां त्वा जनो भूमिरिति प्रमन्दते निर्ऋतिं त्वाहं परिवेद विश्वतः ॥६४॥**

हे क्रूर स्वभावकी निर्ऋति देवी ! यी यजमानहरूको पापरूपी कृत्य नाश गर्नका लागि तिम्रा मुखमा हामी आहुति समर्पित गर्दछौं । हामी साधारण ज्ञानबुद्धिका मानिसहरू तिमीलाई हे भूमि भनेर पुकार्दछौं र सबै किसिमका पापबाट मुक्त गराउने भनेर तिमीलाई नै हामीले मानेका छौं ।

**यं ते देवी निर्ऋतिराबबन्ध पाशं ग्रीवास्वविचृत्यम् । तं ते विष्याम्यायुषो न मध्यादथैतं पितुमद्धि प्रसूतः । नमो भूत्यै येदं चकार ॥६५॥**

हे यजमानहरू हो ! पापकी देवीले तिमीहरूलाई बलियो पाशले घाँटीमा बाँधेकी थिइन् । अग्निका बीचमा निर्ऋति देवी प्रसन्न हुनाले त्यो पाश उनैले हटाइदिइन् । पाशबाट फुक्का गराएपछि अब यो पोषक अन्न तिमी ग्रहण गर । जुन देवीका कृपाले यो कार्य सम्पन्न भयो, ती ऐश्वर्यशालिनी देवीलाई हामी नमस्कार गर्दछौं ।

**निवेशनः सङ्गमनो वसूनां विश्वा रूपाभिचष्टे शचीभिः । देवऽइव सविता सत्यधर्मेन्द्रो न तस्थौ समरे पथीनाम् ॥६६॥**

यजमानलाई आआफ्ना थान्कामा स्थिर राख्ने, धनऐश्वर्य प्रदान गर्ने, सत्य धर्मको पालन गर्ने यी अग्निदेव आफ्ना कर्मले आफ्ना सबै रूपहरूलाई प्रकट गर्दछन् । सवितादेवझैं प्रकाशित भएर इन्द्रदेवझैं उनी पनि सङ्ग्राममा स्थिर रहन्छन् ।

**सीरा युञ्जन्ति कवयो युगा वितन्वते पृथक् । धीरा देवेषु सुम्नया ॥६७॥**

द्रष्टाहरू हलो नार्दछन् । समयअनुसार विभिन्न किसिमले जुवा तयार गर्दछन् । बुद्धिले सम्पन्न व्यक्ति देवताका लागि श्रेष्ठ मनले स्तुति गर्दछन् ।

**युनक्त सीरा वि युगा तनुध्वं कृते योनौ वपतेह बीजम् । गिरा च श्रुष्टिः सभरा असन्नो नेदीयऽ इत्सृण्यः पक्वमेयात् ॥६८॥**

हे ऋत्विक् हो ! हलो आदि खेतीका हतियार व्यवस्थित गरेर गोरुका काँधमा जुवा राखेर खेत जोत । तयार गरिएका खेतमा बिउ छर र कृषिविज्ञानअन्तर्गत बालीका अनेकौं उत्तम प्रजाति विकास गर । चाँडै काट्न सकिने पाकेको अन्न प्राप्त होस् ।

**शुनथ्ं सु फाला वि कृषन्तु भूमिथ्ं शुनं कीनाशाऽ अभि यन्तु वाहैः । शुनासीरा हविषा तोशमाना सुपिप्पलाऽ ओषधीः कर्तनास्मे ॥६९॥**

हलाको तल्लो भागमा लगाइएको फलामे फाली राम्ररी खेत जोतोस् र किसान गोरुका पछि लागेर सजिलैसित हिँडोस् । हे वायु र सूर्यदेव हो ! तिमीहरू दुवै हविष्यले प्रसन्न भएर पृथ्वीलाई जलले सिञ्चित गरीकन यी औषधिलाई असल फलयुक्त गराओ ।

**घृतेन सीता मधुना समंज्यतां विश्वैर्देवैरनुमता मरुद्भिः । ऊर्जस्वती पयसा पिन्वमानास्मान्त्सीते पयसाभ्याववृत्स्व ॥७०॥**

सबै देवता र मरुत्गणले स्वीकार गरेको हलाको फाली मधुर घिउ आदिले सेचन गरियोस । हे हलामा गाँसिएका फाली ! तिमी अन्नले युक्त भएर दुध, घिउ आदिले सबै दिशालाई समृद्ध गराउँदै हामीलाई दहीदुध आदि पौष्टिक पदार्थले समृद्ध गराऊ ।

**लाङ्गलं पवीरवत्सुशेवꣳ सोमपित्सरु । तदुद्वपति गामविं प्रफर्व्यं च पीवरीं प्रस्थावद्रथवाहणम् ॥७१॥**

पृथ्वीलाई खनजोत गर्ने, सोमको रक्षा गर्ने, फाली गाँसिएको यो हलो ज्यादै हितकारी छ । यसैले भेडाबाख्रा, गाई र रथ तान्ने घोडाहरू बलिया बनाएर हामीलाई प्रदान गर्दछ ।

**कामं कामदुघे धुक्ष्व मित्राय वरुणाय च । इन्द्रायाश्विभ्यां पूष्णे प्रजाभ्यऽ ओषधिभ्यः ॥७२॥**

सबै खालका कामनाहरू पूरा गराउने हे हला ! तिमी मित्र, वरुण, इन्द्र, अश्विनीकुमरा र पूषा आदि देवताहरू र समस्त प्रजाहरूका लागि उपयोगी र श्रेष्ठ औषधिका साथै रोजेको भोग्य सामग्री हामीलाई उपलब्ध गराऊ ।

**विमुच्यध्वमघ्न्या देवयानाऽ अगन्म तमसस्पारमस्य । ज्योतिरापाम ॥७३॥**

कृषिको कर्म परिश्रमपूर्वक गर्दै देवत्वको मार्गतिर प्रेरित गर्ने हे मानिसहरू हो ! यस संसारमा वध गर्न नहुने गोरु आदि पशुका सहायताले तिमीहरू संसारको सुव्यवस्था चलाउनका लागि कृषिको कार्य निरन्तर सम्पन्न गरिराख । तिमीहरूकै कृपाले हामी भोकतिर्खारूपी दुःखहरूबाट मुक्ति पाउन सकौँ र ज्योतिरूप यज्ञकर्मलाई प्राप्त गर्न सकौँ ।

**सजूरब्दो अयवोभिः सजूरुषाऽ अरुणीभिः । सजोषसावश्विनादꣳसोभिः सजूः सूरऽ एतशेन सजूर्वैश्वानरऽ इडया घृतेन स्वाहा ॥७४॥**

महिना, दिन, आदि अवयवहरूमा विशेष प्रीति गर्ने जल प्रदाता संवत्सरका लागि, अरूण रश्मिसित प्रीति गर्ने उषाका लागि, चिकित्सकीय कर्मसित प्रीति गर्ने अश्विनीकुमारहरूका लागि, अश्वसित प्रीति गर्ने सूर्यदेव र घिउ आदि हविष्यसित प्रीति गर्ने अग्निदेवताका लागि यो आहुति समर्पित गरिएको छ ।

**याऽ ओषधीः पूर्वा जाता देवेभ्यस्त्रियुगं पुरा । मनै नु बभ्रूणामहꣳ शतं धामानि सप्त च ॥७५॥**

सृष्टिका प्रारम्भमा देवताले उत्पन्न गरेका औषधि वसन्त, वर्षा र शरद् यी तीन ऋतुमा पाकेर पहेँला भए । ती औषधिका एक सय सात ठाउँका विषयमा हामीलाई थाहा छ ।

**शतं वो अम्ब धामानि सहस्रमुत वो रुहः । अधा शतक्रत्वो यूयमिमं मे अगदं कृत ॥७६॥**

माताजस्तो पोषण गुणले सम्पन्न हे औषधि हो ! तिमीहरू प्रत्येकका सयौँ किसिमका नाम र सहस्रौँ वा असङ्ख्य अङ्कुर छन् । सयौँ किसिमका कर्म सिद्ध गर्ने हे औषधि हो ! तिमीहरू सबैले हामीलाई आरोग्य प्रदान गर ।

**ओषधीः प्रति मोदध्वं पुष्पवतीः प्रसूवरीः । अश्वाऽ इव सजित्वरीर्वीरुधः पारयिष्ण्वः ॥७७॥**

हे औषधि हो ! वेगशाली घोडाभैँ भएर तिमीहरूले शत्रुजस्ता अनेकौँ रोग नष्ट गऱ्यौ । फूलसहित र फल उत्पादन गर्ने गुणसम्पन्न हुँदै हाम्रा लागि आनन्ददायक होओ ।

**ओषधीरिति मातरस्तद्वो देवीरुप ब्रुवे । सनेयमश्वं गां वासऽ आत्मानं तव पूरुष ॥७८॥**

हे औषधि हो ! तिमीहरू माताजस्तै पालनशक्तिले युक्त, दिव्य गुणले सम्पन्न छौ । तिमीहरूका यस्ता गुणको हामीले प्रशंसा गर्दा स्वीकार गर । हे पुरुष ! गाई, घोडा, वस्त्र र म स्वयं तिम्रा लागि समर्पित छु ।

**अश्वत्थे वो निषदनं पर्णे वो वसतिष्कृता । गोभाजऽ इत्किलासथ यत्सनवथ पूरुषम् ॥७९॥**

पिपल र पलाशजस्ता वृक्षमा निवास गर्ने हे औषधि हो ! तिमीहरू यजमानलाई जीवनशक्ति प्रदान गरेर उसमाथि कृपा गर्दछौ । त्यसै कारणले तिमीहरू विशेष रूपमा कृपाका पात्र बनेका छौ ।

**यत्रौषधीः समग्मत राजानः समिताविव । विप्रः सऽ उच्यते भिषग्रक्षोहामीवचातनः ॥८०॥**

लडाइँमा राजाहरू जम्मा भएभैँ जोसित औषधि जम्मा हुन्छन्, ती ज्ञानवान् पुरुषलाई चिकित्सक भनिन्छ । उनैले दुखाइपिराइ र रोगव्याध निको पार्दछन् ।

**अश्वावतीᳬं सोमावतीमूर्जयन्तीमुदोजसम् । आवित्सि सर्वाऽ ओषधीरस्माऽ अरिष्टतातये ॥८१॥**

यी यजमानको रोग हटाउनका लागि अश्ववती नामको बलप्रदायक, सोमवती नामको शान्तिदायक, ऊर्जवन्ती नामको उर्जाप्रदायक, उदोजस् नामको ओज र पोषणप्रदायक आदि सबै खालका औषधिका दिव्य गुणसँग हामी राम्ररी परिचित छौँ ।

**उच्छुष्माऽ ओषधीनां गावो गोष्ठादिवेरते । धनᳬं सनिष्यन्तीनामात्मानं तव पूरुष ॥८२॥**

गोठबाट गाई निस्केर छरिएभैँ यज्ञका प्रभावले औषधिको सामर्थ्य वायुमण्डलमा फैलिन्छ । हे पुरुष ! औषधिले तिमीलाई स्वास्थ्यरूपी सम्पदा प्रदान गर्छ ।

**इष्कृतिर्नाम वो माताथो यूयᳬं स्थ निष्कृतीः । सीराः पतत्रिणीः स्थन यदामयति निष्कृथ ॥८३॥**

हे औषधि हो ! तिमीहरू विकृति हटाउने, माताजस्तै निष्कृति अर्थात् रोगनिवारण गर्ने हौ । भोक मेटाउने अन्नभैँ तिमीहरू मानिसको रोग हटाइदेओ ।

**अति विश्वाः परिष्ठाः स्तेनऽ इव व्रजमक्रमुः । ओषधीः प्राचुच्यवुर्यत्किं च तन्वो रपः ॥८४॥**

चोरले गाईका बथानमा आक्रमण गरेभैँ आफ्ना गुणले सर्वत्र व्याप्त हुन पुगेका औषधिले रोगका समूहमा आक्रमण गर्दछन् र शरीरका समस्त विकृति आफ्ना आरोग्यवर्द्धक सामर्थ्यले हटाइदिन्छन् ।

**यदिमा वाजयन्नहमोषधीर्हस्तऽआदधे । आत्मा यक्ष्मस्य नश्यति पुरा जीवगृभो यथा ॥८५॥**

विशेष शक्तिले सम्पन्न औषधिको सेवन गर्नका लागि हामीले हातमा लिँदा राजयक्ष्माजस्तो भयानक रोग पनि आफूलाई नाश भएको मान्दछ । त्यस रोगको सोचाइ वधशाला पुग्नुभन्दा अघि नै वधशालातिर लगिँदै गरेका प्राणीले आफूलाई मरिसकेको ठानेझैँ हुन्छ ।

**यस्यौषधीः प्रसर्पथाङ्गमङ्गं परुष्परुः । ततो यक्ष्मं वि बाधध्वऽउग्रो मध्यमशीरिव ॥८६॥**

हे औषधि हो ! तिमीहरू रोगी मानिसका अङ्गप्रत्यङ्गमा पूर्ण रूपले समाहित हुँदा वीर पुरुषले शत्रुको मर्मस्थलमा प्रहार गरेझैँ यक्ष्म आदि सबै शारीरिक रोग निर्मूल गर्दछौ ।

**साकं यक्ष्म प्र पत चाषेण किकिदीविना । साकं वातस्य ध्राजा सांक नश्य निहाकया ॥८७॥**

हे शरीरमा लागिसकेका यक्ष्म रोग ! तिमी चाँडै नीलकण्ठ, मयुर आदि चरा र वायुझैँ वेगले यहाँबाट भाग र गोही आदि हिंस्रक पशुकहाँ पुगेर विनाश होऊ ।

**अन्या वो अन्यामवत्वन्यान्यस्याऽ उपावत । ताः सर्वाः संविदानाऽ इदं मे प्रावता वचः ॥८८॥**

हे औषधि हो ! तिमीहरू एकापसमा प्रभाव वृद्धि गराओ । प्रयोग गरिएका औषधि अरू औषधिका नजिक आओ र तिनले अरू औषधिसित निकटता बढाओ । सबै औषधिले एकापसमा सहयोगी भावनाको परिचय दिँदै हाम्रो निवेदन स्वीकार गर ।

**याः फलिनीर्याऽ अफलाऽ अपुष्पा याश्च पुष्पिणीः । बृहस्पतिप्रसूतास्ता नो मुञ्चन्त्वꣳहसः ॥८९॥**

फल भरिएका, फल नलागेका, फूल फुलेका, फूल नभएका सबै औषधि बृहस्पति नामका विशेष वैद्यबाट प्रयुक्त भएर हामीलाई रोगबाट मुक्ति दिलाऊन् ।

**मुञ्चन्तु मा शपथ्यादथो वरुण्यादुत । अथो यमस्य पड्वीशात्सर्वस्माद्देवकिल्बिषात् ॥९०॥**

हे औषधि हो ! तिमीहरू कुपोषणबाट उब्जेका रोग अथवा निन्दित कुकृत्यबाट उत्पन्न रोग, वरुणको पाश अथवा यमको बन्धनरूपी रोग, पापकृत्य र दैवी अनुशासनको पालन नगर्नाले लागेका सबै रोगबाट हामीलाई मुक्त गराओ । १६

**अवपतन्तीरवदन्दिवऽओषधयस्परि । यं जीवमश्नवामहै न स रिष्याति पूरुषः ॥९१॥**

दिव्यलोकबाट प्राणका रूपमा धर्तीमा आउने औषधिले हामीलाई आश्वासन दिन्छन् कि जुन प्राणीमाथि हाम्रो कृपा हुन्छ, त्यसले आरोग्य लाभ गरेर कृतार्थ हुँदै समयभन्दा पहिले कहिल्यै त्यो मृत्युका मुखमा पर्दैन ।

**याऽ ओषधीः सोमराज्ञीर्बह्वीः शतविचक्षणाः । तासामसि त्वमुत्तमारं कामाय शꣳ हृदे ॥९२॥**

औषधिका अधिष्ठाता सोम हुन् । उनी सयौँ किसिमका रोग निर्मूल गर्न सक्षम छन् । हे सबैका बीचमा रहने औषधि ! तिमी श्रेष्ठ गुणले युक्त छौ । तिमी अभीष्ट सुख प्राप्त हृदयलाई शक्ति दिनमा पूर्ण सक्षम छौ ।

**याऽओषधीः सोमराज्ञीर्विष्ठिताः पृथिवीमनु । बृहस्पतिप्रसूताऽअस्यै संदत्त वीर्यम् ॥९३॥**

विभिन्न रूपमा धर्तीमा विद्यमान सोमजस्ता विशिष्ट गुणले सम्पन्न विभिन्न खालका औषधि बृहस्पतिद्वारा तयार गरेर सेवन गर्न दिइँदा तिनले यी पुरुषलाई ओजस्वी र वीर्यवान् बनाऊन् ।

**याश्चेदमुपशृण्वन्ति याश्च दूरं परागताः । सर्वाः संगत्य वीरुधोस्यै संदत्त वीर्यम् ॥९४॥**

औषधिका सम्पर्कमा रहेका वा निकै दुर्गम क्षेत्रमा रहे पनि सम्पर्कमा हुने बोटबिरुवा, विभिन्न रूपमा उम्रिएर हाम्रो प्रार्थना सुन्ने सबै औषधिका पारस्परिक सहयोगले यी मानिसलाई शक्ति र ओजले परिपूर्ण गराओस् ।

**मा वो रिषत् खनिता यस्मै चाहं खनामि वः । द्विपाच्चतुष्पादस्माकꣳ सर्वमस्त्वनातुरम् ॥९५॥**

हे औषधि ! तिमीलाई खनेर निकाल्ने मानिस खनेका दोषबाट सर्वथा मुक्त रहून् र जुन रोगको उपचारका लागि तिमीलाई खनेर निकालिएको हुन्छ, त्यो पनि दोषमुक्त होस् । हाम्रा स्त्री, पुत्र आदि आफन्त र गाई आदि पशु सबै निरोगी हुन पाऊन् ।

**ओषधयः समवदन्त सोमेन सह राज्ञा । यस्मै कृणोति ब्राह्मणस्तꣳ राजन् पारयामसि ॥९६॥**

हे औषधि ! तिमी उत्तम छौ । सबै बोटबिरुवा तिमीभन्दा कनिष्ठ छन् । जसले हाम्रो विनाश गर्न खोज्दछन्, तिनीहरू पनि हाम्रै अधीनमा रहून् ।

**नाशयित्री बलासस्यार्शसऽ उपचितामसि । अथो शतस्य यक्ष्माणां पाकारोरसि नाशनी ॥९७॥**

हे औषधिहरू हो ! तिमीहरू शक्ति नाश गर्ने कफ, गलगण्ड आदि रोगहरूलाई निर्मूल गर्नमा सक्षम छौ । यस किसिमका असङ्ख्य रोगहरू र रक्तको विकारबाट उत्पन्न हुने अथवा पाक्ने पिलो आदि घाउखटिरा हटाउने गर्दछौ ।

**त्वां गन्धर्वाऽ अखनँस्त्वामिन्द्रस्त्वां बृहस्पतिः । त्वामोषधे सोमो राजा विद्वान् यक्ष्मादमुच्यत ॥९८॥**

हे औषधिहरू हो ! तिमीहरूको गुण जान्न सक्ने हुनाले गन्धर्व भनिएकाहरूले तिमीहरूलाई खनेर निकालेका हुन् । इन्द्रदेव र बृहस्पतिदेवताले तिमीहरूलाई खनेर

निकालेका हुन् । त्यसपछि औषधिका स्वामी सोमको उपयोगिता जान्नेहरूले क्षयरोग निको पारेका हुन् ।

**सहस्व मे अरातीः सहस्व पृतनायतः । सहस्व सर्वं पाप्मानं॑ सहमानास्योषधे ॥९९॥**

हे औषधिहरू हो ! तिमीहरू शरीरमा रहेको दुःखदायी रोगलाई निवारण गर्नमा सक्षम छौ । त्यसैले सबै किसिमका विकृतिहरू समाप्त पारिदेओ । हामीलाई मानसिक र शारीरिक कष्टबाट मुक्त गराओ ।

**दीर्घायुस्तऽ ओषधे खनिता यस्मै च त्वा खनाम्यहम् । अथो त्वं दीर्घायुर्भूत्वा शतवल्शा विरोहतात् ॥१००॥**

हे औषधिहरू हो ! तिमीहरूलाई खनेर निकाल्नेहरू सबै दीर्घायु होऊन् । जुन रोगको उपचारका लागि खनेर निकालिएको हो, त्यो पनि दीर्घायु होस् र तिमीहरू पनि दीर्घायु प्राप्त गर । तिमीहरू असङ्ख्य आँकुराहरूले युक्त होओ ।

**त्वमुत्तमास्योषधे तव वृक्षाऽ उपस्तयः । उपस्तिरस्तु सोस्माकं यो अस्माँ२ऽ अभिदासति ॥१०१॥**

हे औषधि ! तिमी उत्तम छौ । सबै बोटबिरुवा तिमीभन्दा कनिष्ठ छन् । जसले हाम्रो विनाश गर्न खोज्दछन्, तिनीहरू पनि हाम्रै अधीनमा रहून् ।

**मा मा हिंसी॑ सीज्जनिता यः पृथिव्या यो वा दिवं॑ सत्यधर्मा व्यानट् । यश्चापश्चन्द्राः प्रथमो जजान कस्मै देवाय हविषा विधेम ॥१०२॥**

सृष्टिका रचयिता, सत्यरूपी धर्मका पालक, जगत् धारण गर्ने र स्वर्गलोकका निर्माता, आह्लादकारी र प्रचुर मात्रामा अप् तत्त्व उत्पादनकर्ताले हामीलाई हिंसित नगरुन् । उनी जो भए पनि हामी उनैका अनुशासनमा रहेर हविद्वारा विधिपूर्वक उनैको अर्चना गर्दछौँ ।

**अभ्यावर्त्तस्व पृथिवि यज्ञेन पयसा सह । वपां ते अग्निरिषितो अरोहत् ॥१०३॥**

हे भूमि ! यज्ञका अनुष्ठानहरूको परिणामस्वरूप हुने गरेको प्राणरूपी वर्षासँगै तिमी पनि हाम्रा लागि अनुकूल होइदेऊ । प्रजापतिका प्रेरणाले अग्निदेव तिम्रा पछिल्तिर प्रतिष्ठित होऊन् ।

**अग्ने यत्ते शुक्रं यच्चन्द्रं यत्पूतं यच्च यज्ञियम् । तद्देवेभ्यो भरामसि ॥१०४॥**

हे अग्निदेवता ! तिम्रो ज्वालारूपी शरीर सेतो रङ्गझैँ कान्तिमान्, चन्द्रमाको किरणझैँ आनन्ददायी, ज्योतिस्वरूप, पवित्र र यज्ञीय कर्मका लागि उपयुक्त छ । त्यस ज्योतिस्वरूप, प्रशंसनीय शरीरलाई हामी देवताहरूका निमित्त हव्य समर्पित गर्नका लागि प्रदीप्त गराउँछौँ ।

**इषमूर्जमहमित आदमृतस्य योनिं महिषस्य धाराम् । आ मा गोषु विशत्वा तनूषु जहामि सेदिमनिराममीवाम् ॥१०५॥**

यज्ञका उत्पत्तिको मूल वस्तुका रूपमा रहेका अन्न-घिउ आदि हविष्यान्नहरू महान् कामनाले युक्त भएर अग्निदेवताका लागि हामी उत्तर दिशाबाट ग्रहण गर्दछौँ । यी सबै कुराहरू हाम्रा सामु आऊन् र हाम्रा सन्तान, प्रजा तथा गाई आदि पशुहरूमा प्रविष्ट

होऊन् । अन्नका अभावबाट उत्पन्न हुने प्राणघातक आपद्हरूलाई हामीले त्याग्न सकौँ ।

**अग्ने तव श्रवो वयो महि भ्राजन्ते अर्चयो विभावसो । बृहद्भानो शवसा वाजमुक्थ्यं दधासि दाशुषे कवे ॥१०६॥**

हे अग्निदेवता ! तिम्रो हविष्यान्न प्रशंसनीय छ । हे तेजस्वी अग्निदेवता ! तिम्रो ज्वाला अति सुशोभित हुन्छ । तेजस्वी, ज्ञानी हे देवता ! तिमी आफ्ना सामर्थ्यले हविदातालाई उत्तम अन्न प्रदान गर्दछौ ।

**पावकवर्चाः शुक्रवर्चाऽअनूनवर्चाऽउदियर्षि भानुना । पुत्रो मातरा विचरन्नुपावसि पृणक्षि रोदसी उभे ॥१०७॥**

हे अग्निदेवता ! पवित्र किरण र निर्मल तेजले युक्त तिमी सूर्यदेवजस्तै उदित हुन्छौ र पूर्ण तेज प्राप्त गर्दछौ । हविष्यान्नले द्युलोक र वर्षाले पृथ्व सुसम्पन्न बनाउँछौ ।

**ऊर्जो नपाज्जातवेदः सुशस्तिभिर्मन्दस्व धीतिभिर्हितः । त्वे इषः संन्दधुर्भूरिवर्पसश्चित्रोतयो वामजाताः ॥१०८॥**

सर्वज्ञाता, शक्तिवान् हे अग्निदेवता ! तिमी हाम्रा उत्तम स्तुतिले हर्षोल्लास प्राप्त गर, हाम्रा यज्ञ आदि कर्मले सन्तुष्ट होऊ । अनेकौँ रूपका विलक्षण द्रष्टा तिमी यजमानले प्रदान गरेको हविष्यान्न ग्रहण गर ।

**इरज्यन्नग्ने प्रथयस्व जन्तुभिरस्मे रायो अमर्त्य । स दर्शतस्य वपुषो वि राजसि पृणक्षि सानसिं क्रतुम् ॥१०९॥**

हे अविनाशी अग्निदेवता ! तिमी आफ्ना तेजले प्रदीप्त भएर हाम्रो धन वृद्धि गर । तिमी हाम्रा यज्ञकर्ममा आफ्ना तेजस्वी रूपले सुशोभित हुन्छौ र यज्ञको फल प्रदान गर्दछौ ।

**इष्कर्तारमध्वरस्य प्रचेतसं क्षयन्तᳬं राधसो महः । रातिं वामस्य सुभगां महीमिषं दधासि सानसिᳬं रयिम् ॥११०॥**

संस्कारित र सुशोभित यज्ञ गराउने, सर्वज्ञ, असङ्ख्य धनका अधिपति, धनप्रदाता, हे अग्निदेवता ! हामी तिम्रो आराधना गर्दछौँ, मनग्गे धन र सौभाग्ययुक्त अन्न प्रदान गर ।

**ऋतावानं महिषं विश्वदर्शतमग्निᳬं सुम्नाय दधिरे पुरो जनाः । श्रुत्कर्णᳬं सप्रथस्तमं त्वा गिरा दैव्यं मानुषा युगा ॥१११॥**

याजकहरू यज्ञका महान् आधार, सामर्थ्यवान्, सर्वज्ञ, दर्शनीय अग्निदेवतालाई सुखको आकाङ्क्षाले आफ्ना सामु स्थापित गर्दछन् । हाम्रो स्तुति सुन्ने, सर्वत्र विख्यात, दिव्य गुणसम्पन्न हे अग्निदेवता ! यजमान दम्पती आफ्ना वाणीले तिम्रो स्तुति गर्दछन् ।

**आ प्यायस्व समेतु ते विश्वतः सोम वृष्ण्यम् । भवा वाजस्य सङ्गथे ॥११२॥**

हे सोमदेवता ! प्रत्येक ठाउँमा तिमीलाई बल प्राप्त होस् । तिमी विस्तृत हुँदै सङ्ग्राममा हाम्रा लागि अन्न प्रदान गर्दछौ ।

**सन्ते पयाᳬंसि समु यन्तु वाजाः सं वृष्ण्यान्यभिमातिषाहः । आप्यायमानो**

अमृताय सोम दिवि श्रवाᳬंᳯस्युत्तमानि धिष्व ॥११३॥

हे शत्रुसंहारक सोमदेवता ! दुध र अन्नबाट बल धारण गर । आफ्नो अमरत्व प्राप्तिका लागि द्युलोकमा श्रेष्ठ अन्नहरू प्राप्त गर ।

आप्यायस्व मदिन्तम सोम विश्वेभिरᳬंᳯशुभिः । भवा नः सप्रथस्तमः सखा वृधे ॥११४॥

हे अति आह्लादक सोमदेवता ! आफ्ना दिव्य गुणका यशगाथाहरू चारै दिशामा विस्तार गराऊ । हाम्रो उन्नतिका लागि मित्रका रूपमा तिमीले सहयोग गर ।

आ ते वत्सो मनो यमत्परमाच्चित्सधस्थात् । अग्ने त्वाङ्कामया गिरा ॥११५॥

सर्वव्यापी प्रदीप्त हे अग्निदेवता ! हामी तिम्रा पुत्र हौं, हृदयदेखि नै स्तुति गर्दै तिमीलाई आफूतिर आकर्षित गर्न चाहन्छौं ।

तुभ्यन्ताऽ अङ्गिरस्तम विश्वाः सुक्षितयः पृथक् । अग्ने कामाय येमिरे ॥११६॥

हे अग्निदेवता ! अङ्गिराहरूमा तिमी सर्वश्रेष्ठ हौ । आफ्नो कामना पूरा गर्नका लागि सबै प्रजाले तिम्रो उपासना गर्दछन् ।

अग्निः प्रियेषु धामसु कामो भूतस्य भव्यस्य । सम्राडेको वि राजति ॥११७॥

याजकहरूका वर्तमान र भविष्यका सबै आकाङ्क्षाहरू पूरा गराउने, राम्रोसित उज्यालिएका अग्निदेवता आफ्नो प्रिय स्थान यज्ञवेदीमा स्वयं नै सुशोभित भइरहेका छन् ।

## ॥ इति द्वादशोऽध्यायः ॥

॥बाह्रौं अध्याय सकियो ॥

ॐ

भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।

# वाजसनेयि माध्यन्दिन शुक्ल

# यजुर्वेद – संहिता

## ॥अथ त्रयोदशोऽध्यायः॥

॥तेह्रौं अध्याय॥

**ऋषि–** अवत्सार, गृत्समद, हिरण्यगर्भ, देवश्रवा, देवा, वामदेव, विरूप, त्रिशिरा, अग्नि, इन्द्राग्नी, सविता, देवा, गोतम, मेधातिथि, भरद्वाज, कुत्स आङ्गिरस, उशना काव्य ।

**देवता–** अग्नि, पुष्करपर्ण, आदित्य, कः, सर्पसमूह, इन्द्र, स्वयमातृण्णा, दूर्वा, इष्टका, अयंलोक, असौ लोक, विश्वज्योति, ऋतु, विश्वेदेवा, कूर्म, द्यावापृथिवी, विष्णु, उषा, लिङ्गोक्त, हिरण्यशकल, सूर्य, प्राणभृत् ।

**छन्द–** आर्ची पङ्क्ति, विराट् त्रिष्टुप्, निचृत् आर्षी त्रिष्टुप्, आर्षी त्रिष्टुप्, भुरिक् उष्णिक्, अनुष्टुप्, निचृत् अनुष्टुप्, भुरिक् पङ्क्ति, निचृत् त्रिष्टुप्, भुरिक् आर्षी पङ्क्ति, निचृत् आर्षी अतिजगती, भुरिक् अनुष्टुप्, स्वराट् आर्षी अनुष्टुप्, प्रस्तार पङ्क्ति, भुरिक् अतिजगती, निचृत् धृति, भुरिक् ब्राह्मी बृहती, निचृत् गायत्री, गायत्री, आर्षी पङ्क्ति, त्रिष्टुप्, भुरिक् त्रिष्टुप्, निचृत बृहती, निचृत् उष्णिक्, विराट् ब्राह्मी पङ्क्ति निचृत् ब्राह्मी पङ्क्ति, कृति, भुरिक् कृति, भुरिक् ब्राह्मी पङ्क्ति, ब्राह्मी जगती, निचृत् ब्राह्मी पङ्क्ति, स्वराट् ब्राह्मी जगती, निचृत् अतिधृति, स्वराट् ब्राह्मी त्रिष्टुप्, विराट् आकृति ।

**मयि गृह्णाम्यग्रे अग्निथ्ं रायस्पोषाय सुप्रजास्त्वाय सुवीर्याय । मामु देवताः सचन्ताम् ॥१॥**

सर्वप्रथम अपार वैभव र सुसन्तति प्राप्त गर्नका लागि तथा श्रेष्ठ शक्तिसामर्थ्यका लागि हामी अग्निदेवतालाई यज्ञस्थलमा स्थापित गर्दछौं । यसका लागि हामीलाई देवशक्तिहरूले सहयोग प्रदान गरुन् ।

**अपां पृष्ठमसि योनिरग्नेः समुद्रमभितः पिन्वमानम् । वर्धमानो महाँ२ऽ आ च पुष्करे दिवो मात्रया वरिम्णा प्रथस्व ॥२॥**

तिमी जलका आधार हौ, अग्निका उत्पादक हौ । तिमी समुद्र बढाउँछौ, स्वयं सबैतर्फ विस्तार हुँदै जलमा व्याप्त रहेका छौ । द्युलोकको तेजस्विता र पृथ्वीको विशालताअनुरूप तिमी विस्तृत होऊ ।

**ब्रह्म जज्ञानं प्रथमं पुरस्ताद्वि सीमतः सुरुचो वेनऽ आवः । स बुध्न्याऽ उपमाऽ अस्य विष्ठाः सतश्च योनिमसतश्च वि वः ॥३॥**

सृष्टिका प्रारम्भमा ब्रह्मका रूपमा परमात्म शक्ति उत्पन्न भयो, त्यही शक्ति समस्त ब्रह्माण्डमा व्यवस्थाका रूपमा व्याप्त भयो । उसै कान्तिमान् ब्रह्म सूर्य आदि विभिन्न

रूपमा स्थित भएर अन्तरिक्ष आदि विभिन्न व्यक्त लोकर अव्यक्त जगत्लाई प्रकाशित गर्ने गर्दछ ।

**हिरण्यगर्भः समवर्तताग्रे भूतस्य जातः पतिरेक आसीत् । स दाधार पृथिवीं द्यामुतेमां कस्मै देवाय हविषा विधेम ॥४॥**

उहिले नै हिरण्यगर्भका नाममा, सबै खालका उत्पादनशील पदार्थका स्वामी उनै एक मात्र परमात्मा उचित रूपमा स्थापित भएर पृथ्वी र द्युलोक धारण गरे । उनी को हुन् ? हामी हविद्वारा विधिपूर्वक उनैको अर्चना गर्दछौं ।

**द्रप्सश्चस्कन्द पृथिवीमनु द्यामिमं च योनिमनु यश्च पूर्वः । समानं योनिमनु सञ्चरन्तं द्रप्सं जुहोम्यनु सप्त होत्राः ॥५॥**

सोमरस प्राचीन ऋषि तथा देवताका लागि अन्तरिक्ष लोकमा उत्पन्न भएको हो । हाम्रा आँटिला पुर्खाले यो सोमरस फेला पारे । हामी सात याज्ञिक, उसै लोकमा रहने त्यस दिव्य सोमरसलाई आहुतिका रूपमा समर्पित गर्दछौं ।

**नमोस्तु सर्पेभ्यो ये के च पृथिवीमनु । ये अन्तरिक्षे ये दिवि तेभ्यः सर्पेभ्यो नमः ॥६॥**

सर्ने स्वभाव भएका सर्पहरू पृथ्वी, अन्तरिक्ष र द्युलोकमा छन्, ती सबै सरिहिँड्ने भएकाले सर्प नाम पाएकाहरूलाई हामी नमस्कार गर्दछौं ।

**याऽ इषवो यातुधानानां ये वा वनस्पतीँ१ रनु । ये वावटेषु शेरते तेभ्यः सर्पेभ्यो नमः ॥७॥**

राक्षसले हानेका गतिशील बाणका रूपमा आउने सर्पहरू जेजति छन्, जो वनस्पतिमा आश्रित रहने गरेका छन् र गहिरा खाडल आदिमा रहने गरेका छन्, ती सबै सर्पहरूलाई हाम्रो नमस्कार छ ।

**ये वामी रोचने दिवो ये वा सूर्यस्य रश्मिषु । येषामप्सु सदस्कृतं तेभ्यः सर्पेभ्यो नमः ॥८॥**

ज्योतिर्मय द्युलोक अथवा सूर्यका किरणमा निवास गर्ने जति सर्पहरू छन्, जलभित्र निवास गर्ने सर्पहरू जति छन्, ती सबैलाई हामी नमस्कार गर्दछौं ।

**कृणुष्व पाजः प्रसितिं न पृथ्वीं याहि राजेवामवाँ२ऽ इभेन । तृष्वीमनु प्रसितिं द्रूणानोऽ स्तासि विध्य रक्षसस्तपिष्ठैः ॥९॥**

हे शत्रु धपाउने अग्निदेवता ! बलिया राजाले हात्तीमाथि चढेर राक्षसी वृत्तिका शत्रुमाथि आक्रमण गरेझैँ आक्रमण गर । चरा समात्ने आकारको विस्तृत जालले दुष्टलाई विभिन्न किसिमका दुःख दिएर विनाश गर ।

**तव भ्रमासऽ आशुया पतन्त्यनु स्पृश धृषता शोशुचानः । तपूँ१ष्यग्ने जुह्वा पतङ्गानसन्दितो वि सृज विष्वगुल्काः ॥१०॥**

वायुका सम्पर्कले भुल्न लागेको तीव्र गतिको तिम्रा लप्काले असुर भस्म गराओस् । आहुति प्रदान गर्दा तिम्रा दन्केका ज्वालाले असुरलाई भस्म पारोस् । त्यसका लागि आकाशबाट तारा खसेको जस्तो तीव्र गतिमा आफ्ना तेजलाई तिमी प्रेरित गर ।

**प्रति स्पशो वि सृज तूर्णितमो भवा पायुर्विशो अस्या अदब्धः । यो नो दूरे अघशꣳसो यो अन्त्यग्ने माकिष्टे व्यथिरादधर्षीत् ॥११॥**

हे दमनमा नपर्ने अग्निदेवता ! नजिक वा टाढा रहेका हाम्रा सबै शत्रुलाई वशमा गर्नका लागि अत्यन्त तेज गतिमा सैनिक पठाइदेऊ । हाम्रा सन्तानको रक्षा गर । कसैले पनि तिम्रा भक्तलाई दुःख दिन नसकोस् ।

**उदग्ने तिष्ठ प्रत्या तनुष्व न्यमित्राँ२ऽ ओषतात्तिमहेते । यो नो अरातिꣳ समिधान चक्रे नीचा तं धक्ष्यतसं न शुष्कम् ॥१२॥**

हे अग्निदेवता ! तिमी जोसिलो भएर आफ्नो ज्वाला विस्तार गर । तीव्र ज्वालाका प्रभावले शत्रु पूरै रूपमा भस्म होऊन् । हे ज्योतिर्मय अग्निदेवता ! हाम्रो प्रगतिमा बाधक हुनेलाई सुकेको वृक्षझैँ जरैसमेत जलाएर भस्म पारिदेऊ ।

**ऊर्ध्वो भव प्रति विध्याध्यस्मदाविष्कृणुष्व दैव्यान्यग्ने । अव स्थिरा तनुहि यातुजूनां जामिमजामिं प्र मृणीहि शत्रून् । अग्नेष्ट्वा तेजसा सादयामि ॥१३॥**

हे अग्निदेवता ! तिमी उँभो लाग्ने स्वभावका ज्वालायुक्त भएर हाम्रा शत्रु विध्वंस गर । देवत्व संवर्द्धन गर्ने सत्कर्महरूको सम्पादन गर । प्राणीलाई दुःख दिने दुष्टलाई विजयश्रीविहीन बनाऊ र शत्रु बलशाली हुन नदेऊ । हे स्रुव ! अग्निको तेजद्वारा हामी तिमीलाई प्रतिष्ठित गर्दछौँ ।

**अग्निर्मूर्धा दिवः ककुत्पतिः पृथिव्याऽअयम् । अपाꣳ रेताꣳसि जिन्वति । इन्द्रस्य त्वौजसा सादयामि ॥१४॥**

हे स्रुवा ! सर्वश्रेष्ठ देवता, आकाशका उच्चतम स्थानमा प्रतिष्ठित, पृथ्वीका स्वामी अग्निदेवमा ओज स्थापित गरिएको छ ।

**भुवो यज्ञस्य रजसश्च नेता यत्रा नियुद्भिः सचसे शिवाभिः । दिवि मूर्धानं दधिषे स्वर्षां जिह्वामग्ने चकृषे हव्यवाहम् ॥१५॥**

हे अग्निदेवता ! तिमीले हविष्यान्न ग्रहण गर्ने आफ्नो जिब्रोरूपी ज्वाला प्रदीप्त गर्दा यज्ञ र फलश्रुतिका रूपमा रहेका पर्जन्यको प्रवर्तक मानिन्छौ । तिमी कल्याणस्वरूप अश्वसँग पुग्दा दिव्यलोकमा विराजमान आदित्यको शोभा धारण गर्दछौ ।

**ध्रुवासि धरुणास्तृता विश्वकर्मणा । मा त्वा समुद्रऽ उद्वधीन्मा सुपर्णोऽव्यथमाना पृथिवीं दृꣳह ॥१६॥**

तिमी समस्त विश्वलाई धारण गर्दछौ । विश्वकर्माले विस्तृत गराएका हुनाले सुदृढ र सुस्थिर छौ । समुद्रले तिमीलाई नष्ट नगरोस्, वायु तिम्रो बाधक नहोस् । तिमी नआत्तिईकन पृथ्वीलाई स्थिरता प्रदान गर ।

**प्रजापतिष्ट्वा सादयत्वपां पृष्ठे समुद्रस्येमन् । व्यचस्वतीं प्रथस्वतीं प्रथस्व पृथिव्यसि ॥१७॥**

आफ्नो रूपलाई विशेष रूपमा प्रकट गर्ने हे मातृरूपा पृथ्वी ! तिमीलाई प्रजापतिले समुद्रका पृष्ठभागमा स्थापित गराएका छन्, तिमी जलमा व्यापक रूपमा विस्तृत होऊ । तिमी पृथ्वीका अंशले बनेकी हुनाले तिमी उनैकी प्रतिरूप हौ ।

**भूरसि भूमिरस्यदितिरसि विश्वधाया विश्वस्य भुवनस्य धर्त्री । पृथिवीं यच्छ पृथिवीं दृꣳह पृथिवीं मा हिꣳसीः ॥१८॥**

भूमिको जस्तै सुख प्रदान गर्ने माताका रूपमा रहेकी हे धर्ती तिमी विश्वलाई पालन गर्ने हुनाले देवमाता अदिति हौ । समस्त विश्वका प्राणीहरूको पोषण तिमी नै गर्दछ्यौ । तिमी पृथ्वीमाथि कृपा गर, भूभागलाई बलियो बनाऊ र यसलाई कहिल्यै दुःखी हुन नदेऊ ।

**विश्वस्मै प्राणायापानाय व्यानायोदानाय प्रतिष्ठायै चरित्राय । अग्निष्ट्वाभि पातु मह्या स्वस्त्या छर्दिषा शन्तमेन तया देवतयाङ्गिरस्वद् ध्रुवा सीद ॥१९॥**

हे स्वयमातृण्णे ! प्राण, अपान, व्यान र उदान नामले शरीरमा रहेका सबै वायुको प्रतिष्ठाका लागि र सदाचरणलाई रक्षा गर्नका लागि हामी यज्ञस्थलमा तिमीलाई स्थापना गर्दछौं । लोकहितकारी अग्निदेव शीतल र सुखद साधनले तिम्रो रक्षा गरुन् । त्यस महान् दैवी अनुकम्पाले तिमी अङ्गिराको जस्तै दृढता र स्थिरता प्राप्त गर ।

**काण्डात्काण्डात्प्ररोहन्ती परुषः परुषस्परि । एवा नो दूर्वे प्र तनु सहस्रेण शतेन च ॥२०॥**

हे दुबोहरू हो ! तिमीहरू अनेकौं ग्रन्थि र मर्मस्थल भएका कारणले उचित किसिमले अङ्कुरित हुने गर्दछौ । त्यसैले तिमीहरूको आफ्नै जस्तो गरी असङ्ख्य पुत्रपौत्रादिका रूपमा हाम्रो पनि वैभव वृद्धि गराओ ।

**या शतेन प्रतनोषि सहस्रेण विरोहसि । तस्यास्ते देवीष्टके विधेम हविषा वयम् ॥२१॥**

हे दिव्य गुणले सम्पन्न भएका दुबोहरू हो ! तिमीहरू सयौं हाँगा र हजारौं आँकुराबाट अङ्कुरित हुने गर्दछौ । तिमीहरू यस्तै हुनाले नै हामी तिमीहरूका लागि हवि प्रदान गर्दछौं ।

**यास्ते अग्ने सूर्ये रुचो दिवमातन्वन्ति रश्मिभिः । ताभिर्नो अद्य सर्वाभी रुचे जनाय नस्कृधि ॥२२॥**

हे अग्निदेवता ! तिम्रो आभा सूर्यमण्डलमा स्थित किरणका रूपमा रहेको छ । त्यस समस्त रश्मिले हामी र हाम्रा शाखासन्तान सबैलाई तेजस्विता प्रदान गर ।

**या वो देवाः सूर्ये रुचो गोष्वश्वेषु या रुचः । इन्द्राग्नी ताभिः सर्वाभी रुचं नो धत्त बृहस्पते ॥२३॥**

हे इन्द्र, अग्नि र बृहस्पति ! हे देवताहरू हो ! तिमीहरूको जुन आभा सूर्यमण्डलमा सुशोभित छ, जुन पुष्टिप्रद दीप्तिहरू गाईलाई पोषण प्रदान गर्नमा सक्षम छन् र बलशाली तथा गतिशील अश्वका रूपमा रहेका छन्, ती सबै दीप्तिहरूले सुशोभित भएर तिमीहरू हामीलाई आरोग्य र कान्ति प्रदान गर ।

**विराड्ज्योतिरधारयत्स्वराड्ज्योतिरधारयत् । प्रजापतिष्ट्वा सादयतु पृष्ठे पृथिव्या ज्योतिष्मतीम् । विश्वस्मै प्राणायापानाय व्यानाय विश्वं ज्योतिर्यच्छ । अग्निष्टेधिपतिस्तया देवतयाङ्गिरस्वद् ध्रुवा सीद ॥२४॥**

यस अत्यन्त सुन्दर विराट्रूप लोकले अग्निदेवताको ज्योति धारण गरेको छ । स्वयं ज्योतिर्मय दिव्य लोकले ज्योतिरूपी तेज धारण गरेको छ । प्राण, अपान, व्यान आदिका ज्योतिलाई ज्योतिबाट प्रजापालक प्रजापतिले तिमीलाई पृथ्वीको पृष्ठ भागमा

विराजमान गराऊन् । तिमी सम्पूर्ण ज्योति प्रदान गर । अग्निदेव तिम्रा अधीश्वर हुन् । उनै प्रख्यात देवतासँगै सुस्थिर भएर तिमी अङ्गिराजस्तै तेजले सम्पन्न होऊ ।

**मधुश्च माधवश्च वासन्तिकावृतू अग्नेरन्तःश्लेषोसि कल्पेतां द्यावापृथिवी कल्पन्तामापऽ ओषधयः कल्पन्तामग्नयः पृथङ्‌ मम ज्यैष्ठ्याय सव्रताः । ये अग्नयः समनसोन्तरा द्यावापृथिवी इमे । वासन्तिकावृतू अभिकल्पमानाऽ इन्द्रमिव देवाऽ अभिसंविशन्तु तया देवतयाङ्गिरस्वद् ध्रुवे सीदतम् ॥२५॥**

मधुका रूपमा चैत्र र माधवका रूपमा वैशाख महिना वसन्त ऋतुसित सम्बन्धित हुन्छन् । ऋतुहरूजस्तै दुवै इष्टका अग्निको आधारका रूपमा स्थापित रहून् । कार्यअनुरूप अग्निको छनोट गर्न जानेका हामी याजकहरूलाई उत्कर्ष प्राप्तिका लागि यी द्युलोक र पृथ्वीलोकले परस्पर सहयोग गरुन् । जल र औषधि हामीलाई श्रेष्ठता प्रदान गर्ने होऊन् । समान व्रतशील अनेक अग्निहरू उत्कृष्टतापूर्वक सहयोगी कार्य गरुन् । द्युलोक र पृथ्वीका बीचमा यस्ता बेलामा एकै किसिमको मन भएका जुन अग्नि छन्, तिनले वसन्त ऋतुलाई सम्पादन गर्दै यस यज्ञकर्ममा आश्रित होऊन् । देवशक्तिले इन्द्रदेवताको आश्रय ग्रहण गरेझैँ तिमी पनि अङ्गिराको जस्तै अग्निदेवताको आश्रय ग्रहण गरेर स्थिरता स्थापित गर ।

**अषाढासि सहमाना सहस्वारातीः सहस्व पृतनायतः । सहस्रवीर्यासि सा मा जिन्व ॥२६॥**

हे इष्टकाहरू हो ! तिमी स्वभावैले शत्रुलाई पराजित गराउनमा समर्थ र शुत्रबाट पराजित नहुने हौ । तिमी शत्रुलाई पराजित गर, सङ्ग्रामको कामना गर्ने शत्रुलाई पराजित गर । तिमी अत्यन्त पराक्रमले युक्त होऊ र हामीलाई प्रसन्नता प्रदान गर्न सक्ने होऊ ।

**मधु वाताऽ ऋतायते मधु क्षरन्ति सिन्धवः । माध्वीर्नः सन्त्वोषधीः ॥२७॥**

यज्ञ कर्म गर्नेहरूका लागि वायु एवं नदीले मधुर प्रवाह उत्पन्न गराऊन् । सबै औषधी मधुर रसले सम्पन्न होऊन् ।

**मधु नक्तमुतोषसो मधुमत्पार्थिवꣳ रजः । मधु द्यौरस्तु नः पिता ॥२८॥**

पिताझैँ पोषणकर्ता दिव्यलोक हाम्रा निम्ति माधुर्ययुक्त होस् । माताजस्तै रक्षक पृथ्वीको धुलो मधुजस्तै आनन्दप्रद होस् । रात्रि र उषादेवी हाम्रा निम्ति माधुर्ययुक्त होऊन् ।

**मधुमान्नो वनस्पतिर्मधुमाँ२ऽ अस्तु सूर्यः । माध्वीर्गावो भवन्तु नः ॥२९॥**

सम्पूर्ण वनस्पतिहरू हाम्रा लागि मधुर सुखप्रदायक होऊन् । सूर्यदेवताले हामीलाई आफ्ना माधुर्यले परिपुष्ट गरुन् र गाईहरू हाम्रा लागि अमृतजस्तै मिठो दुधरूपी रस प्रदान गर्न सक्षम रहून् ।

**अपां गम्भन्त्सीद मा त्वा सूर्योभिताप्सीन्माग्निर्वैश्वानरः । अच्छिन्नपत्राः प्रजाऽ अनुवीक्षस्वानु त्वा दिव्या वृष्टिः सचताम् ॥३०॥**

तिमी गहिरो जलको भित्री भागमा र सूर्यमण्डलमा स्थित होऊ, तिमीलाई त्यहाँ सूर्यदेवताले नतताऊन् । वैश्वानर अग्निले पनि तिमीलाई नसताऊन् । प्रजालाई तिमी निरन्तर हेरविचार गर र दिव्य वर्षाका लागि तिमीले सहयोग गर ।

**त्रीन्त्समुद्रान्त्समसृपत् स्वर्गानपां पतिर्वृषभऽ इष्टकानाम् । पुरीषं वसानः सुकृतस्य लोके तत्र गच्छ यत्र पूर्वे परेताः ॥३१॥**

हे कछुवाका रूपमा रहेका प्राण ! तिमी विश्व निर्माण गर्ने एकाइका रूपमा रहेका यी इष्टकाहरूमा शक्ति स्थापित गर्नमा सक्षम छौ । तिमीले नै भोग्य सामग्रीका रूपमा रहेका तीनै लोक र समुद्रहरूलाई संव्याप्त गरेका छौ । तिमी पशुलाई ओगट्दै असल कर्म गर्ने जीवहरू पहिलेदेखि नै जाने गरेका दिशातर्फ प्रस्थान गर ।

**मही द्यौः पृथिवी च नऽ इमं यज्ञं मिमिक्षताम् । पिपृतां नो भरीमभिः ॥३२॥**

अत्यन्त विस्तृत पृथ्वी र द्युलोकले हाम्रा यस यज्ञकर्मलाई आआफ्ना अंशबाट परिपूर्ण गरुन् । भरणपोषण गर्ने सामग्रीहरूद्वारा तिनीहरूले हामी सबैलाई तृप्त गराऊन् ।

**विष्णोः कर्माणि पश्यत यतो व्रतानि पस्पशे । इन्द्रस्य युज्यः सखा ॥३३॥**

हे याजकहरू ! सर्वव्यापक भगवान् विष्णुका सृष्टि सञ्चालनमा सम्बन्धित कार्यहरू ध्यानपूर्वक हेर । यसमा अनेकौं किसिमका व्रत वा नियमहरूको दर्शन गर्न सकिन्छ । इन्द्रका योग्य मित्रहरूले त्यस्ता परम सत्ताको अनुकूल बनेर रहनुपर्दछ ।

**ध्रुवासि धरुणेतो जज्ञे प्रथममेभ्यो योनिभ्यो अधि जातवेदाः । स गायत्र्या त्रिष्टुभानुष्टभा च देवेभ्यो हव्यं वहतु प्रजानन् ॥३४॥**

हे उखा ! तिमी हवि धारण गर्ने क्षमताले युक्त र सुस्थिर छौ । विश्वका सबै पदार्थको ज्ञानले सम्पन्न हुनाले जातवेद भनिएका अग्निदेव पनि सबैभन्दा पहिले तिम्रै सामुमा उपस्थित भएका छन् । त्यस्ता प्रख्यात अग्निदेव आफ्ना कर्मले, उचित तरिकाले परिचित गायत्री, त्रिष्टुप् र अनुष्टुप् छन्दका माध्यमबाट आहुतिका रूपमा देवताहरूलाई दिएको हविष्यान्न पुऱ्याइदिऊन् ।

**इषे राये रमस्व सहसे द्युम्नऽ ऊर्जे अपत्याय । सम्राडसि स्वराडसि सारस्वतौ त्वोत्सौ प्रावताम् ॥३५॥**

हे उखा ! तिमी अन्न, धन, बल, यश, दुध आदि रसिलो पदार्थ र पुत्रपौत्रादि प्रदान गर्नका लागि प्रसन्नतापूर्वक यस ठाउँमा धेरै समयसम्म बसिराख । तिमी भूमिलाई उचित तरिकाले प्रकाशित गराउने हुनाले सम्राट् हौ र आफैं आफूलाई प्रकाशित गराउने हुनाले स्वराट् हौ । सरस्वतीसित सम्बन्धित मन र वाणीले तिमीलाई पालनशक्तिले सम्पन्न गराऊन् ।

**अग्ने युक्ष्वा हि ये तवाश्वासो देव साधवः । अरं वहन्ति मन्यवे ॥३६॥**

हे ज्योतिपुञ्ज अग्निदेवता ! तिमीलाई यज्ञका निम्ति वहन गर्ने कुशल र श्रेष्ठ अश्व रथमा नियोजित गर ।

**युक्ष्वा हि देवहूतमाँ२ऽ अश्वाँ२ऽ अग्ने रथीरिव । नि होता पूर्व्यः सदः ॥३७॥**

हे अग्निदेवता ! देवताको आह्वान गर्ने अश्वलाई सारथीजस्तै बनेर आफ्ना रथमा नियोजित गर । सर्वप्रथम हविदाता भएर तिमी हाम्रा यज्ञको अनुष्ठानमा प्रतिष्ठित होऊ ।

सम्यक् स्रवन्ति सरितो न धेनाऽ अन्तर्हृदा मनसा पूयमानाः । घृतस्य धाराऽ अभि चाकशीमि हिरण्ययो वेतसो मध्ये अग्नेः ॥३८॥

आँतबाट निस्केको र चित्तले शुद्ध गरेको तेज धारा खुसीको नदीझैँ आनन्दले बग्दछ । सिकारीदेखि तर्सिएर हरिण भागेझैँ गरी घिउको धाराले स्वर्णिम प्रकाशयुक्त अग्निलाई तीव्र प्रभावयुक्त गराउँछ ।

ऋचे त्वा रुचे त्वा भासे त्वा ज्योतिषे त्वा । अभूदिदं विश्वस्य भुवनस्य वाजिनमग्नेर्वैश्वानरस्य च ॥३९॥

सत्य, ज्ञान, प्रकाश, विशिष्ट ज्ञान र तेजस्विता प्राप्त गर्नका लागि हामी तिम्रो आश्रय ग्रहण गर्दछौँ । तिम्रा कृपाले यहाँका आश्रित प्राणीसमूह सबै मानिसमा रहेर वैश्वानर नाम भएका प्राणरूपी अग्निको साङ्केतिक भनाइ बुझ्न सक्ने भएका छन् ।

अग्निर्ज्योतिषा ज्योतिष्मान् रुक्मो वर्चसा वर्चस्वान् । सहस्रदाऽअसि सहस्राय त्वा ॥४०॥

हे तेजस्वी ! तिमी ज्योतिबाट प्रकाशित भएका हुनाले अग्निका स्वरूप हौ, तेजले तेजवान् भएका हुनाले सुवर्ण वर्णका अर्थात् रुक्म हौ । तिमी नै असङ्ख्य वैभवसम्पदा प्रदान गर्ने हौ, प्रचुर ऐश्वर्य र ज्ञानको संरक्षण र आर्जन गर्नका लागि हामी तिम्रो उपासना गर्दछौँ ।

आदित्यं गर्भं पयसा समङ्ग्धि सहस्रस्य प्रतिमां विश्वरूपम् । परि वृङ्ग्धि हरसा माभि मꣳस्थाः शतायुषं कृणुहि चीयमानः ॥४१॥

देवशक्तिको उत्पत्तिस्थल र पशुको भरणपोषण गर्ने शक्तिले सम्पन्न हजारौँ स्वरूप भएका तथा विश्वका प्रकाशक अग्निदेवतालाई दुध आदिले अभिषेक गरौँ र प्रदीप्त तेजले सबै किसिमका रोगको विनाश गरौँ । अग्निदेव संवर्द्धित भएर यजमानलाई सयौँ वर्षको आयु प्रदान गर्दछन् र अहङ्कारलाई उसबाट पर राखिदिन्छन् ।

वातस्य जूतिं वरुणस्य नाभिमश्वं जज्ञानꣳसरिरस्य मध्ये । शिशुं नदीनाꣳहरिमद्रिबुध्नमग्ने मा हिꣳसीः परमे व्योमन् ॥४२॥

हे अग्निदेवता ! वायुका प्रिय, वरुणदेवताका नाभीरूप, जलप्रवाहका बीचमा रहने, नदीको सानो रूप, हरियो आभाले सम्पन्न, विस्तृत आकाशमा समाविष्ट, पर्वतका मूल कारण र पर्वतमा आफ्ना गतिको चिह्न बनाउने यस अश्वका रूपमा रहेर प्रकृतिमा व्याप्त हुँदै पर्यावरणलाई सन्तुलित गराउने जललाई तिमी नाश नगरिदेऊ ।

अजस्रमिन्दुमरुषं भुरण्युमग्निमीडे पूर्वचित्तिं नमोभिः । स पर्वभिर्ऋतुशः कल्पमानो गां मा हिꣳसीरदितिं विराजम् ॥४३॥

अविनाशी, ऐश्वर्यले सम्पन्न, उत्तेजनारहित, प्राचीन ऋषिहरूले ग्रहण गर्न योग्य, अन्नले सबैको पोषण गर्ने अग्निदेवतालाई हामी स्तुति गर्दछौँ । त्यस्ता ख्याति प्राप्त

अग्निदेवताले औँसी आदि पर्वहरूमा प्रत्येक ऋतुका लागि अनुकूल कर्महरू सम्पन्न गरुन् र देवमाता अदितिले पोषण प्रदान गरेझैँ दुध आदि दिनमा सक्षम गाईरूपी प्रकृतिको सम्पन्नतालाई नष्ट नगरुन् ।

**वरूत्रीं त्वष्टुर्वरुणस्य नाभिमविं जज्ञानाᳬं रजसः परस्मात् ।**
**महीᳬं साहस्रीमसुरस्य मायामग्ने मा हिᳬंसीः परमे व्योमन् ॥४४॥**

हे अग्निदेवता ! तिमी उत्तम आकाशमा स्थापित, विभिन्न रूपहरूको निर्माण गर्ने, वरुणको नाभीस्वरूप, रक्षा गर्न योग्य, अत्यन्त उच्च लोकमा उत्पन्न, महिमाले सम्पन्न असङ्ख्य कल्याणप्रद, प्राणीको संरक्षकका रूपमा रहेको अवि नामको रक्षण क्षमता वा भेडालाई नष्ट नगर ।

**यो अग्निरग्नेरध्यजायत शोकात्पृथिव्याऽ उत वा दिवस्परि । येन प्रजा विश्वकर्मा जजान तमग्ने हेडः परि ते वृणक्तु ॥४५॥**

विराट् अग्निबाट उत्पन्न भएका अग्निदेव प्रजापतिका दुःखकष्ट मेटाउनका लागि उत्पन्न भएका हुन् । उनले आफ्ना दिव्य तेजका प्रभावले दिव्यलोक र पृथ्वीलाई प्रकाशमय पार्छन् । स्रष्टाले जसका सहायताले सृष्टि गरे, त्यस्ता हे अग्निदेवता ! तिम्रा क्रोधले कहिल्यै याजकलाई पीडा नहोस् ।

**चित्रं देवानामुदगादनीकं चक्षुर्मित्रस्य वरुणस्याग्नेः । आप्रा द्यावापृथिवी अन्तरिक्षᳬं सूर्यऽ आत्मा जगतस्तस्थुषश्च ॥४६॥**

चराचर जगत्का आत्मारूपी सूर्यदेव दैवी शक्तिको अद्‌भुत तेजका रूपमा उदाए । मित्र, वरुण आदिका आँखाजस्ता सूर्यदेव उदाउनासाथ द्युलोक, पृथ्वीलोक र अन्तरिक्ष प्रकाशले झलमल्ल भए ।

**इमं मा हिᳬं सीर्द्विपादं पशुᳬं सहस्राक्षो मेधाय चीयमानः । मयुं पशुं मेधमग्ने जुषस्व तेन चिन्वानस्तन्वो निषीद । मयुं ते शुगृच्छतु यं द्विष्मस्तं ते शुगृच्छतु ॥४७॥**

यज्ञको काम पूरा गर्नका लागि प्रकट गरिएका हे अग्निदेवता ! तिमी मानिस र पशुहरूलाई दुःख नदेऊ । तिमी हजारौँ आँखा भएका छौ । हाम्रा लागि पौष्टिक अन्न र हाम्रा पशुहरू वृद्धि गराऊ । वैभव प्राप्त गरेपछि हामी सुखी र समृद्ध जीवन निर्वाह गर्न पाऔँ । तिम्रा दुःखदायी क्रोधले हिंस्रक पशुलाई र हाम्रो रिसडाह गर्ने तथा हामीले रिस गर्नुपर्नेहरूलाई पीडित गरोस् ।

**इमं मा हिᳬंसीरेकशफं पशुं कनिक्रदं वाजिनं वाजिनेषु । गौरमारण्यमनु ते दिशामि तेन चिन्वानस्तन्वो निषीद । गौरं ते शुगृच्छतु यं द्विष्मस्तं ते शुगृच्छतु ॥४८॥**

यज्ञको काम पूरा गर्नका लागि प्रकट गरिएका हे अग्निदेवता ! तिमी हिलिल्लिँदै फुर्तिलो रूपमा कुद्ने गरेका हाम्रा अश्व र मानिसलाई दुःख नदेऊ । तिम्रा ज्वालारूपी दुःखदायी क्रोध जङ्गलका हिंस्रक पशुलाई हिंसित गर्दै सधैँ झन्झन् बढिरहोस् । तिम्रा

तापले खेतीमा हानी गर्ने पशुलाई र हाम्रो रिसडाह गर्ने तथा हामीले रिस गर्नुपर्नेहरूलाई पीडित गरोस् ।

**इमथं॑ साहस्रथं॑ शतधारमुत्सं व्यच्यमानथं॑सरिरस्य मध्ये । घृतं दुहानामदितिं जनायाग्ने मा हिथं॑सीः परमे व्योमन् । गवयमारण्यमनु ते दिशामि तेन चिन्वानस्तन्वो निषीद । गवयं ते शुगृच्छतु यं द्विष्मस्तं ते शुगृच्छतु ॥४९॥**

हे अग्निदेवता ! सयौँ वा हजारौँ धाराका स्रोत, संसारलाई घिउरूपी तेज अथवा दुधरूपी पोषक सारतत्त्व उत्पन्न गराउने, परम व्योमका रूपमा रहेको अत्यन्त व्यापक र श्रेष्ठ स्थानमा रहने यी दुई भागमा विभाजन गर्न नहुने हुनाले अदिति भनिएका यिनीहरूलाई तिमी हिंसित हुन नदेऊ । जङ्गलमा रहेका गाईको जातका वा अन्य जुनसुकै खेतीमा हानी गर्न आउने पशुहरू धपाउनका लागि तिमीसित गुहार मागेका छौँ । आफ्ना ज्वालाहरू बढाउँदै तिमी उनीहरूतिर जाऊ । हामीले रिस गर्नुपर्ने त्यस्ता गवय आदि पशुहरूमा तिम्रो क्रोध खनियोस् ।

**इममूर्णायुं वरुणस्य नाभिं त्वचं पशूनां द्विपदां चतुष्पदाम् । त्वष्टुः प्रजानां प्रथमं जनित्रमग्ने मा हिथं॑सीः परमे व्योमन् । उष्ट्रमारण्यमनु ते दिशामि तेन चिन्वानस्तन्वो निषीद । उष्ट्रं ते शुगृच्छतु यं द्विष्मस्तं ते शुगृच्छतु ॥५०॥**

हे अग्निदेवता ! यस परम व्योमका रूपमा रहेको अत्यन्त व्यापक र श्रेष्ठ स्थानमा सृष्टिका क्रममा सबैभन्दा पहिले उत्पन्न भएका, वरुण नामले जलको केन्द्रका रूपमा रहेका, छालाभैँ भएर दुई खुट्टे र चार खुट्टे प्राणीलाई सुरक्षा प्रदान गर्ने, ऊनीले सम्पन्न बनिएको यस भेडोरूपी प्रकृतिको संरक्षक सामर्थ्यलाई नाश नगर । तिमीलाई उँट आदि जङ्गली तथा हानीकारक पशुतर्फ हामी पठाउँछौँ । उनीहरूसँगै रमाइलो मानेर रहँदै तिम्रो उन्नति होस् । हामी जोसित रिस गर्दछौँ, त्यस्ता रुखो ठाउँमा बस्ने उँट आदि हानीकारक पशुमाथि तिम्रो रिस बर्सियोस् ।

**अजो ह्यग्नेरजनिष्ट शोकात्सो अपश्यज्जनितारमग्रे । तेन देवा देवतामग्रमायँस्तेन रोहमायन्नुप मेध्यासः । शरभमारण्यमनु ते दिशामि तेन चिन्वानस्तन्वो निषीद । शरभं ते शुगृच्छतु यं द्विष्मस्तं ते शुगृच्छतु ॥५१॥**

यो बोकाबाख्राका रूपमा रहेको जन्म आदिले मुक्त परम शक्तिका तेजले सम्पन्न भएको छ । त्यसै परमात्म शक्तिका प्रभावले त्यो जीव विश्वका स्रष्टालाई प्रत्यक्ष रूपमा देख्न सक्षम हुन्छ । त्यसै परम शक्तिकै कारण देवताहरूले देवत्वको श्रेष्ठ पद पाउन सकेका हुन् र त्यसै शक्तिका सामर्थ्यले याजकहरू स्वर्गको सुख प्राप्त गर्दछन् । हे अग्निदेवता ! तिमीलाई हामी शरभ नामका जङ्गली र हिंस्रक पशुतर्फ पठाउँछौँ । तिम्रो क्रोध त्यस्तै शरभ आदि पशुहरूतर्फ रहोस् र जसलाई हामी मन पराउँदैनौँ तिमी तिनैलाई त्यो रिस पोख्दै आफ्ना ज्वालाले सन्तप्त गराऊ ।

**त्वं यविष्ठ दाशुषो नॄँः पाहि शृणुधी गिरः । रक्षा तोकमुतत्मना ॥५२॥**

सधैँ युवा रहने हे अग्निदेवता ! तिमी दानीहरूको रक्षा गर्नका लागि स्तुतिमा ध्यान देऊ । आफ्ना पुत्रको रक्षाका लागि प्रयत्नशील होऊ ।

अपां त्वेमन्त्सादयाम्यपां त्वोद्मन्त्सादयाम्यपां त्वा भस्मन्त्सादयाम्यपां त्वा ज्योतिषि सादयाम्यपां त्वायने सादयाम्यर्णवे त्वा सदने सादयामि समुद्रे त्वा सदने सादयामि सरिरे त्वा सदने सादयाम्यपां त्वा क्षये सादयाम्यपां त्वा सधिषि सादयाम्यपां त्वा सदने सादयाम्यपां त्वा सदस्थे सादयाम्यपां त्वा योनौ सादयाम्यपां त्वा पुरीषे सादयाम्यपां त्वा पाथसि सादयामि । गायत्रेण त्वा छन्दसा सादयामि त्रैष्टुभेन त्वा छन्दसा सादयामि जागतेन त्वा छन्दसा सादयाम्यानुष्टुभेन त्वा छन्दसा सादयामि पाङ्क्तेन त्वा छन्दसा सादयामि ॥५३॥

हे अपस्या नामका इष्टकाहरू हो ! तिमीहरूलाई हामी जलका स्थानमा प्रतिष्ठित गर्दछौं, औषधिमा स्थापित गर्दछौं, विद्युत्का ज्योतिमा स्थापित गर्दछौं र वाणीका स्थानमा स्थापित गर्दछौं । तिमीहरूलाई आँखाका स्थानमा, कानका स्थानमा, दिव्यलोकमा, अन्तरिक्षलोकमा, समुद्रमा, बालुवामा र अन्नमा स्थापित गर्दछौं । तिमीहरूलाई हामी गायत्री छन्दले, त्रिष्टुप् छन्दले, जगती छन्दले, अनुष्टुप् छन्दले र पङ्क्ति छन्दले स्थापित गराउँछौं र यी सबै स्थानहरूमा तिमीहरूलाई हामी स्थापना गर्दछौं ।

अयं पुरो भुवस्तस्य प्राणो भौवायनो वसन्तः प्राणायनो गायत्री वासन्ती गायत्र्यै गायत्रं गायत्रादुपाᳬशुरुपाᳬशोस्त्रिवृत् त्रिवृतो रथन्तरं वसिष्ठऽ ऋषिः प्रजापतिगृहीतया त्वया प्राणं गृह्णामि प्रजाभ्यः ॥५४॥

हे इष्टकाहरू हो ! यी अग्निदेव सबैभन्दा पहिले उत्पन्न भएका हुनाले प्राणको रूपमा रहेका छन् । यो प्राण भुवनरूपी अग्निबाट उत्पन्न हुनाले प्राणका रूपमा रहेको छ । यो प्राण भुवनरूपी अग्निबाट उत्पन्न भएका कारणल भौवायन नामले परिचित भएको छ । यो भौवायनका निम्ति नै हामी इष्टकाहरूलाई प्रतिष्ठित गर्दछौं । वसन्त ऋतु प्राणबाट उत्पन्न भएको हो । वसन्तबाट गायत्री, गायत्रीबाट गायत्र साम, गायत्र सामबाट उपांशु नामको प्राण उत्पन्न भएको छ । उपांशु प्राणबाट त्रिवृत् नामको स्तोम, त्रिवृत् स्तोमबाट रथन्तर साम उत्पन्न भएका हुन् । यी सबैका प्रवर्तक र द्रष्टा नै सबै प्राणहरूमध्ये प्रधानका रूपमा रहेर वसिष्ठ ऋषिका रूपमा परिचित छन् । यी सबै देवशक्तिहरूका लागि हामी इष्टकालाई प्रतिष्ठित गर्दछौं । हे चितिशक्ति ! प्रजापालकले तिम्रो सहयोगद्वारा बनाएको आरोग्यप्रदा प्राण हामी ग्रहण गर्दछौं र सबैका लागि दीर्घायुको कामना गर्दछौं ।

अयं दक्षिणा विश्वकर्मा तस्य मनो वैश्वकर्मणं ग्रीष्मो मानसस्त्रिष्टुब्ग्रैष्मी त्रिष्टुभः स्वारᳬस्वारादन्तर्यामोन्तर्यामात्पञ्चदशः पञ्चदशाद् बृहद् भरद्वाजऽ ऋषिः प्रजापतिगृहीतया त्वया मनो गृह्णामि प्रजाभ्यः ॥५५॥

विश्वकर्माका नामले प्रसिद्ध भएका यी इष्टकाहरू दक्षिण दिशामा स्थापना गरिएका छन् । वायु देवतालाई मनले सम्भँदै हामी यी इष्टका स्थापित गर्दछौं । मनको उत्पत्ति

उनै विश्वकर्माबाट भएको हो । मनबाट नै ग्रीष्म ऋतु उत्पन्न भयो । सूर्यको खरो रापले युक्त ग्रीष्म ऋतुका मानसिक तेजबाट त्रिष्टुप् छन्द उत्पन्न भयो । त्रिष्टुप् छन्दबाट स्वार साम प्रकट भयो । स्वार सामबाट अन्तर्याम नामले परिचित ग्रह उत्पन्न भयो । अन्तर्यामबाट पञ्चदश स्तोम प्रकट भए, पञ्चदश स्तोमबाट बृहत्साम उत्पन्न भयो । त्यसका द्रष्टा र सञ्चालक स्वयं प्राणकै रूपमा रहेका भरद्वाज ऋषि हुन् । यी सबै दिव्यशक्तिका धाराहरूलाई मनले चिन्तन गर्दै हामी यी इष्टकाहरूको स्थापना गर्दछौं । हे इष्टका ! प्रजापतिले ग्रहण गर्दै उनैका सहयोगले हामी सबै प्रजाहरूको हितका लागि मन धारण गर्दछौं र सबैमा मनोबल होस् भन्ने कामना गर्दछौं ।

**अयं पश्चाद्विश्वव्यचास्तस्य चक्षुर्वैश्वव्यचसं वर्षाश्चाक्षुष्यो जगती वार्षी जगत्याऽ ऋक्सममृक्समाच्छुक्रः शुक्रात्सप्तदशः सप्तदशाद्वैरूपं जमदग्निर्ऋषिः प्रजापतिगृहीतया त्वया चक्षुर्गृह्णामि प्रजाभ्यः ॥५६॥**

सूर्यको विश्वव्यचा नामले प्रसिद्ध यी इष्टकाहरूलाई हामी पश्चिम दिशामा स्थापित गर्दछौं । सूर्यलाई मनले स्मरण गर्दै यी इष्टकाहरू स्थापित हुन्छन् । उनै विश्वव्यचा सूर्यदेवताबाट नेत्र उत्पन्न भए । नेत्रबाट वर्षा ऋतु प्रकट हुन्छ । वर्षाऋतुबाट जगती छन्द उत्पन्न भयो, जगती छन्दबाट ऋक्साम उत्पन्न भयो, ऋक्सामबाट शुक्र ग्रह उत्पन्न भयो, शुक्र ग्रहबाट सप्तदश स्तोम उत्पन्न भए, सप्तदश स्तोमबाट विविध जीवसृष्टि वैरूप सामका नामबाट उत्पन्न भयो । यस्तो विभिन्न किसिमका जीवजन्तुहरको रक्षा गर्ने चक्षुरूपी सूर्यदेवताका द्रष्टा भनेका जमदग्नि ऋषि हुन् । यी सबै देवताहरूलाई मनले स्मरण गर्दै हामी यी इष्टकाहरूलाई स्थापना गर्दछौं । हे इष्टकाहरू हो ! प्रजापतिले निर्माण गरेका ठाउँमा तिमीहरूका सहयोगले हामी नेत्र धारण गर्दछौं र सबैलाई दूरदर्शी विवेक प्राप्त होस् भन्ने कामना गर्दछौं ।

**इदमुत्तरात् स्वस्तस्य श्रोत्रꣳसौवꣳशरच्छ्रोत्र्यनुष्टुप् शारद्यनुष्टुभऽ ऐड मैडान्मन्थी मन्थिनऽ एकविꣳशऽ एकविꣳशाद्वैराजं विश्वामित्रऽ ऋषिः प्रजापतिगृहीतया त्वया श्रोत्रं गृह्णामि प्रजाभ्यः ॥५७॥**

उत्तर दिशातर्फ रहेको, स्वर्गलोकसँग सम्बन्धित श्रोत्र नै प्रजापतिको मुख्य सुखको साधन हो । त्यसैलाई स्मरण गर्दै हामी इष्टकाहरूको स्थापना गर्दछौं । श्रोत्रबाट शरद् ऋतु उत्पन्न भएको हो । शरद् ऋतुबाट अनुष्टुप् छन्द उत्पन्न भयो । अनुष्टुप् छन्दबाट एड साम उत्पन्न भएको हो, एड सामबाट मन्थी उत्पन्न भयो । मन्थी ग्रहबाट यज्ञमा एकविंश स्तोम उत्पन्न भए । एकविंश स्तोमबाट वैराज साम उत्पन्न भयो । यी सबैका द्रष्टा विश्वामित्र ऋषि हुन् । यी सबै दिव्य शक्तिलाई मनन गर्दै हामी इष्टका स्थापना गर्दछौं । हे इष्टकाहरू हो ! प्रजापतिले निर्माण गरेका तिमीहरूको सहायता लिएर हामी प्रजाका लागि श्रोत्र ग्रहण गर्दछौं र सबैले पछिसम्मका लागि असल तथा कर्तव्याकर्तव्य के हो भन्ने सुनून् भन्ने कामना गर्दछौं ।

इयमुपरि मतिस्तस्यै वाङ्मात्या हेमन्तो वाच्यः पङ्क्तिर्हैमन्ती पङ्क्त्यै निधनवन्निधनवतऽ आग्रयणऽ आग्रयणात् त्रिणवत्रयस्त्रिꣳशौ त्रिणवत्रयस्त्रिꣳशाभ्याꣳ शाक्वररैवते विश्वकर्मऽ ऋषिः प्रजापतिगृहीतया त्वया वाचं गृह्णामि प्रजाभ्यो लोकं ताऽ इन्द्रम् ॥५८॥

सर्वोच्च भागमा चन्द्रमारूपी मति विराजमान छ । त्यसैलाई मनले स्मरण गर्दै हामी यी इष्टकाहरू स्थापना गर्दछौं । त्यस चन्द्रमारूपी प्रज्ञाबुद्धिबाटै वाणी उत्पन्न भयो । त्यस वाणीबाटै हेमन्त ऋतु उत्पन्न भएको हो । हेमन्त ऋतुबाट पङ्क्ति छन्द उत्पन्न भयो । पङ्क्ति छन्दबाट निधनवत् नामको साम प्रकट भयो । निधनवत् सामबाट आग्रयण नामको ग्रह उत्पन्न भयो र आग्रयण ग्रहबाट त्रिणव र त्रयस्त्रिंश नामका दुई स्तोमहरू उत्पन्न भए । त्रिणव र त्रयस्त्रिंश यी दुवै स्तोमबाट शक्वर र रैवत नामका साम उत्पन्न हुन्छन् । यी सबैका द्रष्टा विश्वकर्मा ऋषि हुन् । यी सबै शक्तिलाई मनन गर्दै हामी इष्टकाहरूलाई स्थापना गर्दछौं । हे इष्टकाहरू हो ! प्रजापतिले बनाएका तिमीहरूकै सहयोगले प्रजाको रक्षाका लागि हामी वाणी ग्रहण गर्दछौं र सबैलाई वक्तृत्वको श्रेष्ठ शक्ति प्राप्त होस् भन्ने कामना गर्दछौं । हे समस्त इष्टकाहरू हो ! तिमीहरू सबै लोकका अभावरूपी छिद्रहरू पूरा गर, तिमीहरूका लागि सबै प्रजाले स्तोम गान गर्दै इन्द्रदेवतालाई आह्वान गर्दछन् ।

## इति त्रयोदशोऽध्यायः

॥तेह्रौँ अध्याय सकियो॥

ॐ

भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।

# वाजसनेयि माध्यन्दिन शुक्ल

# यजुर्वेद – संहिता

## ॥अथ चतुर्दशोऽध्यायः॥

॥चौधौं अध्याय॥

**ऋषि—** उशना काव्य, विश्वेदेवा ।

**देवता—** अश्विनीकुमार, ऋतु, विश्वेदेवा, वायु, आपः, लिङ्गोक्त, इन्द्राग्नी, स्वयमातृण्णा, दिशा, प्राण, त्रिवृदाय लिङ्गोक्त, इष्टका लिङ्गोक्त ।

**छन्द—** त्रिष्टुप्, निचृत् ब्राह्मी बृहती, विराट् ब्राह्मी बृहती, भुरिक् ब्राह्मी बृहती, भुरिक् शक्वरी, निचृत् उत्कृति, भुरिक् प्रकृति, स्वराट् पङ्क्ति, निचृत् आकृति, भुरिक् अतिजगती, निचृत् ब्राह्मी पङ्क्ति, स्वराट् ब्राह्मी बृहती, निचृत् अष्टि, भुरिक् अनुष्टुप्, भुरिक् विकृति, विराट् पङ्क्ति, स्वराट् उत्कृति, उत्कृति, विराट् अतिजगती, भुरिक् अतिजगती, आर्षी जगती, भुरिक् ब्राह्मी त्रिष्टुप्, निचृत् अनुष्टुप्, निचृत् उष्णिक्, भुरिक् ब्राह्मी पङ्क्ति, भुरिक् अति जगत, भुरिक् विकृति, निचृत् अभिकृति, भरिक् अतिजगती, भुरिक् ब्राह्मी बृहती, निचृत् विकृति, आर्षी त्रिष्टुप्, ब्राह्मी जगती, स्वराट् ब्राह्मी जगती, ब्राह्मी पङ्क्ति, स्वराट् ब्राह्मी जगती ।

**ध्रुवक्षितिर्ध्रुवयोनिर्ध्रुवासि ध्रुवं योनिमासीद साधुया । उख्यस्य केतुं प्रथमं जुषाणाश्विनाध्वर्यू सादयतामिह त्वा ॥१॥**

हे ईँटहरू हो ! तिमीहरू स्थिर निवास, स्थिर स्वभाव र अविचल स्वरूपका छौ । तिमीहरू अग्निदेवताको प्रथम ध्वजारूपी ज्वालाको सेवन गरेर स्थिर हुँदै अविचल भएर श्रेष्ठ स्थान अन्तरिक्ष प्राप्त गर । तिमीहरूलाई देवताहरूका अध्वर्यु अश्विनीकुमारले यस उत्तम स्थलमा स्थापित गरेका हुन् ।

**कुलायिनी घृतवती पुरन्धिः स्योने सीद सदने पृथिव्याः । अभि त्वा रुद्रा वसवो गृहन्त्विमा ब्रह्म पीपिहि सौभगायाश्विनाध्वर्यू सादयतामिह त्वा ॥२॥**

हे इष्टकाहरू हो ! तिमीहरू निवास गर्न योग्य घरले सम्पन्न भएर, घिउ आदि पौष्टिक पदार्थले सम्पन्न भएर, विभिन्न पुरीहरूलाई धारण गर्ने पृथ्वीका सुखदायक निवासमा विराजमान होओ । रुद्र र वसुगणले तिमीहरूको स्तुति गरुन् । ती मन्त्रहरूलाई तिमीहरू आफ्नो सौभाग्य वृद्धि गर्नका लागि सुरक्षित गर । तिमीहरूलाई देवताहरूका अध्वर्यु अश्विनीकुमारले यस उत्तम स्थलमा स्थापित गरेका हुन् ।

**स्वैर्दक्षैर्दक्षपितेह सीद देवानाथं सुम्ने बृहते रणाय । पितेवैधि सूनवऽ आ सुशेवा स्वावेशा तन्वा सं विशस्वाश्विनाध्वर्यू सादयतामिह त्वा ॥३॥**

हे शक्तिका संरक्षक इष्टकाहरू हो ! देवशक्तिलाई सुख दिन र संवर्द्धन गर्नका लागि तिमीहरू यस द्वितीय चितीका स्थानमा स्थिर होओ र सबैको कल्याण गर । पुत्रका लागि सुखको कामना गर्ने पिताको जस्तै तिमीहरू पनि प्रयासरत होओ । तिमीहरूलाई देवताहरूका अध्वर्यु अश्विनीकुमारले यस उत्तम स्थलमा स्थापित गरेका हुन् ।

**पृथिव्याः पुरीषमस्यप्सो नाम तां त्वा विश्वे अभिगृणन्तु देवाः । स्तोमपृष्ठा घृतवतीह सीद प्रजावदस्मे द्रविणायजस्वाश्विनाध्वर्यू सादयतामिह त्वा ॥४॥**

पृथ्वीका प्रथम चितिलाई पूर्ण गराउने हे इष्टकाहरू हो ! तिमीहरू जलबाट उत्पन्न भएका हौ । समस्त देवशक्तिले सबै तर्फबाट तिमीहरूको स्तुति गरुन् । तिमीहरू स्तुतिको अभिप्राय बुझ्दै हविरूपी घिउले सन्तुष्ट भएर यसै ठाउँमा विराजमान होओ । हामीलाई पुत्रपौत्रादिसहित समृद्धि र वैभव प्रदान गर । तिमीहरूलाई देवताहरूका अध्वर्यु अश्विनीकुमारले यस उत्तम स्थलमा स्थापित गरेका हुन् ।

**अदित्यास्त्वा पृष्ठे सादयाम्यन्तरिक्षस्य धर्त्रीं विष्टम्भनीं दिशामधिपत्नीं भुवनानाम् । ऊर्मिर्द्रप्सो अपामसि विश्वकर्मा तऽ ऋषिरश्विनाध्वर्यू सादयतामिह त्वा ॥५॥**

सम्पूर्ण प्राणीमा शासन गर्ने, दिशाहरूलाई स्थिर गराउने हे इष्टकाहरू हो ! तिमीहरू अन्तरिक्षलाई धारण गर्नमा समर्थ छौ । तिमीहरूलाई हामी पृथ्वीको प्रथम चितिमाथि स्थापित गर्दछौं । तिमीहरू जलरूपी रसको तरङ्गजस्तै छौ । विश्वकर्मा तिमीहरूका द्रष्टा ऋषि हुन् । तिमीहरूलाई देवताहरूका अध्वर्यु अश्विनीकुमारले यस उत्तम स्थलमा स्थापित गरेका हुन् ।

**शुक्रश्च शुचिश्च ग्रैष्मावृतू अग्नेरन्तःश्लेषोसि कल्पेतां द्यावापृथिवी कल्पन्तामापऽ ओषधयः कल्पन्तामग्नयः पृथङ्मम ज्यैष्ठ्याय सव्रताः । ये अग्नयः समनसोन्तरा द्यावापृथिवी इमे । ग्रैष्मावृतू अभिकल्पमानाऽ इन्द्रमिव देवाऽ अभिसंविशन्तु तया देवतयाङ्गिरस्वद् ध्रुवे सीदतम् ॥६॥**

ग्रीष्म ऋतुका जेठअसार महिनाजस्ता हे दुवै इष्टकाहरू हो ! तिमीहरू अग्निदेवताका बीचमा ज लनशीलताका रूपमा विद्यमान छौ । हामी प्रगति गर्दै द्युलोक र पृथ्वीलोकसम्म विस्तृत होओ । जल र औषधिहरूले यस कार्यमा हाम्रो सहयोग गरुन् । व्रतशील विभिन्न अग्निहरूले हामीलाई श्रेष्ठता प्राप्त गर्नमा प्रेरित गरुन् । ग्रीष्म ऋतुलाई सम्पादन गर्ने पृथ्वी र द्युलोकका मध्य भागमा विराजमान भएका इष्टकाहरू देवताका माझमा रहेका इन्द्रझैं शोभायमान होऊन् । हे इष्टकाहरू हो ! तिमीहरू आफ्ना दिव्य गुणले अङ्गिराझैं स्थिर होओ ।

**सजूर्ऋतुभिः सजूर्विधाभिः सजूर्देवैः सजूर्देवैर्वयोनाधैरग्नये त्वा वैश्वानरायाश्विनाध्वर्यू सादयतामिह त्वा सजूर्ऋतुभिः सजूर्विधाभिः सजूर्वसुभिः सजूर्देवैर्वयोनाधैरग्नये त्वा वैश्वानरायाश्विनाध्वर्यू सादयतामिह त्वा सजूर्ऋतुभिः**

**सजूर्विधाभिः सजू रुद्रैः सजूर्देवैर्वयोनाधैरग्नये त्वा वैश्वानरायाश्विनाध्वर्यू सादयतामिह त्वा सजूर्ऋतुभिः सजूर्विधाभिः सजूरादित्यैः सजूर्देवैर्वयोनाधैरग्नये त्वा वैश्वानरायाश्विनाध्वर्यू सादयतामिह त्वा सजूर्ऋतुभिः सजूर्विधाभिः सजूर्विश्वैर्देवैः सजूर्देवैर्वयोनाधैरग्नये त्वा वैश्वानरायाश्विनाध्वर्यू सादयतामिह त्वा ॥७॥**

हे इष्टकाहरू हो ! ऋतुहरू र जलसँगको प्रीतियुक्त भएर, शैशव आदि अवस्था प्राप्त गर्ने प्राणीहरूसित इन्द्र आदि देवताहरूसँग तिमीहरूलाई अग्निदेवताको प्रसन्नताका लागि ग्रहण गर्दछौं । यस यज्ञका प्रधान अध्वर्युका रूपमा रहेका अश्विनीकुमारहरूले तिमीहरूलाई द्वितीय चितिमा स्थापित गरेका छन् । ऋतु र जलसितको प्रीतियुक्त भएर, वसुगणसँगै प्राणीका साथ देवताको प्रेमपूर्ण व्यवहारले युक्त हुने तिमीहरूलाई अग्निदेवताको तृप्तिका लागि ग्रहण गर्दछौं । यस कर्मका प्रधान अध्वर्यु अश्विनीकुमारले तिमीहरूलाई द्वितीय चितिमा स्थापित गरुन् । ऋतुहरू, जल, रुद्र, प्रिय प्राणका साथै देवताहरूसितको प्रीतियुक्त तिमीहरूलाई अग्निदेवताको प्रेमपूर्ण र प्रसन्नताका लागि ग्रहण गर्दछौं । यस कर्मका मुख्य अध्वर्युका रूपमा रहेका अश्विनीकुमारहरूले तिमीहरूलाई द्वितीय चितिमा स्थापित गरुन् । ऋतु र जलका प्रिय आदित्यगणको प्रिय प्राणसित प्रीतियुक्त रहेका तिमीहरूलाई अग्निदेवसितको प्रीतियुक्त सन्तुष्टिका लागि हामी ग्रहण गर्दछौं । यस कार्यका प्रधान अध्वर्यु दुवै अश्विनीकुमारहरूले तिमीहरूलाई द्वितीय चितिमा स्थापित गरुन् । ऋतुहरूले सेवित, प्राणसित प्रीतियुक्त, समस्त देवताहरूसँगको प्रीतिले युक्त प्राणीका प्रिय तिमीहरूलाई अग्निदेवताको प्रसन्नताका लागि हामी ग्रहण गर्दछौं । देवताहरूका प्रधान अध्वर्यु अश्विनीकुमारहरूले तिमीहरूलाई पृथ्वीका यस यज्ञको द्वितीय चितिमा विराजमान गराऊन् ।

**प्राणं मे पाह्यपानं मे पाहि व्यानं मे पाहि चक्षुर्मऽ उर्व्या विभाहि श्रोत्रं मे श्लोकय । अपः पिन्वौषधीर्जिन्व द्विपादव चतुष्पात् पाहि दिवो वृष्टिमेरय ॥८॥**

हे इष्टकाहरू हो ! हाम्रो प्राण, अपान र व्यानको संरक्षण तिमीहरूले गर । हाम्रा नेत्रहरूलाई व्यापक दृष्टिशक्तिले सम्पन्न बनाओ । तिमीहरूका कृपाले यो धर्ती सिञ्चित होस् । तिमीहरू औषधिमा पोषक तत्त्व वृद्धि गर, मानिसलाई सुरक्षित गर, गाई आदि पशुहरूको रक्षा गर र द्युलोकलाई जल वर्षा गराउने प्रेरणा सधैं प्रदान गर ।

**मूर्धा वयः प्रजापतिश्छन्दः क्षत्रं वयो मयन्दं छन्दो विष्टम्भो वयोधिपतिश्छन्दो विश्वकर्मा वयः परमेष्ठी छन्दो वस्तो वयो विवलं छन्दो वृष्णिर्वयो विशालं छन्दः पुरुषो वयस्तन्द्रं छन्दो व्याघ्रो वयोनाधृष्टं छन्दः सिꣳहो वयश्छदिश्छन्दः पष्ठवाड्वयो बृहती छन्दऽ उक्षा वयः ककुप् छन्दऽ ऋषभो वयः सतोबृहती छन्दः ॥९॥**

गायत्रीको रूपमा रहेर प्रजापति ब्रह्माका इच्छाशक्तिले मूर्धन्य ब्राह्मणहरू उत्पन्न गरे । अनिरुक्त छन्दले संरक्षणयुक्त क्षत्रियहरूको सिर्जना गरे । संसारको भरणपोषणका

लागि उनैले छन्दका रूपमा वैश्यको रचना गरे । परमेष्ठी विश्वस्रष्टाका शक्तिद्वारा शूद्रहरूलाई उत्पत्ति गरे । एकपद नामका छन्दले भेडा उत्पन्न गरे । पङ्क्ति छन्दका प्रभावले मानिस उत्पन्न गरे र विराट् छन्दका प्रभावले प्रजापतिले बाघ आदि पशु उत्पन्न गराए । अतिजगती छन्दले सिंह प्रकट गरे । बृहती छन्दले भारी बोक्ने पशुहरू उत्पन्न गरे । ककुप् छन्दले उनै प्रजापतिले उक्षा (साँढे ?) उत्पन्न गरे । सतोबृहती छन्दले भालु आदि पशुहरू उत्पन्न गराए ।

**अनड्वान्वयः पङ्क्तिश्छन्दो धेनुर्वयो जगती छन्दस्त्र्यविर्वयस्त्रिष्टुप् छन्दो दित्यवाड्वयो विराट् छन्द पञ्चाविर्वयो गायत्री छन्दस्त्रिवत्सो वयऽ उष्णिक् छन्दस्तुर्यवाड्वयोनुष्टुप् छन्दो लोकं ता इन्द्रम् ॥१०॥**

हे इष्टकाहरू हो ! पङ्क्ति छन्दले प्रजापतिले गोरु उत्पन्न गरे । जगती छन्दले गाई रचना गरे । त्रिष्टुप् छन्दले त्र्यवि (तीन पटक ब्याउने, तीन बच्चा पाउने वा तीन वर्ष आयु भएका ?) जातिका प्राणी उत्पन्न गरे । विराट् छन्दले दित्यवाट् भनिने भारी बोक्ने पशुहरू उत्पन्न गरे भने गायत्री छन्दले पञ्चावि (पाँच पटक ब्याउने, पाँच बच्चा पाउने वा पाँच वर्षको आयु हुने ?) प्राणी उत्पन्न गरे । उष्णिक् छन्दले त्रिवत्सा (तीन पटक ब्याउने वा तीन वर्ष आयु हुने) पशुहरू उत्पन्न गरे । अनुष्टुप् छन्दका प्रभावले प्रजापतिले तुर्यवाट् (चार वर्षको आयु हुने, चार बेत ब्याउने वा चार वटा बच्चा पाउने ?) पशु उत्पन्न गरे । हे इष्टकाहरू हो ! तिमीहरू यस संसारलाई सुरक्षा गर । सबै प्राणीहरूले ऐश्वर्यशाली इन्द्रदेवताको प्रार्थना गर्दछन् ।

**इन्द्राग्नी अव्यथामानामिष्टकां दृꣳहतं युवम् । पृष्ठेन द्यावापृथिवी अन्तरिक्षं च वि बाधसे ॥११॥**

हे इन्द्राग्नि देवशक्तिहरू हो ! तिमीहरू दुवै पीडारहित भएर इष्टकाहरूलाई स्थिर गराओ । आफ्ना उच्च पृष्ठभागले पृथ्वी, अन्तरि र द्युलोक व्याप्त गराउँछौ ।

**विश्वकर्मा त्वा सादयत्वन्तरिक्षस्य पृष्ठे व्यचस्वतीं प्रथस्वतीमन्तरिक्षं यच्छान्तरिक्षं दृꣳहान्तरिक्षं मा हिꣳसीः । विश्वस्मै प्राणायापानाय व्यानायोदानाय प्रतिष्ठायै चरित्राय । वायुष्ट्वाभि पातु मह्या स्वस्त्या छर्दिषा शन्त्येम तया देवतयाङ्गिरस्वद् ध्रुवा सीद ॥१२॥**

हे इष्टकाहरू हो ! प्रजापति विश्वकर्माले विस्तृत गराउँदै तिमीहरूलाई अन्तरिक्षका उच्च स्थानमा विराजमान गराऊन् । तिमीहरू समस्त विश्वका प्राण, अपान, व्यान, उदान आदि प्राणलाई प्रतिष्ठित गर्नका लागि अन्तरिक्षलाई धारण गर । अन्तरिक्षलाई सुदृढ गर, हानी नगर । वायुदेवताले आफ्नो अति कल्याणकारी र प्रखर तेजले तिमीहरूलाई रक्षित गरुन् । त्यस्ता देवताहरूले ग्रहण गरेका हुनाले तिमीहरू अङ्गिराजस्तै सुस्थिर होओ ।

**राज्ञ्यसि प्राची दिग्विराडसि दक्षिणा दिक् सम्राडसि प्रतीची दिक् स्वराडस्युदीची दिगधीपत्न्यसि बृहती दिक् ॥१३॥**

हे इष्टकाहरू हो ! तिमीहरू तेजले सम्पन्न भएर पूर्व दिशामा सुशोभित छौ, तिमीहरू विशिष्ट किसिमका तेजरूप भएर दक्षिण दिशाका स्वरूप हौ । विभिन्न खालका श्रेष्ठ

विधिले रहेको पश्चिम दिशा पनि तिमीहरू नै हौ । स्वयं प्रकाशमान् रहेको उत्तर दिशा पनि तिमीहरू नै हौ । अत्यन्त संरक्षणले युक्त भएको ऊर्ध्व दिशा तिमीहरू नै हुनाले तिमीहरू दिशाका अधिष्ठाताका रूपमा विराजमान छौ ।

**विश्वकर्मा त्वा सादयत्वन्तरिक्षस्य पृष्ठे ज्योतिष्मतीम् । विश्वस्मै प्राणायापानाय व्यानाय विश्वं ज्योतिर्यच्छ । वायुष्टेधिपतिस्तया देवतयाङ्गिरस्वद् ध्रुवा सीद ॥१४॥**

हे इष्टकाहरू हो ! विश्वस्रष्टाले तिमीहरूलाई अन्तरिक्षका उच्च भागमा विराजमान गराऊन् । तिमीहरू याजकको समस्त प्राण, अपान, व्यान प्राप्त गर्नका लागि सम्पूर्ण ज्योति प्रदान गर । आफ्ना अधिपति वायुदेवताका सामर्थ्यले अङ्गिराजस्तै भएर यस कार्यमा अडिग होओ ।

**नभश्च नभस्यश्च वार्षिकावृतू अग्नेरन्तःश्लेषोसि कल्पेतां द्यावापृथिवी कल्पन्तामापऽ ओषधयः कल्पन्तामग्नयः पृथङ्मम ज्यैष्ठ्याय सव्रताः । ये अग्नयः समनसोन्तरा द्यावापृथिवी इमे । वार्षिकावृतू अभिकल्पमानाऽ इन्द्रमिव देवाऽअभिसंविशन्तु तया देवतयाङ्गिरस्वद् ध्रुवे सीदतम् ॥१५॥**

श्रावण र भाद्रपद यी मासहरू वर्षा ऋतुसित सम्बन्धित छन् । हे इष्टकाहरू हो ! तिमीहरू प्रकाशमान अग्निदेवताका बीचमा ज्वलनशीलताका रूपमा स्थिर छौ । हाम्रो उन्नतिका लागि द्युलोक र पृथ्वीलोकले सहयोग गरुन्, जल र औषधिहरूले हाम्रो सहयोग गरुन् । एकरूपता साथ कार्यमा संलग्न रहेका अग्निले उत्कर्ष प्रदान गरुन् । द्युलोक र पृथ्वीका बीचमा रहेका अग्निदेवता पनि वर्षासित सम्बन्धित ऋतुलाई सम्पन्न गराउने कार्य सम्पन्न गरुन् । देवताहरूले इन्द्रदेवताको प्रशंसा गर्दै उनको सहयोगमा लागिपरेझैँ हे इष्टकाहरू हो ! तिमीहरू पनि उनै अङ्गिरा नामका प्रमुख देवताझैँ भएर स्थापित होओ ।

**इषश्चोर्जश्च शारदावृतू अग्नेरन्तःश्लेषोसि कल्पेतां द्यावापृथिवी कल्पन्तामापऽओषधयः कल्पन्तामग्नयः पृथङ्मम ज्यैष्ठ्याय सव्रताः । ये अग्नयः समनसोन्तरा द्यावापृथिवी इमे । शारदावृतू अभिकल्पमानाऽ इन्द्रमिव देवाऽ अभिसंविशन्तु तया देवतयाङ्गिरस्वद् ध्रुवे सीदतम् ॥१६॥**

आश्विन र कार्त्तिक यी दुई महिना शरद् ऋतुका हुन् । हे ऋतुरूपी इष्टकाहरू हो ! तिमीहरू प्रज्वलित अग्निका बीचमा दृढताका निमित्त स्थापित गरिएका छौ । हाम्रो प्रगतिका लागि पृथ्वी, द्युलोक, जल र औषधिहरूले सहयोग गरुन् । सम्पूर्ण देवता इन्द्रदेवताका नजिक पुगेर अडिएझैँ समान विचार भएका इष्टकाहरू यज्ञमा एकत्रित होऊन् । हे इष्टकाहरू हो ! तिमीहरूलाई यी देवताहरूले अङ्गिराको जस्तै सुदृढ बनाएर स्थापित गराऊन् ।

**आयुर्मे पाहि प्राणं मे पाह्यपानं मे पाहि व्यानं मे पाहि चक्षुर्मे पाहि श्रोत्रं मे पाहि वाचं मे पिन्व मनो मे जिन्वात्मानं मे पाहि ज्योतिर्मे यच्छ ॥१७॥**

हे इष्टकाहरू हो ! तिमीहरू हाम्रो आयु संरक्षित गराओ, हाम्रा जीवनधारालाई संरक्षित गर । हाम्रो अपान वायुलाई संरक्षित गर । हाम्रो व्यान वायुलाई रक्षा गर । हाम्रा नेत्रको

रक्षा गर । हाम्रा दुवै कानलाई सुरक्षित गर । हाम्रा वाणीलाई हर्षप्रदायक बनाओ । हाम्रा मनलाई उन्नत विचारले परिपूर्ण गर । हाम्रा आत्माको कल्याण गर र हाम्रो तेज अति प्रखर गराओ ।

**मा छन्दः प्रमा छन्दः प्रतिमा छन्दो अस्त्रीवयश्छन्दः पङ्क्तिश्छन्दऽ उष्णिक् छन्दो बृहती छन्दोनुष्टुप् छन्दो विराट् छन्दो गायत्री छन्दस्त्रिष्टुप् छन्दो जगती छन्दः ॥१८॥**

हे इष्टकाहरू हो ! पृथ्वी, अन्तरिक्ष र द्युलोकलाई मनन गर्दै हामी तिमीहरूलाई स्थापित गर्दछौँ । हामी अस्त्रीवय, पङ्क्ति, उष्णिक, बृहती, अनुष्टुप्, विराट्, गायत्री, त्रिष्टुप् र जगती नामका छन्दहरूलाई मनन गर्दै तिमीहरूलाई स्थापित गर्दछौँ ।

**पृथिवी छन्दोन्तरिक्षं छन्दो द्यौश्छन्दः समाश्छन्दो नक्षत्राणि छन्दो वाक् छन्दो मनश्छन्दः कृषिश्छन्दो हिरण्यं छन्दो गौश्छन्दोजाछन्दोश्वश्छन्दः ॥१९॥**

हे इष्टकाहरू हो ! पृथ्वी, अन्तरिक्ष र द्युलोकसित सम्बन्धित छन्दहरूलाई मनन गर्दै हामी तिमीहरूलाई स्थापित गर्दछौँ । वर्षदेवता, नक्षत्रदेवता, वाक्‌देवता, मनदेवता, कृषिदेवता, हिरण्यदेवता, गोदेवता, अजदेवता र अश्वदेवताका छन्दहरूलाई मनन गर्दै हामी तिमीहरूलाई स्थापित गर्दछौँ ।

**अग्निर्देवता वातो देवता सूर्यो देवता चन्द्रमा देवता वसवो देवता रुद्रा देवतादित्या देवता मरुतो देवता विश्वेदवा देवता बृहस्पतिर्देवतेन्द्रो देवता वरुणो देवता ॥२०॥**

अग्निदेवता, वायुदेवता, सूर्यदेवता, चन्द्रमादेवता, आठवटा वसुदेवता, एकादश रुद्रदेवता, बाह्र आदित्यदेवता, मरुत्गण, विश्वेदेवा, बृहस्पतिदेवता, इन्द्रदेवता र वरुणदेवता आदि सबै दिव्य शक्तिधारालाई मनन गर्दै हामी यी सबै इष्टकाहरूलाई स्थापित गर्दछौँ ।

**मूर्धासि राड् ध्रुवासि धरुणा धर्त्र्यसि धरणी । आयुषे त्वा वर्चसे त्वा कृष्यै त्वा क्षेमाय त्वा ॥२१॥**

सर्वोच्च शिरोभागमा स्थित हे इष्टकाहरू हो ! तिमीहरू स्वयं स्थिरतायुक्त भएर अर्कालाई धारण गर्ने सामर्थ्ययुक्त छौ । सम्पूर्ण प्रजालाई धारण गर्ने धर्तीजस्ता यस स्थानलाई धारण गर । दीर्घ आयु प्राप्त गर्नका लागि हामी तिमीहरूलाई स्थापित गर्दछौँ, तेजस्विता प्राप्त गर्नका लागि तिमीहरूलाई स्थापित गर्दछौँ, कृषिजन्य अन्न आदि वृद्धिका लागि हामी तिमीहरूलाई स्थापित गर्दछौँ र सुखवृद्धिका लागि पनि हामी तिमीहरूलाई स्थापित गर्दछौँ ।

**यन्त्री राड् यन्त्र्यसि यमनी ध्रुवासि धरित्री । इषे त्वोर्जे त्वा रय्यै त्वा पोषाय त्वा लोकं ता इन्द्रम् ॥२२॥**

धर्तीजस्तै अविचल, नियमअनुसार गतिशील हे इष्टकाहरू हो ! तिमीहरू स्वयं नियमपूर्वक रहेर सबैलाई नियमअनुसार सञ्चालन गर्दछौ । हामी अन्न प्राप्त गर्नका लागि तिमीहरूलाई स्वीकार गर्दछौँ, हामी पराक्रमका लागि तिमीहरूलाई स्वीकार गर्दछौँ । ऐश्वर्य वृद्धिका लागि तिमीहरूलाई स्वीकार गर्दछौँ र सबैको पोषणका लागि

तिमीहरूलाई स्वीकार गर्दै स्थापित गर्दछौँ । तिमीहरू सबै लोकको रक्षा गर्दै इन्द्र आदि देवताहरूलाई सन्तुष्ट गराओ ।

**आशुस्त्रिवृद्भान्तः पञ्चदशो व्योमा सप्तदशो धरुणऽएकविंशः प्रतूर्त्तिरष्टादशस्तपो नवदशोभीवर्त्तः सविंशो वर्चो द्वाविंशः सम्भरणस्त्रयोविंशो योनिश्चतुर्विंशो गर्भाः पञ्चविंशऽ ओजस्त्रिणवः क्रतुरेकत्रिंशः प्रतिष्ठा त्रयस्त्रिंशो ब्रध्नस्य विष्टपं चतुस्त्रिंशो नाकः षट्त्रिंशो विवर्त्तोष्टाचत्वारिंशो धर्त्रं चतुष्टोमः ॥२३॥**

हे इष्टकाहरू हो ! त्रिवृत् स्तोममा व्याप्त रहेका तिमीहरूलाई यस स्थानमा विराजमान गराउँछौँ । पन्ध्र दिनसम्म बढ्दै पन्ध्र दिनसम्म नै घट्दै जाने चन्द्रमाका ज्योतिलाई मनन गरेर तिमीहरूको स्थापना गर्दछौँ । प्रजापतिका सत्रवटा स्तोमलाई मनन गरेर तिमीहरूलाई स्थापना गर्दछौँ । धारण गर्न योग्य एक्काईस स्तोमहरूलाई मनन गरेर तिमीहरूलाई स्थापना गर्दछौँ । बाह्र महिना, पाँच ऋतु र एक संवत्सर गरी अठारवटा अङ्गले युक्त प्रतूर्त्ति स्तोमलाई मनन गरेर तिमीहरूलाई स्थापना गर्दछौँ । तपःरूपी उन्नाईस स्तोम देवताहरूलाई मनन गरेर तिमीहरूलाई स्थापना गर्दछौँ । सबै प्राणीलाई आफ्ना वशमा राख्ने बाह्रवटा महिनाहरू, सात ऋतुहरू र संवत्सर गरी जम्मा बीस सङ्ख्या भएको विंश अभीवर्तदेवतालाई मनन गरेर तिमीहरूलाई स्थापना गर्दछौँ । महान् तेज प्रदान गर्ने बाईस स्तोमहरू छन्, ती सम्भरण देवतालाई मनन गरेर हामी तिमीहरूलाई स्थापना गर्दछौँ । प्रजा उत्पन्न गर्ने स्तोम चौबीसवटा हुन्छन्, त्यस्ता योनीलाई मनन गरेर हामी इष्टकालाई स्थापना गर्दछौँ । त्रिणव नामका ओजस्वी देवतालाई स्मरण गरेर हामी इष्टका ओछ्याउँछौँ । एकतीस अवयवहरूले युक्त एकत्रिंश स्तोम भएका ऋतु देवतालाई मनन गर्दै हामी तिमीहरलाई स्थापना गर्दछौँ । तेत्तीस अवयवहरूले युक्त प्रतिष्ठाका कारण त्रयस्त्रिंशत् स्तोम छन्, ती प्रतिष्ठा देवतालाई मनन गरेर तिमीहरूलाई स्थापित गर्दछौँ । सूर्यको निवास स्थल चौबीस स्तोम हो, उनै ब्रध्नविष्टप देवतालाई मनन गरेर हामी इष्टका स्थापित गर्दछौँ । सामका आवर्त्तनहरूले सम्पन्न अठचालीस स्तोम छन्, ती विवर्त्त देवतालाई मनन गर्दै हामी इष्टका स्थापित गर्दछौँ । त्रिवृत्, पञ्चदश, सप्तदश, एकविंश यी चार स्तोमहरूको समूह चतुष्टोम सबैलाई धारण गर्ने शक्तिले सम्पन्न छ । चतुष्टोम धर्त्र देवतालाई मनन गर्दै हामी इष्टका स्थापित गर्दछौँ ।

**अग्नेर्भागोसि दीक्षायाऽ आधिपत्यं ब्रह्म स्पृतं त्रिवृत्स्तोमऽ इन्द्रस्य भागोसि विष्णोराधिपत्यं क्षत्रंस्पृतं पञ्चदश स्तोमो नृचक्षसां भागोसि धातुराधिपत्यं जनित्रंस्पृतंसप्तदश स्तोमो मित्रस्य भागोसि वरुणस्याधिपत्यं दिवो वृष्टिर्वात स्पृतऽ एकविंश स्तोमः ॥२४॥**

हे इष्टकाहरू हो ! तिमीहरू अग्निका अङ्ग हौ, दीक्षाको आधिपत्य तिमीहरूमाथि छ, त्यसैले त्रिवृत् स्तोमद्वारा मृत्युबाट ब्राह्मणको रक्षा भयो । त्रिवृत् स्तोमलाई मनन गरेर तिमीहरूलाई स्थापित गर्दछौँ । तिमीहरू इन्द्रदेवताका अङ्ग हौ, तिमीहरूमाथि विष्णुदेवताको अधिकार छ । पञ्चदश स्तोमले मृत्युबाट क्षत्रियको रक्षा भयो ।

त्यसैले पञ्चदश स्तोमलाई मनन गर्दै हामी इष्टका स्थापना गर्दछौँ । हे इष्टकाहरू हो ! तिमीहरू मानवका असल र खराब कर्मका ज्ञाता हौ र देवताको अङ्गका रूपमा छौ । तिमीहरूमाथि धाता देवताको अधिकार छ । तिमीहरूले सप्तदश स्तोमद्वारा वैश्यहरूलाई मृत्युबाट रक्षा गरेका छौ, त्यसैले सप्तदश स्तोमलाई मनन गर्दै हामी तिमीहरूलाई स्थापना गर्दछौँ । हे इष्टकाहरू हो ! तिमीहरू मित्रदेवताका अङ्गरूप हौ । तिमीहरूमाथि वरुणदेवताको अधिकार छ । एकविंश स्तोमका कारणले द्युलोकसित सम्बन्धित वर्षा र वायु मृत्युबाट संरक्षित भए, त्यसैले एकविंश स्तोमदेवतालाई मनन गर्दै हामी तिमीहरूलाई स्थापना गर्दछौँ ।

**वसूनां भागोसि रुद्राणामाधिपत्यं चतुष्पात् स्पृतं चतुर्विंᳫंश स्तोमऽ आदित्यानां भागोसि मरुतामाधिपत्यं गर्भा स्पृताः पञ्चविंᳫंश स्तोमोदित्यै भागोसि पूष्णऽआधिपत्यमोज स्पृतं त्रिणव स्तोमो देवस्य सवितुर्भागोसि बृहस्पतेराधिपत्यᳫं समीचीर्दिश स्पृताश्चतुष्टोम स्तोमः ॥२५॥**

हे इष्टकाहरू हो ! तिमीहरू वसुगणका भाग हौ, रुद्रदेवताको तिमीहरूमाथि अधिकार छ । तिमीहरूले चतुर्विंश स्तोमद्वारा पशुलाई मृत्युबाट संरक्षित गर्‍यौ, चतुर्विंशस्तोम देवतालाई मनन गर्दै हामी तिमीहरूलाई स्थापित गर्दछौँ । हे इष्टकाहरू हो ! तिमीहरू आदित्यदेवताका भाग हौ, तिमीहरूमाथि मरुत्गणको अधिकार छ । तिमीहरूले पञ्चविंश स्तोमद्वारा गर्भमा रहेका प्राणीहरूलाई मृत्युबाट सुरक्षित गरायौ । पञ्चविंश स्तोमदेवतालाई मनन गरेर हामी तिमीहरूलाई यस ठाउँमा विराजमान गराउँछौँ । हे इष्टकाहरू हो ! तिमीहरू अदितिका अंश हौ, तिमीहरूमाथि पूषादेवताको अधिकार छ, त्रिणवस्तोमद्वारा तिमीहरूले प्रजाको शक्तिलाई सुरक्षित गर्‍यौ । हामी त्रिणव स्तोमदेवताको मनन गर्दै तिमीहरूलाई स्थापना गर्दछौँ । हे इष्टकाहरू हो ! तिमीहरू सर्वप्रेरक सवितादेवताका अंश हौ, तिमीहरूमाथि बृहस्पतिदेवताको अधिकार छ । तिमीहरूले चतुष्टोम स्तोमद्वारा सबै मानिसले विचरण गर्ने गरेका दिशाहरूलाई संरक्षण प्रदान गर्‍यौ । उनै चतुष्टोमदेवतालाई मनन गर्दै हामी तिमीहरूलाई स्थापित गर्दछौँ ।

**यवाना भागोस्ययवानामाधिपत्यं प्रजा स्पृताश्चतुश्चत्वारिंᳫंश स्तोमऽ ऋभूणां भागोसि विश्वेषां देवानामाधिपत्यं भूतᳫं स्पृतं त्रयस्त्रिंᳫंश स्तोमः ॥२६॥**

हे इष्टकाहरू हो ! तिमीहरू शुक्लपक्षका तिथीहरूका भाग हौ, कृष्णपक्षीय तिथिहरूको तिमीहरूमाथि अधिकार छ । तिमीहरूले चत्वारिंशत स्तोमद्वारा प्रजालाई मृत्युबाट संरक्षित गर्‍यौ, चत्वारिंशतस्तोम देवतालाई मनन गर्दै हामी तिमीहरूलाई स्थापित गर्दछौँ । हे इष्टकाहरू हो ! तिमीहरू ऋतुहरूका भाग हौ, समस्त देवताहरूको तिमीहरूमाथि अधिकार छ । तिमीहरूले त्रयस्त्रिंशत स्तोमद्वारा सम्पूर्ण प्राणीलाई मृत्युबाट संरक्षित गर्‍यौ, उनै देवतालाई मनन गर्दै हामी तिमीहरूलाई यस ठाउँमा स्थापित गर्दछौँ ।

**सहश्च सहस्यश्च हैमन्तिकावृतू अग्नेरन्तःश्लेषोसि कल्पेतां द्यावापृथिवी कल्पन्तामापऽ ओषधयः कल्पन्तामग्नयः पृथङ्मम ज्यैष्ठ्याय सव्रताः । ये**

**अग्नयः समनसोन्तरा द्यावापृथिवी इमे । हैमन्तिकावृतू अभिकल्पमानाऽ इन्द्रमिव देवाऽ अभिसंविशन्तु तया देवतयाङ्गिरस्वद् ध्रुवे सीदतम् ॥२७॥**

मंसिर र पुस महिना हेमन्त ऋतुका भाग हुन् । यी दुवै अग्निदेवताका बीचमा रहेर सुदृढताका लागि नियुक्त भएका छन् । अग्निचयन गर्दै हामी याजकहरूको उन्नतिका लागि द्यावापृथिवीले अनुग्रह गरुन् । जल र औषधिहरूले हामीलाई आरोग्य प्रदान गरुन् । समान व्रतहरूमा सङ्कलित, अनेकौं नाम भएका अग्निले हामीलाई उचित किसिमले सहायता गरुन् । यी द्युलोक र पृथ्वीका बीचमा रहेका समान मनका अग्निहरू हेमन्त ऋतुलाई सम्पन्न गराउँदै देवताहरू इन्द्रदेवतामा आश्रित भएझैं यस यज्ञकर्ममा आश्रित होऊन् । हे इष्टकाहरू हो ! प्रख्यात देवताहरूबाट अङ्गिरा सुदृढ भएझैं तिमीहरू प्रतिष्ठित होओ ।

**एकयास्तुवत प्रजा अधीयन्त प्रजापतिरधिपतिरासीत् तिसृभिरस्तुवत ब्रह्मासृज्यत ब्रह्मणस्पतिरधिपतिरासीत् पञ्चभिरस्तुवत भूतान्यसृज्यन्त भूतानां पतिरधिपतिरासीत्सप्तभिरस्तुवत सप्त ऋषयोसृज्यन्त धाताधिपतिरासीत् ॥२८॥**

प्रजापति स्रष्टाले एकाग्र वाणीले प्रार्थना गरेका हुँदा परमेश्वरले अचेतन प्रजा उत्पन्न गरे, अनि प्रजापति सबैका अधिपति भए । प्राण, अपान र व्यान यी तीन शक्तिद्वारा ब्रह्मको उत्पत्ति भयो, यी तीनैले त्यसको स्तुति गरे, ब्रह्मणस्पति त्यस सृष्टिका अधिपति भए । पाँच प्राणले परमेश्वरको स्तुति गरे । त्यसबाट पञ्चभूतको निर्माण भयो । ती पञ्चभूतको स्वामी परमात्मा नै सबैका अधिपति भए । कान, नाक, जिब्रो, आँखा, यी सातैका सहयोगले सप्तर्षि प्रकट भए, संसारलाई धारण गर्ने परमेश्वर नै तिनका अधिपति भए ।

**नवभिरस्तुवत पितरोसृज्यन्तादितिरधिपत्न्यासीदेकादशभिरस्तुवत ऋतवो सृज्यन्तार्त्तवा अधिपतयऽ आसँस्त्रयोदशाभिरस्तुवत मासाऽ असृज्यन्त संवत्सरो धिपतिरासीत् पञ्चदशभिरस्तुवत क्षत्रमसृज्यतेन्द्रोधिपतिरासीत् सप्तदशभिरस्तुवत ग्राम्याः पशवोसृज्यन्त बृहस्पतिरधिपतिरासीत् ॥२९॥**

परमेश्वरले पितृहरूलाई संरक्षकका रूपमा उत्पन्न गरे, देवमाता अदिति उनीहरूकी अधिपति भइन् । नवप्राणले उनको स्तुति गरियो, वसन्त आदि ऋतुहरू उत्पन्न भए र उनीले नै ऋतुहरूका गुण आआफ्ना विषयमा अधिपति भए । उनलाई दस प्राण र एघारौं आत्माले प्रार्थना गरे । उनैले सबै महिनाहरूको रचना गरे र पन्ध्र तिथिहरूसँगै संवत्सरकाललाई अधिपति बनाए । उनैलाई दस प्राण, एघारौं जीवात्मा र दुई पाउले स्तुति गरे । राज्य र क्षत्रिय वंशको सिर्जना गर्नेका गोडाका दसवटा औंला, दुई जङ्घा, दुई घुँडा र एउटा नाभि अनि त्यसभन्दा माथिका अन्य अङ्गहरू सबै गरी जम्मा पन्ध्रवटाले स्तुति गरे । जसले वैश्यवर्गका अधिकारीहरूको रचना गरे र गाई आदि घरपालुवा पशुहरूको रचना गरे । उसैका गोडाका दस औंला, घुँडाभन्दा मुनि र माथिका चार जोर्नी, दुई गोडा र सत्रौं नाभिभन्दा तल्ला भागको स्तुति गरियो ।

**नवदशभिरस्तुवत शूद्रार्यावसृज्येतामहोरात्रे अधिपत्नी आस्तामेकविꣳशत्यास्तुवतैकशफाः पशवोसृज्यन्त वरुणोधिपतिरासीत् त्रयोविꣳशत्यास्तुवत क्षुद्राः पशवोसृज्यन्त पूषाधिपतिरासीत् पञ्चविꣳशत्यास्तुवतारण्याः पशवोसृज्यन्त वायुरधिपतिरासीत् सप्तविꣳशत्यास्तुवत द्यावापृथिवी व्यैतां वसवो रुद्राऽ आदित्याऽ अनुव्यायँस्तऽ एवाधिपतयऽ आसन् ॥३०॥**

दुई हातका दस औँला र शारीरिक नौ प्राण गरी उन्नाईसवटाले स्तुति गरियो । यी उन्नाईसवटा आन्तरिक तथा बाह्य अङ्गको जस्तै शूद्रको सेवाभाव र आर्यको ब्रह्मनिष्ठ भाव प्रादुर्भाव भए । रात र दिन यिनका स्वामी भए । हातका दस तथा गोडाका दस गरी बीस औँला र एक आत्मा शरीरमा विद्यमान छन्, यिनीहरूबाटै परमात्माको गुणानुवाद हुन्छ । ती अङ्गहरूका शक्तिले क्षुद्र पशुहरू उत्पन्न भए र ती सबैका अधिपति पूषादेवताका रूपमा अन्नदात्री भूमि रहेको छ । हातगोडाका दसदस औँला दुई भुजा, दुई गोडा र आत्मा जम्मा यिनको सङ्ख्या पच्चीस छ । यी पच्चीस शरीरका अवयव हुन् । यिनीहरूबाट विधाताका महिमाको गुणगान गरिन्छ । ती अवयवहरूबाटै जङ्गली पशुहरूको रचना भयो, यी सबैका स्वामी वायु हुन् । हातगोडाका दसदस औँला, दुई भुजा, दुई घुँडा, दुई गोडा र आत्मा जम्मा गरी सत्ताईस भए । यिनै सत्ताईस घटकहरूले परमेश्वरका कलाकौशलको वर्णन गर्दै महिमाको गुणगान गरियो । यिनीहरूले नै देवलोक र पृथ्वीलोक दुवै व्याप्त छन् । उनीहरूमै आठ वसु, एघार रुद्र र बाह्र महिना व्यवस्थित भएका छन् । उनीहरू नै आकाश र भूलोक दुवैका अधिपति र पालक हुन् ।

**नवविꣳशत्यास्तुव वनस्पतयोसृज्यन्त सोमोधिपतिरासीदेकत्रिꣳशतास्तुवत प्रजाऽ असृज्यन्त यवाश्चायवाश्चाधिपतयऽ आसँस्त्रयस्त्रिꣳशतास्तुवत भूतान्यशाम्यन् प्रजापतिः परमेष्ठ्यधिपतिरासील्लोकं ताऽ इन्द्रम् ॥३१॥**

शरीरमा हातगोडाका दसदस औँला र नौ प्राण जम्मा गरी भएका उनन्तीस शक्तिघटकहरूले नै विश्वको रचना गरिरहेका छन्, उनैले विधाताको स्तुति गर्दछन् । तिनै घटकहरूले नै वनस्पति निर्माण गरे र सोम त्यसका अधिपति भए । हातगोडाका दसदस औँला, दस प्राण र एकतीसौँ जीवात्मा यी घटकशक्तिहरूले सम्पूर्ण शरीर बनेको छ । यिनै शक्तिले परमात्माका कौशलको महिमाको गुणगान गरियो । यिनैले पजाको सृष्टि भयो । पुरुष र स्त्री यिनका अधिपति हुन् । हातगोडाका दसदस औँला, दस प्राण, दुई गोडा र तेत्तीसौँ जीवात्माबाट सम्पूर्ण शरीरको रचना भयो । यी शक्तिबाटै परमात्माको स्तुति गरियो । त्यसैबाट सम्पूर्ण प्राणीहरू सुखी भए । परम पदमा रहेका प्रजापति परमेश्वर नै सबैका अधिपति भए । सबैले ऐश्वर्यशाली इन्द्रदेवतालाई प्रार्थना गर्दछन् ।

## इति चतुर्दशोऽध्यायः

चौधौँ अध्याय सकियो

ॐ

भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।

# वाजसनेयि माध्यन्दिन शुक्ल

# यजुर्वेद – संहिता

## ॥अथ पञ्चदशोऽध्यायः॥

॥पन्ध्रौं अध्याय॥

**ऋषि–** परमेष्ठी विरूप, भरद्वाज, त्रिशिरा, बुध गविष्ठिर, वामदेव, सुतम्भर, इष, संवनन, प्रस्कण्व, वसिष्ठ, गोतम, सौभरि, कुमारवृष, बन्धु, देवश्रवा देववात, भारत, प्रियमेध ऐन्द्र, जेता माधुच्छन्दस ।

**देवता–** अग्नि, लिङ्गोक्त, ऋतु, सूर्य, लोकम्पृणा लिङ्गोक्त, आपः, इन्द्र, स्वयमातृण्णा ।

**छन्द–** त्रिष्टुप्, भुरिक् त्रिष्टुप्, ब्राह्मी त्रिष्टुप्, निचृत् आकृति निचृत् अभिकृति, विराट् अभिकृति, भुरिक् आर्षी अनुष्टुप्, विराट् ब्राह्मी जगती, विराट् ब्राह्मी त्रिष्टुप्, ब्राह्मी बृहती, स्वराट् ब्राह्मी त्रिष्टुप्, ब्राह्मी बृहती, भुरिक् ब्राह्मी जगती, ब्राह्मी बृहती, ब्राह्मी जगती, ब्राह्मी त्रिष्टुप्, विकृति, निचृत् प्रकृति, कृति, भुरिक् अतिधृति, निचृत् कृति, निचृत गायत्री, निचृत् आर्षीः त्रिष्टुप्, निचृत् त्रिष्टुप्, भुरिक् आर्षी त्रिष्टुप्, निचृत् आर्षी जगती, विराट् आर्षी जगती, विराट् अनुष्टुप्, विराट बृहती, निचृत् बृहती, आर्षी अनुष्टुप्, उष्णिक्, निचृत् उष्णिक्, निचृत् पङ्क्ति, आर्षी पङ्क्ति, आर्षी गायत्री, भुरिक् आर्षी गायत्री, विराट् ब्राह्मी त्रिष्टुप्, स्वराट् ब्राह्मी बृहती, आर्षी त्रिष्टुप्, स्वराट् आर्षी त्रिष्टुप्, भुरिक् आर्षी पङ्क्ति निचृत् अनुष्टुप्, स्वराट् उत्कृति, ब्राह्मी बृहती, विराट् त्रिष्टुप्, आकृति ।

**अग्ने जातान् प्र णुदा नः सपत्नान् प्रत्यजातान् नुद जातवेदः । अधि नो ब्रूहि सुमनाऽ अहेडँस्तव स्याम शर्मꣳस्त्रिवरूथऽ उद्भौ ॥१॥**

हे सर्वज्ञानसम्पन्न अग्निदेवता ! देखा परेका हाम्रा शत्रुहरूलाई तिमी राम्ररी विनाश गर र पछि देखा पर्ने शत्रुहरूलाई रोक । तिमी खुसी होऊ र हामीलाई अपमानित नगरीकन चाहिएको वर प्रदान गर । हामी तिम्रा उत्तम सुखको उत्पादक आश्रयमा स्थित रहेर आग्निध्र, हविर्धान तथा सदोमण्डप तीनै मण्डपमा यज्ञको कार्य सम्पन्न गरौं ।

**सहसा जातान् प्रणुदा नः सपत्नान् प्रत्यजाताञ्जातवेदो नुदस्व । अधि नो ब्रूहि सुमनस्यमानो वयꣳस्याम प्र णुदा नः सपत्नान् ॥२॥**

हे सम्पूर्ण ज्ञानले सम्पन्न अग्निदेवता ! हाम्रा सबै खालका शत्रुलाई विनाश गर भविष्यमा देखा पर्ने शत्रुलाई पनि नष्ट गराऊ । तिमी खुसी मनले हामीलाई मार्गदर्शन गराऊ, त्यसो भएपछि हामी सबै शत्रुलाई विनाश गर्नमा समर्थ हुन सक्नेछौं ।

**षोडशी स्तोमऽ ओजो द्रविणं चतुश्चत्वारिꣳश स्तोमो वर्चो द्रविणम् । अग्नेः पुरीषमस्यप्सो नाम तां त्वा विश्वे अभि गृहन्तु देवाः । स्तोमपृष्ठा धृतवतीह सीद प्रजावदस्मे द्रविणा यजस्व ॥३॥**

हे इष्टकाहरू हो ! सोह्र कलाले सम्पन्न स्तोमलाई ध्यान गर्दै तिमीहरूलाई स्थापित गर्दछौं । ती स्तोमहरूले पराक्रमयुक्त सम्पदा प्रदान गर्दछन् । चवालीस शक्तिले युक्त स्तोमहरूलाई मनन गर्दै तिमीहरूलाई स्थापित गर्दछौं । तिनले तेज र शक्ति प्रदान गर्नेछन् । तिमीहरू रक्षकका नामले पूर्णिमाका चन्द्रमाजस्तै अग्निदेवतालाई पूर्णता प्रदान गर्दछौ । पूर्ण शक्तिलाई देवताका समूहले प्रशंसा गर्दछन् । सबै शक्तिहरू र बलशाली पुरुषहरूले सम्मान गरेपछि तेजस्विता धारण गरेर तिमीहरू यस स्थानमा विराजमान होओ । तिमीहरू हामीलाई उपयोगी ऐश्वर्य प्रदान गर ।

**एवश्छन्दो वरिवश्छन्दः शम्भूश्छन्दः परिभूश्छन्दऽ आच्छच्छन्दो मनश्छन्दो व्यचश्छन्दः सिन्धुश्छन्दः समुद्रश्छन्दः सरिरं छन्दः ककुप्छन्दस्त्रिककुप्छन्दः काव्यं छन्दो अङ्कुपं छन्दोक्षरपङ्क्तिश्छन्दः पदपङ्क्तिश्छन्दो विष्टारपङ्क्तिश्छन्दः क्षुरोभ्रजश्छन्दः ॥४॥**

हे इष्टकाहरू हो ! प्राणीहरूका लागि विचरण गर्न योग्य पृथ्वी, प्रभामण्डलले युक्त अन्तरिक्ष, स्वर्गीय आनन्द प्रदाता द्युलोक र सबैतिर व्याप्त रहेका दिशाहरूलाई मनन गर्दै हामी तिमीहरूलाई स्थापित गर्दछौं । प्रजापतिको सङ्कल्प, मनको मनन शक्ति, समस्त संसारमा व्याप्त हुने गुणले युक्त सूर्य, नाडिहरूद्वारा शरीरमा व्याप्त प्राणवायु, समुद्रजस्तै गम्भीर मन र मुखबाट निस्केको वाणी यी सबैलाई मनन गर्दै तिमीहरूलाई स्थापना गर्दछौं । प्राण र उदानलाई मनन गरेर तिमीहरूलाई स्थापित गर्दछौं । प्रकाशरूपी तीन वेद, कुटिल मार्गमा प्रवाहित हुने जल, पृथ्वी, आकाश, पाताल, दिशाहरू र देदीप्यमान विद्युत्लाई मनन गर्दै हामी तिमीहरूलाई स्थापित गर्दछौं ।

**आच्छच्छन्दः प्रच्छच्छन्दः संयच्छन्दो वियच्छन्दो बृहच्छन्दो रथन्तरञ्छन्दो निकायश्छन्दो विवधश्छन्दो गिरश्छन्दो भ्रजश्छन्दः सꣳस्तुप्छन्दोनुष्टुप्छन्दऽ एवश्छन्दो वरिवश्छन्दो वयश्छन्दो वयस्कृच्छन्दो विष्पर्धाश्छन्दो विशालं छन्दश्छदिश्छन्दो दूरोहणं छन्दस्तन्द्रं छन्दो अङ्काङ्कं छन्दः ॥५॥**

हे इष्टकाहरू हो ! शरीरलाई ढाक्ने अन्नलाई मनन गरेर तिमीहरूलाई स्थापित गर्दछौं । शरीरलाई पखाल्ने जललाई, कर्मबाट निवृत्त गर्ने रात्रिलाई, विशिष्ट व्यापारका प्रवर्त्तक दिनहरूलाई मनन गरेर तिमीहरूलाई स्थापित गर्दछौं । विस्तृत द्युलोक, रथ आदिमा गमन गर्न योग्य पृथ्वी र अत्यन्त शब्द निकाल्ने वायुदेवतालाई मनन गरेर तिमीहरूलाई स्थापित गर्दछौं । वैखरी वाणी, मध्यमा वाणी र भूलोकलाई स्थापना गरेर तिमीहरूलाई स्थापना गर्दछौं । प्रभामण्डललाई मनन गरेर, बाल्य आदि उमेरलाई मनन गरेर, जठराग्निलाई मनन गरेर, तिमीहरूको प्रचुर ऐश्वर्य प्रदायक स्वर्गलाई मनन गरेर जहाँ विभिन्न किसिमका मानिसहरू शोभायमान हुन्छन्, त्यस्तो भूतललाई मनन गरेर सूर्यको रश्मिले व्याप्त अन्तरिक्ष तथा द्युलोकलाई मनन गरेर तिमीहरूलाई स्थापित

गर्दछौँ । निष्काम ज्योतिष्टोम यज्ञका कृपाले सिद्ध ज्ञानस्वरूप सूर्यदेवतालाई मनन गरेर ढुङ्गामाटो, खाडल आदिले युक्त जललाई मनन गरेर तिमीहरूलाई यस ठाउँमा स्थापित गर्दछौँ ।

**रश्मिना सत्याय सत्यं जिन्व प्रतिना धर्मणा धर्मं जिन्वान्वित्या दिवा दिवं जिन्व सन्धिनान्तरिक्षेणान्तरिक्षं जिन्व प्रतिधिना पृथिव्या पृथिवीं जिन्व विष्टम्भेन वृष्ट्या वृष्टिं जिन्व प्रवयाह्नाहर्जिन्वानुया रात्र्या रात्रीं जिन्वोशिजा वसुभ्यो वसूञ्जिन्व प्रकेतेनादित्येभ्यऽ आदित्याञ्जिन्व ॥६॥**

हे इष्टकाहरू हो ! तेजस्विताका माध्यमबाट सत्यको प्रतिष्ठा गर्नका लागि सत्यलाई पुष्ट गराओ । गतिशील आचरणद्वारा धर्मको प्रतिष्ठा गर्नका लागि धर्मलाई परिपुष्ट गराओ । दिव्यताको अनुगमन गर्दै द्युलोकलाई तृप्त गराओ । परस्पर सञ्चार सन्धिका माध्यमबाट पृथ्वी, द्युलोक, पदार्थ र चेतनालाई एकीकृत प्रतिष्ठा गर्नका लागि अन्तरिक्षलाई परिपुष्ट गराओ । पदार्थहरूलाई प्रतिपादनका माध्यमबाट उर्वरता र यथास्थितिलाई निरन्तरता प्रदान गर्नका लागि पृथ्वीलाई सन्तुष्ट गराओ । वर्षाबाट जल प्राप्त गरेर सार्थकता प्रदान गर्नका लागि वर्षालाई सन्तुष्ट गराओ । कर्तव्यअनुसार विशिष्ट कर्म सम्पादन गर्दै दिवसलाई सार्थकता प्रदान गर्नका लागि दिवसहरूलाई पुष्ट गराओ । शरीर र प्रकृतिका अवयवहरूको अनुकूल माध्यमबाट विश्रामको स्थिति प्राप्त गर्नका लागि रात्रिलाई सन्तुष्ट गराओ । आवास प्रदान गराउने वसुहरूको प्रतिष्ठाका लागि, हित, आकाङ्क्षाका माध्यमबाट सबैमा वास गरेका चेतनारूपी वसुहरूलाई सन्तुष्ट गराओ । ज्ञानरूपी प्रतिभाको विकासका माध्यमबाट प्रकाशको स्रोतका रूपमा रहेका प्रकाशपुञ्ज आदित्यलाई पुष्ट गराओ ।

**तन्तुना रायस्पोषेण रायस्पोषं जिन्व सꣳसर्पेण श्रुताय श्रुतं जिन्वै डेनौषधीभिरोषधीर्जिन्वोत्तमेन तनूभिस्तनूर्जिन्व वयोधसाधीतेनाधीतं जिन्वाभिजिता तेजसा तेजो जिन्व ॥७॥**

हे इष्टकाहरू हो ! विस्तार र उत्पादन गर्नमा समर्थ तन्तुहरूका माध्यमबाट ऐश्वर्यको प्रतिष्ठाका लागि सम्पत्तिलाई सम्पन्न गराओ । श्रुतिज्ञानको प्रतिष्ठाका लागि उचित किसिमले प्रचारका माध्यमबाट वेदहरूमाथि प्रेम गर । पृथ्वीमा उत्पन्न अन्न वनस्पति आदिका गुणले औषधिउपचारको प्रतिष्ठाका लागि औषधिहरूलाई परिपुष्टता प्रदान गर । विकृति उच्छेदन गर्ने सामर्थ्यरूपी उत्तमताका माध्यमबाट शरीरलाई प्रतिष्ठा प्रदान गर्न अङ्गअवयवहरूलाई पुष्ट गराओ । अध्ययनलाई प्रतिष्ठित गर्नका लागि अनुभवसम्पन्नताका माध्यमबाट अध्ययनसित प्रीति गर । तेजस्विताको प्रतिष्ठाका लागि विजयशीलताका माध्यमबाट बाधाहरूलाई जितेर तेजस्वितालाई पुष्ट गराओ ।

**प्रतिपदसि प्रतिपदे त्वानुपदस्यनुपदे त्वा सम्पदसि सम्पदे त्वा तेजोसि तेजसे त्वा ॥८॥**

हे इष्टकाहरू हो ! तिमीहरू जीवनको मूल आधार अन्नका रूप हौ । अन्नका लागि तिमीहरूलाई स्वीकार गर्दछौँ । तिमीहरू विचारका रूप हौ । त्यसैले बुद्धिका लागि तिमीहरूलाई स्थापित गर्दछौँ । तिमीहरू सम्पत्तिका रूप हौ । त्यसैले सम्पत्तिका

लागि तिमीहरूलाई उपलब्ध गर्दछौं । तिमीहरू मानिसका शरीरमा तेजका रूप हौ । त्यसैले तेजस्विताका लागि तिमीहरूलाई स्वीकार गर्दछौं ।

**त्रिवृदसि त्रिवृते त्वा प्रवृदसि प्रवृते त्वा विवृदसि विवृते त्वा सवृदसि सवृते त्वा क्रमोस्याक्रमाय त्वा सङ्क्रमोसि सङ्क्रमाय त्वोत्क्रमोस्युत्क्रमाय त्वोत्क्रान्तिरस्युत्क्रान्त्यै त्वाधिपतिनोर्जोर्जं जिन्व ॥९॥**

हे इष्टकाहरू हो ! तिमीहरू कृषि, वर्षा र बीजबाट उत्पन्न हुने अन्नजस्तै छौ । अन्न वृद्धि गर्नका लागि तिमीहरूलाई स्वीकार गर्दछौं । तिमीहरू सत्कर्मका प्रवर्त्तक हौ, त्यसैले सत्कर्मको प्रवृत्तिको विस्तारका लागि तिमीहरूलाई स्थापित गर्दछौं । तिमीहरू विशिष्ट विधिले कर्म सम्पादन गर्दछौ । त्यसैले शुभकर्मका लागि तिमीहरूलाई स्थापित गर्दछौं । तिमीहरू श्रेष्ठ आचरणले युक्त छौ । त्यसैले उत्तम चरित्रका लागि तिमीहरूलाई स्थापित गर्दछौं । तिमीहरू [illegible]
भोक निवारण गर्नका लागि तिमीहरूलाई हामी स्थापित गर्दछौं । तिमीहरू उन्नत क्रान्तिका प्रवर्त्तक हौ । त्यसैले क्रान्तिकारी परिवर्तनका लागि हामी तिमीहरूलाई स्थापित गर्दछौं ।

**राज्ञ्यसि प्राची दिग्वसवस्ते देवाऽ अधिपतयोग्निर्हेतीनां प्रतिधर्त्ता त्रिवृत् त्वा स्तोमः पृथिव्याᳬश्रयत्वाज्यमुक्थमव्यथायै स्तभ्नातु रथन्तरᳬसाम प्रतिष्ठित्याऽ अन्तरिक्षऽ ऋषयस्त्वा प्रथमजा देवेषु दिवो मात्रया वरिम्णा प्रथन्तु विधर्त्ता चायमधिपतिश्च ते त्वा सर्वे संविदाना नाकस्य पृष्ठे स्वर्गे लोके यजमानं च सादयन्तु ॥१०॥**

हे इष्टकाहरू हो ! तिमीहरू पूर्व दिशाका स्वामिनी हौ । अष्टवसु तिमीहरूका पालक हुन् । अग्निदेवता समस्त अनिष्ट निवारक हुन् । त्रिवृत् स्तोमले तिमीहरूलाई भूमिमाथि स्थापित गरुन् । आज्य र उक्थले तिमीहरूलाई सुदृढ गराऊन् । प्रतिष्ठाका लागि रथन्तर सामले अन्तरिक्षलोकमा तिमीहरूलाई स्थापित गराऊन् । सर्वप्रथम उत्पन्न भएका ऋषिगणले देवलोकमा तिमीहरूलाई श्रेष्ठ देवताहरूका साथमा स्थापित गराऊन् । विशिष्ट रीतिले धारण गर्ने अधिपतिले तिमीहरूलाई विस्तारित गरुन् । यसै किसिमले सम्पूर्ण वसु आदि देवताहरू एक साथ भएर याजकलाई स्वर्गको सुखबाट लाभान्वित गराऊन् ।

**विराडसि दक्षिणा दिग्रुद्रास्ते देवाऽ अधिपतयऽइन्द्रो हेतीनां प्रतिधर्त्ता पञ्चदशस्त्वा स्तोमः पृथिव्याᳬश्रयतु प्र उगमुक्थमव्यथायै स्तभ्नातु बृहत्साम प्रतिष्ठित्याऽ अन्तरिक्षऽ ऋषयस्त्वा प्रथमजा देवेषु दिवो मात्रया वरिम्णा प्रथन्तु विधर्त्ता चायमधिपतिश्च ते त्वा सर्वे संविदाना नाकस्य पृष्ठे स्वर्गे लोके यजमानं च सादयन्तु ॥११॥**

हे इष्टकाहरू हो ! तिमीहरू विशेष रूपले व्यापक दक्षिण दिशाका रूप हौ । रुद्रदेवता तिमीहरूका पालक हुन् । विघ्नविनाशक इन्द्रदेवताले पञ्चदश स्तोम पृथ्वीमा स्थापित गरुन् । प्रउग नामका उक्थले स्थिरताका निम्ति तिमीहरूलाई सुदृढ गराऊन् र बृहत्साम अन्तरिक्षमा स्थापित गराऊन् । ऋषिगणले दिव्यलोकमा दैवी

गुणका रूपमा प्रतिष्ठित गरुन् । यसै गरी वसु आदि देवताहरू एकत्रित भएर याजकहरूको सुखका लागि स्वर्गलोकमा पुऱ्याऊन् ।

**सम्राडसि प्रतीची दिगादित्यास्ते देवाऽ अधिपतयो वरुणो हेतीनां प्रतिधर्त्ता सप्तदशस्त्वा स्तोमः पृथिव्याᳬं श्रयतु मरुत्वतीयमुक्थमव्यथायै स्तभ्नातु वैरूपᳬं साम प्रतिष्ठित्याऽ अन्तरिक्षऽ ऋषयस्त्वा प्रथमजा देवेषु दिवो मात्रया वरिम्णा प्रथन्तु विधर्त्ता चायमधिपतिश्च ते त्वा सर्वे संविदाना नाकस्य पृष्ठे स्वर्गे लोके यजमानं च सादयन्तु ॥१२॥**

हे इष्टकाहरू हो ! तिमीहरू विशेष दीप्तियुक्त पश्चिम दिशाजस्तै छौ । आदित्यगण तिमीहरूका पालनकर्ता हुन् । दुःखनिवारक वरुणदेवताले तिमीहरूलाई सप्तदश स्तोम भूमिमाथि प्रतिष्ठित गरुन् । मरुत् उक्थले दृढाका लागि तिमीहरूलाई स्थापित गरुन् । वैरूप सामले अन्तरिक्षमा दृढताका लागि तिमीहरूलाई स्थापित गरुन् । सृष्टिक्रममा प्रथमपटक उत्पन्न ऋषिहरूले तिमीहरूलाई देवलोकमा स्थापित गरुन् । यसै गरी सम्पूर्ण वसु आदि सबै देवताहरूले याजकहरूको सुखका रूपमा तिमीहरूलाई स्वर्गलोकमा पुऱ्याऊन् ।

**स्वराडस्युदीची दिङ्मरुतस्ते देवाऽ अभिपतयः सोमो हेतीनां प्रतिधर्त्तैकविᳬंशस्त्वा स्तोमः पृथिव्याᳬं श्रयतु निष्केवल्यमुक्थमव्यथायै स्तभ्नातु वैराजᳬं साम प्रतिष्ठित्याऽ अन्तरिक्षऽ ऋषयस्त्वा प्रथमजा देवेषु दिवो मात्रया वरिम्णा प्रथन्तु विधर्त्ता चायमधिपतिश्च ते त्वा सर्वे संविदाना नाकस्य पृष्ठे स्वर्गे लोके यजमानं च सादयन्तु ॥१३॥**

हे इष्टकाहरू हो ! तिमीहरू स्वयं दीप्तिमान् रहेको उत्तर दिशाका रूप हौ, मरुत्गण तिमीहरूका स्वामी हुन् । सोमले व्याधि निवारण गर्दछन् । एकविंश स्तोमले तिमीहरूलाई पृथ्वीमा विराजित गराऊन् । सुदृढताका लागि तिमीहरू निष्केवल्य नामको शस्त्ररूपी स्तोत्रमा स्थित गरेर वैराज सामले अन्तरिक्षमा स्थिर गराऊन् । प्रथम उत्पन्न ऋषिहरूले सम्पूर्ण दिव्यलोकमा उत्तम दैवी गुणले व्याप्त गराऊन् । अभीष्ट सिद्धि गराउने र मुख्य यी स्वाभिमानी देवताहरूले पनि तिमीहरूलाई विस्तारित गरुन् । यसै किसिमले सम्पूर्ण वसु आदि देवताले एकमत भएर याजकहरूलाई माथि रहेको सुखस्वरूपको स्वर्गलोकमा अवश्य पुऱ्याऊन् ।

**अधिपत्न्यसि बृहती दिग्विश्वे ते देवाऽ अधिपतयो बृहस्पतिर्हेतीनां प्रतिधर्त्ता त्रिणवत्रयस्त्रिᳬंशौ त्वा स्तोमौ पृथिव्याᳬं श्रयतां वैश्वदेवाग्निमारुते उक्थे अव्यथायै स्तभ्नीताᳬं शाक्वररैवते सामनी प्रतिष्ठित्याऽ अन्तरिक्षऽ ऋषयस्त्वा प्रथमजा देवेषु दिवो मात्रया वरिम्णा प्रथन्तु विधर्त्ता चायमधिपतिश्च ते त्वा सर्वे संविदाना नाकस्य पृष्ठे स्वर्गे लोके यजमानं च सादयन्तु ॥१४॥**

हे इष्टकाहरू हो ! तिमीहरू पालनशक्तिले युक्त, विस्तृत, ऊर्ध्व दिशाका रूप हौ । सबै देवशक्तिहरू तिमीहरूका पालक हुन् । बृहस्पति दुःखनिवारक हुन् । त्रिणवत्रयस्त्रिंश स्तोमले भूमिमा तिमीहरूलाई प्रतिष्ठित गराऊन् । वैश्वदेवता, अग्निदेवता, मरुत्देवतासम्बन्धी स्तोत्रहरूले सुस्थिरताका लागि तिमीहरूलाई स्थापित

गरुन् । शाक्वर र रैवत नामका दुई सामले तिमीहरूलाई अन्तरिक्षमा प्रतिष्ठित गरुन् । प्रथम उत्पन्न ऋषिहरूले दिव्यलोकमा उत्तम देवी गुणले तिमीहरूलाई व्याप्त गराऊन् । अभीष्ट कार्य सम्पन्न गर्ने र प्रधान स्वाभिमानी देवताहरूले पनि तिमीहरूलाई विस्तारित गरुन् । यसै किसिमले वसु आदि देवताहरू एकमत भएर सुखस्वरूप उच्चतायुक्त स्वर्गलोकमा यजमानलाई अवश्य प्रतिष्ठित गरुन् ।

**अयं पुरो हरिकेशः सूर्यरश्मिस्तस्य रथगृत्सश्च रथौजाश्च सेनानीग्रामण्यौ । पुञ्जिकस्थला च ऋतुस्थला चाप्सरसौ दङ्क्ष्णवः पशवो हेतिः पौरुषेयो वधः प्रहेतिस्तेभ्यो नमो अस्तु ते नोवन्तु ते नो मृडयन्तु ते यं द्विष्मो यश्च नो द्वेष्टि तमेषां जम्भे दध्मः ॥१५॥**

सूर्यदेवताको सुनौलो आभाजस्तै देदीप्यमान अग्निदेवता पूर्व दिशामा इष्टकाका रूपमा प्रतिष्ठित छन् । उनै अग्निदेवताको रथमा विद्या र सिपमा कुशल वसन्तऋतु सेनापति र ग्रामनायक बनेर रहेको छ । सत्सङ्कल्प र रूप आदिका प्रेरक दिशा र उपदिशाहरू अप्सराका रूपमा छन् । व्याघ्र आदि हिंस्रक पशुहरू नै यिनका शस्त्रास्त्र हुन् र लडाइँको मृत्यु नै यिनले गरेको वध हो । यस किसिमले उनै अग्निदेवतालाई सबै सहभागिहरूका साथ नमस्कार गर्दछौँ । उनीहरू सबैले हाम्रो रक्षा गर्दै सुख प्रदान गर्दछन् । जो हामीसित प्रेमभावविनाका छन् र जसले हाम्रो रिस गर्दछन्, ती सबैलाई हामी अग्निदेवताका ज्वालारूपी दाह्रामा हालिदिन्छौँ ।

**अयं दक्षिणा विश्वकर्मा तस्य रथस्वनश्च रथेश्चित्रश्च सेनानीग्रामण्यौ । मेनका च सहजन्या चाप्सरसौ यातुधाना हेती रक्षाꣳसि प्रहेतिस्तेभ्यो नमो अस्तु ते नोवन्तु ते नो मृडयन्तु ते यं द्विष्मो यश्च नो द्वेष्टि तमेषां जम्भे दध्मः ॥१६॥**

सबै कर्महरूलाई निर्वाह गर्ने विश्वकर्मा वायुका रूपमा यी इष्टकाहरू दक्षिण दिशामा स्थापित छन् । रथमा बसेर शब्द गर्दै शासक, सेनापति र नगर रक्षकका रूपमा ग्रीष्म ऋतु रहेका छन् । सबैले मानेकी मेनका र सबैसँग समान भाव राख्ने सहजन्या यी दुई अप्सराहरू छन् । विभिन्न किसिमका आसुरी वृत्ति र क्रूर खालका विभिन्न राक्षसहरू यिनका तीक्ष्ण शस्त्रास्त्र हुन् । यसै किसिमले यी वायुरूपी इष्टकालाई सबै सेवकहरूले सेवासुसार तथा नमस्कार गर्दछन् । उनीहरू सबैले हामीलाई सुखी बनाऊन्, उनीहरू सबैले हामीलाई सुरक्षा गरुन् । जो हामीसित प्रेमभावविनाका छन् र जसले हाम्रो रिस गर्दछन्, ती सबै रिस गर्नेहरूलाई हामी अग्निदेवताका ज्वालारूपी दाह्रामा हालिदिन्छौँ ।

**अयं पश्चाद्विश्वव्यचास्तस्य रथप्रोतश्चासमरथश्च सेनानीग्रामण्यौ । प्रम्लोचन्ती चानुम्लोचन्ती चाप्सरसौ व्याघ्रा हेतिः सर्पाः प्रहेतिस्तेभ्यो नमो अस्तु ते नोवन्तु ते नो मृडयन्तु ते यं द्विष्मो यश्च नो द्वेष्टि तमेषां जम्भे दध्मः ॥१७॥**

सम्पूर्ण विश्वलाई प्रकाशित गर्ने, आदित्यस्वरूपका इष्टका पश्चिम दिशामा स्थापित छन् । युद्धमा धैर्यशाली वीर महारथी वर्षाऋतु यिनका सेनानायक ग्रामरक्षक हुन् । आफ्नो परिधानको सौन्दर्यले सबैको मन लोभ्याउने, मख्ख पार्ने व्यक्तिलाई पनि मोहित पार्ने प्रम्लोचनी र अनुम्लोचनी यिनका दुई अप्साहरू छन् । बाघ आदि पशु सर्प आदि

विषालु जीव यिनका शस्त्रास्त्र हुन् । यी सबैलाई हाम्रो नमस्कार छ । यिनीहरू सबै हाम्रा लागि सुखकारी होऊन्, यी सबैले हामीलाई रक्षा गरुन् । जो हामीसित प्रेमभावविनाका छन् र जसले हाम्रो रिस गर्दछन्, ती सबैलाई हामी अग्निदेवताका ज्वालारूपी दाह्रामा हालिदिन्छौँ ।

**अयमुत्तरात्संयद्वसुस्तस्य ताक्ष्यश्चारिष्टनेमिश्च सेनानीग्रामण्यौ । विश्वाची च घृताची चाप्सरसावापो हेतिर्वातः प्रहेतिस्तेभ्यो नमो अस्तु ते नोवन्तु ते नो मृडयन्तु ते यं द्विष्मो यश्च नो द्वेष्टि तमेषां जम्भे दध्मः ॥१८॥**

उत्तर दिशामा प्रतिष्ठित रहेका यी इष्टकाहरू धनले सम्पन्न हुने यज्ञका रूप हुन् । अन्तरिक्षमा उनीहरूका तीक्ष्ण पक्षरूपी आयुधहरूलाई विस्तार गर्ने र विकृति नाश गर्ने खालका अपराजेय शस्त्रास्त्रले युक्त सेनापति र ग्रामपालकका रूपमा शरद् ऋतु रहेको छ । विश्वले वन्दना गर्ने र घिउ भक्षण गर्ने विश्वाची र घृताची नामका दुई अप्सरा उसका छन् । जल उनको शस्त्र हो र वायु उनको तीक्ष्ण आयुध हो । उनीहरू सबैलाई हाम्रो नमस्कार छ । तिनीहरू सबैले हामीलाई रक्षा गरुन् । जो हामीसित प्रेमभावविनाका छन् र जसले हाम्रो रिस गर्दछन्, ती सबैलाई हामी अग्निदेवताका ज्वालारूपी दाह्रामा हालिदिन्छौँ ।

**अयमुपर्यर्वाग्वसुस्तस्य सेनजिच्च सुषेणश्च सेनानीग्रामण्यौ । उर्वशी च पूर्वचित्तिश्चाप्सरसाववस्फूर्जन् हेतिर्विद्युत्प्रहेतिस्तेभ्यो नमो अस्तु ते नोवन्तु ते नो मृडयन्तु ते यं द्विष्मो यश्च नो द्वेष्टि तमेषां जम्भे दध्मः ॥१९॥**

माथिल्लो दिशामा रहेका इष्टकाहरू पर्जन्यका रूप हुन् । उनीहरूसित विजेता र समर्थ सेनायुक्त सेनानायक र ग्रामपालक हेमन्त ऋतु छन् । उनले विस्तार गरेका कार्यलाई नियन्त्रित गर्ने र अत्यन्त सुन्दर रूपसम्पन्न हुनाले जुनसुकै व्यक्तिका मनलाई वशीभूत गर्ने उर्वशी र पूर्वचिति नामका दुई अप्सराहरू छन् । भयानक गर्जना तथा विद्युत् उनका शस्त्रास्त्र र तीक्ष्ण आयुध हुन्, उनीहरू सबैलाई हाम्रो नमस्कार छ । उनीहरू सबैले हामीलाई सुखी बनाऊन् र रक्षा गरुन् । जो हामीसित प्रेमभावविनाका छन् र जसले हाम्रो रिस गर्दछन्, ती सबैलाई हामी अग्निदेवताका ज्वालारूपी दाह्रामा हालिदिन्छौँ ।

**अग्निर्मूर्धा दिवः ककुत्पतिः पृथिव्याऽ अयम् । अपाꣳ रेताꣳसि जिन्वति ॥२०॥**

सर्वश्रेष्ठ देवता, आकाशका उच्चतम स्थानमा प्रतिष्ठित, पृथ्वीका स्वामी अग्निदेवमा ओज स्थापित गरिएको छ ।

**अयमग्निः सहस्रिणो वाजस्य शतिनस्पतिः । मूर्धा कवी रयीणाम् ॥२१॥**

ज्ञानी अग्निदेव सयौँ वा हजारौँ किसिमका अन्न र धनका सर्वोच्च अधिष्ठाता हुन् ।

**त्वामग्ने पुष्करादध्यथर्वा निरमन्थत । मूर्ध्नो विश्वस्य वाघतः ॥२२॥**

परम श्रेष्ठ, अखिल विश्व धारण गर्ने हे अग्निदेवता ! अथर्वाले तिमीलाई विश्वका महान्तम आधारका रूपमा अरणीमन्थनद्वारा प्रकट गरे ।

**भुवो यज्ञस्य रजसश्च नेता यत्रा नियुद्भिः सचसे शिवाभिः । दिवि मूर्धानं दधिषे स्वर्षां जिह्वामग्ने चकृषे हव्यवाहम् ॥२३॥**

हे अग्निदेवता ! तिमीले हविष्यान्न ग्रहण गर्ने आफ्नो जिब्रोरूपी ज्वाला प्रदीप्त गर्दा यज्ञ र फलश्रुतिका रूपमा रहेका पर्जन्यको प्रवर्तक मानिन्छौ । तिमी कल्याणस्वरूप अश्वसँग पुग्दा दिव्यलोकमा विराजमान आदित्यको शोभा धारण गर्दछौ ।

**अबोध्यग्निः समिधा जनानां प्रति धेनुमिवायतीमुषासम् । यह्वाऽ इव प्र वयामुज्जिहानाः प्र भानवः सिस्रते नाकमच्छ ॥२४॥**

उषाकालमा गाई जागेझैँ याजकका समिधाले प्रज्वलित भई जागेका दिव्य ज्वाला रुखको हाँगो मौलाएझैँ द्युलोकसम्म फैलिन्छन् ।

**अवोचाम कवये मेध्याय वचो वन्दारु वृषभाय वृष्णे । गविष्ठिरो नमसा स्तोममग्नौ दिवीव रुक्ममुरुव्यञ्चमश्रेत् ॥२५॥**

त्रिकालदर्शी, शक्तिशाली र सेचन गर्नका लागि सक्षम यज्ञका अग्निलाई स्तोत्र पाठ गर्दै हामी स्तुति गर्दछौँ । द्युलोकमा प्रकाशमान आदित्यलाई सन्ध्योपासनाका समयमा विशिष्ट महिमाले युक्त प्रार्थना समर्पित गरेझैँ स्थिर वाणी भएका हविदाताले आह्वान गर्दै अग्निमा मन्त्रोच्चारणपूर्वक हविष्यान्न समर्पित गर्दछन् ।

**अयमिह प्रथमो धायि धातृभिर्होता यजिष्ठो अध्वरेष्वीड्यः । यमप्नवानो भृगवो विरुरुचुर्वनेषु चित्रं विभ्वं विशेविशे ॥२६॥**

देवता बोलाइदिने, यज्ञीय कर्म निर्वाह गर्ने अग्निदेवताले यज्ञमा ऋत्विक्‌हरूको प्रशंसनीय स्तुति प्राप्त गर्दछन् । यज्ञको कार्य गर्न यस यज्ञवेदीमा उनलाई स्थापित गरेका छन् । यजमानको उन्नतिका लागि भृगुवंशी ऋषिले विलक्षण एवं विस्तृत कर्मका सम्पादक अग्निदेवतालाई वनमा प्रज्वलित गरेका थिए ।

**जनस्य गोपाऽ अजनिष्ट जागृविरग्निः सुदक्षः सुविताय नव्यसे । घृतप्रतीको बृहता दिविस्पृशा द्युमद्विभाति भरतेभ्यः शुचिः ॥२७॥**

प्रजाको रक्षा गर्ने, जागृति र दक्षता प्रदान गर्ने अग्निदेव याजकलाई प्रगतिको नयाँ बाटो प्रशस्त गर्नका लागि प्रकट भएका छन् । घिउका आहुतिले अधिक प्रदीप्त भएर विराट् आकाश स्पर्श गर्न सक्छन् । साधकलाई तेजले युक्त पवित्रता प्रदान गर्नका लागि नै तिमी प्रकट हुन्छौ ।

**त्वामग्ने अङ्गिरसो गुहा हितमन्वविन्दञ्छिश्रियाणं वनेवने । स जायसे मथ्यमानः सहो महत्त्वामाहुः सहसस्पुत्रमङ्गिरः ॥२८॥**

हे अग्निदेवता ! विभिन्न वनस्पतिमा व्याप्त भएर गोप्य ठाउँमा रहेका बेला तिमीलाई अङ्गिरावंशी ऋषिहरूले फेला पारे । धेरै बल गरेर अरणी घोटेपछि तिमी उत्पन्न हुन्छौ । त्यसो हुनाले मनीषीहरू तिमीलाई शक्तिका पुत्र भनेर बोलाउँछन् ।

**सखायः सं वः सम्यञ्चमिषꣳस्तोमं चाग्नये । वर्षिष्ठाय क्षितीनामूर्जो नप्त्रे सहस्वते ॥२९॥**

हे ऋत्विक् मित्रहरू हो ! वरिष्ठ अग्निदेव जलका नाति हुन् र असल बल प्रदान गर्दछन् । तिमीहरू यिनका लागि असल स्तवन गाउँदै हविष्यान्न समर्पित गर ।

**सꣳसमिद्युवसे वृषन्नग्ने विश्वान्यर्यऽ आ । इडस्पदे समिध्यसे स नो वसून्याभर ॥३०॥**

हे सुख बर्साउने अग्निदेवता ! तिमी सम्पूर्ण विश्वका अधिपति भएर समस्त तत्त्वमा रहन्छौ । यज्ञको वेदी वा पृथ्वीमा नै प्रकट हुँदा हामीलाई विभिन्न ऐश्वर्य प्रदान गर ।

**त्वां चित्रश्रवस्तम हवन्ते विक्षु जन्तवः । शोचिष्केशं पुरुप्रियाग्ने हव्याय वोढवे ॥३१॥**

प्रेमपूर्वक हविष्य ग्रहण गर्ने हे यशस्वी अग्निदेवता ! तिमी आश्चर्यजनक वैभवले सम्पन्न छौ । सम्पूर्ण मनुष्य एवं ऋत्विक्‌गण यज्ञ सम्पादन गर्नका लागि तिम्रो आह्वान गर्दै हवि समर्पित गर्दछन् ।

**एना वो अग्निं नमसोर्जो नपातमा हुवे । प्रियं चेतिष्ठमरतिꣳ स्वध्वरं विश्वस्य दूतममृतम् ॥३२॥**

शक्ति अक्षुण्ण गराउने, चेतना एवं स्नेह प्रदाता, उत्तम यज्ञका आधाररूप, ज्ञानप्रदाता, सनातन अग्निदेवतालाई आह्वान गर्दै हामी उनको वन्दना गर्दछौँ ।

**विश्वस्य दूतममृतं विश्वस्य दूतममृतम् । स योजते अरुषा विश्वभोजसा स दुद्रवत्स्वाहुतः ॥३३॥**

दूतले झैँ तत्परतापूर्वक यज्ञ आदि कार्यहरू सम्पन्न गर्ने, अमृतरूपी अग्निदेवतालाई हामी आह्वान गर्दछौँ । ती क्रोधरहित प्रख्यात अग्निदेवता सम्पूर्ण उत्तम यज्ञमा भाग पाउँछन् । यज्ञमा उनलाई बोलाएपछि तुरुन्तै अश्वलाई आफ्ना रथमा नियुक्त गर्दछन् र श्रेष्ठ विधिले यज्ञमा उपस्थित हुन्छन् ।

**स दुद्रवत्स्वाहुतः स दुद्रवत्स्वाहुतः । सुब्रह्मा यज्ञः सुशमी वसूनां देवꣳ राधो जनानाम् ॥३४॥**

उत्तम किसिमका याज्ञिक आदिले सम्पन्न, सत्कर्मरूपी यज्ञमा आह्वान गरिएका प्रख्यात अग्निदेवता चाँडै प्रकट हुन्छन् । वसु, रुद्र, आदित्य आदि देवताहरूले युक्त भएका यज्ञमा दैवी सम्पदायुक्त व्यक्तिहरूद्वारा उत्तम विधिले आहुति समर्पित गरिन्छ । त्यस किसिमका यज्ञमा नै तिमी जाने गर्दछौ ।

**अग्ने वाजस्य गोमतऽ ईशानः सहसो यहो । अस्मे धेहि जातवेदो महि श्रवः ॥३५॥**

बलपूर्वक उत्पन्न हुने हे ज्ञानसम्पन्न अग्निदेवता ! तिमी अन्न र गाई आदि पशुधनले सम्पन्न छौ । हाम्रा लागि पनि तिमी अपार वैभव प्रदान गर ।

**सऽ इधानो वसुष्कविरग्निरीडेन्यो गिरा । रेवदस्मभ्यं पुर्वणीक दीदिहि ॥३६॥**

ज्वालाका रूपमा विभिन्न मुख भएका जाज्वल्यमान हे अग्निदेवता ! तिमी त्रिकालदर्शी एवं सबैका आश्रयस्थल हौ । दिव्य स्तुतिले सन्तुष्ट भएर यज्ञमा सर्वप्रथम उपस्थित हुने तिमी आफ्नो तेजस्विताले हामीलाई अपार धनवैभव प्रदान गर ।

**क्षपो राजन्नुत त्मनाग्ने वस्तोरुतोषसः । स तिग्मजम्भ रक्षसो दह प्रति ॥३७॥**

ज्वालारूपी विकराल दाह्रा हुने हे अग्निदेवता ! आफ्ना तीक्ष्ण स्वभावले तिमी असुर संहार गर्दछौ । त्यसैले रात्रि, दिन, उषाकाल र हाम्रा सबै हानीकारक असुर भस्म गर ।

**भद्रो नो अग्निराहुतो भद्रा रातिः सुभग भद्रो अध्वरः । भद्राऽ उत प्रशस्तयः ॥३८**

हविले सन्तुष्ट भएका हे अग्निदेवता ! हाम्रा लागि मङ्गलकारी होऊ । हे ऐश्वर्यशाली ! हामीलाई कल्याणकारी धन प्राप्त होस् र तिम्रो स्तुति हाम्रा लागि मङ्गलकारी होस् ।

**भद्रा उत प्रशस्तयो भद्रं मनः कृणुष्व वृत्रतूर्ये । येना समत्सु सासहः ॥३९॥**

हे अग्निदेवता ! तिमी जुन मनका शक्तिले जीवनरूपी समरमा कुविचाररूपी शत्रुहरूलाई पराजित गर्दछौ, मनको उही शक्तिलाई हाम्रो दुष्कर्मरूपी पाप नाश गर्नका लागि लगाएर हाम्रो कल्याण गर ।

**येना समत्सु सासहोव स्थिरा तनुहि भूरि शर्धताम् । वनेमा ते अभिष्टिभिः ॥४०॥**

हे अग्निदेवता ! तिमी जुन शक्तिले युद्धमा शत्रुलाई संहार गर्दछौ, उसै किसिमले अति सङ्घर्षशील शत्रुहरूलाई बलिया धनुषको प्रत्यञ्चा काटिदेऊ । तिमीले प्रदान गरेको ऐश्वर्यले हामी सबै सधैंका लागि सुखी रहौं ।

**अग्निं तं मन्ये यो वसुरस्तं यं यन्ति धेनवः । अस्तमर्वन्तऽ आशवोस्तंनित्यासो वाजिनऽ इषथं॑ स्तोतृभ्यऽ आ भर ॥४१॥**

सबैका आश्रयस्थलका रूपमा रहेका उनै अग्निदेवता हामीसित परिचित छन् । साँझको अग्निहोत्रका समयमा अग्निदेवता प्रदीप्त भएको देखेपछि गाईहरू आआफ्ना थलामा फर्कन्छन् र तीव्रगामी अश्व पनि सधैं उनै अग्निदेवतालाई प्रदीप्त भएको देखेपछि तबेलामा फर्कन्छन् । हे अग्निदेवता ! तिमी यस किसिमका हुनाले याजकहरूलाई प्रचुर धनधान्य प्रदान गर ।

**सो अग्निर्यो वसुर्गृणे सं यमायन्ति धेनवः । समर्वन्तो रघुद्रुवः सथं॑ सुजातासः सूरयऽ इषथं॑ स्तोतृभ्यऽ आ भर ॥४२॥**

जो सबैका आश्रयरूप र सहायक हुन्, उनै अग्निदेवतालाई हामी प्रार्थना गर्दछौं । अग्निका नजिकै गाई र तेज गतिमा कुद्ने अश्व पनि आउँछन् । श्रेष्ठ कुलमा उत्पन्न र सुसंस्कार सम्पन्न विद्वान्हरूले अग्निदेवतालाई उपासना गर्दछन् । उपास्य गुणले युक्त हे अग्निदेवता ! याजकहरूका लागि मनग्गे धनधान्य प्रदान गर ।

**उभे सुश्चन्द्र सर्पिषो दर्वी श्रीणीषऽ आसनि । उतो नऽ उत्पुपूर्या उक्थेषु शवसस्पतऽ इषथं॑ स्तोतृभ्यऽ आ भर ॥४३॥**

प्रजाको पालन गर्ने, शक्तिले सम्पन्न, देदीप्यमान हे अग्निदेवता ! आहुति प्रदान गर्दाखेरि दुवै पात्र तिम्रा मुखसम्म पुग्छन् । हविष्यान्नद्वारा तिमीलाई प्रसन्न गर्ने स्तोतालाई महान् ऐश्वर्य प्रदान गर ।

**अग्ने तमद्याश्वं न स्तोमैः क्रतुं न भद्रथं॑ हृदिस्पृशम् । ऋध्यामा तऽ ओहैः ॥४४॥**

खोजेको कुरो पूरा गराउने हे अग्निदेवता ! आज तिम्रा यस यज्ञलाई सामगानले संवर्द्धित गराउँछौं । अश्वमेध यज्ञमा जसरी विभिन्न किसिमका स्तुतिहरूले अश्वलाई

विशेष रूपले प्रेरित गरिन्छ, उसै गरी हामी कल्याणकारी यज्ञीय सङ्कल्पहरूलाई सुदृढ गराउँछौं ।

**अधा ह्यग्ने क्रतोर्भद्रस्य दक्षस्य साधोः । रथीर्ऋतस्य बृहतो बभूथ ॥४५॥**

हे कल्याणकारी, बलवर्द्धक, अभीष्ट प्रदान गर्ने र सत्यस्वरूप अग्निदेवता ! तिमी महान् छौ र हाम्रो यज्ञका मुख्य आधार हौ ।

**एभिर्नो अर्कैर्भवा नो अर्वाङ्क् स्वर्ण ज्योतिः । अग्ने विश्वेभिः सुमनाऽ अनीकैः ॥४६**

हे अग्निदेवता ! सूर्यजस्तै तेजस्वी, असल विचारका तिमी पूज्य इन्द्र आदि देवताका साथ हाम्रा यज्ञमा आऊ ।

**अग्निथ्ठ॰ होतारं मन्ये दास्वन्तं वसुथ्ठ॰ सूनुथ्ठ॰ सहसो जातवेदसं विप्रं न जातवेदसम् । यऽ ऊर्ध्वया स्वध्वरो देवो देवाच्या कृपा । घृतस्य विभ्राष्टिमनु वष्टि शोचिषाजुह्वानस्य सर्पिषः ॥४७॥**

दैवी गुणसम्पन्न, श्रेष्ठ कर्मका सम्पादक, देवताका नजिक जाने, ऊर्ध्वगामी ज्वालाले सन्दीप्त र विस्तारयुक्त भएर अग्निदेव निरन्तर घृतपानको अभिलाषा गर्दछन् । देवताका आह्वानकर्ता, दानकर्ता, सबैका आश्रयस्वरूप अग्नि अरणि मन्थनबाट उत्पन हुनाले शक्तिका पुत्र हुन् । सर्वज्ञानसम्पन्न, शास्त्रज्ञ र ब्रह्मनिष्ठ ज्ञानीजस्ता अग्निदेवतालाई हामी स्वीकार गर्दछौं ।

**अग्ने त्वं नो अन्तमऽ उत त्राता शिवो भवा वरूथ्यः । वसुरग्निर्वसुश्रवाऽ अच्छा नक्षि द्युमत्तमथ्ठ॰ रयिं दाः । तं त्वा शोचिष्ठ दीदिवः सुम्नाय नूनमीमहे सखिभ्यः ॥४८॥**

हे अग्निदेवता ! तिमी हाम्रा अति नजिकै असल संरक्षक र मङ्गलकारी भएर रहन्छौ । सबैलाई आश्रय दिने, धनवान्हरूमा प्रथम हे अग्निदेवता ! तिमी हाम्रा नजिकै सहजै आऊ र तेजस्वितायुक्त भएर हामीलाई धन प्रदान गर । हे तेजस्वी र प्रकाशवान् अग्निदेवता ! मित्र आदि स्नेही आफन्तका लागि सुखको कामना गर्दै निश्चित रूपमा हामी तिम्रो प्रार्थना गर्दछौं ।

**येन ऋषयस्तपसा सत्रमायन्निन्धानाऽ अग्निथ्ठ॰ स्वराभरन्तः । तस्मिन्नहं नि दधे नाके अग्निं यमाहुर्मनवस्तीर्णबर्हिषम् ॥४९॥**

मनलाई केन्द्रित गराउने तपस्साधनाले ऋषिहरूले अग्निलाई प्रज्वलित गरेर देवत्व प्राप्तिरूपी परम पुरुषार्थ प्राप्त गरे । उसै मनका एकाग्रतारूपी तपस्साधनाले हामी पनि दैवी क्षमतालाई जगाउनका लागि अग्निदेवतालाई स्थापना गर्दछौं । उनै अग्निदेवतालाई मनीषीहरूको यज्ञीय श्रेष्ठ कर्मलाई सफल बनाउनका लागि हामी सम्बोधन गर्दछौं ।

**तं पत्नीभिरनु गच्छेम देवाः पुत्रैर्भ्रातृभिरुत वा हिरण्यैः । नाकं गृभ्णानाः सुकृतस्य लोके तृतीये पृष्ठे अधि रोचने दिवः ॥५०॥**

हे दैवीगुणसम्पन्न व्यक्तिहरू हो ! पुण्यकर्मले प्राप्त गरेको तेस्रो ज्योतिर्मय दिव्यलोकमा श्रेष्ठ आनन्दमय स्थान उपलब्ध गर्ने इच्छा गर्दै हामी सहधर्मिणी, पुत्र,

बन्धुबान्धव र स्वर्ण आदि पदार्थका साथसाथै अग्निको सेवन गर्दछौं । यसबाट हामी श्रेष्ठ देवलोक प्राप्त गर्दछौं ।

**आ वाचो मध्यमरुहद्भुरण्युरयमग्निः सत्पतिश्चेकितान् । पृष्ठे पृथिव्या निहितो दविद्युतदधस्पदं कृणुतां ये पृतन्यवः ॥५१॥**

विश्वलाई भरणपोषण गर्ने, श्रेष्ठ महामानवहरूका पालक, चैतन्य, भूमिका उच्च भागमा रहेका, अति प्रकाशमान हे अग्निदेवता ! मन्त्रोच्चारका बीच तिमी यज्ञरूपी चयनस्थलमा स्थापित हुनेछौ । सैन्यशक्तिले सम्पन्न भएर जुन दुष्ट दुराचारीहरू हामीसित युद्ध गर्द खोज्दछन्, उनीहरूलाई तिमी आफ्ना गोडाले किचेर नाश गरिदेऊ ।

**अयमग्निर्वीरतमो वयोधाः सहस्रियो द्योततामप्रयुच्छन् । विभ्राजमानः सरिरस्य मध्यऽ उप प्र याहि दिव्यानि धाम ॥५२॥**

अत्यन्त बलवान्, हविष्यान्न ग्रहण गर्नमा समर्थ, हजारौं किसिमका कार्य सम्पन्न गर्ने हे अग्निदेवता ! तिमी प्रारम्भ गरिएका धार्मिक अनुष्ठानहरूलाई पूरा गराउनका लागि आलस्यरहित भएर प्रकट होऊ । तीनै लोकका बीचमा विशेष रूपले प्रकाशमान भएर हामीलाई दिव्यलोक उपलब्ध गराऊ ।

**सम्प्रच्यवध्वमुप सम्प्रयाताग्ने पथो देवयानान् कृणुध्वम् । पुनः कृण्वानाः पितरा युवानान्वाताᳬंसीत् त्वयि तन्तुमेतम् ॥५३॥**

हे ऋषिहरू हो ! तिमीहरू सबै यी अग्निदेवताका नजिक आओ । नजिक आएर राम्रोसँग उनलाई प्रज्वलित गर । हे अग्निदेवता ! हाम्रो देवयानको मार्ग तिमी प्रशस्त गराइदेऊ । वाणी र मनलाई तरुण गराउँदै ऋषिहरूले यस यज्ञमा तिमीलाई श्रेष्ठ रीतिले विस्तारित गरेका छन् ।

**उद्बुध्यस्वाग्ने प्रति जागृहि त्वमिष्टापूर्ते सᳬंसृजेथामयं च । अस्मिन्त्सधस्थे अध्युत्तरस्मिन् विश्वे देवा यजमानश्च सीदत ॥५४॥**

हे अग्निदेवता ! तिमी जागृत होऊ र प्रतिदिन यजमानलाई पनि जागृत गराऊ । यस यज्ञमा यजमानसँग सुसङ्गत होऊन् । तिम्रा अनुग्रहले यस यजमानका श्रेष्ठ इच्छाहरू पूर्ति होऊन् । हे विश्वेदेवताहरू हो ! याजकहरू, देवताहरू देवताहरूका लागि योग्य सर्वश्रेष्ठ स्थान देवलोकमा चिरकालसम्म हामी निवास गरौं ।

**येन वहसि सहस्रं येनाग्ने सर्ववेदसम् । तेनेमं यज्ञं नो नय स्वर्देवेषु गन्तवे ॥५५॥**

हे अग्निदेवता ! तिमी जुन शक्तिले सहस्र दक्षिणले संम्पन्न सर्वमेध नामको सर्वस्व समर्पित गर्ने यज्ञ सम्पन्न गर्दछौ, उसै पराक्रमी शक्तिले हाम्रो यो यज्ञ सम्पन्न गराऊ । यज्ञका प्रभावले हामी याजकहरूलाई देवत्वको परमपद प्राप्त गराऊ ।

**अयं ते योनिर्ऋत्वियो यतो जातो अरोचथाः । तं जानन्नग्नऽ आरोहाथा नो वर्धया रयिम् ॥५६॥**

हे अग्निदेवता ! यो गार्हपत्य अग्नि तिम्रो उत्पत्तिस्थल हो । जुन ऋतुकालका गार्हपत्यबाट उत्पन्न भएर तिमीले यज्ञ आदि श्रेष्ठ कर्म सम्पन्न गर्नका लागि प्रदीप्त

हुन्छौ, उसै गार्हपत्यलाई राम्ररी अनुभव गर्दै हे अग्निदेवता ! तिमी दक्षिण कुण्डमा स्थापित होऊ र त्यसपछि हाम्रा लागि धनऐश्वर्यलाई मनग्गे संवर्धित गर ।

**तपश्च तपस्यश्च शैशिरावृतू अग्नेरन्तःश्लेषोसि कल्पेतां द्यावापृथिवी कल्पन्तामापऽ ओषधयः कल्पन्तामग्नयः पृथङ्मय ज्यैष्ठ्याय सव्रताः । ये अग्नयः समनसोन्तरा द्यावापृथिवी इमे । शैशिरावृतू अभिकल्पमानाऽ इन्द्रमिव देवाऽ अभिसंविशन्तु तया देवतयाङ्गिरस्वद्ध्रुवे सीदतम् ॥५७॥**

माघ र फागुन महिनाहरू शिशिर ऋतुसित सम्बन्धित छन् । हे इष्टकाहरू हो ! तिमीहरू प्रज्वलित अग्निमा त्यसको सुदृढताका लागि स्थिर होओ । तिमीहरूले गर्दा द्युलोक र भूलोक आनन्ददायक होऊन्, जल र सोमलता आदि औषधिहरू आनन्दप्रद होऊन् । सम्पूर्ण अग्निहरू हामी याजकहरूका लागि उन्नतिदायक होऊन् । द्यावा र पृथ्वीका बीचमा जुन अनेकौं खालका अग्निहरू एक समान मन भएका छन् तिनीहरू यस शिशिर ऋतुसित सम्बन्धित भएर उसलाई पनि उस्तै किसिमले सुदृढ गराऊन्, जसरी सम्पूर्ण देवशक्तिहरू इन्द्रदेवतालाई आफ्नो आश्रय मानेर कर्म सम्पादन गर्दछन् । हे इष्टकाहरू हो ! उनै प्रधान देवताद्वारा अङ्गिराको जस्तै स्थित भएर तिमीहरू पनि सुदृढता धारण गर ।

**परमेष्ठी त्वा सादयतु दिवस्पृष्ठे ज्योतिष्मतीम् । विश्वस्मै प्राणायापानाय व्यानाय विश्वं ज्योतिर्यच्छ । सूर्यस्तेधिपतिस्तया देवतयाङ्गिरस्वद् ध्रुवा सीद ॥५८॥**

हे जाज्वल्यमान इष्टकाहरू हो ! वायुरूपी तिमीहरूलाई विश्वकर्माले स्वर्गलोकमाथि विराजमान गराऊन् । सूर्यदेवता तिमीहरूका स्वामी हुन् । तिमी याजकहरूका प्राण, अपान र व्यानलाई उत्थान गर्नका लागि ज्योति प्रदान गर । तिमीहरू वायुदेवताका सामर्थ्यले अङ्गिराजस्तै भएर यज्ञका कार्यमा अविचल र सुस्थिर भइराख ।

**लोकं पृण छिद्रं पृणाथो सीद ध्रुवा त्वम् । इन्द्राग्नी त्वा बृहस्पतिरस्मिन्योनावसीषदन् ॥५९॥**

हे इष्टकाहरू हो ! तिमीहरू पहिलेदेखि स्थापित इष्टकाहरूले स्पर्श नभईकन, चयनस्थलका रिक्त स्थानलाई पूर्ण गराऊ र दृढतापूर्वक स्थित होओ । इन्द्रदेवता, अग्निदेवता र बृहस्पतिदेवताले यस स्थानमा तिमीहरूलाई विराजित गरेका छन् ।

**ता अस्य सूददोहसः सोमꣳ श्रीणन्ति पृश्नयः । जन्मदेवानां विशस्त्रिष्वा रोचने दिवः ॥६०॥**

सूर्योदय हुँदा गाईले देवताको जन्मस्थानबाट तीनै वटा सवनमा प्रचुर दुध प्रदान गर्छन् । तिनीहरू इन्द्रदेवताका लागि आफ्नो दुध सोमरसमा मिसाउँछन् ।

**इन्द्रं विश्वा अवीवृधन्त्समुद्रव्यचसं गिरः । रथीतमꣳ रथीनां वाजानाꣳ सत्पतिं पतिम् ॥६१॥**

समुद्रजस्तै व्यापक, रथीहरूमा महानतम, अन्नका स्वामी र सत्प्रवृत्ति भएका इन्द्रलाई सबै स्तुतिले उन्नतिशील गराउँछन् ।

**प्रोथदश्वो न यवसेविष्यन्यदा महः संवरणाद्व्यस्थात् । आदस्य वातो अनु वाति शोचिरध स्म ते व्रजनं कृष्णमस्ति ॥६२॥**

हिल्लिने घोडाले घाँसमा चरेझैं दावानलले पेटमा रुख भराउँछन् । यस अवस्थामा वायुका प्रभावले कालो धुवाँ जतातिर जान्छ, अग्निदेवताको मार्ग त्यतै हुन्छ ।

**आयोष्ट्वा सदने सादयाम्यवतश्छायायाᳬं समुद्रस्य हृदये । रश्मीवतीं भास्वतीमा या द्यां भास्या पृथिवीमोर्वन्तरिक्षम् ॥६३॥**

तेजस्वी रश्मिहरूका प्रकाशले सुशोभित हे स्वयमातृण्णे ! जल वर्षा गराउने सागरको जस्तै पोषक तत्त्वको वर्षा गरेर संसारलाई पालनपोषण गर्ने आदित्यका हृदयस्थलमा हामी तिमीलाई स्थापित गर्दछौं । तिमी पृथ्वी, अन्तरिक्ष र द्युलोकलाई आफ्ना दिव्य प्रकाशले परिपूर्ण ज्योतिसम्पन्न गराउँछौ ।

**परमेष्ठी त्वा सादयतु दिवस्पृष्ठे व्यचस्वतीं प्रथस्वतीं दिवं यच्छ दिवं दृᳬंह दिवं मा हिᳬंसीः । विश्वस्मै प्राणायापानाय व्यानायोदानाय प्रतिष्ठायै चरित्राय । सूर्यस्त्वाभि पातु मह्या स्वस्त्या छर्दिषा शन्तमेन तया देवतयाङ्गिरस्वद् ध्रुवे सीदतम् ॥६४॥**

सम्पूर्ण संसारमा आफ्नो तेज विस्तार गर्ने हे स्वयमातृण्णे ! संसारको सृष्टि गर्ने विश्वकर्माले तिमीलाई दिव्यलोकमाथि स्थापित गरुन् । तिमी समस्त प्राणीहरूको प्राण, अपान, व्यान र उदानको शक्तिलाई सुदृढता प्रदान गर्नका लागि आफ्ना स्थानमा प्रतिष्ठित होऊ र सदाचरणको विस्तार गर्नमा सहायक होऊ । सूर्यदेवताले तिमीलाई राम्रोसँग रक्षा गरुन् । तिमी दिव्य गुण नष्ट हुन नदेऊ । आफ्ना उसै अधिष्ठाता देवताको अनुकूलताले अङ्गिराजस्तै अविचल भएर तिमी स्थापित होऊ ।

**सहस्रस्य प्रमासि सहस्रस्य प्रतिमासि सहस्रस्योन्मासि साहस्रोसि सहस्राय त्वा ॥६५॥**

हे अग्निदेवता ! तिमी हजारौं इष्टकाहरूजस्तै शक्तिले सम्पन्न भएका मापदण्ड हौ । तिमी असङ्ख्य वैभवका प्रतिरूप हौ र हजारौं स्थानमा विराजमान हुन योग्य छौ । यसै कारणले तिमी हजारौं इष्टकाभन्दा माथि विराजमान हुनका लागि उपयुक्त छौ । हामी असङ्ख्य उच्च श्रेणीहरू प्राप्त गर्नका लागि तिमीलाई स्वीकार गर्दछौं ।

**इति पञ्चदशोऽध्यायः ॥**

पन्ध्रौं अध्याय सकियो ।

ॐ

भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।

# वाजसनेयि माध्यन्दिन शुक्ल

# यजुर्वेद – संहिता

## ॥अथ षोडशोऽध्यायः॥

॥सोह्रौं अध्याय॥

**ऋषि–** परमेष्ठी प्रजापति, देवगण प्रजापति, कुत्स ।

**देवता–** एक रुद्र, बहुरुद्रगण, बहुरुद्रगण, अग्नि, वायु, सूर्य ।

**छन्द–** आर्षी गायत्री, आर्षी स्वराट् अनुष्टुप्, विराट् आर्षी अनुष्टुप्, निचृत् आर्षी अनुष्टुप्, भुरिक् आर्षी उष्णिक्, भुरिक् आर्षी अनुष्टुप्, निचृत् अनुष्टुप्, स्वराट् आर्षी उष्णिक्, निचृत् आर्षी जगती, निचृत् अतिधृति, निचृत् अष्टि, विराट् अतिधृति, अतिधृति, निचृत् अतिजगती, शक्वरी, भुरिक् शक्वरी, भुरिक् अतिजगती, निचृत् शक्वरी, आर्षी जगती, विराट् आर्षी त्रिष्टुप्, स्वराट् आर्षी पङ्क्ति, स्वराट् आर्षी त्रिष्टुप्, आर्षी त्रिष्टुप्, निचृत् आर्षी त्रिष्टुप्, भुरिक् आर्षी पङ्क्ति, अतिशक्वरी, स्वराट् आर्षी बृहती, जगती, स्वराट् प्रकति, आर्षी अनुष्टुप्, निचृत् आर्षी यवमध्या त्रिष्टुप्, निचृत् धृति, धृति ।

**नमस्ते रुद्र मन्यवऽउतो तऽइषवे नमः । बाहुभ्यामुत ते नमः ॥१॥**

हे दुष्ट दमन गर्ने रुद्रदेवता ! तिम्रो अनीति दमन गर्ने क्रोधरूपी मन्युलाई हाम्रो नमस्कार छ । तिम्रा वाणीलाई हामी नमस्कार गर्दछौं । तिम्रा दुवै भुजाहरूलाई हामी नमस्कार गर्दछौं ।

**या ते रुद्र शिवा तनूरघोरापापकाशिनी । तया नस्तन्वा शन्तमया गिरिशन्ताभि चाकशीहि ॥२॥**

हे रुद्रदेवता ! तिमी अति उच्च पर्वतको सुरक्षित गुफामा रहन्छौ । तिम्रो कल्याणकारी शान्त रूप पाप विनाशक हुनाले सौम्य र बलशाली पनि छ । तिम्रो त्यो मङ्गलमय रूपले हामीमाथि कृपादृष्टि राख्ने गर ।

**यामिषुं गिरिशन्त हस्ते बिभर्ष्यस्तवे । शिवां गिरित्र तां कुरु मा हिꣳसीः पुरुषं जगत् ॥३॥**

हे रुद्रदेवता ! तिमी पर्वतमा रहेर प्राणीको रक्षाका लागि समर्पित छौ । शत्रु विनाशका लागि तिमीले हातमा लिएका बाणलाई कल्याणको प्रयोजनमा प्रयुक्त गर । ती बाणहरू असल मानिस र सोझा प्राणीको हिंसामा प्रयोग नहोऊन् ।

**शिवेन वचसा त्वा गिरिशाच्छावदामसि । यथा नः सर्वमिज्जगदयक्ष्मꣳसुमनाऽअसत् ॥४॥**

हे पर्वतका निवासी रुद्रदेवता ! तिमी सम्पूर्ण संसारलाई नै रोगबाट मुक्त राख र उत्तम विचारले युक्त भएको मन प्रदान गर भन्दै हामी मङ्गलमय स्तुतिले तिमीलाई सधैं प्रार्थना गर्दछौं ।

**अध्यवोचदधिवक्ता प्रथमो दैव्यो भिषक् । अहींश्च सर्वाञ्जम्भयन्त्सर्वाश्च यातुधान्योधराचीः परा सुव ॥५॥**

हे प्रमुख ज्ञानका प्रवक्ता, देवताहरूमा प्रथम पूज्य, स्मरण गर्नासाथ सांसारिक रोगहरूलाई हटाउने वैद्यजस्ता रुद्रदेवताले सर्प आदि सबै क्रूर प्राणीहरूलाई नष्ट गर र अधोगामी राक्षसी प्रवृत्तिका स्त्रीहरूलाई पर हटाऊ भनेर वीरभद्र आदिलाई भने ।

**असौ यस्ताम्रो अरुणऽउत बभ्रुः सुमङ्गलः । ये चैनथ्ं रुद्राऽअभितो दिक्षु श्रिताः सहस्रशोवैषाथ्ं हेडऽईमहे ॥६॥**

झुल्कँदा ताँवाको रङ्गका, मध्याह्न कालमा अरूणिम र अस्त कालमा खैरो रङ्गमा देखिने यी रुद्रको अंशका रूपमा आएका सूर्यदेवताले आफ्ना रश्मिरूपी हजारौं किसिमका शक्ति अनन्त दिशामा स्थापित गरेका छन् । उनलाई हामी नमस्कार गर्दै उनको क्रोध हामीमाथि नपरोस् ।

**असौ योवसर्पति नीलग्रीवो विलोहितः । उतैनं गोपाऽअदृश्रन्नदृश्रन्नुदहार्यः स दृष्टो मृडयाति नः ॥७॥**

यी सूर्यदेवताको नीलो ग्रीवायुक्त तेजस्वी आभाले सूर्यमण्डलमा विशेष रूपले प्रकाशित देखिन्छ र विशेष रातो भएर निरन्तर गतिमान् रहन्छ । यी रङ्गहरूको दर्शन उदयकालमा नित्य गाईको चरनमा जाने र जल लिएर आउने नारीहरूले गर्दछन् । यस्ता उनै रुद्ररूपी आदित्य देवताको दर्शन हाम्रा निम्ति कल्याणकारी होस् ।

**नमोस्तु नीलग्रीवाय सहस्राक्षाय मीढुषे । अथो ये अस्य सत्वानोहं तेभ्योकरं नमः ॥८॥**

नीलो कण्ठ भएका, सूयको किरणरूपी सहस्र नेत्र भएका, प्राणपर्जन्यरूपी वर्षा गराउने रुद्रदेवतालाई हाम्रो नमस्कार छ । यिनको यो सत्यरूप अंशलाई पनि हामी सधैं नमस्कार गर्दछौं ।

**प्रमुञ्च धन्वनस्त्वमुभयोरार्त्न्योर्ज्याम् । याश्च ते हस्तऽइषवः परा ता भगवो वप ॥९॥**

हे आदित्यस्वरूप भगवान् रुद्रदेवता ! साँझका समयमा तिमीले धारण गरेका, आफ्ना धनुषका दुवै कोटीमा रहेको प्रत्यञ्चारूपी किरणलाई समेट र हातमा धारण गरेको बाणरूपी गर्मी हटाइदेऊ ।

**विज्यं धनुः कपर्दिनो विशल्यो बाणवाँ२ऽ उत । अनेशन्नस्य याऽइषवऽआभुरस्य निषङ्गधिः ॥१०॥**

यी जटाधारी रुद्रदेवताको धनुप पत्यञ्चारहित भएर आवश्यकताविहीन होस्, ठोक्रो बाणविनाको खाली होस् र यिनका बाण कतै नदेखिऊन् । यिनको खड्ग राख्ने म्यान खाली होस् ।

**या ते हेतिर्मीढुष्टम हस्ते बभूव ते धनुः । तयास्मान्विश्वतस्त्वमयक्ष्मया परि भुज ॥११॥**

हे सुखदायक रुद्रदेवता ! तिम्रा हातमा भएको धनुष र हतियारहरू विध्वंसरहित छन् । तिमी तिनै हतियारहरूले हामीलाई सबै तिरबाट राम्रो सुरक्षा गर ।

**परि ते धन्वनो हेतिरस्मान्वृणक्तु विश्वतः । अथो यऽइषुधिस्तवारे अस्मन्निधेहि तम् ॥१२॥**

हे रुद्रदेवता ! तिम्रा धनुषबाण आदि शस्त्रहरू सबै तर्फबाट हाम्रा लागि सुरक्षादायक होऊन् । आन्तरिक र बाह्य शत्रुका आक्रमणबाट हामीलाई तिनले बचाइरहून् र तिम्रो तारो हामीबाट टाढै रहोस्, हामीले तिम्रो कोपभाजन बन्नु नपरोस् ।

**अवतत्य धनुष्ट्वꣳ सहस्राक्ष शतेषुधे । निशीर्य शल्यानां मुखा शिवो नः सुमना भव ॥१३॥**

हे सहस्र नेत्रधारी रुद्रदेवता ! तिमीसित सयौँ किसिमका तीरहरू छन् । आफ्ना धनुषको प्रत्यञ्चो खसाल र बाणको तिखो धार पनि मेटाऊ । यसो गरेर नै तिमी हाम्रा लागि कल्याणकारी र उत्तम मनोभावका होऊ ।

**नमस्तऽआयुधायानातताय धृष्णवे । उभाभ्यामुत ते नमो बाहुभ्यां तव धन्वने ॥१४॥**

हे रुद्रदेवता ! तिम्रा धनुषमा चढाइने गरेका बाणलाई हामी नमस्कार गर्दछौँ । तिम्रा दुवै सामर्थ्यवान् भुजा र तिनले धारण गरेका धनुषलाई पनि हामी नमस्कार गर्दछौँ ।

**मा नो महान्तमुत मा नो अर्भकं मा न उक्षन्तमुत मा नऽउक्षितम् । मा नो वधीः पितरं मोत मातरं मा नः प्रियास्तन्वो रुद्र रीरिषः ॥१५॥**

हे रुद्रदेवता ! हाम्रा ज्ञान र बलसम्पन्न वृद्धलाई नसताऊ । हाम्रा साना बालकलाई हिंसा नगर । हाम्रा बलिष्ठ युवा पुरुषहरूलाई घात नगर । हाम्रा गर्भस्थ शिशुहरूलाई हिंसित नगराऊ र हाम्रा मातापितालाई नाश नगरिदेऊ । हाम्रा आफन्तको शरीर कष्टमा नपार ।

**मा नस्तोके तनये मा नऽ आयुषि मा नो गोषु मा नो अश्वेषु रीरिषः । मा नो वीरान् रुद्र भामिनो वधीर्हविष्मन्तः सदमित् त्वा हवामहे ॥१६॥**

हे रुद्रदेवता ! हाम्रा छोरानाति सन्तानहरू, हाम्रो जीवन, गाई, घोडालाई हानी नपुगोस् । तिमी हाम्रा शूरवीरलाई विनाशका लागि क्रोधित नगराऊ । हविष्यान्न प्रदान गर्ने यज्ञमा हामी तिमीलाई आह्वान गर्दछौँ ।

**नमो हिरण्यबाहवे सेनान्ये दिशां च पतये नमो नमो वृक्षेभ्यो हरिकेशेभ्यः पशूनां पतये नमो नमः शष्पिञ्जराय त्विषीमते पथीनां पतये नमो नमो हरिकेशायोपवीतिने पुष्टानां पतये नमः ॥१७॥**

सुनौला गहनाले सुशोभित भुजा भएका, दिशाहरूका स्वामी, सेनानायक, पल्लवझैँ कोमल हरियालीयुक्त, वृक्षझैँ हितकारी, प्राणीका पालनकर्ता, तेजस्वी, नवअङ्कुरणझैँ पीत वर्णका मार्गका अधिपति, प्रेरणादायी मार्गदर्शक, जनै धारण गर्ने, जरारहित, ज्ञानसम्पन्न, समर्थ मानिसका अधिपति महादेवरूपी रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ ।

**नमो बभ्लुशाय व्याधिनेऽन्नानां पतये नमो नमो भवस्य हेत्यै जगतां पतये नमो नमो रुद्रायाततायिने क्षेत्राणां पतये नमो नमः सूतायाहन्त्यै वनानां पतये नमः ॥१८॥**

खैरो रङ्गका, शत्रुलाई नाश गर्ने, अन्नलाई पोषक बनाउने, संसारको हितका लागि हतियार भिर्ने, संसारका पालनकर्ता, आततायीहरूको विनाशका लागि हतियार धारण

गर्ने, खेत-चरन र वनको रक्षा गर्ने र कसैबाट वध नगरिने खालका सारथीस्वरूप देवाधिदेव रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं ।

**नमो रोहिताय स्थपतये वृक्षाणां पतये नमो नमो भुवन्तये वारिवस्कृतायौषधीनां पतये नमो नमो मन्त्रिणे वाणिजाय कक्षाणां पतये नमो नमऽउच्चैर्घोषायाक्रन्दयते पत्तीनां पतये नमः ॥१९॥**

रातो वर्णका, विश्वकर्माको रूपमा काम गर्ने, बोटबिरुवाका पोषक, भूमण्डललाई विस्तृत गराउने, ऐश्वर्यका संरक्षक, औषधिहरूलाई पोषण प्रदान गर्ने, व्यापारमा कुशल, जनतालाई उचित प्रेरणा दिने, काटिएका बोटबिरुवालाई फेरि पलाउन प्रेरित गर्ने, सङ्ग्राममा शत्रुलाई रुवाउने, भयङ्कर गर्जना गर्ने र पङ्क्तिबद्ध भएर पैदल हिँड्ने सेनाका अधिपति रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं ।

**नमः कृत्स्नायतया धावते सत्वनां पतये नमो नमः सहमानाय निव्याधिनऽआव्याधिनीनां पतये नमो नमो निषङ्गिणे ककुभाय स्तेनानां पतये नमो नमो निचेरवे परिचरायारण्यानां पतये नमः ॥२०॥**

हाम्रो रक्षा गर्नका लागि धनुष तयार गरेर शत्रुमाथि हमला गर्ने, सबै सात्विक पुरुषहरूका पालक, शत्रुविजयी, वैरीका विनाशक, आफ्ना पराक्रमी सेनाका नायक, उपद्रवकारीहरूमाथि खड्ग प्रहार गर्ने, चोरचकारलाई नियन्त्रण गर्ने, अपहरणकारी उपद्र्याहाहरूलाई नियन्त्रण गर्ने र वनका संरक्षक रुद्रदेवतालाई हामीहरू सबैले सधैं नमस्कार गर्दछौं ।

**नमो वञ्चते परिवञ्चते स्तायूनां पतये नमो नमो निषङ्गिणऽइषुधिमते तस्कराणां पतये नमो नमः सृकायिभ्यो जिघाᳩसद्भ्यो मुष्णतां पतये नमो नमोसिमद्भ्यो नक्तञ्चरद्भ्यो विकृन्तानां पतये नमः ॥२१॥**

लुटार ठगहरूमाथि नियन्त्रण राख्ने रुद्रदेवतालाई हाम्रो नमस्कार छ । गुप्तचरलाई नियन्त्रण गर्ने रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । खड्ग र बाण लिएका उपद्र्याहाहरूलाई रोक्ने रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । तस्करी गर्नेहरूमाथि नियन्त्रण गर्ने रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । हातमा वज्रजस्ता हतियार लिएका शत्रुलाई विनाश गर्ने रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । हातमा खड्ग लिएर राति विचरण गर्ने रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । सुरुङ्ग हानेर अर्काको धनसम्पत्ति चोर्ने दस्युहरूलाई दुःख दिने रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं ।

**नमऽउष्णीषिणे गिरिचराय कुलुञ्चानां पतये नमो नमऽइषुमद्भ्यो धन्वायिभ्यश्च वो नमो नमऽआतन्वानेभ्यः प्रतिदधानेभ्यश्च वो नमो नमऽआयच्छद्भ्योस्यद्भ्यश्च वो नमः ॥२२॥**

फेटा बाँधेर पर्वतमा विचरण गर्ने रुद्रदेवतालाई हाम्रो नमस्कार छ । बलपूर्वक अर्काको धन हरण गर्नेहरूलाई नियन्त्रण गर्ने रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । दुष्टका निम्ति डर उत्पन्न गराउने, धनुषबाण धारण गर्ने रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । दुष्टको दमन गर्नका लागि धनुषमा प्रत्यञ्चा चढाएर धनुष तन्काएर चलाउने रुद्रदेवतालाई नमस्कार छ । हे बाण प्रहार गर्ने रुद्रदेवता ! बारम्बार हाम्रो नमस्कार छ ।

**नमो विसृजद्भ्यो विध्यद्भ्यश्च वो नमो नमः स्वपद्भ्यो जाग्रद्भ्यच वो नमो नमः शयानेभ्यऽ आसीनेभ्यश्च वो नमो नमस्तिष्ठद्भ्यो धावद्भ्यश्च वो नमः ॥२३॥**

दुष्टहरूमाथि बाण चलाउने रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ । शत्रुलाई भेदन गर्ने रुद्रदेवतालाई हाम्रो नमस्कार छ । सुत्ने, जाग्ने, बस्ने, उभिने र कुद्ने गरेका रुद्रदेवतालाई मनदेखि हाम्रो नमस्कार छ ।

**नमः सभाभ्यः सभापतिभ्यश्च वो नमो नमोश्वेभ्योश्वपतिभ्यश्च वो नमो नमऽआव्याधिनीभ्यो विविध्यन्तीभ्यश्च वो नमो नमऽउगणाभ्यस्तृᳬहतीभ्यश्च वो नमः ॥२४॥**

सभाका रूपमा रहेका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ । सभापतिका रूपमा रहेका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ । अश्वको बलका रूपमा रहेका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ । असल सेवक वा सेनाका रूपमा रहेका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ । सङ्ग्राममा सहायक भएर शत्रुमाथि प्रहार गर्ने रुद्रदेवतालाई पनि हामी नमस्कार गर्दछौँ ।

**नमो गणेभ्यो गणपतिभ्यश्च वो नमो नमो व्रातेभ्यो व्रातपतिभ्यश्च वो नमो नमो गृत्सेभ्यो गृत्सपतिभ्यश्च वो नमो नमो विरूपेभ्यो विश्वरूपेभ्यश्च वो नमः ॥२५॥**

सेनाको समूहका रूपमा रहेका, सेनापतिका रूपमा रहेका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ । विशिष्ट आक्रमणकारी र उनीहरूको समूहको अधिपतिका रूपमा रहेका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ । बुद्धिमान् र तिनीहरूको समूहका रूपमा रहेका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ । विभिन्न किसिमका असङ्ख्य रूप धारण गर्ने रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ ।

**नमः सेनाभ्यः सेनानिभ्यश्च वो नमो नमो रथिभ्यो अरथेभ्यश्च वो नमो नमः क्षत्तृभ्यः सङ्ग्रहीतृभ्यश्च वो नमो नमो महद्भ्यो अर्भकेभ्यश्च वो नमः ॥२६॥**

सेनारूपी रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ र सेनापतिरूपी रुद्रदेवतालाई हाम्रो नमस्कार छ । रथ लिएका वीरलाई नमस्कार गर्दछौँ र रथविनाका वीरलाई पनि नमस्कार गर्दछौँ । सङ्ग्राम गर्ने वीर तथा रथ आदि सामग्रीले युक्त वीर रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ । वरिष्ठ पूजनीय र कनिष्ठ वीररूपी रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ ।

**नमस्तक्षभ्यो रथकारेभ्यश्च वो नमो नमः कुलालेभ्यः कमरिभ्यश्च वो नमो नमो निषादेभ्यः पुञ्जिष्ठेभ्यश्च वो नमो नमः श्वनिभ्यो मृगयुभ्यश्च वो नमः ॥२७॥**

धनुषबाण र रथ निर्माण गर्ने श्रेष्ठ कलाकारका रूपमा रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ । माटाका भाँडाकुँडा बनाउने र फलामका साधन बनाउने रूपमा रहेका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ । पर्वतनिवासी भिल आदि र वनमा बस्ने पुञ्जिष्ठ आदि जङ्गली जातका रूपमा रहेका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ । कुकुरका गलामा डोरी बाँधेर घिच्याउने गरेकालाई रुद्रदेवताका रूपमा हामी नमस्कार गर्दछौँ र सिकारको खोजीमा लागेका व्याधाका रूपमा रहेका रुद्रदेवतालाई पनि हामी नमस्कार गर्दछौँ ।

**नमः श्वभ्यः श्वपतिभ्यश्च वो नमो नमो भवाय च रुद्राय च नमः शर्वाय च पशुपतये च नमो नीलग्रीवाय च शितिकण्ठाय च ॥२८॥**

कुकुरका अन्तःकरणमा निवास गरेका रुद्रदेवतालाई हाम्रो नमस्कार छ । कुकुरका स्वामी बनेका किराँतका अन्तःकरणमा निवास गरेका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । जसबाट सिङ्गो संसार सृष्टि भएको छ उनलाई नमस्कार, पापनाशक रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । नीलो गला भएका रुद्रदेवतालाई नमस्कार नीलोभन्दा बाहेक सेतो गलो भएका रुद्रदेवतालाई पनि हामी नमस्कार गर्दछौं ।

**नमः कपर्दिने च व्युप्तकेशाय च नमः सहस्राक्षाय च शतधन्वने च नमो गिरिशयाय च शिपिविष्टाय च नमो मीढुष्टमाय चेषुमते च ॥२९॥**

कपालका जटाको जुरो बाँधेका, मुडुलो टाउको भएका, हजारौं आँखा भएका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । सयौं धनुष धारण गरेका रुद्रदेवताका रूपलाई हामी नमस्कार गर्दछौं । विष्णुको रूपमा सबै प्राणीभित्र बसेका, तृप्ति प्रदान गर्ने मेघको रूपमा रहेका र बाण धारण गरेका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं ।

**नमो ह्रस्वाय च वामनाय च नमो बृहते च वर्षीयसे च नमो वृद्धाय च सवृधे च नमोग्र्याय च प्रथमाय च ॥३०॥**

ख्याउटे जिउ भएका, वामपुडको उचाइ भएका, अधबैंसे उमेरको अङ्ग भएका, बुढो जिउ भएका, अति बुढो उमेर भएका, आकर्षक तन्नेरी रूप भएका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । सबैका अगुवा, पुरुष रूपधारी रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं र सबैमा श्रेष्ठ गुणले सम्पन्न पुरुषरूपी रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं ।

**नमऽ आशवे चाजिराय च नमः शीघ्र्याय च शीभ्याय च नमऽ ऊर्म्याय चावस्वन्याय च नमो नादेयाय च द्वीप्याय च ॥३१॥**

शीघ्र गति भएका, शीघ्र काम गर्ने रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । वेगका साथ चल्ने र प्रवाहमान वायुको रूपमा रहेका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । जलको तरङ्गमा रहेका रुद्रदेवताका रूपलाई हामी नमस्कार गर्दछौं । नदीमा रहने र द्वीपमा रहने गरेका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं ।

**नमो ज्येष्ठाय च कनिष्ठाय च नमःपूर्वजाय चापरजाय च नमो मध्यमाय चापगल्भाय च नमो जघन्याय च बुध्न्याय च ॥३२॥**

जेठो रूपमा रहेका र कान्छो रूपमा रहेकालाई नमस्कार गर्दछौं । सृष्टिको सुरुमा उत्पन्न भएको र वर्तमान अवस्थामा रहेका रूपलाई हामी नमस्कार गर्दछौं । सन्तानका रूपमा उत्पन्न हुने रूप, अव्यक्त अण्डका रूपमा उत्पन्न भएका रुद्रदेवताका रूपलाई हामी नमस्कार गर्दछौं । पशु आदिका रूपमा रहेका र वृक्ष आदिको मूलका रूपमा रहेका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं ।

**नमः सोभ्याय च प्रतिसर्याय च नमो याम्याय च क्षेम्याय च नमः श्लोक्याय चावसान्याय च नमऽ उर्वर्याय च खल्याय च ॥३३॥**

सोभ्य नाम गरेको मनुष्यलोकका रूपमा रहेकालाई हामी नमस्कार गर्दछौं । शत्रुमाथि आक्रमण गरेर पराजित गराउन सफल हुने खालका रुद्रदेवतालाई हामी नमस्कार

गर्दछौँ । न्यायका रक्षक र व्यवहारमा कुशल रूपलाई हामी नमस्कार गर्दछौँ । मन्त्रको व्याख्या गर्नमा कुशल र कार्यलाई सफलतापूर्वक समाप्त गर्नेका रूपमा रहेका रुद्रदेवताका रूपलाई हामी नमस्कार गर्दछौँ । अचल धनसम्पत्तिका अधिपति र अन्न आदि पदार्थलाई सञ्चय गर्नमा कुशल रुद्ररूपी देवतालाई हामी नमस्कार गर्दछौँ ।

**नमो वन्याय च कक्ष्याय च नमः श्रवाय च प्रतिश्रवाय च नमऽ आशुषेणाय चाशुरथाय च नमः शूराय चावभेदिने च ॥३४॥**

वनका रुखहरूमा रहेका र घाँस आदि औषधिहरूमा रहेका देवतालाई हामी नमस्कार गर्दछौँ । ध्वनिमा रहेका र प्रतिध्वनिमा रहेका देवताहरूलाई हामी नमस्कार गर्दछौँ । चाँडो गति भएका सेनामा रहेका देवतालाई नमस्कार गर्दछौँ । शूरवीरहरूमा विद्यमान र शत्रुका हृदय छेड्ने खालका हतियारमा बसेका देवतालाई हामी नमस्कार गर्दछौँ ।

**नमो बिल्मिने च कवचिने च नमो वर्मिणे च वरूथिने च नमः श्रुताय च श्रुतसेनाय च नमो दुन्दुभ्याय चाहनन्याय च ॥३५॥**

शत्रुको प्रहारबाट शिरलाई जोगाउन शिरस्त्राण र शरीर जोगाउन कवच लगाउने देवतालाई हामी नमस्कार गर्दछौँ । रथभित्र बसेका र हात्तका हौदाभित्र बसेका देवतालाई हामी नमस्कार गर्दछौँ । प्रसिद्धि कमाएका र प्रसिद्ध सेना लिएका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ । रणका बाजालाई र ती वाद्ययन्त्रहरू बजाउनेका रूपमा रहेका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ ।

**नमो धृष्णवे च प्रमृशाय च नमो निषङ्गिणे चेषुधिमते च नमस्तीक्ष्णेषवे चायुधिने च नमः स्वायुधाय च सुधन्वने च ॥३६॥**

सङ्घर्षशील वीरहरूलाई, विचारशील वीरहरूलाई, खड्गधारी वीरहरूलाई, धनुषबाण लिएका वीरहरूलाई हामी नमस्कार गर्दछौँ । तिखो बाण प्रहार गर्ने र उत्तम आयुध लिएका वीरहरूलाई हामी नमस्कार गर्दछौँ । उच्च कोटीका आयुध धारण गरेका वीरहरू र श्रेष्ठ धनुषधारी वीरहरूलाई हामी नमस्कार गर्दछौँ ।

**नमः स्रुत्याय च पथ्याय च नमः काट्याय च नीप्याय च नमः कुल्याय च सरस्याय च नमो नादेयाय च वैशन्ताय च ॥३७॥**

गाउँका सानातिना बाटागल्लीमा रहेका देवतालाई हामी नमस्कार गर्दछौँ । राजमार्गमा रहेका देवताहरूलाई हामी नमस्कार गर्दछौँ । दुर्गम ठाउँका बाटाहरूमा रहेका र पर्वतका तल्ला भागमा रहेका देवतालाई हामी नमस्कार गर्दछौँ । कुलो नहर र ताल आदिमा रहेका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ । नदीका जलमा रहेका र सानातिना पोखरीहरूमा रहेका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ ।

**नमः कूप्याय चावट्याय च नमो वीध्र्याय चातप्याय च नमो मेघ्याय च विद्युत्याय च नमो वर्ष्याय चावर्ष्याय च ॥३८॥**

इनारमा रहेका देवतालाई हामी नमस्कार गर्दछौँ । खाडलमा रहेका देवतालाई नमस्कार छ । अत्यन्त प्रकाशमा रहेका देवतालाई हाम्रो नमस्कार छ । सूर्यको रापमा रहेका देवतालाई नमस्कार । बादलमा बसेका देवतालाई हामी नमस्कार गर्दछौँ । खरो

घाममा रहेका देवतालाई हामी नमस्कार गर्दछौं । मुसलधारे झरीमा रहने र त्यस्तो झरी रोकिदिने देवतालाई हामी नमस्कार गर्दछौं ।

**नमो वात्याय च रेष्म्याय च नमो वास्तव्याय च वास्तुपाय च नमः सोमाय च रुद्राय च नमस्ताम्राय चारुणाय च ॥३९॥**

हावाहुरीका रूपमा रहेका देवतालाई हामी नमस्कार गर्दछौं । प्रलयका रूपमा रहने देवतालाई हाम्रो नमस्कार छ । वास्तुकलामा रहेका देवतालाई हामी नमस्कार गर्दछौं । घरगृह आदि वास्तुमा रहेका देवतालाई हामी नमस्कार गर्दछौं । चन्द्रमामा रहेका देवतालाई नमस्कार, पापनाशक रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । साँझपखका ताँवारङ्गी सूर्यदेवताका रूपमा रहेका र बिहानीको लालीमायुक्त सूर्यदेवताको रूपमा रहेका देवतालाई हाम्रो नमस्कार छ ।

**नमःशङ्गवे च पशुपतये च नमऽ उग्राय च भीमाय च नमोग्रेवधाय च दूरेवधाय च नमो हन्त्रे च हनीयसे च नमो वृक्षेभ्यो हरिकेशेभ्यो नमस्ताराय ॥४०॥**

कल्याणकारी वाणीका रूपमा रहेका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । प्राणीहरूका पालक रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । शत्रुविनाशका लागि कठोर हृदयको रूप लिने देवतालाई हामी नमस्कार गर्दछौं र शत्रुलाई डरत्रास देखाउने रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । अगाडि आएका शत्रुलाई विनाश गर्ने रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । परबाट आउने शत्रुलाई विनाश गर्ने रुद्रदेवतालाई हाम्रो प्रणाम । शत्रुविनाश गर्ने र प्रलयको जस्तै हुङ्कार गर्ने रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । घाँसजस्तो हरियो रङ्गको कपाल भएका वृक्षरूपी देवताहरूलाई हामी नमस्कार गर्दछौं र संसाररूपी सागरबाट पार लगाउने विराट् रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं ।

**नमः शम्भवाय च मयोभवाय च नमः शङ्कराय च मयस्कराय च नमः शिवाय च शिवतराय च ॥४१॥**

दिव्य आनन्द प्रदान गर्ने र सांसारिक सुख प्रदान गर्ने रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं । कल्याण गर्ने र सुख बढाउने देवतालाई हामी नमस्कार गर्दछौं । सबै किसिमका मङ्गल गर्ने र आफ्ना भक्तहरूलाई पवित्रतापूर्वक गति प्रदान गर्ने रुद्रदेवतालाई हामी नमस्कार गर्दछौं ।

**नमः पार्याय चावार्याय च नमः प्रतरणाय चोत्तरणाय च नमस्तीर्थ्याय च कूल्याय च नमः शष्प्याय च फेन्याय च ॥४२॥**

समुद्रपारि रहेका र समुद्रका किनारमा रहेका देवतालाई हामी नमस्कार गर्दछौं । पार लगाउन प्रयोग भएका साधनझैं बनेर आफैं पार गराउने देवतालाई हामी नमस्कार गर्दछौं । तीर्थमा रहेका देवतालाई हामी नमस्कार गर्दछौं र जलका किनारमा रहने देवतालाई हाम्रो नमस्कार छ । कुश आदिमा रहेका र समुद्रको फिँजमा रहेका देवतालाई हाम्रो नमस्कार छ ।

**नमः सिकत्याय च प्रवाह्याय च नमः किꣳशिलाय च क्षयरणाय च नमः कपर्दिने च पुलस्तये च नमऽ इरिण्याय च प्रपथ्याय च ॥४३॥**

बालुवामा बसेका देवतालाई हामी नमस्कार गर्दछौँ र नदीका प्रवाहमा रहने देवतालाई हामी नमस्कार गर्दछौँ । नदीका तलीमा रहने र रुखबिरुवा, ढुङ्गा आदिमा रहेका देवतालाई हामी नमस्कार गर्दछौँ । सिपी, कौडी, शङ्ख आदि किराहरूमा रहेका देवतालाई हामी नमस्कार गर्दछौँ । पानीमा पूरै मिसिएर बसेका देवतालाई हामी नमस्कार गर्दछौँ । घाँस आदि र रुखो पाखामा रहने तथा विशिष्ट जलप्रवाहमा रहने देवतालाई हामी नमस्कार गर्दछौँ ।

**नमो व्रज्याय चगोष्ठ्याय च नमस्तल्प्याय च गेह्याय च नमो हृदय्याय च निवेष्प्याय च नमः काट्याय च गह्वरेष्ठाय च ॥४४॥**

गाई आदि पशुको चरनमा रहने र गोठ आदिमा रहने देवतालाई हामी नमस्कार गर्दछौँ । ओछ्यान र घर आदिमा रहेका देवतालाई हामी नमस्कार गर्दछौँ । हृदयमा प्राणका रूपमा बसेका देवतालाई हामी नमस्कार गर्दछौँ । हिउँका चुचुराहरूमा रहने देवतालाई हामी नमस्कार गर्दछौँ । दुर्गम मार्गमा रहेका पर्वत आदि पाखापखेरा, गुफा तथा गहिरो पानीमा रहने देवतालाई हाम्रो नमस्कार छ ।

**नमः शुष्क्याय च हरित्याय च नमः पाꣳसव्याय च रजस्याय च नमो लोप्याय चोलप्याय च नमऽ ऊर्व्याय च सूर्व्याय च ॥४५॥**

सुकेका काठदाउरामा रहेका, हरिया बनबुट्यानमा रहेका देवतालाई हाम्रो नमस्कार छ । फूलका थुँगा र वनका सुन्दरतामा रहेका देवतालाई हामी नमस्कार गर्दछौँ । अदृश्य स्थानमा रहेका र घाँसका त्यान्द्राहरूमा रहने देवतालाई हामी नमस्कार गर्दछौँ । पृथ्वीको उर्वर भूमिमा रहने र महाप्रलयको विकराल अग्निमा विराजमान देवतालाई हामी नमस्कार गर्दछौँ ।

**नमः पर्णाय च पर्णशदाय च नमऽ उद्गुरमाणाय चाभिघ्नते च नमऽ आखिदते च प्रखिदते च नमऽ इषुकृद्भ्यो धनुष्कृद्भ्यश्च वो नमो नमो वः किरिकेभ्यो देवानाꣳहृदयेभ्यो नमो विचिन्वत्केभ्यो नमो विक्षिणत्केभ्यो नमऽ आनिर्हतेभ्यः ॥४६॥**

झारपातमा रहेका, सुकेका पातपतिङ्गरमा रहेका देवतालाई हामी नमस्कार गर्दछौँ । सृष्टिचक्र चलाउन निरन्तर काममा खटिएका, शत्रुलाई संहार गर्ने रूप लिएर बसेका देवतालाई हामी नमस्कार गर्दछौँ । अल्छे र दुःखदायी रूपमा रहेका, तीन किसिमका ताप उत्पन्न गर्नेका रूपमा रहेका देवतालाई हाम्रो नमस्कार छ । बाण आदि उत्पन्न गर्ने र धनुष आदि निर्माण गर्नेका रूपमा रहेका देवतालाई हामी नमस्कार गर्दछौँ । देवताको हृदयरूपी सूर्य, वर्षा आदिले संसारको सृष्टिचक्र चलाउने बनेर बसेका धार्मिक वा पापवृत्तिमा संलग्न रहेकाहरूलाई विभाजन गर्नेका रूपमा रहेका रुद्रदेवतालाई हामी नमस्कार गर्दछौँ ।

**द्रापे अन्धसस्पते दरिद्र नीललोहित । आसां प्रजानामेषां पशूनां मा भेर्मा रोङ्मो च नः किंचनाममत् ॥४७॥**

हे रुद्रदेवता ! तिमी पापीहरूलाई अधम गतिमा लैजाने, अन्नका स्वामी, निर्लोभी, नीलोरातो रङ्गका छौ । तिमी यी प्रजा र पशुहरूलाई दुःख पाउन नदेऊ । पशुहरूलाई डराउने नबनाइदेऊ र हामीलाई कुनै खालको रोग लाग्न नदेऊ ।

**इमा रुद्राय तवसे कपर्दिने क्षयद्वीराय प्र भरामहे मतीः । यथा शमसद् द्विपदे चतुष्पदे विश्वं पुष्टं ग्रामेऽ अस्मिन्ननातुरम् ॥४८॥**

हाम्रा प्रजा र गाई आदि पशुलाई सुख होस् । यस गाउँका सबै प्राणीहरू आपद्रहित र बलिया होऊन् । हामी आफ्नो बुद्धि दुष्टहरूलाई नाश गर्ने वीरलाई प्रेरणा दिने जटाधारी रुद्रदेवतालाई समर्पित गरौं ।

**या ते रुद्र शिवा तनूः शिवा विश्वाहा भेषजी । शिवा रुतस्य भेषजी तया नो मृड जीवसे ॥४९॥**

हे रुद्रदेवता ! तिम्रो कल्याणकारी रूप नै विश्वलाई व्याधिबाट मुक्त गराउने औषधि हो । त्यो औषधि शरीरलाई नवजीवन प्रदान गर्ने बलको रूप हो । तिम्रा त्यसै बलले हाम्रो जीवनलाई सुखमय बनाऊ ।

**परि नो रुद्रस्य हेतिर्वृणक्तु परि त्वेषस्य दुर्मतिरघायोः । अव स्थिरा मघवद्भ्यस्तनुष्व मीढ्वस्तोकाय तनयाय मृड ॥५०॥**

रुद्रदेवताको आयुध हामीदेखि परै रहोस् । क्रोधित मुद्रा भएका दुर्बुद्धिहरू हामीदेखि परै रहून् । हे इष्टप्रदायक रुद्रदेवता ! ऐश्वर्यवान् यजमानको भय हटाउनका लागि आफ्ना धनुषको प्रत्यञ्चा खसाल र हाम्रा पुत्रपौत्रादिलाई सुख तथा सौभाग्य प्रदान गर ।

**मीढुष्टम शिवतम शिवो नः सुमना भव । परमे वृक्षऽ आयुधं निधाय कृत्तिं वसानऽ आ चर पिनाकं बिभ्रदा गहि ॥५१॥**

हे इष्ट फलप्रदायक रुद्रदेवता ! तिमी हाम्रा लागि कल्याणकारी छौ । तिमी सधैं शान्त र श्रेष्ठ मनका छौ । आफ्ना शस्त्र साधन ठूला वृक्षका टुप्पामा राखेर निःशस्त्र हुँदै चर्मरूपी वस्त्र धारण गरेर आऊ । तिमी केवल शत्रुनाशक धनुष मात्रै लिएर यहाँ आऊ ।

**विकिरिद्र विलोहित नमस्ते अस्तु भगवः । यास्ते सहस्रꣳ हेतयोन्यमस्मन्नि वपन्तु ताः ॥५२॥**

हे अत्यन्त शुद्ध स्वरूप भएका र उपद्रव नाश गर्ने रुद्र भगवान् ! तिमीलाई नमस्कार गर्दछौं । तिम्रा हजारौं किसिमका शस्त्रहरू हामीदेखि बाहेक अन्य उपद्रव गर्नेहरूमाथि बर्सिऊन् र तिनीहरू नाश होऊन् ।

**सहस्राणि सहस्रशो बाह्वोस्तव हेतयः । तासामीशानो भगवः पराचीना मुखा कृधि ॥५३॥**

हे आफ्ना भुजाहरूमा सहस्र किसिमका खड्ग, शूल आदि आयुधहरू लिएका रुद्र भगवान् ! तिमी यी संहारक आयुधहरूको मुख हामीलाई हानी नहुने गरी हामीभन्दा भिन्न दिशातर्फ फर्काऊ ।

**असंख्याता सहस्राणि ये रुद्राऽ अधि भूम्याम् । तेषाᳬ सहस्रयोजनेव धन्वानी तन्मसी ॥५४॥**

असङ्ख्य प्राणीहरूलाई नियन्त्रित गर्ने रुद्रदेवताको हजारौँको गण भूमिमा नै रहेको छ । हे भव्य स्वरूप भएका रुद्रदेवता ! ती गणको धनुष हामीभन्दा हजारौँ योजन पर राख ।

**अस्मिन् महत्यर्णवेन्तरिक्षे भवाऽ अधि । तेषाᳬ सहस्रयोजनेव धन्वानी तन्मसी ॥५५॥**

यस अन्तरिक्षमा र विशाल सागरका आश्रयमा व्याप्त भएर रहेका प्रलयङ्कारी शक्तिरूप रुद्रगण र हे महारुद्र ! यी सबै धनुषहरू हामीदेखि हजारौँ योजन पर र प्रत्यञ्चारहित अवस्थामा रहून् ।

**नीलग्रीवाः शितिकण्ठाः दिवᳬरुद्राऽ अपश्रिताः । तेषाᳬ सहस्रयोजनेव धन्वानी तन्मसी ॥५६॥**

नीलो घाँटी र सेतो कण्ठ भएको शर्व नामका रुद्रगण द्युलोकका आश्रयमा रहेका छन् । हे महारुद्र ! उनीहरू सबैका धनुष हामीदेखि हजारौँ योजन पर र प्रत्यञ्चारहित अवस्थामा रहून् ।

**नीलग्रीवाः शितिकण्ठाः शर्वाऽ अधः क्षमाचराः । तेषाᳬ सहस्रयोजनेव धन्वानी तन्मसी ॥५७॥**

नीलो घाँटी र सेतो कण्ठ भएको शर्व नामका रुद्रगण भूमण्डलका तल्लो भागमा विचरण गर्दछन् । हे महारुद्र ! उनीहरू सबैका धनुष हामीदेखि हजारौँ योजन पर र प्रत्यञ्चारहित अवस्थामा रहून् ।

**ये वृक्षेषु शष्पिञ्जरा नीलग्रीवा विलोहिताः । तेषाᳬ सहस्रयोजनेव धन्वानी तन्मसी ॥५८॥**

नीलो घाँटी र हरियो वर्णको तेजस्विताले सम्पन्न रुद्रगण वृक्ष आदिमा रहेका छन् । हे शक्तिशाली महारुद्र ! उनीहरू सबैका धनुष हामीदेखि हजारौँ योजन पर र प्रत्यञ्चारहित अवस्थामा रहून् ।

**ये भूतानामधिपतयो विशिखासः कपर्दिनः । तेषाᳬ सहस्रयोजनेव धन्वानी तन्मसी ॥५९॥**

हे महारुद्रदेवता ! सम्पूर्ण प्राणीहरूका रक्षक, मुडुलो शिर भएका वा जटाधारी सबै रुद्रगणका जुनसुकै धनुष प्रत्यञ्चारहित बनाएर हामीदेखि हजारौँ योजन पर राख ।

**ये पथां पथिरक्षयऽ ऐलबृदाऽ आयुर्युधः । तेषाᳬ सहस्रयोजनेव धन्वानी तन्मसी ॥६०॥**

हे महारुद्रदेवता ! विभिन्न मार्गमा हिँड्ने पथिकहरूलाई विभिन्न तरिकाले रक्षा गर्ने र अन्नले प्राणीलाई परिपुष्ट गराएर जीवनसङ्ग्रामभरि जुभ्ने प्रेरणा प्रदान गर्ने ती रुद्रगणको धनुषलाई प्रत्यञ्चारहित बनाएर हामीदेखि हजारौँ योजन पर राखिदेऊ ।

**ये तीर्थानि प्रचरन्ति सृकाहस्ता निषङ्गिणः । तेषाꣳ सहस्रयोजनेव धन्वानी तन्मसी ॥६१॥**

रुद्रगणहरू हातमा भाला लिएर र तरवार भिरेर विभिन्न तीर्थहरूमा विचरण गर्दछन् । हे महारुद्रदेवता ! उनीहरूका सबै धनुषहरूलाई प्रत्यञ्चाविहीन बनाएर हामीदेखि हजारौँ योजन पर राख ।

**येन्नेषु विविध्यन्ति पात्रेषु पिबतो जनान् । तेषाꣳ सहस्रयोजनेव धन्वानी तन्मसी ॥६२॥**

रुद्रका गणले अन्न ग्रहण गर्ने प्राणीहरूलाई विभिन्न किसिमका रोगव्याधले प्रताडित गर्दछन् र विभिन्न किसिमका पात्रमा पानी, दुध आदि पिउने प्राणीलाई अनेकौँ खालका दुःख दिन्छन् । हे महारुद्रदेवता ! उनीहरूका सबै धनुषलाई प्रत्यञ्चाविहीन बनाएर हामीदेखि हजारौँ योजन पर राख ।

**य एतावन्तश्च भूयाꣳसश्च दिशो रुद्रा वितस्थिरे । तेषाꣳ सहस्रयोजनेव धन्वानी तन्मसी ॥६३॥**

हे महारुद्रदेवता ! यहाँ वा वहाँका विभिन्न दिशामा रहने गरेका रुद्रगणका सबै धनुषहरूलाई प्रत्यञ्चाविहीन बनाएर हामीदेखि हजारौँ योजन पर राख ।

**नमोस्तु रुद्रेभ्यो ये दिवि येषां वर्षमिषवः । तेभ्यो दश प्राचीर्दश दक्षिणा दश प्रतिचीर्दशोदीचीर्दशोर्ध्वाः । तेभ्यो नमो अस्तु ते नोवन्तु ते नो मृडयन्तु ते यं द्विष्मो यश्च नो द्वेष्टि तमेषां जम्भे दध्मः ॥६४॥**

द्युलोकमा रहने रुद्रको शक्तिरूपी रुद्रगणले वर्षाका धारारूपी बाण लिएको छ, उसलाई नमस्कार छ । उसै रुद्रगणलाई पूर्व, दक्षिण, पश्चिम, उत्तर र ऊर्ध्व दिशामा हामी हात जोडेर नमस्कार गर्दछौँ । उसै रुद्रगणले हाम्रो रक्षा गरोस्, हामीलाई सुख प्रदान गरोस् । जोसित हामी द्वेष गर्दछौँ र जो हामीसित द्वेष गर्दछन्, तिनीहरूलाई हामी रुद्रदेवताका दाह्रामा हालिदिन्छौँ ।

**नमोस्तु रुद्रेभ्यो येन्तरिक्षे येषां वातऽ इषवः । तेभ्यो दश प्राचीर्दश दक्षिणा दश प्रतिचीर्दशोदीचीर्दशोर्ध्वाः । तेभ्यो नमो अस्तु ते नोवन्तु ते नो मृडयन्तु ते यं द्विष्मो यश्च नो द्वेष्टि तमेषां जम्भे दध्मः ॥६५॥**

अन्तरिक्षमा रहने रुद्रको शक्तिरूपी रुद्रगणले विभिन्न खालका पवनरूपी बाण लिएको छ, उसलाई नमस्कार छ । उसै रुद्रगणलाई पूर्व, दक्षिण, पश्चिम, उत्तर र ऊर्ध्व दिशामा हामी हात जोडेर नमस्कार गर्दछौँ । उसै रुद्रगणले हाम्रो रक्षा गरोस्, हामीलाई सुख प्रदान गरोस् । जोसित हामी द्वेष गर्दछौँ र जो हामीसित द्वेष गर्दछन्, तिनीहरूलाई हामी रुद्रदेवताका दाह्रामा हालिदिन्छौँ ।

**नमोस्तु रुद्रेभ्यो ये पृथिव्यां येषामन्नमिषवः । तेभ्यो दश प्राचीर्दश दक्षिणा दश प्रतिचीर्दशोदीचीर्दशोर्ध्वाः । तेभ्यो नमो अस्तु ते नोवन्तु ते नो मृडयन्तु ते यं द्विष्मो यश्च नो द्वेष्टि तमेषां जम्भे दध्मः ॥६६॥**

पृथ्वीमा रहने रुद्रको शक्तिरूपी रुद्रगणले विभिन्न खालका अन्नरूपी बाण लिएको छ, उसलाई नमस्कार छ । उसै रुद्रगणलाई पूर्व, दक्षिण, पश्चिम, उत्तर र ऊर्ध्व दिशामा हामी हात जोडेर नमस्कार गर्दछौँ । उसै रुद्रगणले हाम्रो रक्षा गरोस्, हामीलाई सुख प्रदान गरोस् । जोसित हामी द्वेष गर्दछौँ र जो हामीसित द्वेष गर्दछन्, तिनीहरूलाई हामी रुद्रदेवताका दाह्रामा हालिदिन्छौँ ।

## इति षोडशोऽध्यायः

सोह्रौँ अध्याय सकियो ।

ॐ

भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।

# वाजसनेयि माध्यन्दिन शुक्ल

# यजुर्वेद – संहिता

## ॥अथ सप्तदशोऽध्यायः॥

॥सत्रौं अध्याय॥

**ऋषि–** कुत्स, वसूयव, मेधातिथि, भरद्वाज, ऋषिसूत लोपामुद्रा, विश्वकर्मा भौवन, अप्रतिरथ, तापस, विश्वावसु, जेता माधुच्छन्दस, विधृति, कण्व, गृत्समद, वसिष्ठ, कुमारवृष, सप्तर्षिगण, वामदेव ।

**देवता–** मरुत्गण, अश्मा, आशीर्वाद, आभिचारिक, अग्नि, प्राणसमूह, विश्वकर्मा, इन्द्र, इषु, योद्धागण, लिङ्गोक्त, दिशा, हविर्यज्ञ, आदित्य, यज्ञ, इन्द्राग्नी, सविता, यज्ञपुरुष ।

**छन्द–** भुरिक् अतिशक्वरी, निचृत् विकृति, विराट् आर्षी पङ्क्ति, भुरिक् आर्षी गायत्री, आर्षी त्रिष्टुप्, आर्षी बृहती, आर्षी गायत्री, निचृत् आर्षी गायत्री, निचृत् आर्षी जगती, भुरिक् आर्षी बृहती, निचृत् गायत्री, आर्षी जगती, निचृत् आर्षी त्रिष्टुप्, भुरिक् आर्षी पङ्क्ति, विराट् आर्षी त्रिष्टुप्, आर्षी अनुष्टुप्, विराट् आर्षी अनुष्टुप्, पङ्क्ति, विराट् आर्षी त्रिष्टुप्, आर्षी अनुष्टुप्, निचृत् आर्षी बृहती, पिपीलिकामध्या बृहती, निचृत् आर्षी पङ्क्ति, आर्षी उष्णिक्, विराट् अतिजगती, भुरिक् आर्षी उष्णिक्, स्वराट् आर्षी गायत्री, निचृत् शक्वरी ।

**अश्मन्नूर्जं पर्वते शिश्रियाणामद्भ्यऽ ओषधीभ्यो वनस्पतिभ्यो अधि सम्भृतं पयः । तां नऽ इषमूर्जं धत्त मरुतः सꣳरराणा अश्मँस्ते क्षुन्मयि तऽ ऊर्ग्यं द्विष्मस्तं ते शुगृच्छतु ॥१॥**

हे मरुद्गण ! तिमीहरू हामीलाई अन्न आदिले सम्पन्न बनाउन सक्षम छौ । तिमीहरू पर्वत र ढुङ्गाहरूमा आश्रित बललाई, औषधिहरूलाई, वनस्पति आदिबाट निस्कने रसलाई र श्रेष्ठ अन्न तथा ओजलाई हाम्रा निम्ति धारण गर । हे सर्वभक्षी अग्निदेवता ! तिम्रो भोक शान्त होस्, तिम्रो स्वरूप हामीलाई प्राप्त होस् । जसले रिसडाह गर्दछन् उनीमाथि तिम्रा क्रोधको प्रभाव परोस् ।

**इमा मे अग्नऽ इष्टका धेनवः सन्त्वेका च दश च दश च शतं च शतं च सहस्रं च सहस्रं चायुतं चायुतं च नियुतं च नियुतं च प्रयुतं चार्बुदं च न्यर्बुदं च समुद्रश्च मध्यं चान्तश्च परार्धश्चैता मे अग्नऽ इष्टका धेनवःसन्त्वमुत्रामुष्मिँल्लोके ॥२॥**

हे अग्निदेवता ! हव्यका सूक्ष्म एकाइका रूपमा अर्पित यी इष्टकाहरू हाम्रा लागि कामधेनुजस्तै अभीष्ट फल प्रदान गर्नमा समर्थ होऊन् । यी इष्टकाहरू दस गुणा भएर, एकबाट दस, दसबाट सय, सयबाट हजार, हजारबाट अयुत, अयुतबाट नियुत, नियुतबाट प्रयुत, प्रयुतबाट करोड, करोडबाट अर्ब, अर्बबाट न्यर्ब, न्यर्बबाट खर्ब, खर्बबाट पद्म, पद्मबाट महापद्म, महापद्मबाट शङ्कु, शङ्कुबाट समुद्र, समुद्रबाट मध्य, मध्यबाट अन्त र

अन्तबाट परार्द्धसम्म बढ्दै जाऊन् । यी बढिरहेका इष्टकाहरू हाम्रा लागि यो लोक र परलोकमा हरेक किसिमले अभीष्ट फल प्रदायक कामधेनु गाईजस्तै होऊन् ।

**ऋतवः स्थऽ ऋतावृधऽ ऋतुष्ठाः स्थऽ ऋतावृधः । घृतश्च्युतो मधुश्च्युतो विराजो नाम कामदुघाऽ अक्षीयमाणाः ॥३॥**

हे इष्टकाहरू हो ! तिमीहरू सत्यरूपी यज्ञजस्तै पोषण प्रदान गर्ने हौ । यज्ञलाई बढाउने ऋतुहरूमा तिमीहरू अधिष्ठित छौ । तिमीहरू घिउरूपी रस र मधुरूपी रस सेचन गराउने, देदीप्यमान, अभीष्ट कामनाहरू पूरा गराउने र कहिल्यै नष्ट नहुने खालका छौ ।

**समुद्रस्य त्वावकयाग्ने परि व्ययामसि । पावको अस्मभ्यथं्ँ शिवो भव ॥४॥**

हे अग्निदेवता ! हामी तिमीलाई समुद्रका शैवाल आदि तापका कुचालकहरूले सुरक्षित गराएर राख्दछौँ । तिमी हाम्रो जीवनलाई पवित्र बनाउँदै हाम्रो कल्याण गर ।

**हिमस्य त्वा जरायुणाग्ने परि व्ययामसि । पावको अस्मभ्यथं्ँ शिवो भव ॥५॥**

हे अग्निदेवता ! हिउँको संरक्षक आवरणले झैँ चारै तिरबाट ढाकेर हामी तिमीलाई सुरक्षित गराउँछौँ । हाम्रा लागि तिमी पवित्रकर्ता र कल्याणकारी भइदेऊ ।

**उप ज्मन्नुप वेतसेऽ वतर नदीष्वा । अग्ने पित्तमपामसि मण्डूकि ताभिरागहि सेमं नो यज्ञं पावकवर्णथं्ँ शिवं कृधि ॥६॥**

हे अग्निदेवता ! तिमी भूमिमाथि आऊ र बडवानलसँगै नदीमा प्रवाहित होऊ । किनभने पानी पनि जलको तेजस् रूप नै हो । हे मण्डकहरू हो ! तिमीहरू पनि अग्निको अनुसरण गर्दै पृथ्वीका बाहिरी सतहमा आएर जलमा प्रवेश गर । हाम्रा यस यज्ञलाई पवित्र र कल्याणकारी बनाओ ।

**अपामिदं न्ययनथं्ँ समुद्रस्य निवेशनम् । अन्याँस्ते अस्मत्तपन्तु हेतयः पावको अस्मभ्यथं्ँ शिवो भव ॥७॥**

हे अग्निदेवता ! तिमी जलको आधार यस स्थान विशाल समुद्रमा बडवानलका रूपमा विद्यमान छौ । तिम्रा ज्वालाले हामीलाई छोडेर अन्यान्य शत्रुलाई सताऊन् । हाम्रा निम्ति तिमी पवित्रकर्ता र कल्याणकारी सिद्ध होऊ ।

**अग्ने पावक रोचिषा मन्द्रया देव जिह्वया । आ देवान्वक्षि यक्षि च ॥८॥**

हे पवित्रता प्रदान गर्ने अग्निदेवता ! प्रसन्न गराउने ज्वालारूपी जिब्राले देवताहरूलाई आमन्त्रित गर र उनीहरूका निम्ति यज्ञ सम्पन्न गर ।

**स नः पावक दीदिवोग्ने देवाँ२ऽ इहा वह । उप यज्ञथं्ँ हविश्च नः ॥९॥**

हे पवित्र गराउने र दीप्तिमान् अग्निदेवता ! तिमी देवताहरूलाई हाम्रा यज्ञमा हवि ग्रहण गर्नका लागि लिएर आऊ ।

**पावकया यश्चितयन्त्या कृपा क्षामन् रुरुचऽ उषसो न भानुना । तूर्वन्न यामन्नेतशस्य नू रणऽ आ यो घृणे न ततृषाणो अजरः ॥१०॥**

उषा कालको प्रकाशजस्ता अग्निदेवबाट पृथिवीलाई पवित्रता र चेतना प्राप्त हुँदा पृथ्वी तेजले शोभायमान हुन्छ । हे वीतहव्य ! तिमीहरू सर्वभक्षी र अजर अग्निदेवताको अर्चना गर । उनी एतश ऋषिको रक्षाका लागि रणभूमिमा शीघ्र चैतन्य हुन्छन् ।

**नमस्ते हरसे शोचिषे नमस्ते अस्त्वर्चिषे । अन्याँस्ते अस्मत्तपन्तु हेतयः पावको अस्मभ्यꣳशिवो भव ॥११॥**

हे अग्निदेवता ! तिम्रो दीप्तिमान् ज्वाला सबै किसिमका रसलाई आकर्षण गर्न सक्ने खालको छ । तिम्रा त्यस तेजलाई हामी नमस्कार गर्दछौँ । तिम्रा ज्वालाले हामीलाई बाहेक अरूलाई नै दुःख दियोस् । हाम्रा लागि तिमी पवित्रकर्ता र कल्याणकारी होऊ ।

**नृषदे वेडप्सुषदे वेड् बर्हिषदे वेड् वनसदे वेट् स्वर्विदे वेट् ॥१२॥**

यी अग्निदेवता मानिसभित्र जठराग्निका रूपमा विद्यमान रहन्छन् । उनका लागि नै यो आहुति समर्पित गरिएको छ । अग्निदेवता समुद्रमा बडवानलका रूपमा अधिष्ठित छन् । उनका लागि यो आहुति हामी समर्पित गर्दछौँ । अग्निदेवता कुश आदिमा औषधिका रूपमा विद्यमान रहन्छन् । उनको खुसीका लागि हामी यो आहुति चढाउँछौँ । यी अग्नि वृक्षमा दावानलका रूपमा अधिष्ठित छन् । उनकै प्रीतिका निम्ति हामी यो आहुति प्रदान गर्दछौँ । यी अग्निदेवता द्युलोकमा अवस्थित सूर्यका रूपमा प्रसिद्ध छन् । उनका प्रीतिका लागि हामी यो आहुति समर्पित गर्दछौँ ।

**ये देवा देवानां यज्ञिया यज्ञियानाꣳसंवत्सरीणमुप भागमासते । अहुतादो हविषो यज्ञे अस्मिन्त्स्वयं पिबन्तु मधुनो घृतस्य ॥१३॥**

जुन देवताहरू आहुति प्रदान नगरीकनै हविष्यान्न ग्रहण गर्दछन्, उनै प्राणरूप देवताहरू यस यज्ञमा मधु, घिउ आदि हविको भाग स्वयं पान गरुन् । जुन देवताहरू यजनका निम्ति प्रतिष्ठित देवताहरूका बीचमा देदीप्यमान् छन्, उनीहरू नै वर्षको समाप्तिमा हुने गरेका यज्ञका हविको भाग सेवन गर्दछन् ।

**ये देवा देवेष्वधि देवत्वमायन् ये ब्रह्मणः पुरऽ एतारो अस्य । येभ्यो नऽ ऋते पवते धाम किञ्चन न ते दिवो न पृथिव्याऽ अधि स्नुषु ॥१४॥**

जुन प्राणरूपी देवताहरूले इन्द्र आदिको जस्तै देवत्वको अधिकार प्राप्त गरेका छन्, जो आत्मारूपी अग्निका सम्मुखमा विचरण गर्दछन्, जसको अभावमा शरीरमा अलिकति पनि चेतना बाँकी रहँदैन ती प्राणरूपी देवता न द्युलोकमा छन्, न त पृथ्वीमा नै । उनी त सबैका सबै इन्द्रियमा नै विद्यमान छन् ।

**प्राणदाऽ अपानदा व्यानदा वर्चोदा वरिवोदाः । अन्याँस्ते अस्मत्तपन्तु हेतयः पावको अस्मभ्यꣳ शिवो भव ॥१५॥**

याजकहरूलाई प्राण, अपान, व्यान आदि वायुका साथै पराक्रम र ऐश्वर्य प्रदान गर्ने हे अग्निदेवता ! तिम्रा शस्त्रास्त्र हाम्रा लागि पवित्रता र कल्याण प्रदान गर्ने होऊन् तथा तिनले शत्रुलाई दुःख दिऊन् ।

**अग्निस्तिग्मेन शोचिषा यासद्विश्वं न्यत्रिणम् । अग्निर्नो वनते रयिम् ॥१६॥**

हे अग्निदेवता ! तिमी आफ्ना प्रज्वलित, तीक्ष्ण ज्वालाले विघ्नकारक तत्त्व नष्ट गर अनि जसले तिम्रो उपासना र स्तुति गर्दछन्, तिनलाई बल तथा ऐश्वर्य प्रदान गर ।

**य इमा विश्वा भुवनानि जुह्वदृषिर्होता न्यसीदत् पिता नः । सऽ आशिषा द्रविणमिच्छमानः प्रथमच्छदवराँ२ऽ आ विवेश ॥१७॥**

हामीलाई पिताले झैँ पोषण प्रदान गर्ने परमात्मा स्वयं नै यी सम्पूर्ण लोकका प्राणीहरूको संहार गर्ने बनेर सूक्ष्मद्रष्ट्य ऋषि र याजकहरूमा अधिष्ठित भएका हुन्छन् । उनै परमात्माले सबैलाई धनसम्पदाको इच्छा पूरा गराउँछन् । उनैले सबैलाई आफ्ना अधीनमा राख्दछन् र आफ्ना अधीनमा रहेका प्राणीहरूमा आफैँ नै सर्वत्र व्याप्त हुन पुग्दछन् ।

**किंस्विदासीदधिष्ठानमारम्भणं कतमत्स्वित्कथासीत् । यतो भूमिं जनयन्विश्वकर्मा वि द्यामौर्णोन्महिना विश्वचक्षाः ॥१८॥**

सृष्टिको निर्माणभन्दा पहिले परमात्मा कुन आश्रयमा अडिएका थिए ? सृष्टिको निर्माणमा प्रयोग भएका मूल द्रव्य के र कस्ता थियो ? त्यसबाट सर्वद्रष्टा विश्वकर्मा परमात्माले यस सुविशाल पृथ्वी र महान् द्युलोकको सिर्जना महान् सामर्थ्यले कहाँ बसेर गरे ?

**विश्वतश्चक्षुरुत विश्वतोमुखोविश्वतोबाहुरुत विश्वतस्पात् । सं बाहुभ्यां धमति सं पतत्रैर्द्यावाभूमी जनयन्देवऽ एकः ॥१९॥**

सर्वत्र आँखा भएका, सबैतिर मुख भएका, सबैतिर भुजा भएका र सबैतिर चरण भएका उनै अद्वितीय परमात्माले आफ्ना भुजाले गतिशील पृथ्वी र द्युलोक आश्रयविनै निर्माण गरेका थिए र उचित रूपमा तिनलाई सञ्चालित गर्ने उनी एक्लै थिए ।

**किंस्विद्वनं कऽ उ स वृक्षऽ आस यतो द्यावापृथिवी निष्टतक्षुः । मनीषिणो मनसा पृच्छतेदु तद्यदध्यतिष्ठद्भुवनानि धारयन् ॥२०॥**

कस्तो वन र कस्ता वृक्षबाट निर्माण सामग्री लिएर विश्वकर्मा ईश्वरले पृथिवी र द्युलोक निर्माण गरे ? हे विवेकी पुरुष हो ! समस्त भुवन धारण गर्दै ती विश्वकर्मादेव कुन ठाउँमा अडिएका छन् भनेर आआफ्ना मनका शक्तिसित सोध ।

**या ते धामानि परमाणि यावमा या मध्यमा विश्वकर्मन्नुतेमा । शिक्षा सखिभ्यो हविषि स्वधावः स्वयं यजस्व तन्वं वृधानः ॥२१॥**

हे विश्वको रचना गर्ने परमात्मा ! हे सबैलाई धारणपोषण गर्ने ईश्वर ! तिम्रा उच्चतम, मध्यम वा तल्ला धामका विषयमा हामीलाई मित्रको भावना राखेर सिकाऊ । सबै जीवलाई तिमीले वृद्धि प्रदान गरेपछि नै हामी उत्तम हविष्यान्नद्वारा यजन गरौँ ।

**विश्वकर्मन् हविषा वावृधानः स्वयं यजस्व पृथिवीमुत द्याम् । मुह्यन्त्वन्ये अभितः सपत्नाऽ इहास्माकं मघवा सूरिरस्तु ॥२२॥**

हे विश्वका स्रष्टा परमात्मा ! हामीले दिइएका हविष्यान्नले प्रसन्न भएर पृथ्वीले जस्तै सबै आश्रितहरूको हितका लागि यज्ञमा स्वयं यजन गर । तिमी सबै शत्रु आफ्ना बलले मोहग्रस्त गराऊ । यस महान् प्रकृतियज्ञमा ऐश्वर्यसम्पन्न इन्द्रदेवताले हाम्रा लागि आत्मज्ञान प्रदान गरुन् ।

**वाचस्पतिं विश्वकर्माणमूतये मनोजुवं वाजे अद्या हुवेम । स नो विश्वानि हवनानि जोषद्विश्वशम्भूरवसे साधुकर्मा ॥२३॥**

हामी आज जीवनयज्ञमा आफ्नो रक्षाका लागि ज्ञानका अधिपति सृष्टिका रचयिता परमेश्वरलाई आह्वान गर्दछौं । सत्कर्ममा प्रेरणा दिएर कल्याण गर्ने ती विश्वकर्माले हामीबाट प्रदान गरिएको हविष्यान्न हाम्रो रक्षाका लागि प्रेमपूर्वक ग्रहण गरुन् ।

**विश्वकर्मन् हविषा वर्धनेन त्रातारमिन्द्रमकृणोरवध्यम् । तस्मै विशः समनमन्त पूर्वीरयमुग्रो विहव्यो यथासत् ॥२४॥**

हे विश्वका रचनाकर्ता परमेश्वर ! हविले वृद्धि प्राप्त गरेर तिमीले इन्द्रलाई विश्वको रक्षक र अपराजेय बनायौ । उहिलेका ऋषिहरूको जस्तै हामी पनि उनै इन्द्रदेवतालाई झुकेर नमस्कार गर्दछौं । यी पराक्रमी इन्द्रदेवता तिम्रै शक्तिले सबै तिरबाट समर्थ भएका छन् । हामी उनैलाई आह्वान गर्दछौं ।

**चक्षुषः पिता मनसा हि धीरो घृतमेने अजनन्नम्नमाने । यदेदन्ताऽ अददृहन्त पूर्वऽ आदिद् द्यावापृथिवी अप्रथेताम् ॥२५॥**

उहिल्यै द्यावापृथिवीको विस्तार भएर तिनका बाहिरीभित्री भाग बलियोसँग अडिएपछि चक्षुसम्पन्न पिताले नमनशील घृतको सृष्टि गरे ।

**विश्वकर्मा विमनाऽ आद्विहाया धाता विधाता परमोत संदृक् । तेषामिष्टानि समिषा मदन्ति यत्रा सप्तऋषीन्परऽ एकमाहुः ॥२६॥**

विश्वकर्मादेव विशिष्ट महाशक्तिसम्पन्न, व्यापक विश्वका निर्माता, धारणकर्ता, महान् र सर्वद्रष्टा हुन् । उनैलाई प्राणका सप्तधाराका रूपमा रहेका सप्तऋषि पनि भनिन्छ । तिनको अभीष्ट पूर्ति उनकै पोषणशक्तिले हुन्छ । ती एउटै अद्वितीय हुन् ।

**यो नः पिता जनिता यो विधाता धामानि वेद भुवनानि विश्वा । यो देवानां नामधाऽ एकऽ एव तꣳ सम्प्रश्नं भुवना यन्त्यन्या ॥२७॥**

परमेश्वर हामी सबैका उत्पन्न र पालन गर्ने हुन्, उनी सबैका धारणकर्ता हुन् । उनी सम्पूर्ण लोकका स्थानका ज्ञाता हुन् र एउटै भएर पनि विविध देवताको विभिन्न नाम धारण गर्दछन् । सबै लोकका प्राणी आखिरमा उनैसित पुग्दछन् ।

**त आऽ यजन्त द्रविणꣳ समस्माऽ ऋषयः पूर्वे जरितारो न भूना । असूर्त्ते सूर्त्ते रजसि निषत्ते ये भूतानि समकृण्वन्निमानि ॥२८॥**

अन्तरिक्षमा प्रत्यक्ष वा अप्रत्यक्ष रूपमा निवास गर्ने परमेश्वरले नै समस्त प्राणीको रचना गरेका छन् । उनै स्रष्टाका लागि उहिलेका ऋषिहरूले स्तुति गर्दै यज्ञमा महान् वैभव समर्पित गरे ।

**परो दिवा परऽ एना पृथिव्या परो देवेभिरसुरैर्यदस्ति । कꣳ स्विद् गर्भं प्रथमं दध्रऽ आपो यत्र देवाः समपश्यन्त पूर्वे ॥२९॥**

हृदयमाको ईश्वरीय तत्त्व द्युलोकभन्दा पर छ, पृथ्वीभन्दा पर छ, देवता र असुरभन्दा पनि पर छ । जल तत्त्वले सर्वप्रथम कुन गर्भ धारण गर्‍यो ? त्यो गर्भ कस्तो विलक्षण थियो ? उहिलेका ऋषिहरू त्यस परमतत्त्वको उचित दर्शन पाउनासाथ देवत्वको परमपद प्राप्त गर्दथे ।

**तमिद्गर्भं प्रथमं दध्रऽ आपो यत्र देवाः समगच्छन्त विश्वे । अजस्य नाभावध्येकमर्पितं यस्मिन् विश्वानि भुवनानि तस्थुः ॥३०॥**

सृष्टिका आदिदेखि नै विद्यमान त्यस परमतत्त्वले जलको गर्भ धारण गर्‍यो, त्यसै ठाउँमा सम्पूर्ण देवशक्तिहरूको आश्रय स्थल छ । त्यस अजन्मा ईश्वरको नाभीकेन्द्रमा एउटै परम तत्त्व अधिष्ठित छ र त्यसैमा समस्त भुवन आश्रित भएर स्थिर रहेको छ ।

**न तं विदाथ यऽ इमा जजानान्यद्युष्माकमन्तरं बभूव । नीहारेण प्रावृता जल्प्या चासुतृपऽ उक्थशासश्चरन्ति ॥३१॥**

हे मानिस हो ! यस सम्पूर्ण ब्रह्माण्डको रचना गर्ने परमेश्वरलाई तिमीहरू जान्दैनौ । परमतत्त्वका रूपमा रहेका तिनी सबैबाट भिन्न भएर पनि सबैभित्र प्रतिष्ठित छन् । अज्ञानको बाक्लो अन्धकारमा डुबेका, केवल गफ र विवादमा लागेर जिउ जोगाउने र पोस्ने चिन्ताले सताइएकाहरूले त्यस्ता परमेश्वरका सम्बन्धमा व्यर्थ विवाद गर्दै विचरण गर्दछन्, साक्षात्कार गर्न सक्दैनन् ।

**विश्वकर्मा ह्यजनिष्ट देवऽ आदिद्गन्धर्वो अभवद् द्वितीयः । तृतीयः पिता जनितौषधीनामपां गर्भं व्यदधात् पुरुत्रा ॥३२॥**

सृष्टिका क्रममा सर्वप्रथम ब्रह्माण्डका सञ्चालक देवताहरू उत्पन्न भए, त्यसपछि पृथ्वीलाई धारण गर्ने अग्निरूपी सूर्यदेवता प्रकट भए । तेस्रो क्रममा औषधिका उत्पादक र पालक प्राणरूपी पर्जन्य देवता उत्पन्न भए । उनै विश्वसृजेताले सबै जललाई गर्भका रूपमा विभिन्न किसिमले धारण गरेका छन् ।

**आशुः शिशानो वृषभो न भीमो घनाघनः क्षोभणश्चर्षणीनाम् । सङ्क्रन्दनोऽनिमिष एकवीरः शतꣳ सेनाऽ अजयत्साकमिन्द्र ॥३३॥**

स्फुर्तिवान्, विकराल, साँढेभैँ शत्रु तर्साउने, दुष्टनाशक, शत्रु रुवाउने, द्वेष गर्नेलाई दिक्क पार्ने अल्छ्याइँ नभएका वीर इन्द्रदेव सयौँ शत्रु जितेर विजयी हुन्छन् ।

**संक्रनदनेनानिमिषेण जिष्णुना युत्कारेण दुश्च्यवनेन धृष्णुना । तदिन्द्रेण जयत तत्सहध्वं युधो नरऽ इषुहस्तेन वृष्णा ॥३४॥**

हे योद्धा पुरुषहरू हो ! तिमीहरू सबै धैर्यपूर्वक गर्जना गर्दै शत्रुलाई तर्साउने गर्दछौ, विभिन्न खालका आक्रामक मुद्रामा रहेर युद्धमा तयार हुने, बाण लिएका, विजेता, अजेय, इच्छित बाणको वर्षा गराउने इन्द्रदेवताका सामर्थ्यसँग आबद्ध भएर शत्रुसेनालाई पराजित गर्दै विजयी होओ र सुखी जीवन बिताओ ।

**सऽ इषुहस्तैः स निषङ्गिभिर्वशी सꣳस्रष्ट्या स युधऽ इन्द्रो गणेन । सꣳसृष्टजितसोमपा बाहुशर्ध्युग्रधन्वा प्रतिहिताभिरस्ता ॥३५॥**

शुत्रलाई वशमा राख्ने इन्द्रदेवता बाणधारी, खड्गधारी वीरको सैन्यदललाई उचित किसिमले व्यवस्थित गराउँदै सङ्ग्राममा शत्रुसित लडाइँ गर्दछन् । एकत्रित भएका शत्रुलाई जित्ने, उत्तम धनुषले शत्रुमाथि बाणको वर्षा गराउने र यज्ञमा सोमपान गर्ने उनै इन्द्रदेवताले हामीलाई रक्षा गरुन् । !

**बृहस्पते परि दीया रथेन रक्षोहामित्राँ२ऽ अपबाधमानः । प्रभञ्जन्त्सेनाः प्रमृणो युधा जयन्नस्माकमेध्यविता रथानाम् ॥३६॥**

हे सर्वपालक इन्द्रदेवता ! राक्षस मार्दै, शत्रु तर्साएर उसको सेना ध्वंस गराउँदै तिमीहरू रथमा यहाँ आओ । युद्धमा विजयी भएर हाम्रा रथको रक्षा गर्दै अघि बढ ।

**बलविज्ञाय स्थविरः प्रवीरः सहस्वान्वाजी सहमानऽ उग्रः । अभिवीरो अभिसत्वा सहोजा जैत्रमिन्द्र रथमा तिष्ठ गोवित् ॥३७॥**

हे इन्द्रदेवता ! सबैका बलको ज्ञान भएका, उत्तम वीर, शत्रुको आक्रमण खप्ने, बलवान्, शत्रुमाथि विजय गर्ने, उग्र, महावीर, शक्तिशाली भएर जन्मेका, गाईको रक्षा गर्ने तिमी विजयी रथमा प्रतिष्ठित छौ ।

**गोत्रभिदं गोविदं वज्रबाहुं जयन्तमज्म प्रमृणन्तमोजसा । इमथं॒ सजाताऽ अनु वीरयध्वमिन्द्रथं॒ सखायो अनु सथं॒ रभध्वम् ॥३८॥**

हे योद्धा हो ! तिमीहरू सबै शत्रुका किल्लाका भेदक, गाईको रक्षा गर्ने, वज्रजस्तै बलिया भुजा भएका, शत्रु विनाश गर्ने, विजेता इन्द्रका नेतृत्वमा रहेर पराक्रम देखाओ । हे मित्र हो ! इन्द्रदेव रिसाउँदा शत्रुमाथि रिस गर ।

**अभि गोत्राणि सहसा गाहमानोदयो वीरः शतमन्युरिन्द्रः । दुश्च्यवनः पृतनाषाडयुध्योस्माकथं॒ सेना अवतु प्र युत्सु ॥३९॥**

आफ्ना बलले शत्रुका समूहलाई निर्दयतापूर्वक कुच्याउँदै, अत्यन्त क्रोधले रन्किँदै, शत्रुको सेनालाई पराजित गराउने पराक्रमी इन्द्रदेवताले युद्धमा हाम्रा सेनालाई उचित किसिमले संरक्षण प्रदान गरुन् ।

**इन्द्रऽ आसां नेता बृहस्पतिर्दक्षिणा यज्ञः पुरऽ एतु सोमः । देवसेनानामभिभञ्जतीनां जयन्तीनां मरुतो यन्त्वग्रम् ॥४०॥**

हाम्रा सेनालाई नेतृत्व प्रदान गर्ने हे इन्द्रदेवता ! बृहस्पतिदेव सबैभन्दा अघि जाऊन् । दक्षिणायज्ञका सञ्चालक सोम अघि जाऊन् । शत्रुनाशक मरुत्हरू विजयी देवताका सेनाका अघि लागून् ।

**इन्द्रस्य वृष्णो वरुणस्य राज्ञऽ आदित्यानां मरुताथं॒ शर्ध उग्रम् । महामनसां भुवनच्यवानां घोषो देवानां जयतामुदस्थात् ॥४१॥**

बलशाली इन्द्रदेव, राजा वरुण, आदित्य र मरुत्हरूको तीक्ष्ण बल सहायक होस् । शत्रुको सहर ध्वस्त पार्ने, विशाल मन भएका र विजयी देवताको जयघोष गुन्जियोस् ।

**उद्धर्षय मघवन्नायुधान्युत्सत्वनां मामकानां मनाथं॒सि । उद्वृत्रहन् वाजिनां वाजिनान्युद्रथानां जयतां यन्तु घोषाः ॥४२॥**

हे ऐश्वर्यशाली इन्द्रदेवता ! तिमी आफ्ना आयुधहरूलाई उचित किसिमले तिखारेर देवताका पक्षका वीरहरूका मनलाई उत्साहित गर । अश्वहरूलाई तीव्र गतिमा कुद्नका लागि उत्तेजित गर । हे शत्रुनाशक इन्द्रदेवता ! विजयी रथको जयघोष चारै दिशामा गुञ्जायमान होस् र चारै दिशामा देवताहरूको विजयको उत्सव मनाइयोस् ।

**अस्माकमिन्द्रः समृतेषु ध्वजेष्वस्माकं याऽ इषवस्ता जयन्तु । अस्माकं वीराऽ उत्तरे भवन्त्वस्माँ२ऽ उ देवाऽ अवता हवेषु ॥४३॥**

युद्धमा हाम्रा सेनालाई इन्द्रदेवताले सुरक्षा प्रदान गरुन् । हाम्रा बाण शत्रुमाथि विजयी होऊन् । हाम्रा वीरहरू विजयी होऊन् । हे देवता हो ! हामीलाई युद्धमा सुरक्षा गर ।

**अमीषां चित्तं प्रतिलोभयन्ती गृहाणाङ्गान्यप्वे परेहि । अभि प्रेहि निर्दह हृत्सु शौकैरन्धेनामित्रास्तमसा सचन्ताम् ॥४४॥**

हे पापवृत्ति हो ! हामीदेखि टाढै बस । शत्रुको चित्त भुल्याओ । उनका अङ्गमा ओगट । शत्रुमाथि आक्रमण गरेर उनका हृदयमा शोकका ज्वाला दन्काइदेओ । हाम्रा शत्रुलाई गहिरो अन्धकारमा पारेर अचेत गराओ ।

**अवसृष्टा परा पत शरव्ये ब्रह्मसᳪशिते । गच्छामित्रान्प्र पद्यस्व मामीषां कं चनोच्छिषः ॥४५॥**

हे बाणरूपी अस्त्र ! मन्त्रका प्रयोगले तीक्ष्ण गराएका तिमीलाई हामीले छोड्दा शत्रुका सेनामाथि एकै पटक प्रहार गर र उनलाई सन्तप्त गराऊ । उनका शरीरमा पसेर सबैको नाश गर र कुनै पनि दुष्टलाई जिउँदो नछोड ।

**प्रेता जयता नरऽ इन्द्रो वः शर्म यच्छतु । उग्रा वः सन्तु बाहवोऽ नाधृष्या यथासथ ॥४६॥**

हे वीर हो ! शत्रुमाथि आक्रमण गरेर विजयी होओ । इन्द्रदेवताले तिमीहरूलाई सुख र शान्ति प्रदान गर्नेछन् । तिमीहरूका भुजामा उग्र सामर्थ्य भरियोस् । त्यसो भएपछि शत्रुले तिमीलाई आफ्ना अधिकारमा लिन नसकून् ।

**असौ या सेना मरुतः परेषामभ्यैति नऽ ओजसा स्पर्धमाना । तां गूहत तमसापव्रतेन यथामी अन्यो अन्यं न जानन् ॥४७॥**

हे मरुत्हरू हो ! शत्रुको यो सेना आफ्नो बल र अहङ्कारको मात लागेर युद्ध गर्न हतारिँदै हामीतिर आइरहेको छ, त्यसलाई अन्धकारले ढाकिदेओ । त्यसो भएपछि यी शत्रुहरू आफ्नै एकापसमा अल्मलिएर लडाइँ गर्दै मर्नेछन् ।

**यत्र बाणाः सम्पतन्ति कुमारा विशिखाऽ इव । तत्रऽ इन्द्रो बृहस्पतिरदितिः शर्म यच्छतु विश्वाहा शर्म यच्छतु ॥४८॥**

जहाँ शिखारहित बालक जतातर्तै घुमेझैँ गरी बाण खस्दछन्, त्यहाँ बृहस्पति, इन्द्रदेवता र अदितिले हामीलाई सुखदायक संरक्षण प्रदान गरुन् र हाम्रो सधैँ कल्याण गरुन् ।

**मर्माणि ते वर्मणा छादयामि सोमस्त्वा राजामृतेनानु वस्ताम् । उरोर्वरीयो वरुणस्ते कृणोतु जयन्तं त्वानु देवा मदन्तु ॥४९॥**

हे रथी ! तिम्रो मर्मस्थल हामी कवचयुक्त गराउँछौं । सोमदेवताका कृपाले तिमीलाई अमृत युक्त गरोस् । वरुणदेवताले तिमीलाई सुख प्रदान गरुन् । तिम्रा विजयले देवताहरू आनन्दित होऊन् ।

**उदेनमुत्तरां नयाग्ने घृतेनाहुत । रायस्पोषेण सꣳसृज प्रजया च बहुं कृधि ॥५०॥**

हे अग्निदेवता ! याजकहरूले प्रदान गरेको घिउको आहुतिले तृप्त भएर तिमी उनीहरूलाई प्रचुर मात्रामा धनसम्पदाका रूपमा अपार वैभव प्रदान गर । पुत्रपौत्रादि दिएर सन्तानको सुखलाभ गराऊ ।

**इन्द्रेमं प्रतरां नय सजातानामसद्वशी । समेनं वर्चसा सृज देवानां भागदाऽ असत् ॥५१॥**

हे इन्द्रदेवता ! यी यजमानहरूलाई उन्नतिको दिशामा अग्रसर गराऊ । त्यसो भएपछि उनले आफ्ना दाजुभाइ नातागोतालाई आफ्ना अनुकूल भएका पाउन सकून् । यिनलाई तेजस्वी वैभव प्रदान गर । त्यस वैभवले उनीहरू यस्ता यज्ञका रूपमा देवतालाई उनीहरूको भाग प्रदान गर्न सकून् ।

**यस्य कुर्मो गृहे हविस्तमग्ने वर्धया त्वम् । तस्मै देवाऽ अधि ब्रुवन्नयं च ब्रह्मणस्पतिः ॥५२॥**

हे अग्निदेवता ! हामी जुन याजकका आवासमा यज्ञकर्म गर्दछौं, तिमी तिनीहरूको वैभव बढाइदेऊ । सबै देवताहरूले उसको श्रेष्ठता स्वीकार गरुन् । त्यस्ता यजमानहरूले यज्ञ आदि श्रेष्ठ कर्मको पालन सधैँ गर्न सकून् र सुखीसमृद्ध जीवन निर्वाह गर्न पाऊन् ।

**उदु त्वा विश्वे देवाऽ अग्ने भरन्तु चित्तिभिः । स नो भव शिवस्त्वꣳ सुप्रतीको विभावसुः ॥५३॥**

हे अग्निदेवता ! दिव्य गुणले सम्पन्न समस्त देवतागण नित्य यज्ञ आदि कर्म र श्रेष्ठ विचारले तिम्रो उन्नति गराऊन् । मन्त्रका साथसाथै यज्ञमा आहुति दिएर अग्निलाई बढाऊन् । हामी याजकहरूलाई तिमी अपार तेजस्वी वैभव प्रदान गरेर कल्याण गर्ने कृपा गर ।

**पञ्च दिशो दैवीर्यज्ञमवन्तु देवीरपामतिं दुर्मतिं बाधमानाः । रायस्पोषे यज्ञपतिमाभजन्ती रायस्पोषे अधि यज्ञो अस्थात् ॥५४॥**

हामी याजकहरूको कमसल बुद्धि र दुर्बुद्धिलाई इन्द्र, यम, वरुण, सोम र ब्रह्मासित सम्बन्धित पूर्व, पश्चिम, उत्तर, दक्षिण तथा मध्य यी पाँचै दिव्य दिशाहरूले हटाइदिऊन् । यज्ञ आदि श्रेष्ठ कर्म गर्ने यजमानलाई तिमी अपार धनवैभव उपलब्ध गराऊ र हाम्रा यज्ञलाई सुरक्षा प्रदान गर । धनको वृद्धिका साथसाथै हाम्रा दान आदि सत्कर्मरूपी यज्ञ पनि समृद्ध होऊन् ।

**समिद्धे अग्नावधि मामहानऽ उक्थपत्रऽ ईड्यो गृभीतः । तप्तं घर्मं परिगृह्यायजन्तोर्जायद्यज्ञमयजन्त देवाः ॥५५॥**

दिव्य गुणले सम्पन्न याजकहरूले तातो घिउ लिएर यजन कर्म गर्दै घिउले युक्त हविष्यान्नले अग्निलाई प्रदीप्त गराउँदै अत्यन्त पूजनीय, स्तुत्य देवताहरूको स्तुति वेदमन्त्रले गर्दछन् र यज्ञलाई उत्तम किसिले सम्पन्न गर्दछन् ।

**दैव्याय धर्त्रे जोष्ट्रे देवश्रीः श्रीमनाः शतपयाः । परिगृह्य देवा यज्ञमायन् देवा देवेभ्यो अध्वर्यन्तो अस्थुः ॥५६॥**

श्रेष्ठ पुरुषहरू देवताका निम्ति यज्ञकर्मको कामना गर्दछन् । त्यस्ता दिव्य गुणले सम्पन्न र सम्पदाका स्वामी, उत्तम मन भएका तथा सयौं किसिमका गाईको दुध आदि पदार्थले पुष्ट हुने पुरुषहरू यज्ञमा आउँछन् । उनीहरू दिव्य गुणले सम्पन्न विश्वलाई धारण गर्ने, प्रेमभावले युक्त परमात्मालाई स्तुति गरेर सधैं उनको आश्रय पनि प्राप्त गर्न सफल हुन्छन् ।

**वीतथं॑ हविः शमितथं॑ शमिता यजध्यै तुरीयो यज्ञो यत्र हव्यमेति । ततो वाकाऽ आशिषो नो जुषन्ताम् ॥५७॥**

उदार मन भएका सौम्य पुरुषहरूले संस्कारित हविले सम्पन्न यज्ञलाई देवताको सन्तुष्टिका लागि सम्पन्न गराउँछन् । त्यस्ता बेलाको यज्ञलाई चौथो वा अन्तिम अंर्थ लाग्ने तुरीय यज्ञ सम्पन्न हुन्छ । त्यस बेला यज्ञमा उच्चारण गरिएका वेदका मन्त्रका आशीर्वचनहरू हाम्रो मनको इच्छाअनुसार सफल हुन्छन् ।

**सूर्यरश्मिर्हरिकेशः पुरस्तात्सविता ज्योतिरुदयाँ२ऽ अजस्रम् । तस्य पूषा प्रसवे याति विद्वान्त्सम्पश्यन्विश्वा भुवनानि गोपाः ॥५८॥**

हरियो रङ्गका वनस्पति र यसमा आश्रित सबै जीवलाई पोषण गर्ने परम ज्योतिर्वान् सूर्यदेव आफ्नो रश्मि पूर्व दिशामा प्रकट गर्दछन् । जितेन्द्रिय विद्वान् र पोषणकर्ता सूर्यदेव उत्पन्न भएर सम्पूर्ण लोकलाई प्रकाशित गर्दछन् र निरन्तर गतिशील हुन्छन् ।

**विमानऽ एष दिवो मध्यऽ आस्तऽ आपप्रिवान् रोदसी अन्तरिक्षम् । स विश्वाचीरभिचष्टे घृताचीरन्तरा पूर्वमपरं च केतुम् ॥५९॥**

संसारको रचना गर्नमा सक्षम सूर्यदेवता द्युलोकका मध्य भागमा अवस्थित छन् । उनले द्युलोक, पृथ्वीलोक र अन्तरिक्षलोक यी तीनैलाई आफ्ना तेजले दीप्तिमान् गराउँछन् । सूर्यदेवता सम्पूर्ण विश्वलाई आफ्ना आश्रयमा लिने, जल धारण गर्ने र सबै कुरो देख्ने गर्दछन् । यो लोक, परलोक र मध्यलोकमा स्थित प्राणीहरूको सूक्ष्म भाव पनि उनले राम्ररी जान्दछन् ।

**उक्षा समुद्रो अरुणः सुपर्णः पूर्वस्य योनिं पितुराविवेश । मध्ये दिवो निहितः पृश्निरश्मा विचक्रमे रजसस्पात्यन्तौ ॥६०॥**

सूर्यदेवता वर्षाले संसारको सेचन गर्ने, समुद्रबाट जल धारण गर्ने, रातो वर्णका भएर आकाशमा निरन्तर गतिशील रहने गर्दछन् । अनेकौं रश्मिले युक्त भई पूर्व दिशाबाट उदाएर द्युलोकका गर्भमा समाविष्ट हुन्छन् । उनी आकाशमा गमन गर्दै सबै लोकलाई सबै तिरबाट संरक्षासुरक्षा प्रदान गर्दछन् ।

**इन्द्रं विश्वाऽ अवीवृधन्त्समुद्रव्यचसं गिरः । रथीतमथं॑ रथीनां वाजानाथं॑ सत्पतिं पतिम् ॥६१॥**

समुद्रजस्तै व्यापक, सबै रथिहरूमा महानतम, अन्नका स्वामी र सत्प्रवृत्तिहरूका पालक इन्द्रदेवतालाई सबै खालका स्तुतिले अभिवृद्धि गराउँछन् ।

**देवहूर्यज्ञऽ आ च वक्षतसुम्नहूर्यज्ञऽ आ च वक्षत् । यक्षदग्निर्देवो देवाँ२ऽ आ च वक्षत् ॥६२॥**

देवताहरूलाई आह्वान गर्दै यज्ञदेवताले देवताहरूलाई हविष्यान्न वहन गरुन् र उनैको यजन गरुन् । सम्पूर्ण सुखसुविधालाई आह्वान गर्ने यज्ञदेवतालाई हवि प्रदान गर्ने काम सम्पन्न गरौं । अग्निदेवताले समस्त देवताहरूका यज्ञशालामा अधिष्ठित गरेर उनीहरूको यजन कार्य सम्पन्न गरौं ।

**वाजस्य मा प्रसवऽ उद्ग्राभेणोदग्रभीत् । अधा सपत्नानिन्द्रो मे निग्राभेणाधराँ२ऽ अकः ॥६३॥**

हे इन्द्रदेवता ! सत्कर्म गर्ने हाम्रा याजकहरूका लागि अन्न उत्पादन गर्दै प्रगतिको मार्ग प्रशस्त पारेर उच्चतम स्थिति प्रदान गर र शत्रुलाई निम्न स्थितिमा पुऱ्याएर अधोगति प्रदान गर ।

**उद्ग्राभं च निग्राभं च ब्रह्म देवाऽ अवीवृधन् । अधा सपत्नानिन्द्राग्नी मे विषूचीनान्व्यस्यताम् ॥६४॥**

हे देवताहरू हो ! सत्कर्म गर्नमा लागेका हामीहरूलाई उत्तम सामर्थ्य धारण गर्ने स्थितिमा र शत्रुलाई पतनका खाडलमा पुऱ्याऊ । इन्द्रदेवता र अग्निदेवताले हाम्रा शत्रुलाई विभिन्न किसिमले पूरै विनाश गरुन् ।

**क्रमध्वमग्निना नाकमुख्यथं्ं हस्तेषु बिभ्रतः । दिवस्पृष्ठथं्ं स्वर्गत्वा मिश्रा देवेभिराध्वम् ॥६५॥**

हे याज्ञिकहरू हो ! अग्निदेवताबाट उत्तम सुख प्राप्त गरेर उखा पात्रलाई हातमा लिंदै शौर्य प्रदर्शन गर । तिमीहरू देवगणसित मिलेर दिव्यलोकमा जाओ र सुखपूर्वक निवास गर ।

**प्राचीमनु प्रदिशं प्रहि विद्वानग्नेरग्ने पुरो अग्निर्भवेह । विश्वाऽ आशा दीद्यानो वि भाह्यूर्जं नो धेहि द्विपदे चतुष्पदे ॥६६॥**

हे अग्निदेवता ! तिमी पूर्व दिशातिर फर्क । अग्रगामी भएर सबैलाई नेतृत्व प्रदान गर । सम्पूर्ण दिशाहरूलाई दीप्तिमान् ज्वालाले संव्याप्त गर र हाम्रा पुत्रपौत्र, गाई आदि पशुहरूलाई बलसम्पन्न बनाऊ ।

**पृथिव्याऽ अहमुदन्तरिक्षमारुहमन्तरिक्षाद्दिवमारुहम् । दिवो नाकस्य पृष्ठात् स्वर्ज्योतिरगामहम् ॥६७॥**

हामी पृथ्वीभन्दा माथि रहेको अन्तरिक्षमा आरूढ हुन्छौं र अन्तरिक्षभन्दा उच्च स्थानमा रहेका द्युलोकमा आरूढ हुन्छौं । त्यसपछि द्युलोकको सुखस्वरूप वलयचक्रभन्दा माथि रहेको परम ज्योतिष्मान् सूर्यलोकमा पुग्दछौं ।

**स्वर्यन्तो नापेक्षन्तऽ आ द्याथं्ं रोहन्ति रोदसी । यज्ञं ये विश्वतोधारथं्ं सुविद्वाथं्ंसो वितेनिरे ॥६८॥**

विश्वको चक्रीय व्यवस्थालाई जुन उत्तम विद्वान्ले धारण गर्दछन्, जसले यज्ञीय अनुष्ठान् सम्पन्न गरेर आफ्नो यश फिँजाउँछन्, उनै अत्यन्त सुखकारी स्वर्गलाई भोग्दै लौकिक भोगहरूलाई अपेक्षा नगरेर द्यावापृथ्वीभन्दा माथि उठ्दछन् र स्वर्गका आरोहण गर्दछन् ।

**ऋतश्च सत्यश्च ध्रुवश्च धरुणश्च । धर्त्ता च विधर्त्ता च विधारयः ॥८२॥**

शुद्ध र सत्यस्वरूप, स्थिर, धारणशील, धर्त्ता, विधर्त्ता र विभिन्न किसिमले धारण गर्ने उनन्चास मरुद्गण हाम्रा यज्ञमा आऊन् । यो आहुति उनीहरूका लागि समर्पित गरिएको छ ।

**ऋतजिच्च सत्यजिच्च सेनजिच्च सुषेणश्च । अन्तिमित्रश्च दूरे अमित्रश्च गणः ॥८३॥**

शुद्ध स्वरूपका विजेता, सत्यस्वरूपका विजेता, शत्रुको सेनाविजेता, श्रेष्ठ सेनाले सम्पन्न भएका, मित्रका समीप रहने गरेका, शत्रुलाई पर भगाउने र सङ्घमा एकत्र भएर रहने यी मरुत्गण हाम्रा यस यज्ञमा आऊन् । उनीहरूका लागि यो आहुति समर्पित गरिएको छ ।

**ईदृक्षासऽ एतादृक्षासऽ ऊ षु णः सदृक्षासः प्रतिसदृक्षासऽ एतन । मितासश्च सम्मितासो नोऽ अद्य सभरसो मरुतो यज्ञे अस्मिन् ॥८४॥**

हे मरुत्गण ! तिमीहरू विभिन्न कोणबाट देख्ने, समान कोणबाट देख्ने, प्रत्येक समान कोणबाट देख्ने, मिश्रित कोणबाट देख्ने, समान किसिमका मिश्रित कोणबाट देख्ने र समान अलङ्कारले सजिएका छौ । तिमीहरू आज हाम्रा यस यज्ञमा आओ । यो आहुति तिमीहरूका लागि समर्पित गरिएको छ ।

**स्वतवाँश्च प्रघासी च सान्तपनश्च गृहमेधी च । क्रीडी च शाकी चोज्जेषी ॥८५॥**

स्वयं आर्जन गरेका तपोबलले सम्पन्न र पुरोडाश आदि भक्षण गर्ने, शत्रुलाई सन्तप्त गराउने, गृहस्थधर्मका पालक, क्रीडाशील, बलशाली, यशस्वी, विजयशील मरुद्गण हाम्रा यस यज्ञमा आऊन् । उनीहरूका निम्ति यो आहुति समर्पित गरिएको छ ।

**इन्द्रं दैवीर्विशो मरुतोनुवर्त्मानोऽ भवन्यथेन्द्रं दैवीर्विशो मरुतोनु वर्त्मानोभवन् । एवमिमं यजमानं दैवीश्च विशो मानुषीश्चानुवर्त्मानो भवन्तु ॥८६॥**

देवताको सेना शक्तिशाली मरुत्गणका रूपमा जसरी इन्द्रदेवताको प्रजाझैं उनको अनुगामी भएको छ, उसै गरी समस्त दैवी गुण र मनुष्यरूपमा रहेका प्रजाहरूले यी यजमानलाई अनुसरण गरुन् ।

**इमथं स्तनमूर्जस्वन्तं धयापां प्रपीनमग्ने सरिरस्य मध्ये । उत्सं जुषस्व मधुमन्तमर्वन्त्समुद्रियथं सदनमा विशस्व ॥८७॥**

हे अग्निदेवता ! जलका मध्य भागमा रहेका विशिष्ट रसले परिपूर्ण, घिउका धाराले युक्त स्रुक नामको पात्ररूपी स्तनलाई तिमी पान गर । हे अर्वन् घोडारूपी अग्निदेवता ! मधुर स्वादयुक्त घिउले भरिएका स्रुकलाई स्नेहपूर्वक पान गर र सन्तुष्ट भएर समुद्रको चयन यागसम्बन्धी यस यज्ञस्थलमा शीघ्र प्रवेश गर ।

**घृतं मिमिक्षे घृतमस्य योनिर्घृते श्रितो घृतम्वस्य धाम । अनुष्वधमा वह मादयस्व स्वाहाकृतं वृषभ वक्षि हव्यम् ॥८८॥**

अग्निदेवताको मुख्य आश्रयस्थल घिउ हो । त्यसैले यिनलाई घिउले सिञ्चित गरिन्छ । हे बलशाली अग्निदेवता ! स्नेहपूर्वक समर्पित गरिएको आहुति सबै देवतालाई पुऱ्याइएर प्रसन्न गराऊ ।

**समुद्रादूर्मिर्मधुमाँ२ऽ उदारदुपांशुना सममृतत्वामानट् । घृतस्य नाम गुह्यं यदस्ति जिह्वा देवानाममृतस्य नाभिः ॥८९॥**

मधुर रसले युक्त भएका तरङ्गहरू, घिउरूपी समुद्रबाट माथि उलँदै प्राणरूप अग्निदेवतामा एकीकृत भएर अमरता प्राप्त गर्दछन् । त्यस घिउको गुप्त नाम देवताको जिब्रो र अमृतको नाभीका रूपमा रहेको छ भन्ने गरिन्छ ।

**वयं नाम प्र ब्रवामा घृतस्यास्मिन्यज्ञे धारयामा नमोभिः । उप ब्रह्मा शृणवच्छस्यमानं चतुः शृङ्गोऽ वमीद्गौरऽ एतत् ॥९०॥**

हामी याजकहरू त्यस घिउको स्तुति गर्दछौं । यस यज्ञमण्डपमा नमस्कार गर्दै हामी त्यसलाई धारण गर्दछौं । हामीबाट गाइने स्तुति ब्रह्माजीले सुनून् । चार वेदरूपी सिङ भएका, गोरो वर्णका देवताले यस संसारको सृष्टि गरे ।

**चत्वारि शृङ्गा त्रयो अस्य पादा द्वे शीर्षे सप्त हस्तासो अस्य । त्रिधा बद्धो वृषभो रोरवीति महो देवो मर्त्याँ२ऽ आ विवेश ॥९१॥**

यज्ञका अग्निदेवताका चार वटा सिङ, तीन वटा खुट्टा, दुई टाउका र सात वटा हात छन् । ती बलशाली वृषभ देवता तीन किसिमले बद्ध भएर ध्वनि गर्दछन् र मानिसका बीचमा प्रवेश गर्दछन् ।

**त्रिधा हितं पणिभिर्गुह्यमानं गवि देवासो घृतमन्वविन्दन् । इन्द्रऽ एकंꣳ सूर्यऽ एकं जजान वेनादेकंꣳ स्वधया निष्टतक्षुः ॥९२॥**

देवताले व्यापारीबाट गाईका बीचमा तीन किसिमले लुकाएर राखेको घिउ थाहा पाए । तिनमध्ये सबैभन्दा पहिलो इन्द्रदेवताले निकाले, दोस्रो आदित्यदेवताले निकाले र तेस्रो देवताहरूले आफ्ना बलले अग्निबाट निकाले ।

**एताऽ अर्षन्ति हृद्यात्समुद्राच्छतव्रजा रिपुणा नावचक्षे । घृतस्य धाराऽ अभि चाकशीमि हिरण्ययो वेतसो मध्यऽ आसाम् ॥९३॥**

धाराहरू मनोहर समुद्रभन्दा सयौं गतिले प्रवाहित भइरहेका छन् । शत्रुले त्यसलाई देख्न सक्दैनन् । घिउका ती धारा हामी देख्छौं । ती धाराका बीचमा विद्यमान अग्नि पनि हामी देख्न सक्छौं ।

**सम्यक्स्रवन्ति सरितो न धेनाऽ अन्तर्हृदा मनसा पूयमानाः । एते अर्षन्त्यूर्मयो घृतस्य मृगाऽ इव क्षिपणोरीषमाणाः ॥९४॥**

आँतबाट निस्केको र चित्तले शुद्ध गरेको तेज धारा खुसीको नदीझैँ आनन्दले बग्दछ । सिकारीदेखि तर्सिएर हरिण भागेझैँ गरी घिउको धारा तीव्र गतिले प्रवाहित हुन्छ ।

**सिन्धोरिव प्राध्वने शूघनासो वातप्रमियः पतयन्ति यह्वाः । घृतस्य धाराऽ अरुषो न वाजी काष्ठा भिन्दन्नूर्मिभिः पिन्वमानः ॥९५॥**

नदीको पानी तेज गतिमा ओरालोतिर बगेझैँ वायुसमानको वेगले घिउको धारा अग्नितिर जाँदै छ । घिउको धारा तेजस्वी घोडाझैँ आफ्नो परिधिलाई नाघेर लहरले अझ माथि उठ्दछन् ।

**अभि प्रवन्त समनेव योषाः कल्याण्यः स्मयमानासो अग्निम् । घृतस्य धाराः समिधो नसन्त ता जुषाणो हर्यति जातवेदाः ॥९६॥**

विचार मिलेका कारण हाँसिरहने स्त्री आफ्ना पतितिर गएझैँ गरी घिउको धारा अग्नितिर जाँदै हुन्छ । घिउको धारा प्रज्वलित हुँदै सबै ठाउँमा व्याप्त हुन्छ । सबै कुराको ज्ञान भएका अग्निदेव हर्षित भएर त्यस धाराकै इच्छा गर्दछन् ।

**कन्याऽ इव वहतुमेतवाऽ उ अञ्ज्यञ्जानाऽ अभि चाकशीमि । यत्र सोमः सूयते यत्र यज्ञो घृतस्य धाराऽ अभि तत्पवन्ते ॥९७॥**

सोमरस पेलेर तयार गरिने र यज्ञ सम्पन्न गरिने ठाउँमा घिउको धारा प्रवाहित हुन्छ । यो धारा वरको पछि लाग्न सिँगारिएकी कन्याझैँ प्रवाहित भएको हामी देख्दछौँ ।

**अभ्यर्षत सुष्टुतिं गव्यमाजिमस्मासु भद्रा द्रविणानि धत्त । इमं यज्ञं नयत देवता नो घृतस्य धारा मधुमत्पवन्ते ॥९८॥**

हे याजक हो ! देवताका लागि स्तुति गर । हे देवता हो ! हामी याजकका लागि प्रशंसनीय ऐश्वर्य, गाई र विजय धारण गर । हाम्रो यो यज्ञ तिमी देवतासमक्ष पुऱ्याऊ । घिउका मधुर धारा प्रवाहित भएको छ ।

**धामं ते विश्वं भुवनमधि श्रितमन्तः समुद्रे हृद्यन्तरायुषि । अपामनीके समिथे यऽ आभृतस्तमश्याम मधुमन्तं तऽ ऊर्मिम् ॥९९॥**

हे अग्निदेवता ! तिम्रो तेज समुद्रका बीचमा बडवाग्निका रूपमा, आकाशमा सूर्यदेवताका रूपमा, हृदयका बीचमा वैश्वानरका रूपमा, अन्नमा प्राणका रूपमा, जलमा विद्युत्का रूपमा र युद्धमा शौर्याग्निका रूपमा विद्यमान छ । सारा संसार नै तिमीमा आश्रित छ । तिम्रो त्यो मिठासले पूर्ण रसको उपयोग गर्नमा हामी समर्थ होऔँ ।

## इति सप्तदशोऽध्यायः

सत्रौँ अध्याय सकियो ।

ॐ

भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।

# वाजसनेयि माध्यन्दिन शुक्ल

# यजुर्वेद – संहिता

## ॥अथ अष्यदशोऽध्यायः॥

॥अठारौं अध्याय॥

**ऋषि–** देवगण, लुशोधानाक, इन्द्राग्नी, शुनःशेप, गालव, विश्वकर्मा, बन्धु, देवश्रवा, देववात भारत, इन्द्र, विश्वामित्र, शास भारद्वाज, जय ऐन्द्र, कुत्स, भरद्वाज, उत्कील कात्य, उशना काव्य ।

**देवता–** अग्नि, पृथिवी, विश्वेदेवा, अन्न, सविता, लिङ्गोक्त, गन्धर्व, अप्सरा, प्रजापति, वायु, वरुण, यजमान, देवगण, आत्मा, वृत्रहा, वैश्वानर ।

**छन्द–** शक्वरी, भुरिक् अतिजगती, भुरिक् शक्वरी, निचृत् अत्यष्टि, स्वराट् शक्वरी, भुरिक् अतिशक्वरी, भुरिक् अतिजगती, निचृत् शक्वरी, भुरिक् अष्टि, विराट् आर्षी पङ्क्ति, निचृत् अतिशक्वरी, स्वराट् अतिधृति, विराट् धृति, पङ्क्ति, संकृति, विराट् संकृति, भुरिक् पङ्क्ति, निचृत् आकृति, ब्राह्मी बृहती, भुरिक् आर्षी पङ्क्ति, भुरिक् आकृति, आर्ची बृहती, स्वराट् विकृति, ब्राह्मी उष्णिक्, स्वराट् जगती, निचृत् आर्षी त्रिष्टुप्, निचृत् आर्षी अनुष्टुप्, त्रिष्टुप्, विराट् आर्षी अनुष्टुप्, आर्षी अनुष्टुप्, आर्षी पङ्क्ति, विराट् आर्षी त्रिष्टुप्, भुरिक् आर्षी त्रिष्टुप्, निचृत् आर्षी जगती, ब्राह्मी उष्णिक्, आर्षी त्रिष्टुप्, विराट् आर्षी जगती, निचृत अष्टि, भुरिक् आर्षी अनुष्टुप्, भुरिक् आर्षी उष्णिक्, स्वराट् आर्षी त्रिष्टुप्, आर्षी जगती, आर्षी जगती, आर्षी उष्णिक्, निचृत् आर्षी गायत्री, निचृत् अनुष्टुप्, विराट् अनुष्टुप्, निचृत् त्रिष्टुप्, निचृत् गायत्री, आर्षी गायत्री ।

**वाजश्च मे प्रसवश्च मे प्रयतिश्च मे प्रसितिश्च मे धीतिश्च मे क्रतुश्च मे स्वरश्च मे श्लोकश्च मे श्रवश्च मे श्रुतिश्च मे ज्योतिश्च मे स्वश्च मे यज्ञेन कल्पन्ताम् ॥१॥**

यस यज्ञबाट हामीलाई अन्न, सम्पदा, ऐश्वर्य, पुरुषार्थपरायणता, प्रबन्धक्षमता, निर्णायक बुद्धिको क्षमता, काम गर्ने शक्ति, स्वर, श्लोक, यशसम्पदा, श्रवणक्षमता, ज्ञानसम्पदा, तेजस्विता र आत्मशक्ति आदि प्राप्त होऊन् ।

**प्राणश्च मे पानश्च मे व्यानश्च मेसुश्च मे चित्तं च मऽ आधितं च मे वाक् च मे मनश्च मे चक्षुश्च मे श्रोत्रं च मे दक्षश्च मे बलं च मे यज्ञेन कल्पन्ताम् ॥२॥**

हामीलाई प्राणवायु, अपानवायु, व्यानवायु, मुख्य प्राण, चिन्तन, परिश्रम गर्ने क्षमता, वाणी, मन, दृष्टिक्षमता, श्रवणक्षमता र बल आदि सबै कुराहरू यज्ञका फलको रूपमा प्राप्त होऊन् ।

**ओजश्च मे सहश्च मऽ आत्मा च मे तनूश्च मे शर्म च मे वर्म च मेङ्गानि च मेस्थीनि च मे परूꣳषि च मे शरीराणि च मऽ आयुश्च मे जरा च मे यज्ञेन कल्पन्ताम् ॥३॥**

यसै यज्ञबाट हामीलाई ओज, सहिष्णुता, आत्मबल र शारीरिक बल वृद्धि होस् । सुखसम्पदा, शारीरिक सुरक्षा, परिपुष्टता, हड्डीमा बल, आँला–जोर्नीहरू बलिया होऊन् । हामीलाई शारीरिक आरोग्यता प्राप्त होस् र आयु तथा परिपक्वतामा अभिवृद्धि होस् ।

**ज्यैष्ठ्यं च मऽ आधिपत्यं च मे मन्युश्च मे भामश्च मेमश्च मेम्भश्च मे जेमा च मे महिमा च मे वरिमा च मे प्रथिमा च मे वर्षिमा च मे द्राघिमा च मे वृद्धं च मे वृद्धिश्च मे यज्ञेन कल्पन्ताम् ॥४॥**

यज्ञको फलस्वरूप हामीमा पाकोपना, अधिकार, अनीतिमाथि नियन्त्रणक्षमता, दुष्टताको प्रतिकार गर्ने सामर्थ्य बढोस् । हाम्रो परिपक्वता, जीवनशक्ति, विजयशीलता, महत्ता, उत्कृष्टता, व्यापकता, दीर्घायुष्य, सुझबुझ, वंशपरम्परा र उत्कृष्टता आदिमा वृद्धि होस् ।

**सत्यं च मे श्रद्धा च मे जगच्च मे धनञ्च मे विश्वं च मे महश्च मे क्रीडा च मे मोदश्च मे जातं च मे जनिष्यमाणं च मे सूक्तं च मे सुकृतं च मे यज्ञेन कल्पन्ताम् ॥५॥**

यज्ञको फलस्वरूपम हामीमा सत्य र श्रद्धाको भावना वृद्धि होस् । हाम्रा लौकिक पदार्थ, धनसम्पदा, विश्वस्तरीय महत्ता, खेलकुद, आमोदप्रमोद, सन्तान, धार्मिक ज्ञान र त्यसमा आधारित कर्ममा सबै किसिमले वृद्धि होस् ।

**ऋतं च मेमृतं च मेयक्ष्मं च मेनामयच्च मे जीवातुश्च मे दीर्घायुत्वं च मेनमित्रं च मे भयं च मे सुखं च मे शयनं च मे सूषाश्च मे सुदिनं च मे यज्ञेन कल्पन्ताम् ॥६॥**

यस यज्ञका कर्मफलले उत्तम कर्म, अमृततत्त्व आदि प्राप्त होऊन् । क्षय आदि विभिन्न किसिमका रोगका साथै अभाव, अनिकाल हटून् । रोगप्रतिरोधक क्षमता बढोस् र हामीमा आरोग्यता, क्षमता, आयु बढोस् । हाम्रा शत्रु मासिऊन, हामीभित्र निर्भयता, आनन्द, सुख प्राप्त होस् । हामीलाई शयन, सन्ध्योपासनका लागि उचित प्रभात र उत्तम दिन धेरै उपलब्ध होऊन् ।

**यन्ता च मे धर्ता च मे क्षेमश्च मे धृतिश्च मे विश्वं च मे महश्च मे संविच्च मे ज्ञात्रं च मे सूश्च मे प्रसूश्च मे सीरं च मे लयश्च मे यज्ञेन कल्पन्ताम् ॥७॥**

यज्ञको फलस्वरूप हामीलाई नेतृत्वक्षमता, सम्पत्तिरक्षणको क्षमता प्राप्त होस् । हामीलाई धैर्य, सबै किसिमका लौकिक ऐश्वर्य, महान् सामर्थ्य प्राप्त होस् । हाम्रो ज्ञान र विज्ञानको क्षमता, कृषिका साधनहरू र सांसारिक बाधाबाट मुक्त हुने क्षमता प्राप्त होस् ।

**शं च मे मयश्च मे प्रियं च मेनुकामश्च मे कामश्च मे सौमनसश्च मे भगश्च मे द्रविणं च मे भद्रं च मे श्रेयश्च मे वसीयश्च मे यशश्च मे यज्ञेन कल्पन्ताम् ॥८॥**

यज्ञ आदि श्रेष्ठ कर्मका प्रभावले हाम्रा सुख, सबै खालका आनन्द, प्रिय पदार्थको प्राप्ति, भोग्य पदार्थको प्राप्ति, उत्तम मन, ऐश्वर्य, धनसम्पदा, श्रेयकल्याण, गृहसुख, यश आदि सबै कुरा प्रचुर मात्रामा वृद्धि होऊन् ।

**ऊर्क् च मे सूनृता च मे पयश्च मे रसश्च मे घृतं च मे मधु च मे सग्धिश्च मे सपीतिश्च मे कृषिश्च मे वृष्टिश्च मे जैत्रं च मऽ औद्भिद्यं च मे यज्ञेन कल्पन्ताम् ॥९॥**

यज्ञ आदिको फलस्वरूप हामीलाई अन्न, ज्ञानयुक्त वाणी, दुध आदि रसयुक्त पेय पदार्थ, घिउ, मह आदि प्राप्त होस् । हामी आफ्ना आफन्तहरूसँगै मिलेर भोजन र दुग्धपान आदि गर्न पाऔँ । वर्षाले हाम्रो धान आदि बाली उब्जाउन र खेतीका अन्य काम गर्न सजिलो र अनुकूलता प्रदान गरोस् । हाम्रा बोटबिरुवाहरू राम्ररी बढिरहून् र हामीलाई विजयका लागि उपयुक्त शक्तिसम्पन्नता प्राप्त होस्, हामी शत्रुजयी बनौँ ।

**रयिश्च मे रायश्च मे पुष्टं च मे पुष्टिश्च मे विभु च मे प्रभु च मे पूर्णं च मे पूर्णतरं च मे कुयवं च मेक्षितं च मेन्नं च मे क्षुच्च मे यज्ञेन कल्पन्ताम् ॥१०॥**

यज्ञ आदि श्रेष्ठ कर्मको फलले हाम्रो सम्पदा, हाम्रो ऐश्वर्य जतासुकैबाट समृद्ध रहोस् । शरीर आदिका सबै भाग राम्ररी फस्टाउन् । हाम्रो व्यापकता, प्रभुता, पूर्णता र धनधान्यको प्रचुरतामा पर्याप्त वृद्धि होस् । हाम्रो कुअन्न पशुलाई पुग्ने गरी होस् । असल अन्नहरू सबै पुष्टिकारक र हाम्रो भोकतिर्खा मेटाउनका लागि समर्थ होऊन् ।

**वित्तं च मे वेद्यं च मे भूतं च मे भविष्यच्च मे सुगं च मे सुपथ्यं च मऽ ऋद्धं च मऽ ऋद्धिश्च मे क्लृप्तं च मे क्लृप्तिश्च मे मतिश्च मे सुमतिश्च मे यज्ञेन कल्पन्ताम् ॥११॥**

यज्ञ आदि उत्तम कर्मका प्रभावले हाम्रो धनद्रव्य आदिमा निरन्तर वृद्धि भइरहोस् । पूर्वसञ्चित धन र आउँदा दिनहरूमा प्राप्त हुने धनमा वृद्धि होस् । धन प्राप्त गर्ने कर्महरू सजिला र मार्गहरू सुगम होऊन् । यज्ञीय सत्कर्महरू समृद्ध होऊन् । हाम्रा यी कर्महरू श्रेष्ठ द्रव्य र सत् सामर्थ्य बढाउने किसिमका होऊन् । यज्ञको सत्परिणाम हाम्रो बुद्धि उच्च गराउने सबैका लागि हितकारी होस् ।

**व्रीहयश्च मे यवाश्च मे माषाश्च मे तिलाश्च मे मुद्गाश्च मे खल्वाश्च मे प्रियङ्गवश्च मेणवश्च मे श्यामाकाश्च मे नीवाराश्च मे गोधूमाश्च मे मसूराश्च मे यज्ञेन कल्पन्ताम् ॥१२॥**

यज्ञ आदि सत्कर्मको फलस्वरूप हाम्रा लागि धान, जौ, मास, तिल, मुगी, चना, कागुनु, रायो, साँवा, नीवार, गहुँ, मुसुरो आदि सबै बालीहरूको वृद्धि होस् ।

**अश्मा च मे मृत्तिका च मे गिरयश्च मे पर्वताश्च मे सिकताश्च मे वनस्पतयश्च मे हिरण्यं च मेयश्च मे श्यामं च मे लोहं च मे सीसं च मे त्रपु च मे यज्ञेन कल्पन्ताम् ॥१३॥**

हामीकहाँ भएका खनिज पदार्थ, ढुङ्गा, माटो, सानाठूला पर्वत, बालुवा, वनस्पति, सुनचाँदी, फलाम, ताँबा, सिसा र टिन आदि सबै वस्तुहरू यज्ञीय कर्मका प्रभावले सधैँ धेरै भइरहून् ।

**अग्निश्च मऽ आपश्च मे वीरुधश्च मऽ ओषधयश्च मे कृष्टपच्याश्च मेकृष्टपच्याश्च मे ग्राम्याश्च मे पशवऽ आरण्याश्च मे वित्तं च मे वित्तिश्च मे भूतं च मे भूतिश्च मे यज्ञेन कल्पन्ताम् ॥१४॥**

यज्ञीय कर्मका प्रभावले हाम्रा लागि देवगणले अग्नि र आकाशीय जललाई अनुकूल बनाऊन् । बुट्यान, घाँस, बोटबिरुवा, औषधिहरू, मिहिनेत गरेर बनाइएका औषधिहरू र आफैँ उब्जिएका औषधिहरू पूर्ण रूपले मौलाऊन् । यस यज्ञले घरपालुवा र जङ्गली पशुहरूलाई परिपुष्ट गरोस् । पहिले कमाइएको र कमाउनुपर्ने धन, पुत्र आदिको सुखका साथै ऐश्वर्य आदिमा पनि वृद्धि होस् ।

**वसु च मे वसतिश्च मे कर्म च मे शक्तिश्च मेर्थश्च मऽ एमश्च मऽ इत्या च मे गतिश्च मे यज्ञेन कल्पन्ताम् ॥१५॥**

यज्ञ आदि कर्मका फलले हामीलाई देवगणले उपयोगी धनसम्पदा तथा गृहसम्पदाले समृद्ध गराऊन् । मन परेका कर्म गर्नका लागि र तिनलाई पूरा गर्नका लागि उनीहरूले मनचिन्ते सामर्थ्य पनि उपलब्ध गराऊन् । आवश्यक धन, इष्ट साधन, इष्ट प्राप्तिका उपाय र गतिको सामर्थ्यले उनीहरूले हामीलाई सक्षम गराऊन् ।

**अग्निश्च मऽ इन्द्रश्च मे सोमश्च मऽ इन्द्रश्च मे सविता च मऽ इन्द्रश्च मे सरस्वती च मऽ इन्द्रश्च मे पूषा च मऽ इन्द्रश्च मे बृहस्पतिश्च मऽ इन्द्रश्च मे यज्ञेन कल्पन्ताम् ॥१६॥**

यस यज्ञका फलले हाम्रा लागि अग्निदवतासँग इन्द्रदेवताको, सोमदेवतासँग इन्द्रदेवताको, सवितादेवतासँग इन्द्रदेवताको, सरस्वतीदेवीसँग इन्द्रदेवताको पूषादेवतासँग इन्द्रदेवताको र बृहस्पतिदेवतासँग इन्द्रदेवताको कृपा प्रचुर मात्रामा वृद्धि होस् ।

**मित्रश्च मऽ इन्द्रश्च मे वरुणश्च मऽ इन्द्रश्च मे धाता च मऽ इन्द्रश्च मे त्वष्ट्या च मऽ इन्द्रश्च मे मरुतश्च मऽ इन्द्रश्च मे विश्वे च मे देवाऽ इन्द्रश्च मे यज्ञेन कल्पन्ताम् ॥१७॥**

यस यज्ञका फलले हाम्रा लागि मित्रदवतासँग इन्द्रदेवताको, वरुणदेवतासँग इन्द्रदेवताको, धातादेवतासँग इन्द्रदेवताको, त्वष्टादेवतासँग इन्द्रदेवताको, मरुत्देवतासँग इन्द्रदेवताको र विश्वेदेवतासँग इन्द्रदेवताको कृपा प्रचुर मात्रामा वृद्धि होस् ।

**पृथिवी च मऽ इन्द्रश्च मेन्तरिक्षं च मऽ इन्द्रश्च मे द्यौश्च मऽ इन्द्रश्च मे समाश्च मऽ इन्द्रश्च मे नक्षत्राणि च मऽ इन्द्रश्च मे दिशश्च मऽ इन्द्रश्च मे यज्ञेन कल्पन्ताम् ॥१८॥**

यज्ञ आदि कर्मको फलस्वरूप हाम्रा निम्ति भूमिदेवता, अन्तरिक्षदेवता, द्युलोकका देवता, वर्षाका देवता, नक्षत्रका देवता, दिशाहरूका देवता आदिको कृपा मनग्गे रूपमा प्राप्त होस् । यी देवताहरूका साथसाथै देवताहरूका राजा इन्द्रदेवताको कृपा पनि अनिवार्य रूपमा हामीलाई प्राप्त भइरहोस् ।

**अꣳशश्च मे रश्मिश्च मेऽदाभ्यश्च मेऽधिपतिश्च मऽ उपाꣳशुश्च मेऽन्तर्यामश्च मऽ ऐन्द्रवायवश्च मे मैत्रावरुणश्च मऽ आश्विनश्च मे प्रतिप्रस्थानश्च मे शुक्रश्च मे मन्थी च मे यज्ञेन कल्पन्ताम् ॥१९॥**

यज्ञ कर्मको फलस्वरूप अंशुग्रह, रश्मिग्रह, अदाभ्यग्रह, अधिपतिग्रह, उपांशुग्रह, अन्यर्यामग्रह, ऐन्द्रवाहवग्रह, मैत्रावरुणग्रह, आश्विनग्रह, प्रतिप्रस्थानग्रह, शुक्रग्रह, मन्थीग्रह आदि सबै सहायक होऊन् र हामीलाई सक्षम बनाऊन् ।

**आग्रयणश्च मे वैश्वदेवश्च मे ध्रुवश्च मे वैश्वानरश्च मऽ ऐन्द्राग्नश्च मे महावैश्वदेवश्च मे मरुत्वतीयाश्च मे निष्केवल्यश्च मे सावित्रश्च मे सारस्वतश्च मे पात्नीवतश्च मे हारियोजनश्च मे यज्ञेन कल्पन्ताम् ॥२०॥**

यज्ञ कर्मको फलस्वरूप आग्रयण, वैश्वदेव, ध्रुव, वैश्वानर, ऐन्द्राग्न, महावैश्वदेव, मरुत्वतीय, निष्केवल्य, सावित्र, सारस्वत, पात्नीवत र हारियोजन आदि सबै देवताहरू अनुकूल भएर हामीलाई सशक्त बनाऊन् ।

**स्रुचश्च मे चमसाश्च मे वायव्यानि च मे द्रोणकलशश्च मे ग्रावाणश्च मेऽधिषवणे च मे पूतभृच्च मऽ आधवनीयश्च मे वेदिश्च मे बर्हिश्च मेऽवभृथश्च मे स्वगाकारश्च मे यज्ञेन कल्पन्ताम् ॥२१॥**

यज्ञको फलस्वरूपले हाम्रा निम्ति स्रुच, चमस, वायव्य आदि यज्ञपात्र, द्रोणकलश, ग्रावा, अधिषवण फलक नामको फल्याक, पूतभृत् नामको सोमपात्र, आधवनीय नामको पात्र, वेदिका, कुश, अवभृथस्नान र शम्युवाक पात्र अनुकूल भएर अभीष्टलाई पूर्ति गराऊन् ।

**अग्निश्च मे घर्मश्च मेऽर्कश्च मे सूर्यश्च मे प्राणश्च मेऽश्वमेधश्च मे पृथिवी च मेऽदितिश्च मे दितिश्च मे द्यौश्च मेऽङ्गुलयः शक्वरयो दिशश्च मे यज्ञेन कल्पन्ताम् ॥२२॥**

यज्ञको फलस्वरूप हाम्रा लागि अग्नि, प्रवर्ग्य, पुरोडाशसित सम्बन्धित यज्ञ, सूर्य, प्राण, अश्वमेध, भूमि, दिति, अदिति, द्युलोक, विराट् पुरुषका अवयवहरू शक्तिहरू र दिशाहरू यी सबै सहायक भएर हामीलाई अभीष्ट प्राप्त गराऊन् ।

**व्रतं च मऽ ऋतवश्च मे तपश्च मे संवत्सरश्च मेऽहोरात्रे ऊर्वष्ठीवे बृहद्रथन्तरे च मे यज्ञेन कल्पन्ताम् ॥२३॥**

यज्ञको फलस्वरूप व्रत, ऋतु, तप, संवत्सर, दिनरात, ऊर्वष्ठी, बृहद्रथन्तर साम आदि सबै हाम्रा लागि अनुकूल भएर हामीलाई अभीष्ट प्राप्त गराऊन् ।

**एका च मे तिस्रश्च मे तिस्रश्च मे पञ्च मे पञ्च च मे सप्त च मे सप्त च मे नव च मे नव च मऽ एकादश च मऽ एकादश च मे त्रयोदश च मे त्रयोदश च मे पञ्चदश च मे पञ्चदश च मे सप्तदश च मे सप्तदश च मे नवदश च मे नवदश च मऽ एकविꣳशतिश्च मऽ एकविꣳशतिश्च मे त्रयोविꣳशतिश्च मे त्रयोविꣳशतिश्च मे पञ्चविꣳशतिश्च मे पञ्चविꣳशतिश्च मे**

**सप्तविंशतिश्च मे सप्तविंशतिश्च मे नवविंशतिश्च मे नवविंशतिश्च मऽ एकत्रिंशच्च मऽ एकत्रिंशच्च मे त्रयस्त्रिंशच्च मे यज्ञेन कल्पन्ताम् ॥२४॥**

यज्ञकै फलस्वरूप हामीलाई एक, तीन, पाँच, सात, नौ, एघार, तेह्र, पन्ध्र, सत्र, उन्नाईस, एक्काईस, तेईस, पच्चीस, सत्ताईस, उनन्तीस, एकतीस र तेत्तीस सङ्ख्याका स्तोमहरू सहायक भएर अभीष्ट प्राप्त गराऊन् ।

**चतस्रश्च मेष्टौ च मष्टौ च मे द्वादश च मे द्वादश च मे षोडश च मे षोडश च मे विंशतिश्च मे विंशतिश्च मे चतुर्विंशतिश्च मे चतुर्विंशतिश्च मेष्टाविंशतिश्च मेष्टाविंशतिश्च मे द्वात्रिंशच्च मे द्वात्रिंशच्च मे षट्त्रिंशच्च मे षट्त्रिंशच्च मे चत्वारिंशच्च मे चत्वारिंशच्च मे चतुश्चत्वारिंशच्च मे चतुश्चत्वारिंशच्च मेष्टाचत्वारिंशच्च मे यज्ञेन कल्पन्ताम् ॥२५॥**

चार, आठ, बाह्र, सोह्र, बीस, चौबीस, अट्ठाईस, बत्तीस, छत्तीस, चालीस, चवालीस र अठचालीस सङ्ख्यक स्तोमहरू यस यज्ञमा सहायक भएर हामीलाई अभीष्ट कुरो सबै प्राप्त गराऊन् ।

**त्र्यविश्च मे त्र्यवी च मे दित्यवाट् च मे दित्यौही च मे पञ्चाविश्च मे पञ्चावी च मे त्रिवत्सश्च मे त्रिवत्सा च मे तुर्यवाट् च मे तुर्यौही च मे यज्ञेन कल्पन्ताम् ॥२६॥**

यस यको फलस्वरूप हाम्रा निम्ति डेढ बर्से, दुई बर्से र अढाई बर्से बाछाबाछी त्यसका साथै तीन बर्से बहर र कोरली गाई तथा तीन बर्से गाई र गोरु पनि सहायक भएर अभीष्ट प्राप्त गराऊन् ।

**पष्ठवाट् च मे पष्ठौही च मऽ उक्षा च मे वशा च मऽ ऋषभश्च मे वेहच्च मेनड्वाँश्च मे धेनुश्च मे यज्ञेन कल्पन्ताम् ॥२७॥**

यज्ञको फलले हामीलाई चार वर्षका गोरुगाई, सेवा गर्न सक्षम गाईगोरु, बाँझा गाई, गर्भ तुहाउने गाई, गाडा तान्ने गोरु र भर्खर ब्याएका लैना गाई हामीलाई प्राप्त होऊन् र सबै किसिमका पशु सम्पदा प्राप्त होऊन् ।

**वाजाय स्वाहा प्रसवाय स्वाहापिजाय स्वाहा क्रतवे स्वाहा वसवे स्वाहाहर्पतये स्वाहाह्ने मुग्धाय स्वाहा मुग्धाय वैनंशिनाय स्वाहा विनंशिनऽ आन्त्यायनाय स्वाहान्त्याय भौवनाय स्वाहा भुवनस्य पतये स्वाहाधिपतये स्वाहा प्रजापतये स्वाहा । इयं ते राण्मित्राय यन्तासि यमनऽ ऊर्जे त्वा वृष्ट्यै त्वा प्रजानां त्वाधिपत्याय ॥२८॥**

प्रचुर अन्नका कारण वाजरूपी चैत्र मास, जल क्रीडा आदिका प्रमुखका रूपमा परिचित प्रसव नामको वैशाख मास, जलक्रीडा आदिमा प्रशस्त आनन्द प्रदान गर्ने हुनाले अपिज नामको ज्येष्ठ मास, चातुर्मास याग आदिको प्राचुर्यताका कारणले ऋतुरूप आषाढ मास, चातुर्मास्य यात्राका निरोधक वसुरूपी श्रावण मास, वर्षाको अन्त्यमा तातो घामका कारण अहंपतिरूप भाद्र मास, तुषारापातका कारण मुग्धरूप

आश्विन मास, दिनमान घट्ने हुनाले विनाशशील र पापनाशक हुनाले अमुग्ध एवं विनंशीरूप कार्तिक मास दक्षिणायनका अन्त्यमा रहेका हुनाले अविनाशी विष्णुरूप मार्गशीर्ष मास, जठराग्निलाई दीप्त गराउने हुनाले भौवनरूप पौष मास, सम्पूर्ण प्राणीलाई पालन गर्ने भुवनपतिरूप माघ मास, वर्षको अन्त्यमा हुने र चिसो कम हुँदै जानाले रमाइलो अथवा वसन्त ऋतुको उदय गराउने हुनाले अधिक स्वास्थ्यकर र सुन्दर हुनाले प्रजापतिरूप फाल्गुन मासका लागि यो आहुति समर्पित गरिएको छ । हे प्रजापति ! आफ्ना यस राज्यमा तिमी यस्ता यजमानहरूका लागि मित्रजस्तै छौ । तिमी यज्ञ आदिका क्रियाका नियन्ता हौ । पोषक अन्नरूप ऊर्जा वृद्धिका लागि धनधान्य प्राप्तिका लागि वृष्टिका लागि प्रजाका अधिपतिको रूपमा रहेर संरक्षणका लागि हामी तिमीलाई प्रीतिपूर्वक नमस्कार गर्दछौँ ।

**आयुर्यज्ञेन कल्पतां प्राणो यज्ञेन कल्पतां चक्षुर्यज्ञेन कल्पताᳫँ श्रोत्रं यज्ञेन कल्पतां वाग्यज्ञेन कल्पतां मनो यज्ञेन कल्पतामात्मा यज्ञेन कल्पतां ब्रह्मा यज्ञेन कल्पतां ज्योतिर्यज्ञेन कल्पताᳫँ स्वर्यज्ञेन कल्पतां पृष्ठं यज्ञेन कल्पतां यज्ञो यज्ञेन कल्पताम् । स्तोमश्च यजुश्च ऋक् च साम च बृहच्च रथन्तरं च । स्वर्देवाऽ अगन्मामृताऽ अभूम प्रजापतेः प्रजाऽ अभूम वेट् स्वाहा ॥२९॥**

यज्ञको फलस्वरूप हाम्रो आयु वृद्धि होस्, तेजयुक्त प्राण बलले सम्पन्न होस्, आँखा तथा कानमा उत्कृष्टताले परिपूर्ण होऊन्, वाणी उत्कृष्ट होस्, मन सामर्थ्यवान् होस् र हाम्रो आत्मा परम आनन्दमा रमाओस् । वेदहरूका ज्ञाता ब्रह्मा सन्तोषले परिपूर्ण होऊन्, यस यज्ञबाट ज्योर्तिमान् परमतत्त्व प्राप्त होस्, यज्ञबाट स्वर्गको प्राप्ति होस्, स्वर्गीय सुख प्राप्त होस्, यज्ञबाट यज्ञले उत्कर्षता प्राप्त गरोस् । स्तुतिका मन्त्र, यजु, ऋक्, साम, बृहत् र रथन्तर पनि हामीलाई अभीष्ट प्राप्तिका लागि सहायक होऊन् । समस्त देवगण स्वयं प्रयत्नपूर्वक रहेर हामीमाथि देवत्व स्थापित स्वर्गको अमृतमय सुख प्राप्त गराऊन् । हामी पनि प्रजापति परमात्माका प्रजाका रूपमा रहेर सुखको भोग गरौँ । यसै अभिलाषाले प्रेरित यो विशिष्ट आहुति समर्पित गरिएको छ ।

**वाजस्य नु प्रसवे मातरं महीमदितिं नाम वचसा करामहे । यस्यामिदं विश्वं भुवनमाविवेश तस्यां नो देवः सविता धर्म साविषत् ॥३०॥**

आफ्ना दिव्य रस र अन्नले समस्त प्राणीलाई पोषण प्रदान गर्ने अखण्ड पृथ्वीका साथै समस्त लोकहरूलाई समेत हामी उत्तम विधिले वन्दना गर्दछौँ । सम्पूर्ण जगत्लाई आफ्नो दिव्य किरणले प्रेरित गर्ने सवितादेवताले यस पृथ्वीमा हाम्रो स्थिति बलियो बनाउनमा सहयोग गरून् ।

**विश्वे अद्य मरुतो विश्वऽ ऊती विश्वे भवन्त्वग्नयः समिद्धाः । विश्वे नो देवाऽ अवसा गमन्तु विश्वमस्तु द्रविणं वाजो अस्मे ॥३१॥**

मरुत्देव र रुद्र आदि सबै देवताले हाम्रो संरक्षण गरून् । सम्पूर्ण अग्नि प्रज्वलित होऊन् । इन्द्र आदि सबै देवता हाम्रो संरक्षणका लागि यज्ञमा आऊन् । हामीलाई सबै किसिमका ऐश्वर्यसम्पदा र अन्न सामग्री उपलब्ध होस् ।

**वाजो नः सप्त प्रदिशश्चतस्रो वो परावतः । वाजो नो विश्वैर्देवैर्धनसाताविहावतु ॥३२॥**

हाम्रो अन्न, ज्ञान, ऐश्वर्य, पराक्रम आदि चारै लोक र सातै दिशामा अभिवृद्धि होस् । समस्त दिव्य शक्तिले हाम्रा धनधान्यको रक्षा गरुन् ।

**वाजो नो अद्य प्र सुवाति दानं वाजो देवाँ२ऽ ऋतुभिः कल्पयाति । वाजो हि मा सर्ववीरं जजान विश्वाऽ आशा वाजपतिर्जयेयम् ॥३३॥**

अन्नका अधिष्ठाता वाजदेवताले हामीलाई अन्नदानको प्रेरणा प्रदान गरुन् । सबै देवगणलाई ऋतुहरूको अनुसार हविष्यान्न प्राप्त भइरहोस् । अन्नदेवताले हामीलाई वीर पुत्रपौत्रादिले सम्पन्न बनाऊन् । हामी अन्नका अधिपति देवताको रूप गृहण गरेर सबै दिशामा प्रगति गर्न सकौँ ।

**वाजः पुरस्तादुत मध्यतो नो वाजो देवान् हविषा वर्धयाति । वाजो हि मा सर्ववीरं चकार सर्वाऽ आशा वाजपतिर्भवेयम् ॥३४॥**

अन्न हाम्रा अगाडि र घरभित्रै उत्पन्न हुन्छ । अन्नले हविद्वारा देवताहरूलाई सन्तुष्ट गराउँछ । अन्नले नै हामीलाई वीर पुत्रपौत्रादिले सम्पन्न गराउँछ । हामी अन्नका अधिपति भएर सबै दिशामा प्रगति गरौँ ।

**सम्मा सृजामि पयसा पृथिव्याः सम्मा सृजाम्यद्भिरोषधीभिः । सोहं वाजꣳ सनेयमग्ने ॥३५॥**

हे अग्निदेवता ! हामी यस पृथ्वीमा उपलब्ध हुने रसहरूलाई आफैँले जुटाउँछौ । हामी जल र औषधिरुलाई पनि आफैँ जुटाउँछौ । हामी औषधि र जलका रूपमा पोषक अन्न प्राप्त गर्दछौँ ।

**पयः पृथिव्यां पयऽ ओषधीषु पयो दिव्यन्तरिक्षे पयो धाः । पयस्वतीः प्रदिशः सन्तु मह्यम् ॥३६॥**

हे अग्निदेवता ! तिमी यस पृथ्वीमा समस्त पोष्का रसलाई स्थापित गर । औषधिमा जीवनरस स्थापित गर । द्युलोकमा दिव्य रसलाई स्थापित गर । अन्तरिक्षमा श्रेष्ठ रसलाई स्थापित गर । हाम्रा लागि यी सबै दिशा र उपदिशाहरू अभीष्ट रस प्रदान गर्ने खालका होऊन् ।

**देवस्य त्वा सवितुः प्रसवेश्विनोर्बाहुभ्यां पूष्णो हस्ताभ्याम् । सरस्वत्यै वाचो यन्तुर्यन्त्रेणग्नेः साम्राज्येनाभिषिञ्चामि ॥३७॥**

हे यजमानहरू हो ! सवितादेवता उदाउँदा उनको प्रेरणाले दुवै अश्विनीकुमारहरूका बाहुले, पूषादेवताका दुवै हातले, सरस्वतीका वाणीले, नियामक सत्ताका नियमले र अग्निदेवताका साम्राज्यले तिमीहरूलाई कृपाको वर्षा गराउँदै अभिषेक गरिएको छ ।

**ऋताषाडृतधामाग्निर्गन्धर्वस्तस्यौषधयोप्सरसो मुदो नाम । स नऽ इदं ब्रह्म क्षत्रं पातु तस्मै स्वाहा वाट् ताभ्यः स्वाहा ॥३८॥**

सत्यका बलले विजय प्राप्त गर्ने, श्रेष्ठ आधार भएका, पृथ्वीलाई धारण गर्ने, अग्निदेवताले ब्राह्मण, क्षत्रिय आदि वर्णका संस्कारवान् द्विजाति नागरिकहरूलाई रक्षा गरुन् । उनका लागि प्रेमपूर्वक हामी यो आहुति प्रदान गर्दछौँ । प्राणीहरूमा हर्षको

सञ्चार गराउने औषधिहरू यी अग्निरूपी गन्धर्वका अप्सराजस्तै हुन् । उनले हामीलाई उनले रक्षा गरुन् । उनलाई प्रेमपूर्वक यो आहुति हामी समर्पित गर्दछौं ।

**सꣳहितो विश्वसामा सूर्यो गन्धर्वस्तस्य मरीचयोप्सरसऽ आयुवो नाम । स नऽ इदं ब्रह्म क्षत्रं पातु तस्मै स्वाहा वाट् ताभ्यः स्वाहा ॥३९॥**

दिन र रातलाई मिलाउने, सामवेदका उत्तम ऋचाहरूले स्तुति गरिने, पृथ्वीलाई धारण गर्ने सूर्यदेवताले हाम्रा सुवर्णजस्ता संस्कारवान् ब्राह्मण, क्षत्रिय आदि वर्णको रक्षा गरुन् । उनका लागि यो आहुति अर्पित छ । आपसमा संयोगको गुण भएका गन्धर्वरूपी सूर्यका रश्मिहरू उनका अप्सराजस्तै हुन्, उनीहरूले हामीलाई रक्षा गरुन् । उनीहरूका लागि यो आहुति प्रेमपूर्वक समर्पित गरिएको छ ।

**सुषुम्णः सूर्यरश्मिश्चन्द्रमा गन्धर्वस्तस्य नक्षत्राण्यप्सरसो भेकुरयो नाम । स नऽ इदं ब्रह्म क्षत्रं पातु तस्मै स्वाहा वाट् ताभ्यः स्वाहा ॥४०॥**

उत्तम किसिमको आनन्द प्रदान गर्ने, सूर्यका रश्मिले प्रकाश प्राप्त गर्ने चन्द्रमारूपी गन्धर्वका हामीलाई ब्राह्मबल र क्षात्रबलले रक्षा गरुन् । उनकै खुसीका लागि यो आहुति समर्पित गरिएको छ । विशेष रूपले कान्तिमान्, आरोग्यवर्द्धक, शीतल रश्मिहरू उनका अप्सरा हुन् । उनीहरूले हाम्रो रक्षा गरुन् । उनीहरूको खुसीका लागि यो आहुति प्रेमपूर्वक समर्पित गरिएको छ ।

**इषिरो विश्वव्यचा वातो गन्धर्वस्तस्यापो अप्सरसऽ ऊर्जो नाम । स नऽ इदं ब्रह्म क्षत्रं पातु तस्मै स्वाहा वाट् ताभ्यः स्वाहा ॥४१॥**

शीघ्र गमन गर्ने, सर्वत्र व्याप्त यस भूमिलाई धारण गर्ने गन्धर्वरूपी वायुले हाम्रा ब्राह्मबल र क्षात्रबलको रक्षा गरुन् । उनका लागि प्रेमपूर्वक यो आहुति समर्पित गरिएको छ । प्राणीहरूलाई जीवनरसरूपी जल यिनका अप्सरा हुन्, उनीहरूले पनि हाम्रो रक्षा गरुन् । उनीहरूको खुसीका लागि हामीले यो आहुति समर्पित गरेका छौं ।

**भुज्युः सुपर्णो यज्ञो गन्धर्वस्तस्य दक्षिणाऽ अप्सरस स्तावा नाम । स नऽ इदं ब्रह्म क्षत्रं पातु तस्मै स्वाहा वाट् ताभ्यः स्वाहा ॥४२॥**

प्राणपर्जन्यका रूपमा पोषक पदार्थ प्रदान गर्ने, सधैं उत्तम गमनशील यज्ञ गन्धर्व हुन् । उनले हाम्रो ब्राह्मबल र क्षात्रबलको रक्षा गरुन् । उनका निम्ति यो श्रेष्ठ आहुति हामी समर्पित गर्दछौं । श्रेष्ठ स्तुतिरूपी स्तावा नामकी दक्षिणा ती यज्ञरूपी गन्धर्वकी अप्सरा हुन् । उनले हामीलाई रक्षा गरुन् । उनको खुसीका लागि यो उत्तम आहुति समर्पित गरिएको छ ।

**प्रजापतिर्विश्वकर्मा मनो गन्धर्वस्तस्य ऋक्सामान्यप्सरसऽ एष्टयो नाम । स नऽ इदं ब्रह्म क्षत्रं पातु तस्मै स्वाहा वाट् ताभ्यः स्वाहा ॥४३॥**

प्रजाका पालक, समस्त विश्वका सृष्टिकर्ता, मनरूपी गन्धर्वले हाम्रो ब्राह्मबल र क्षात्रबलको रक्षा गरुन् । उनका लागि यो श्रेष्ठ आहुति समर्पित गरिएको छ । अभीष्ट फलदायक एष्टि नामका ऋक्वेद र सामवेदका ऋचाहरू त्यस मनका अप्सराहरू हुन् । उनले हाम्रो रक्षा गरुन् । यो आहुति उनीहरूकै खुसीका लागि समर्पित गरिएको छ ।

**स नो भुवनस्य पते प्रजापते यस्य तऽ उपरि गृहा यस्य वेह । अस्मै ब्रह्मणेस्मै क्षत्राय महि शर्म यच्छ स्वाहा ॥४४॥**

विश्वलाई पालन गर्ने हे प्रजापति ! माथि रहेको ऊर्ध्वलोकका ग्रह अथवा यस लोकका ग्रहहरू सबै तिम्रै आश्रयमा अडिएका छन् । तिमीले नै हाम्रो ब्राह्मबल र क्षात्रबलको रक्षा गर्दै हामीलाई सुख प्रदान गर्दछौ । तिम्रा लागि यो आहुति प्रदान गरिएको छ ।

**समुद्रोसि नभस्वानार्द्रदानुः शम्भूर्मयोभूरभि मा वाहि स्वाहा । मारुतोसि मरुतां गणः शम्भूर्मयोभूरभि मा वाहि स्वाहावस्यूरसि दुवस्वाञ्छम्भूर्मयोभूरभि मा वाहि स्वाहा ॥४५॥**

हे वायुदेवता ! तिमी अपार जलसमूहले भरिएको समुद्रजस्तै छौ । तिमी नभमण्डलमा सर्वत्र व्याप्त छौ । वर्षाले भूमिलाई भिजाउने, सबैलाई सुख प्रदान गर्ने र अत्यन्त हर्ष उत्पन्न गर्ने तिमी नै हौ । तिमी अन्तरिक्षमा यात्रा गर्ने मरुत्गणका रूप हौ । सबैलाई आफ्नो आश्रयमा स्थान दिएर संरक्षण प्रदान गर्ने, अन्न उत्पन्न गर्ने, सम्पूर्ण सुख र हर्ष प्रदान गर्ने तिमी नै हौ । हामीलाई तिमी नै सुरक्षा गर । तिम्रा लागि प्रेमपूर्वक हामीले आहुति प्रदान गरेका छौं ।

**यास्ते अग्ने सूर्ये रुचो दिवमातन्वन्ति रश्मिभिः । ताभिर्नो अद्य सर्वाभी रुचे जनाय नस्कृधि ॥४६॥**

हे अग्निदेवता ! तिम्रो दिव्य प्रकाश सूर्यको रश्मिका माध्यबाट द्युलोकलाई प्रकाशित गर्दछ । त्यो ज्योति आज दिव्य कान्तियुक्त भएर हामी र हाम्रा शाखासन्तानलाई तेजले सम्पन्न बनाउनका लागि प्रकाशित होस् ।

**या वो देवाः सूर्ये रुचो गोष्वश्वेषु या रुचः । इन्द्राग्नी ताभिः सर्वाभी रुचन्नो धत्त बृहस्पते ॥४७॥**

हे इन्द्र, अग्नि, बृहस्पति आदि विश्वका समस्त देवशक्तिहरू हो ! तिमीहरूको जुन दीप्ति सूर्यमण्डलमा विद्यमान रहेको छ र जुन दीप्ति गाई तथा अश्वमा तेजका रूपमा समाविष्ट छ, त्यस्ता सबै दीप्तिहरूले प्रकाशित भएर तिमीहरू हामीभित्र दिव्य तेज धारण गराओ ।

**रुचन्नो धेहि ब्राह्मणेषु रुचꣳराजसु नस्कृधि । रुचं विश्येषु शूद्रेषु मयि धेहि रुचा रुचम् ॥४८॥**

हे अग्निदेवता ! हाम्रा ब्राह्मणहरूमा तेजस्विता स्थापित गर । हाम्रा क्षत्रियहरूमा तेजस्विता स्थापित गर । वैश्यहरूमा तेजस्विता स्थापित गर र शूद्रहरूमा तथा हामीमा पनि दिव्य तेज स्थापित गर र हाम्रा राष्ट्रका चारै वर्णलाई तेजस्वी गराऊ ।

**तत्त्वायामि ब्रह्मणा वन्दमानस्तदा शास्ते यजमानो हविर्भिः । अहेडमानो वरुणेह बोध्युरुशꣳस मा नऽ आयुः प्र मोषीः ॥४९॥**

वेदका मन्त्रहरूले अभिनन्दन गरिने हे वरुणदेवता ! हवि दान दिएर यजमानहरू लौकिक सुखको आकाङ्क्षा गर्दछन् । हामी वेदका वचन बुझ्ने ब्राह्मणहरू यजमानको सन्तुष्टि र प्रसन्नताका लागि स्तुति गर्दै तिमीलाई प्रार्थना गर्दछौं । सबैले स्तुति गर्ने

गरेका हे वरुणदेवता ! यस स्थानमा तिमी क्रोध नगरेर हाम्रो प्रार्थना सुन । हाम्रो आयु कसै गरेर क्षीण हुन नदेऊ ।

**स्वर्ण घर्मः स्वाहा स्वर्णार्कः स्वाहा स्वर्ण शुक्रः स्वाहा स्वर्ण ज्योतिः स्वाहा स्वर्ण सूर्यः स्वाहा ॥५०॥**

सर्वत्र प्रकाश फिँजाउने आदित्यदेवताका लागि यो आहुति समर्पित छ । सूर्यको रूपमा रहेका अग्निदेवताका लागि यो आहुति समर्पित गरिएको छ । शुभ्र तेजले सम्पन्न देवताका लागि यो आहुति समर्पित गरिएको छ । अन्तर्निहित ज्योतिका निम्ति यो आहुति समर्पित गरिएको छ । अन्तःकरणमा प्रकाशित सूर्यका निम्ति यो आहुति समर्पित गरिएको छ । यो आहुति सबैले उचित किसिमले ग्रहण गरुन् ।

**अग्निं युनज्मि शवसा घृतेन दिव्यꣳ सुपर्णं वयसा बृहन्तम् । तेन वयं गमेम ब्रध्नस्य विष्टपꣳ स्वो रुहाणा अधि नाकमुत्तमम् ॥५१॥**

दिव्य गुणले सम्पन्न, श्रेष्ठ गति भएका, आज्यका आहुतिले वृद्धि प्राप्त गर्ने अग्निदेवतालाई हामी बलदायक घिउले सुसम्पन्न गर्दछौं । हामी यस माध्यमबाट आदित्यलोकमा गमन गर्दछौं । त्यसपछि स्वर्गलोकमाथि गमन गर्दै सन्तापरहित सर्वोत्तम लोकमा पुग्दछौं ।

**इमौ ते पक्षावजरौ पतत्रिणौ याभ्याꣳ रक्षाꣳ स्यपहꣳ स्यग्ने । ताभ्यां पतेम सुकृतामु लोकं यत्र ऋषयो जग्मुः प्रथमजः पुराणाः ॥५२॥**

हे अग्निदेवता ! तिम्रा यी दुई पँखेटा कहिल्यै पुराना नहुने र सधैँ उड्नमा नै तयार रहने खालका छन् । यिनकै सहायताले तिमी राक्षसहरूलाई विनाश गर्दछौ । तिनै पँखेटाका सहायताले हामी पुण्यात्माहरूका दिव्यलोकको यात्रा गरौँ । उहिलेका ऋषिहरू पनि त्यहीँ गएका छन् ।

**इन्दुर्दक्षः श्येनऽ ऋतावा हिरण्यपक्षः शकुनो भुरण्युः । महान्त्सधस्थे ध्रुवऽ आ निषत्तो नमस्ते अस्तु मा मा हिꣳ सीः ॥५३॥**

हे अग्निदेवता ! तिमी चन्द्रजस्तै आनन्द प्रदान गर्दछौ । निरन्तर प्रयत्नशील, बाज पक्षीजस्तै वेगवान्, सत्यका रूपमा कर्म गर्ने, सत्यका सुनौला पँखेटा भएका, भरणपोषणका आधार रूप, महान् सामर्थ्यवान्, अटल, यज्ञमा अविच्छिन्न रूपले स्थित रहने किसिमका छौ । तिमीलाई हामी सधैँ नमस्कार गर्दछौँ, हामीलाई तिमी कुनै किसिमले दुःख नदेऊ ।

**दिवो मूर्धासि पृथिव्या नाभिरूर्गपामोषधीनाम् । विश्वायुः शर्म सप्रथा नमस्पथे ॥५४॥**

हे अग्निदेवता ! तिमी स्वर्गलोकको मस्तकजस्तै मूर्धन्य र पृथ्वीको नाभीजस्तै केन्द्रविन्दु हौ । तिमी जल र औषधिका साररूपमा छौ । समस्त प्राणीका जीवनआधार, सुखप्रदायक तिमी समान रूपले सर्वत्र व्याप्त भएर रहेका छौ । सबैका लागि पथप्रदर्शक रहेका तिमीलाई हामी नमस्कार गर्दछौँ ।

**विश्वस्य मूर्धन्नधितिष्ठसि श्रितः समुद्रे ते हृदयमप्स्वायुरपो दत्तोदधिं भिन्त । दिवस्पर्जन्यादन्तरिक्षात्पृथिव्यास्ततो नो वृष्ट्याव ॥५५॥**

हे अग्निदेवता ! सर्वत्र व्याप्त भएर तिमी विश्वका सर्वोच्च स्थानमा विराजमान छौ । तिम्रो हृदय अन्तरिक्षमा र आयु जलमा व्याप्त बनेर रहेका छन् । तिमी द्युलोक, अन्तरिक्ष, पृथ्वीको गर्भ र अन्य स्थानबाट जल ल्याएर पृथ्वीमा वर्षा गराएर हामीमाथि कृपा गर । बादललाई भत्काएर हामीलाई पानी देऊ ।

**इष्टो यज्ञो भृगुभिराशीर्दा वसुभिः । तस्य नऽ इष्टस्य प्रीतस्य द्रविणेहागमेः ॥५६॥**

हे धनदौलत ! तिमी हाम्रो अत्यन्त आफन्तका रूप हौ र हामीसित तिम्रो प्रेम गाँसिएको छ । धनको कामना गर्ने यजमानका घरमा तिमीहरू आफ्नो वैभवले सम्पन्न गराओ । मन लागेको फल उपलब्ध गराउने यो यज्ञ शत्रु नाश गर्ने भृगु र स्थायी निवास गर्ने वीर वसुहरूले उत्तम किसिमले सम्पादन गरेका छन् ।

**इष्टो अग्निराहुतः पिपर्त्तु नऽ इष्टꣳ हविः । स्वगेदं देवेभ्यो नमः ॥५७॥**

यज्ञ सम्पादन गर्नमा सबैभन्दा प्रमुख अग्निदेवता याजकहरूले प्रदान गरेको हविले सन्तुष्ट भएर हाम्रो अभीष्ट पूरा गराऊन् र उनी स्वयं गमनशील भएर यो हवि देवताहरूलाई पनि पुऱ्याइदिऊन् ।

**यदाकूतात्समसुस्रोद्धृदो वा मनसो वा सम्भृतं चक्षुषो वा । तदनु प्रेत सुकृतामु लोकं यत्र ऋषयो जग्मुः प्रथमजाः पुराणाः ॥५८॥**

हे ऋत्विक्हरू हो ! अन्तर्प्रेरणाबाट, हृदयबाट, मनबाट या नेत्र आदि इन्द्रियबाट जुन ज्ञान उचित रूपमा निष्पन्न भएको छ, त्यसको अनुसरण गर्दै आचारवान् सत्पुरुषहरूको दिव्यलोक प्राप्त गर । उही ठाउँ उहिलेका ऋषिहरू पनि प्राप्त गरेका छन् ।

**एतꣳ सधस्थ परि ते ददामि यमावहाच्छेवधिं जातवेदाः । अन्वागन्ता यज्ञपतिर्वो अत्र तꣳ स्म जानीत परमे व्योमन् ॥५९॥**

परम श्रेष्ठ स्वर्गलोकमा रहने गरेका हे देवताहरू हो ! अग्निदेवताले जुन यज्ञका सुखदायक फल यजमानलाई प्रदान गरेका छन्, त्यही फल हामी तिमीहरूका लागि अर्पित गर्दछौं । हे देवताहरू हो ! यजमानहरू तिमीहरूकहाँ आउनेछन्, त्यस परम श्रेष्ठ स्वर्गलोकमा आउने यजमानहरूलाई तिमीहरू यथोचित रूपमा चिनेर अभीष्ट प्रदान गर ।

**एतं जानीथ परमे व्योमन् देवाः सधस्था विद रूपमस्य । यदागच्छात्पथिभिर्देवयानैरिष्टापूर्ते कृणवाथाविरस्मै ॥६०॥**

परम श्रेष्ठ स्वर्गमा निवास गर्ने हे देवताहरू हो ! यी यजमानसित र यिनका श्रेष्ठ स्वरूपसित परिचित होओ । जुन बेला यिनीहरू देवयानका मार्गबाट गमन गर्दछन्, त्यस बेला यज्ञ कर्मबाट प्राप्त हुने सम्पूर्ण फल यिनलाई प्रदान गर ।

**उद्बुध्यस्वाग्ने प्रति जागृहि त्वमिष्टापूर्ते सꣳ सृजेथामयं च । अस्मिन्त्सधस्थे अध्युत्तरस्मिन्विश्वे देवा यजमानश्च सीदत ॥६१॥**

हे अग्निदेवता ! तिमी उचित रीतिले प्रज्वलित भएर चैतन्यता धारण गर । अभीष्ट पूर्ति गर्नमा सक्षम यस यज्ञको फलस्वरूप यजमानका सत् आकाङ्क्षाहरू पूरा गराऊ र

उसको जीवनलाई चेतनामय गराऊ । हे विश्वेदेवताहरू हो ! तिमीहरूका लागि कर्म गर्ने यी यजमानहरू देवताका साथमा रहनका लागि योग्य हुँदै स्वर्गलोकमा चिरकालसम्म रहिरहून् ।

**येन वहसि सहस्रं येनाग्ने सर्ववेदसम् । तेनेमं यज्ञं नो नय स्वर्देवेषु गन्तवे ॥६२॥**

हे अग्निदेवता ! तिमी जुन शक्तिले सहस्र दक्षिणाले युक्त यज्ञलाई सम्पन्न गर्दछौ, जुन शक्तिले सर्वज्ञ भएको गौरव प्राप्त गर्दछौ, उसै सामर्थ्यले हाम्रा यस यज्ञलाई अर्थात् यज्ञमा समर्पित हविष्यान्नलाई स्वर्गमा रहेका देवताहरूसम्म पुऱ्याउने कृपा गर । याजकहरूलाई दिव्य गुणले अभिपूरित गर ।

**प्रतरेण परिधिना स्रुचा वेद्या च बर्हिषा । ऋचेमं यज्ञं नो नय स्वर्देवेषु गन्तवे ॥६३॥**

हे अग्निदेवता ! हाम्रा ढुङ्गा, परित्रि, स्रुक, वेदी, कुशा र ऋचा आदिले सम्पन्न यस यज्ञलाई वा यज्ञका सामग्री वा साधनलाई देवतासम्म पुग्नका लागि देवलोकतर्फ प्रेरित गर ।

**यद्दत्तं यत्परादानं यत्पूर्तं याश्च दक्षिणाः । तदग्निर्वैश्वकर्मणः स्वर्देवेषु नो दधत् ॥६४॥**

हे संसारको सिर्जना गर्ने अग्निदेवता ! हामीले दीनदुःखी, अतिथि र ब्राह्मणलाई धन वा साधन आदिका रूपमा दिउका दानलाई अथवा इनार, सत्तल आदिको निर्माण गर्नेजस्ता उचित कार्यमा लगाएका धनलाई अथवा यज्ञको दक्षिणालाई स्वर्गमा रहने गरेको देवशक्तिहरूसम्म पुऱ्याइदेऊ ।

**यत्र धाराऽ अनपेता मधोर्घृतस्य च याः । तदग्निर्वैश्वकर्मणः स्वर्देवेषु नो दधत् ॥६५॥**

यी संसारको सिर्जना गर्ने अग्निदेवताले हामी याजकहरूलाई मधु, घिउ र दुधदही आदिको कहिल्यै नसकिने धारा निरन्तर रूपमा बग्ने दिव्यलोकमा सद्गुणले सुशोभित भएर सुखद अवस्थामा रहन पाउने गरी पुऱ्याऊन् ।

**अग्निरस्मि जन्मना जातवेदा घृतं मे चक्षुरमृतं मऽ आसन् । अर्कस्त्रिधातू रजसो विमानोजस्त्रो घर्मो हविरस्मि नाम ॥६६॥**

म जन्मजात रूपले सबै कुराको जानकारी भएको अग्नि हुँ । घिउ मेरो आँखाको शक्ति हो । मेरा मुखमा अमृत छ । म प्राणरूपमा तीनै वटालाई धारण गरेर अन्तरिक्ष मापन गर्दछु । निरन्तर तेजोमय सूर्य, हवि एवं हविवाहक पनि म नै हुँ ।

**ऋचो नामास्मि यजूᳬंषि नामास्मि सामानि नामास्मि । ये अग्नयः पाञ्चजन्याऽ अस्यां पृथिव्यामधि । तेषामसि त्वमुत्तमः प्र नो जीवातवे सुव ॥६७॥**

अद्वैतवादी याजक स्वयंलाई अग्निका रूपमा अनुभव गर्दै ऋक्वेद, यजुर्वेद र सामवेद नामको अग्नि मै हुँ भन्दछन् । यस संसारमा पाँचै किसिमका जनताको हितकारी अग्निमध्येका हे विशिष्ट ज्ञानाग्नि ! तिमी श्रेष्ठ छौ, सत्कर्ममा निरन्तर जुटिरहेका हामी याजकहरूलाई तिमी लामो आयु प्रदान गरेर दीर्घजीवी बनाऊ ।

**वार्त्रहत्याय शवसे पृतनाषाह्याय च । इन्द्र त्वा वर्तयामसि ॥६८॥**

हे इन्द्रदेवता ! वृत्र नामको असुर मार्नका लागि र शत्रुको सेना पराजित गर्नका लागि शक्ति पाऊँ भन्ने निवेदन तिमीसित हामी गर्दछौँ ।

**सहदानुं पुरुहूत क्षियन्तमहस्तमिन्द्र सं पिणक्कुणारुम् । अभि वृत्रं वर्धमानं पियारुमपादमिन्द्रं तवसा जघन्थ ॥६९॥**

हे धेरैबाट बोलाइने इन्द्रदेवता ! दानीहरूका तिमी आश्रयदाता हौ । साह्रै चर्को गर्जना गर्ने वृत्रलाई तिमीले हात नभएको ढुँडो बनाएर टुक्राटुक्रा पार्‍यौ । हे इन्द्रदेवता ! तिमीले उर्लँदै आएको र हिंस्रक स्वभावका वृत्रलाई गोडाविनाको खोरन्डो बनाएर बलपूर्वक मारेका थियौ ।

**वि नऽ इन्द्र मृधो जहि नीचा यच्छ पृतन्यतः । यो अस्माँ२ऽ अभिदासत्यधरं गमया तमः ॥७०॥**

हे इन्द्रदेवता ! सङ्ग्राममा हाम्रा शत्रुलाई पूरै रूपमा पराजित गराऊ । युद्धको कामना गर्दै जुन शत्रु हाम्रा विरुद्धमा सैन्य बल उपस्थित गराउन खोज्दछन्, त्यस्ता शत्रुलाई तल खसालिदेऊ । जुन शत्रुले हामीलाई वशमा पारेर दासत्वमा राख्न खोज्दछन्, तिनलाई बाक्लो अन्धकारका खाडलमा खसालिदेऊ ।

**मृगो न भीमः कुचरो गिरिष्ठाः परावतऽ आ जगन्था परस्याः । सृकꣳ सꣳशाय पविमिन्द्र तिग्मं वि शत्रून् ताढि वि मृधो नुदस्व ॥७१॥**

हे इन्द्रदेवता ! तिमी पर्वतीय हिंस्रक सिंहजस्तै भयङ्कर छौ । तिमी टाढाबाट यहाँ आएर टाढासम्म हान्न सकिने वज्र धारिलो बनाएर शत्रु विनाश गर । लडाइँ गर्न खोज्ने असुर पर पुऱ्याऊ ।

**वैश्वानरो नऽ ऊतयऽ आ प्र यातु परावतः । अग्निर्नः सुष्टुतीरुप ॥७२॥**

सम्पूर्ण प्राणीलाई कल्याण गर्ने हे अग्निदेवता ! तिमी हाम्रो उत्तम स्तुति सुन । धेरै टाढाबाट आएर भए पनि सत्कर्म गर्ने हामी याजकहरूलाई तिमी रक्षा गर ।

**पृष्टो दिवि पृष्टो अग्निः पृथिव्यां पृष्टो विश्वा ओषधीरा विवेश । वैश्वानरः सहसा पृष्टो अग्निः स नो दिवा स रिषस्पातु नक्तम् ॥७३॥**

वैश्वानर अग्निदेव द्युलोक र पृथ्वीमा प्रशंसनीय छन् । सम्पूर्ण औषधीमा व्याप्त हुनाले यिनी प्रशंसाका पात्र हुन् । बलका कारण प्रशंसनीय अग्निदेवताले दिनरातका हिंस्रक प्राणीबाट हामीलाई रक्षा गरुन् ।

**अश्याम तं काममग्ने तवोती अश्याम रयिꣳ रयिवः सुवीरम् । अश्याम वाजमभि वाजयन्तोश्याम द्युम्नमजराजरं ते ॥७४॥**

हे अग्निदेवता ! तिम्रा कृपाले हाम्रो कामना पूरा होस् । ऐश्वर्यका स्वामी हे अग्निदेवता ! हामी सुसन्तति युक्त एवं ऐश्वर्यवान् होऔँ । हे अन्नदाता ! हामीलाई अन्न प्रदान गर । हे अग्निदेवता ! तिमी अजर छौ, आफ्नो तेजस्वी अमर यशले हामीलाई यशस्वी बनाऊ ।

**वयं ते अद्य ररिमा हि काममुत्तानहस्ता नमसोपसद्य । यजिष्ठेन मनसा यक्षि देवानस्रेधता मन्मना विप्रो अग्ने ॥७५॥**

हे अग्निदेवता ! हामी कामनायुक्त याजकहरू हात माथि उठाएर तिमीलाई हव्य आदि अर्पण गर्दछौं । हे मेधावान् अग्निदेवता ! हाम्रा हव्य आदिले सन्तुष्ट भएर तिमी आफ्ना असल मनले स्तोत्रद्वारा देवताहरूको यजन गर ।

**धामच्छदग्निरिन्द्रो ब्रह्मा देवो बृहस्पतिः । सचेतसो विश्वे देवा यज्ञं प्रावन्तु नः शुभे ॥७६॥**

सबै लोकहरूलाई धारण गर्ने देवगण, अग्नि, इन्द्र, ब्रह्मा, बृहस्पति र उत्तम बुद्धि भएका हे विश्वेदेवताहरू हो ! तिमीहरू हाम्रा यज्ञलाई धाममा स्थापित गर । याजकहरूका यस श्रेष्ठ कर्मरूप यज्ञको अनुष्ठानलाई दिव्यलोकसम्म पुऱ्याइदेओ ।

**त्वं यविष्ठ दाशुषो नॄं: पाहि शृणुधी गिरः । रक्षा तोकमुत त्मना ॥७७॥**

सधैं युवा रहने हे अग्निदेवता ! तिमी दानीहरूको रक्षा गर्नका लागि स्तुतिमा ध्यान देऊ । आफ्ना पुत्रको रक्षाका लागि प्रयत्नशील होऊ ।

## इति अष्यदशोऽध्यायः

अठारौं अध्याय सकियो ।

ॐ

**भूर्भुवः स्वः तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् ।**

# वाजसनेयि माध्यन्दिन शुक्ल

# यजुर्वेद – संहिता

## ॥अथ एकोनविंशोऽध्यायः॥

॥उन्नाईसौँ अध्याय॥

**ऋषि—** प्रजापति, अश्विनीकुमार, सरस्वती, भारद्वाज, आभूति, सुकीर्ति काक्षीवत, हैमवर्चि, वैखानस, शङ्ख, इन्द्र ।

**देवता—** सुरासोम, सूर्य, सोम, पयसुरा, विषूचिका, अग्नि, पयोग्रह, सुराग्रह, सोमसम्पत्, अश्विनी, सरस्वती, इन्द्र, पितर, पवमान अग्नि, लिङ्गोक्त, ब्रह्म, सविता, विश्वेदेवा, यजमान, आशीर्वाद, देवयान, पितृयान, इन्द्र, ग्रहसमूह ।

**छन्द—** निचृत् शक्वरी, स्वराट् अनुष्टुप्, भुरिक् त्रिष्टुप्, आर्षी गायत्री, निचृत् जगती, विराट् प्रकृति, निचृत् पङ्क्ति, आर्षी उष्णिक्, शक्वरी, भुरिक् अनुष्टुप्, अनुष्टुप्, निचृत अनुष्टुप्, भुरिक् उष्णिक्, निचृत् त्रिष्टुप्, त्रिष्टुप्, विराट् त्रिष्टुप्, निचृत् अष्टि, भुरिक् अष्टि, गायत्री, निचृत् गायत्री, स्वराट् पङ्क्ति, भुरिक् पङ्क्ति विराट् पङ्क्ति, स्वराट् त्रिष्टुप्, विराट् अनुष्टुप्, स्वराट् ब्राह्मी उष्णिक्, भुरिक् अतिजगती, भुरिक् अतिशक्वरी, अतिशक्वरी ।

**स्वाद्वीं त्वा स्वादुना तीव्रां तीव्रेणामृताममृतेन । मधुमतीं मधुमता सृजामि सꣳसोमेन । सोमोस्यश्विभ्यां पच्यस्व सरस्वत्यै पच्यस्वेन्द्राय सुत्राम्णे पच्यस्व ॥१॥**

उत्तम स्वाद भएको, तीक्ष्ण, अमृतसरहको गुण भएको, मधुर रसयुक्त हे औषधिहरू हो ! तिमीहरूलाई अत्यन्त स्वादिष्ट, तीक्ष्ण, अमृतोपम र मधुर सोमसँगै मिसाउँछौं । हे औषधिहरू हो ! सोमका संसर्गले तिमीहरू पनि सोमजस्तै भएका छौ । तिमीहरू अश्विनीकुमारहरूका निम्ति परिपक्व होओ, देवती सरस्वतीका लागि परिपक्व होओ र सबै किसिमको संरक्षण प्रदान गर्ने इन्द्रदेवताका लागि परिपक्व होओ ।

**परीतो षिञ्चता सुतꣳ सोमो य उत्तमꣳ हविः । दधन्वाँ यो नर्यो अप्स्वन्तरा सुषाव सोममद्रिभिः ॥२॥**

हे ऋत्विक् हो ! मानिसको हितैषि, ढुङ्गामा पेलिएको, जल मिसिएको सोम देवताको उत्तम हवि हो ।

**वायोः पूतः पवित्रेण प्रत्यङ्क्सोमो अतिद्रुतः । इन्द्रस्य युज्यः सखा । वायो पूतः पवित्रेण प्राङ्क्सोमो अतिद्रुतः । इन्द्रस्य युज्यः सखा ॥३॥**

यो दिव्य सोम माथि अन्तरिक्षबाट अवतरण गर्दाखेरि वायुले शुद्ध भएर देवशक्तिका नियन्त्रक इन्द्रदेवताको मित्र हुन्छ । यही सोम यज्ञद्वारा तलबाट माथितिर जाँदा पनि वायुले नै शुद्ध भएर इन्द्रदेवताकै मित्र सिद्ध हुन्छ ।

**पुनाति ते परिस्रुतथं॒ सोमथं॒ सूर्यस्य दुहिता । वारेण शश्वता तना ॥४॥**

हे सोमरूपी यजमान ! प्रकृतिरूपी शाश्वत चाल्नीले तिमीलाई छानेझैँ नै सूर्यपुत्री श्रद्धाले पनि छानेर पवित्र गराउँदै देवशक्तिका लागि उपयोगी बनाएर सनातन बनाउँछिन् ।

**ब्रह्म क्षत्रं पवते तेजऽ इन्द्रिय सुरया सोमः सुतऽ आसुतो मदाय । शुक्रेण देव देवताः पिपृग्धि रसेनान्नं यजमानाय धेहि ॥५॥**

हे दिव्य सोमदेवता ! तिमी आफ्ना दिव्य तेजले देवताहरूलाई प्रसन्न गराऊ । यजमानलाई रसयुक्त अन्न प्रदान गर । पेलेर तयार पारेका यस सोमले ब्राह्मबल र क्षात्रबललाई पवित्र गराउँछ तथा उनीहरूको तेज एवं इन्द्रियलाई सामर्थ्य प्रदान गर्दछ । तीक्ष्ण स्वभाव भएक, उत्तम रसरूपी औषधिहरूसँग मिसिएर यो सोम अझै आनन्ददायक हुने गर्दछ ।

**कुविदङ्ग यवमन्तो यवं चिद्यथा दान्त्यनुपूर्वं वियूय । इहेहैषां कृणुहि भोजनानि ये बर्हिषो नमऽ उक्तिं यजन्ति । उपयामगृहीतोस्यश्विभ्यां त्वा सरस्वत्यै त्वेन्द्राय त्वा सुत्राम्णऽ एष ते योनिस्तेजसे त्वा वीर्याय त्वा बलाय त्वा ॥६॥**

हे सोम ! प्रजाको रक्षा गर्ने कामनाले तिमीलाई ज्ञानवान्, ऐश्वर्ययुक्त अश्विनीकुमारहरू, देवी सरस्वती र इन्द्रदेवताका लागि हामी उपयाम पात्र ग्रहण गर्दछौँ । जौखेती गर्ने किसानले जतन गरेर जौ काटेझैँ देवताहरूको प्रिय सोमले दुष्टको दमन गर्नका लागि उत्तम पुरुषको भनाइअनुसार श्रेष्ठजनलाई पोषण प्रदान गरेर उनीहरूको सुरक्षा गरोस् । शौर्य र बल सम्पन्नताका लागि पनि तिमीलाई यस ठाउँमा स्थापना गर्दछौँ ।

**नाना हि वां देवहितथं॒ सदस्कृतं मा सथं॒ सृक्षाथां परमे व्योमन् । सुरा त्वमसि शुष्मिणी सोमऽएष मा मा हिथं॒ सीः स्वां योनिमाविशन्ती ॥७॥**

हे सुरारूपी औषधि र सोमरस ! देवताको हितकारी यज्ञशालामा तिमीहरू दुई अलगअलग भएर रहेका बेला आकाशको अत्यन्त उचाइमा यज्ञ आदि कर्म गरिसक्दा पनि एकापसमा नमिसिनू । हे सुरा ! तिमी बलशाली रसका रूप हौ र यो सोम तिमीभन्दा भिन्न स्वभावको छ । त्यसो हुनाले त्यसका स्थानमा तिमी पसेर उसको गुण नष्ट नगरिदेऊ ।

**उपयामगृहीतोस्याश्विनं तेजः सारस्वतं वीर्यमैन्द्रं बलम् । एष ते योनिर्मोदाय त्वा नन्दाय त्वा महसे त्वा ॥८॥**

हे सोम ! तिमी उपयाम पात्रमा जम्मा होऊ । तिम्रो स्थान यही हो, यसै स्थानमा तिमीलाई अश्विनीकुमारहरूको तेज, देवी सरस्वतीको बल र इन्द्रदेवताको शौर्य प्राप्त गर्नका लागि राखेका छौं । हे सोम ! देवतालाई हर्ष, आनन्द र उनीहरूको महत्ता वृद्धि गर्नका लागि तिमीलाई उनका लागि प्रदान गर्दछौँ ।

**तेजोसि तेजो मयि धेहि वीर्यमसि वीर्यं मयि धेहि बलमसि बलं मयि धेह्योजोस्योजो मयि धेहि मन्युरसि मन्युं मयि धेहि सहोसि सहो मयि धेहि ॥९॥**

हे तेजस्वी ! हामीलाई तेजले युक्त गराऊ । हे वीर्यवान् ! हामीलाई पराक्रमी बनाऊ । हे बलशाली ! हामीलाई बलवान् बनाऊ । हे ओजस्वी ! हामीलाई